ॐ नमः शिवाय

## श्रीस्कन्दपुराण, हिमवत्खण्ड अन्तर्गतको

# नेपालमाहात्म्य



ललितपुरको पुल्चोकबाट वि.सं.१९१० मा देखिएको काठमाडौं । चित्रकार : डा.हेनरी एम्बुस ओल्डफिड, श्रोतः बेलायती पुस्तकालयको वेबसाइट

**नेपालीमा भावानुवाद तथा तस्बिर सङ्कलन :**

# मोहन प्रसाद सापकोटा

## दुई शब्द :

म संस्कृतको विज्ञ होइन । श्रद्धेय गुरु योगी नरहरिनाथ, श्रद्धेय गुरु प्रा.डा.वेणीमाधव ढकाल आदि महानुभावबाट हिमवत्खण्ड तथा नेपालमाहात्म्यको अनुवाद भई सकेको छ । यो पुस्तक खासगरी भारतवाट प्रकाशन भएका नेपालमाहात्म्यका विभिन्न पुस्तकको सहयोगमा तयार पारिएको हो । योगी नरहरिनाथज्यूले लेख्नु भएको हिमवत्खण्ड अन्तर्गतको नेपालमाहात्म्यसँग यो नेपालमाहात्म्य मेल खाँदैन । यो कुरा डा.ढकालज्यूले पनि आफ्नो हिमवत्खण्डको परिशिष्टमा बताउनु भएको छ । यस पुस्तक मार्फत नेपालीलाई नयाँ कुरा केही दिन सकें अथवा सकिन त्यो पाठक तथा विद्वान वर्गले मूल्याङ्कन गर्ने विषय हो । यस पुस्तकमा उल्लेखित स्थान, मन्दिर तीर्थ आदिलाई प्रष्ट पार्न विभिन्न श्रोतबाट सङ्कलन गरी सम्भव भएसम्मका पुराना तस्बिरहरू समेत राखिएका छन् । सबैसँग तस्बिर राख्ने अनुमति लिन सम्भव हुने देखिएन । सकिन्छ यही अनुरोधलाई अनुमतीकारूपमा ग्हण गरी दिनु होला । तर, सबै तस्बिरका श्रोत खुलाइएका छन् । कसैले चित्त दुखाए आगामी संस्करणमा ती तस्बिर यस पुस्तकबाट हटाइने छन् । शुरुमा यो पुस्तकलाई जस्तो बनाउँदछु भन्ने सोचेको थिएँ, त्यस्तो बनाउन सकिन । तर पनि यो पुस्तकले श्रद्धेय गुरुजनको प्रयाशलाई केही भएपनि टेवा दिनेछ र अज्ञानताबाट केही हदसम्म ज्ञानतिर नेपालीलाई लैजाने छ भन्ने आशा गरेको छु । मलाई प्रसिद्धि वा नाफा कमाउनु छैन । हावामा कुदिरहेको समाजलाई सलाई कोरेर उज्यालो देखाउने प्रयाश मात्र गरेको हुँ ।



यो पुराण मात्र नभई एक पौराणिक इतिहास पनि हो । विविध कारणले यसमा उल्लेखित अनेक स्थानका बारेमा अहिले यसै भन्न सकिने अवस्था रहेन । तैपनि जोजसले मेरो अनुरोधलाई स्वीकार गरी जानकारी र तस्बिर पठाई मलाई सहयोग गर्नु भयो, उहाँहरु सबैलाई तथा विभिन्न देशी, विदेशी संस्थालाई समेत तस्बिरका लागि धन्यवाद दिन चाहन्छु । हामी हाम्रो इतिहासलाई कुनै विदेशीले खोजेर प्रमाणित गरि देओस् भनी चाहन्छौं । यसरी हामी कसैको पनि इतिहास जोगिन्न । हामी आफैं सक्षम बन्नु पर्दछ । यो पुस्तकले इतिहासप्रेमीलाई पनि केही ज्ञान दिनेछ भन्ने विश्वास लिएको छु । इतिहासमा जबसम्म प्रमाण प्रतिस्थापन हुँदैन तबसम्म हामीसँग जे छ त्यसैलाई प्रमाण मान्नु पर्दछ । हामीलाई नक्कली प्रमाण बनाइरहन जरुरी छैन, भएका कुरा जोगाउन सके, उत्खनन गर्न सके त्यही नै पर्याप्त हुन्छ । धार्मिक पर्यटन प्रवर्धन गर्न समेत यो पुस्तकले सहयोग गर्नेछ भन्ने विश्वास लिएको छु ।

अनुवादमा आफ्नो पन घुसाउन पाइँदैन । तर मैले यस पुस्तकमा आफ्नो पन पनि ठाउँठाउँमा घुसाएको छु । यसैले मैले आफूलाई भावानुवादक भनेको हुँ ।

ग्रन्थको भावानुवाद गर्ने क्रममा मैले गोपाल वंशावली, स्वयम्भूपुराण, नेपाल राज्यको इतिहास, राजवंशावली, राजभोगमाला वंशावली, प्रा.डा.वेणीमाधव ढकालज्यूको हिमवत्खण्ड आदि ग्रन्थको सहयोग लिएँ ।

अन्तमा, जानी नजानी भएका भूलहरु औंल्याई आगामी दिनमा सुध्रन हौसला प्रदान गर्नु हुने नै छ भन्ने विश्वास लिएर यो दुई शब्द यहीँ टुङ्ग्याउँदछु । देवभूमीमा बसोबास गर्ने सबैको कल्याण होस् !

# स्कन्दपुराण, हिमवत्खण्ड अन्तर्गत नेपालमाहात्म्यको विषयसूची

## ॥ श्री गणेशाय नमः ॥
## ॥ ॐ नमः शिवाय ॥
## ॥ ॐ नमोभगवते वासुदेवाय ॥
## ॥ ॐ तत्सद्ब्रह्मणे नमः ॥
## ॥ श्री सरस्वत्यै नमः ॥
## ॥ श्री व्यासाय नमः ॥
# ॥ अथ महर्षिश्रीवेदव्यासप्रणीतं श्रीस्कन्दमहापुराणम् ॥
# ॥ नेपालमाहात्म्यम् ॥
### ॥ अथ प्रथमोऽध्यायः ॥
॥ पहिलो अध्याय ॥

**नारायणं नमस्कृत्य नरं चैव नरोत्तमम् ।**
**देवीं सरस्वतीं चैव ततो जयमुदीरयेत् ॥१॥**

नरोत्तम भगवान् श्रीनारायण र श्रीनरलाई अनि देवी श्रीसरस्वतीलाई पनि नमस्कार गरी त्यसपछि "जय ग्रन्थ" पढोस् वा उच्चारण गरोस् ।१।

नोटः अठार पुराण, भगवान् रामचन्द्रको पुण्यदायक चरित्र अर्थात् रामायण, वैष्णव र शैव सम्प्रदायका धर्म, वेदव्यासले लेखेको पाँचौं वेद अर्थात् महाभारत तथा नारद मुनिले बताएका श्रौत धर्म : यिनलाई विद्वानहरू "जय" नामले सम्बोधन गर्ने गर्दछन् ।(भविष्यपुराण, अध्याय ४, श्लोक ८६-८८) । नर र नारायणको उत्पत्तिका विषयमा पनि पुराणहरूमा केही फरक विवरण पाइन्छ । जस्तैः (क) धर्मबाट दक्षप्रजापतिकी छोरी मूर्तिको गर्भबाट जन्माइएका विष्णुरूपका ऋषिहरुको अवतार । श्रीमद्भागवत, दोश्रो स्कन्ध, अध्याय ७, श्लोक ६ । (ख) हिरण्यकशिपुलाई मारेपछि जति स्तुती गरेपनि शान्त नभएको नारायणको नृसिंह रूप शान्त पार्न भगवान् शिवले लिनु भएको शरभको रूपले नृसिंहको रूपलाई कमरबाट दुई टुक्रा बनायो । यसपछि नरभागबाट नर र सिंहको भागबाट नारायणको उत्पत्ति भयो । कालिकापुराण, अध्याय ३०, श्लोक १२४-१२७ । उत्पत्ति प्रसङ्ग फरक भएपनि उत्पत्तिको प्रयोजनमा भने समानता छ । यी सृष्टिका लागि उत्पन्न भएका थिए ।

**सूत उवाच** ॥ सूत मुनि भन्नुहुन्छ-

**जन्मेजयस्य यज्ञान्ते मुनयो ब्रह्मवादिनः ।**
**समागताः पुराणानां कथां चक्रुर्निरन्तरम् ॥२॥**
**मुनिमध्ये महातेजा जैमिनिः पर्यपृच्छत ।**
**मार्कण्डेयं महात्मानं भूय एव महाद्युतिम् ॥३॥**

राजा जनमेजयले यज्ञ गरेपछि जम्मा भएका ब्रह्मवादी मुनिहरूले लगातार पुराणका कथा भन्न थाले ।२। (यसै क्रममा) मुनिहरूका बीचमा रहेका महातेजस्वी जैमिनि मुनिले तेज एवं ज्ञानमा खानी समानका महात्मा मार्कण्डेय मुनिसँग (यो कुरा) जिज्ञासा राख्नु भयो ।३।

**जैमिनिरुवाच** ॥ जैमिनि भन्नु हुन्छ-

**भगवन् सर्वधर्मज्ञ त्रिकालज्ञ मुनीश्वर ।**
**त्वत्तः श्रुतानि सर्वाणि क्षेत्राणि फलदानि च ॥४॥**
**नेपालं च महाक्षेत्रं भुक्तिमुक्तिफलप्रदम् ।**
**वद तत् कीदृशं क्षेत्रंश्रोतुमुत्सुकितं मनः ॥५॥**

"हे भगवन् ! हे सबै धर्मका जानिफकार ! हे भूत, वर्तमान र भविष्यका ज्ञाता ! हे मुनिश्वर ! हजुरबाट फलदायी (अन्य) सबै तीर्थहरूको बारेमा सुन्यौ ।४। (अब) भोग र मोक्ष दिने नेपालका महातीर्थहरूका बारेमा (ती तीर्थ) के कस्ता हुन् भनी सुन्न मेरो मन उत्सुक छ, मलाई बताउनु होस्" ।५।

**मार्कण्डेय उवाच॥** मार्कण्डेय भन्नु हुन्छ -

**नेपालक्षेत्रमाहात्म्यं श्रृणु सावहितो मुदा ।**
**पीठानां परमं पीठं क्षेत्राणां क्षेत्रमुत्तमम्॥६॥**

नेपालतीर्थको माहात्म्य सावधान भई आनन्दले सुन्नु होस् । यो पीठहरूमध्येको श्रेष्ठ पीठ र तीर्थहरूमध्येको उत्तम तीर्थ हो ।६।

नोटः यस पुराणमा वर्णन भएका स्थानहरूको वर्णन हेर्दा नेपाल भन्नाले काठमाडौं उपत्यका तथा काभ्रे सिन्धुपाल्चोक, दोलखा, सिन्धुली, नुवाकोट, धादिङ्ग र मकवानपुरको केही भागलाई समेटेर बनेको क्षेत्र देखिन्छ । नेपालको प्रचीन सीमाका बारेमा थपघट भइरहने गरेको पाइन्छ । बृहस्पति सूत्रमा नेपाल एक सय चार योजन (१,२४८-१,५६० व.कि.मि.) को छ भनिएको पाइन्छ । काठमाडौं उपत्यकाको वर्तमान क्षेत्रफल ६६५ व.कि.मि. रहेबाट पनि तत्कालीन नेपालको सीमाका बारेमा केही अनुमान लगाउन सकिन्छ । पीठको अर्थ सती देवीको अङ्ग पतन भएर उत्पन्न भएको शक्तिशाली तीर्थस्थल भन्ने बुझिन्छ ।

**श्लेष्मान्तकवनं तस्य पुरा नाम प्रतिष्ठितम् ।**
**शालैस्तालैस्तमालैश्च हिन्तालैः परिपूरितम्॥७॥**
**खर्जूरैर्नागरङ्गैश्च बीजपूरैश्च मण्डितम् ।**
**नानानिर्झरणोपेत्तं नानापक्षिनिनादितम्॥८॥**
**वाग्वत्याः सरितस्तीरे सर्वत्र कुसुमान्वितम् ।**
**श्लेष्मान्तकवनं दृष्ट्वा पार्वत्या सह शङ्करः॥९॥**
**तुष्टोऽभूदतुलां प्रीतिं लेभे च मुनिसत्तम ।**
**काशीं विहाय कैलासमण्डलं सुमनोहरम्॥१०॥**
**पार्वत्या सहितो रुद्रः श्लेष्मान्तकवनं ययौ ।**
**अलक्षितो निजगणैर्मृगरूपं विधाय च॥११॥**
**मृग्या भवान्या सहितो रेमे तस्मिन् वने मुदा ।**
**श्लेष्मान्तकवनं रुद्रे प्रविष्टे पार्वतीयुते॥१२॥**
**अलक्षितः सुरगणैर्जगदासीत् समाकुलम् ।**
**ब्रह्मादयः सुरगणा मुनिभिर्नारदाभिः॥१३॥**
**त्रैलोक्यं बभ्रमुः सर्वे रुद्रान्वेषणतत्पराः ।**
**पुरे ग्रामे वने वाऽपि नद्यामुपवनेषु च॥१४॥**
**पर्वतेषु समस्तेषु ददृशुर्नैव शङ्करम् ।**
**भ्रमन्तो ह्यलसाः श्रान्ता हिमवन्तं नगेश्वरम्॥१५॥**
**जग्मुर्मुनिगणैः सार्द्धं शङ्करेऽर्पितमानसाः ।**
**कुक्षौ हिमवतो रम्ये श्लेष्मान्तकवने तदा॥१६॥**

त्यो (नेपालतीर्थ) को पुरानो नाम **<u>श्लेष्मान्तक वन</u>** थियो र साल, नरिवल, तमाल र साना नरिवलका वृक्षहरूले (त्यो वन) भरिभराउ थियो ।७। खयर, सुन्तला र बिमिरोका वृक्षले भरिएको थियो । अनेक झरना र अनेक थरी चराका सामूहिक आवाजले (त्यो वन) गुञ्जिने गर्दथ्यो ।८। बाग्मती नदीको किनारमा रहेको सर्वत्र फूल फुलिरहेको (यस्तो) श्लेष्मान्तक वनलाई देखेर हे मुनिश्रेष्ठ ! पार्वती सहित शङ्कर...।९। सन्तुष्ट हुनु भयो र अतुलनीय प्रीति (आनन्द) प्राप्त गर्नु भयो । (अनि) काशी तथा अती रमणीय कैलास पर्वतलाई छाडी...।१०। पार्वती सहित भगवान् रुद्र सेवकले नदेख्ने गरी हरिण(मृग)को रूप धारणगरी (उक्त) श्लेष्मान्तक वनमा जानु भयो ।११। मृगरूपी भगवान् शिव पार्वतीसँग उक्त वनमा रमाएर घुमफिर गर्न थाल्नु भयो । श्लेष्मान्तक वनमा पार्वती सहित भगवान् शिव गएपछि...।१२। अदृश्य हुनुभएका भगवान् शिवका कारण सारा संसार आत्तिन थाल्यो । (अनि) नारद आदि मुनि सहित ब्रह्मा आदि गरिएका सबै देवता...।१३। भगवान् शिवलाई खोज्न भनी तीनै लोकमा घुम्न लागे । तिनले शहर, गाऊँ, वन, नदी, उपवन...।१४। तथा सारा पर्वत (चहारे) तर शिव भगवान्लाई देखेनन् । खोज्दा खोज्दा थाकेर पर्वतराज हिमालय(श्रृङ्खला)को ...।१५। काखमा रहेको, सुन्दर श्लेष्मान्तक वनमा मुनिगण सहितका ती (देवताहरू) शिवमा अर्पित मन लिएर पुगे ।१६।



नोट : प्राचीन कालमा काठमाडौं उपत्यकामा घना जङ्गल थियो । वरिपरि रहेका डाँडाका केही भागमा मात्र मानिसहरुको बसोबास हुने गर्दथ्यो । गोपाल वंशावलीमा लेखिएको "...महारन्यभूते भूमण्डले...(ठूलो जङ्गल भएको भूभागमा)" भन्ने वाक्यांशले पनि यसको पुष्टि गर्दछ । घना जङ्गल भएपछि माथिको वर्णनमा कुनै अतिशयोक्ति देखिने कुरा पनि आएन । "श्लेष्मान्तक" को अर्थ लप्सी हुन्छ । लप्सीका रूख बढी भएका कारण त्यसबेला पशुपति मन्दिरको वरिपरिको जङ्गललाई श्लेष्मान्तक वन भनिएको हुनुपर्दछ । तर, माथि वनको वर्णन गर्दा अरु फलफूलको नाम दिएर लप्सीकै नाम किन राखिएन, त्यो भने विचारणीय छ ।

**एकश्रृङ्गं त्रिनेत्रं च पुष्टाङ्गमतिसुन्दरम् ।**
**मृगरूपधरं रुद्रं मृगीरूपधरां शिवाम् ॥१७॥**
**ददृशुर्विस्मिताः सर्वे मृगयूथसमन्वितम् ।**
**तुष्टुवुर्देवताः सर्वा नानास्तोत्रर्मुदान्विताः॥१८॥**

(त्यहाँ) एक सिङ, तीन आँखा र पुष्ट अङ्ग भएका अति सुन्दर मृगरूपी शिव र मृगिणीरूपी पार्वतीलाई...।१७। मृगको बथानमा सबैले अचम्मसँग देखे । (त्यसपछि) सबै देवताहरू खुसी भई अनेक स्तोत्रले स्तुति गर्न लागे ।१८। हे तपोधन (जैमिनि) ! तै

**तथाऽपि न जहौ रुद्रो मृगरूप तपोधन ।
चक्रुस्ते मन्त्रणां विप्र शक्रविष्णुविरञ्चयः ॥१९॥
शृङ्गं धृत्वा मृगस्यास्य स्थापयामो वशे वयम् ।
इति कृत्वा मतिं देवा ब्रह्मविष्णुसुरेश्वराः ॥२०॥
बलेन जगृहुः शृङ्गं पाणिभ्यां, मृगरूपिणः ।
धृते शृङ्गे सुरैः शीघ्रं मृगरूपी महेश्वरः ॥२१॥
उत्पफाल ततो जातं शृङ्गं खण्डचतुष्टयम् ।
उत्पत्य च महारुद्रः परे पारे मनोहरे ॥२२॥
वाग्वत्याः सरितस्तीरे नाम्ना पशुपतिः स्मृतः ।
ततो ब्रह्मादयो रुद्रमूचुः प्राञ्जलयः सुराः ॥२३॥
व्रज काशीं महारुद्र कैलासं वा मनोहरम् ।
त्वया विना जगच्छून्यं भाति नः सचराचरम् ॥२४॥
इत्याकर्ण्य वचो रुद्रो जगाद त्रिदशान् प्रति ।
स्थास्याम्यत्र वने रम्ये न यास्यामि च कुत्रचित् ॥२५॥
स्थितोऽहं पशुरूपेण श्लेष्मान्तकवने यतः ।
अतः पशुपतिर्लोके मम नाम भविष्यति ॥२६॥
ये मां पशुपतिं देवा द्रक्ष्यन्ति मनुजा भुवि ।
पशुजन्म न तेषां तु मत् प्रसादाद्भविष्यति ॥२७॥
मृगेन्द्रशिखराद्रम्यां मम हासाद्विनिर्गताम् ।
वाग्वतीं ये च द्रक्ष्यन्ति ते नराः पुण्यभागिनः ॥२८॥
मृगेन्द्रशिखरं गत्वा पीत्वा वै वाग्वतीजलम् ।
द्रक्ष्यन्ति मां पशुपतिं न ते स्युः पशवो द्विज ॥२९॥**

पनि शिवले मृगरूपलाई त्याग्नु भएन । हे जैमिनि ! तब इन्द्र, विष्णु र ब्रह्माले सल्लाह गरे (कि)...।१९। "हामी यो मृगको सिङमा समातेर यसलाई नियन्त्रणमा लिउँ" । यस्तो विचार गरी ब्रह्मा, विष्णु र इन्द्रले...।२०। बलपूर्वक उक्त मृगरूपी शिवको सिङ हातले समाते । सिङ समातिएपछि मृगरूपी शिव तुरुन्त...।२१। (बुर्लुक्क) उफ्रनु भयो र (समातिएको) सिङ चार टुक्रा हुन पुग्यो । **महारुद्र (भने अलप भई नदी) तरेर पारी गई सुन्दर...।२२। बाग्मती नदीको किनारमा पशुपतिका नामले रहनु भयो ।** त्यसपछि ब्रह्मा आदिले हात जोडेर भगवान् रुद्रलाई ( यसो) भन्न लागे...।२३। "हे महारुद्र ! काशी वा मनोहर कैलासमा हिँड्नु होस् । हजुर नभएर यो सारा जगत शून्य र चराचर सबै खल्लो भइरहेछ" ।२४। यो कुरा सुनेर भगवान् शिवले देवताहरूलाई भन्नु भयो–"म यो रमणीय वनमा नै बस्दछु, अन्त कतै जान्न.. ।२५। **म श्लेष्मान्तक वनमा पशुरूप लिएर बसेको छु, त्यसैले यो लोकमा मेरो नाम 'पशुपति' हुनेछ ।२६।** जो देवता वा मानिस पृथ्वीमा मेरो अर्थात् पशुपतिको दर्शन गर्दछन् तिनको मेरा कृपाले पशु जुनीमा जन्म हुने छैन ।२७।

**सुन्दर मृगेन्द्रशिखर (शिवपुरी) बाट मेरो हाँसोका कारण उत्पन्न भएकी बाग्मती नदीलाई जसले दर्शन गर्दछन् ती पुण्यशाली हुन्छन् ।२८।** मृगेन्द्रशिखरमा गई जसले बाग्मतीको जल पिई मेरो अर्थात् पशुपतिको दर्शन गर्दछन् हे द्विज ! ती पशुजुनीमा पर्दैनन् ।२९।



नोट : मृगेन्द्रको अर्थ सिंह हुन्छ । भगवान् विष्णुले नृसिंहको रूप लिई हिरण्यकशिपुलाई मारेपछि यही पर्वतमा आएर बसेको वा शिव भगवान्को शरभ रुपले उन्मत्त नृसिंहलाई बोकेर लेराई यहाँ राखेको जस्ता कथाहरु पाइन्छन् । यसैले यो पहाडको नाम मृगेन्द्रशिखर रहन गयो । काठमाडौंको उत्तर-पूर्वमा रहेको यो पहाडलाई आजकल शिवपुरी भनिन्छ । राजभोगमाला वंशावली, नेपाल राज्यको इतिहास आदि पुस्तकले पनि शिवपुरी नै मृगेन्द्रशिखर हो भनी उल्लेख गरेका छन् । वाग्वतीको उत्पत्तिका बारेमा स्कन्दपुराणकै हिमवत्खण्डमा लेखिएको कथा यस प्रकार छ : "प्रह्लादका रक्षाका लागि नृसिंह रुप धारण गरी हिरण्यकशिपुलाई मारेर थकित भएका भगवान विष्णु आराम गर्न हिमालयतिर गई सिंहको रुप लिएर रहेका थिए । नृसिंहलाई खोज्दै प्रह्लाद पनि पछिपछि गएका थिए । जब उनलाई भेट्टाएनन् तब त्यहीँ बसेर एक हजार वर्षसम्म कठीन तपस्या गरे । प्रह्लादको तपस्या देखेर भगवान् शंकर समेत प्रसन्न भई जोरले खित्का छोडेर हाँस्नु भयो । उहाँको त्यो हँसाइले हिमालयको गुफाबाट फिँज, तरङ्ग र मालाले सहित पुण्यजल भएकी निर्मल बागमती नदी निक्लिन् । त्यसपछि महादेवले प्रह्लादलाई भन्नु भयो "हे दैत्येन्द्र ! मेरे हाँसो वा वाक् वा वचनबाट यी नदी हिमालयबाट बाहिर निस्केकी हुनाले यिनको नाम वाग्वती रहनेछ । भगवान विष्णु यहाँ मृगेन्द्ररुपले बसेका हुनाले यो क्षेत्र वैष्णव क्षेत्र समेत हुनेछ । यसभन्दा माथि शिवलिङ्गमय शुभ स्थान छ, जुन संसारमा शिवपुरीका नामले प्रसिद्ध हुनेछ । वाग्वतीको मुहानमा नुहाएर जसले शिवपुरीको दर्शन गर्दछ, उसका जन्मजन्मान्तरका पाप निःसन्देह नष्ट हुने छन् । यति भनी महादेव अन्तर्ध्यान भए । वाग्वती शब्द अपभ्रंश हुँदै हुँदै बाग्मती हुन पुग्यो" । जहाँबाट वाग्वती निस्केकि थिइन् त्यो ठाउँमा रहेको ढुङ्गेधारालाई आजकल बाघको मुखुण्डो भिराएर राखिएको पाइन्छ, कालान्तरमा सम्भवतः वाग्वती नदीलाई बाघमती बनाइनेछ । वाग्द्वारमा हरेक वर्षको वैशाख १ गते मेला लाग्दछ ।

**पशुकुण्डे नरः स्नात्वा पदाऽऽक्रम्य मृगस्थलीम् ।
किरातेश्वरमभ्यर्च्य सर्वपापैः प्रमुच्यते ॥३०॥
कार्तिके कृष्णपक्षस्य चतुर्दश्यां मृगस्थलीम् ।
प्रदक्षिणां करिष्यन्ति ते नराः स्वर्गगामिनः ॥३१॥**

**जोजसले पशुकुण्ड (गुह्येश्वर कुण्ड) मा नुहाई मृगस्थली नाघेर गई किरातेश्वर महादेवको पूजा गर्नै छन् ती सबै पापबाट मुक्त हुने छन् ।३०। जो कार्तिक कृष्ण चतुर्दशी (कुकुर तिहार) का दिन मृगस्थलीको परिक्रमा गर्दछन् ती मानिस स्वर्ग जान्छन् ।३१।**

**इन्द्रेण विष्णुना धात्रा यद्यच्छृङ्गं धृतं मम ।**
**आत्माभिलषिते स्थाने तं लिङ्गं स्थाप्यतां मम ॥३२॥**

इन्द्र, विष्णु र ब्रह्माका हातमा जुन मेरो सिङ(को टुक्रा) समाइएको छ, त्यो आफूले चाहेको स्थानमा (लगी) शिवलिङ्गकोरूपमा स्थापना गर्नू" ।३२।

नोट : अलि अग्लो स्थानमा रहेको समथर जमिनलाई स्थली वा थली भनिन्छ । मृग घुम्ने यस्तो जग्गालाई मृगस्थली भनिन्छ । पशुपति र गुह्येश्वरीको बीचमा रहेको डाँडामाथि जुन समथर भाग छ मृगस्थली त्यही हो । अहिले सम्म ठाउँ जति मानिसले ओगटेर भीरलाई बार बारी मृग पाल्दै त्यसैलाई मृगस्थली बनाइएको छ । किरातेश्वर उत्पत्तिको कथा भने स्वस्थानीको कथामा बताइएको कथासँग नै मिल्दोजुल्दो पाइन्छ । अहिलेको गुह्येश्वरीको मूल मन्दिर र यसको पश्चिम-उत्तर भागमा नजिकै रहेका गुह्येश्वर रहेको स्थानमा पहिले ससाना कुण्ड थिए होलान् । त्यसैले पनि नेपाल राज्यको इतिहासमा गुह्येश्वर रहेको स्थान नै पशुकुण्ड हो भनिएको पाइन्छ ।

**एतस्मिन्नन्तरे गौरी महादेवमुवाच तम् ।**
**वाग्वत्याः सरितस्तीरे स्थास्यामि तव सन्निधौ ॥३३॥**
**श्रुत्वा गिरिसुतावाक्यमुवाच गिरिजापतिः ।**
**अत्यन्तगुप्तं गिरिजे कथयामि तवाग्रतः ॥३४॥**
**पूर्वे भवे दक्षकन्या सती नाम्ना व्यवस्थिता ।**
**अपमानेन तातस्य प्राणांस्त्यक्तास्त्वया शिवे ॥३५॥**
**मया स्नेहेन ते देवि कुणपं कण्ठसंस्थितम् ।**
**कृत्वा महीपर्यटनं कृतं शोकाकुलेन च ॥३६॥**
**शोकाकुलं च मां दृष्ट्वा विष्णुस्नेहवशेन मे ।**
**सुदर्शनेन चिच्छेद तवाङ्गानि स्थले स्थले ॥३७॥**
**तवाङ्गं पतितं गुह्यं वाग्वतीनटिनीतटे ।**
**मृगस्थल्यां उदीच्यां तु तत् पीठं परमं महत् ॥३८॥**
**मम वात्सल्यतो यस्मात् स्थातुमिच्छसि पार्वति ।**
**तस्मात् ते वत्सला नाम भविष्यति वरानने ॥३९॥**
**ममाग्नेय्यां सदा तिष्ठ ममाज्ञातो महेश्वरि ।**
**वाग्वत्याः पयसि स्नात्वा दृष्ट्वा त्वां वत्सलां शिवे ॥४०॥**
**द्रक्ष्यन्ति मां नरा ये वै ते स्युः कैलासगामिनः ।**
**मत्सन्निधौ तेऽन्तिके वा गुह्येशीसन्निधावपि ॥४१॥**
**ये जपन्ति नरा भक्त्या तेषां सिद्धिर्भविष्यति ।**
**इत्याकर्ण्य वचो देवी शङ्करस्य शुभाशयम् ॥४२॥**
**स्थिता सा वत्सला तत्र वाग्वत्याः सरितस्तटे ।**
**विष्णुस्तच्छृङ्गमादाय पशुपाशविमोचनम् ॥४३॥**
**उत्तरे वाग्वतीतीरे सुतुङ्गे सुमनोहरे ।**
**स्थापयामास तल्लिङ्गं सर्वपापैः प्रमुच्यते ॥४४॥**
**भाद्रमासे त्वमावास्यां तिथौ गोकर्णसन्निधौ ।**
**ये पिण्डान् पातयिष्यन्ति तारयिष्यन्ति ते पितॄन् ॥४५॥**
**भृगुपातं करिष्यन्ति गोकर्णेश्वरसन्निधौ ।**
**तेषां मनोरथाः सर्वे भविष्यन्ति न संशयः ॥४६॥**
**ब्रह्माऽपि श्रृङ्गमादाय तदा दक्षिणसारणम् ।**
**गत्वा संस्थापयामास गोकर्णेश्वरमुत्तमम् ॥४७॥**
**तद्दक्षिणं तु गोकर्णं क्षेत्राणां क्षेत्रमुत्तमम् ।**
**इन्द्रोऽपि श्रृङ्गमादायमरावत्यां द्विजोत्तम ॥४८॥**
**स्थापयामास तल्लिङ्गं सर्वकामफलप्रदम् ।**
**वाग्वत्याः सरितस्तीरे पशुपाशविमोचनम् ॥४९॥**
**एवं श्लेष्मान्तकवने नाम्ना पशुपतिः स्मृतः ।**

यसपछि पार्वतीले महादेवसँग भन्नु भयो-"हे नाथ ! वाग्मती नदीका किनारमा हजुरका नजिकै म पनि बस्न पाउँ" ।३३। पार्वतीको कुरा सुनेपछि शिव भन्नु हुन्छ-"हे पार्वती ! म तिमीलाई अत्यन्त गोप्य कुरा बताउँदछु" ।३४। "पूर्वजन्ममा तिमी दक्षकी छोरी सती नामले उत्पन्न भएकी थियौ । हे शिवे ! तिमीले ( त्यसबेला) पिताले गरेको (मेरो) अपमानका कारण प्राण त्यागेकी थियौ ।३५। हे देवी ! म प्रेमपूर्वक तिम्रो मृतदेह काँधमा बोकी शोक गर्दै पृथ्वी घुमिरहेको थिएँ ।३६। मलाई शोकाकुल भइरहेको देखी विष्णुले माया गर्दै सुदर्शन चक्रले तिम्रो मृतदेहलाई ठाउँठाउँमा काटी दिए ।३७। (यसरी काटिए पछि) तिम्रो गुह्य ( गुप्त) अङ्ग बाग्मती नदीको किनारमा खसेको थियो । (त्यसपछि उत्पन्न भएको) मृगस्थलीको उत्तर दिशामा रहेको तिम्रो उक्त श्रेष्ठ पीठ भव्य छ ।३८। हे पार्वती ! तिमी मेरो वात्सल्यताका लागि यहाँ बस्न चाहिरहेकी छौ, त्यसैले हे सुन्दरी ! तिम्रो नाम "वत्सला" हुनेछ ।३९। हे महेश्वरी ! मेरा आज्ञाले मेरै नजिक आग्नेय दिशा (पूर्व र दक्षिणको बीच) मा सधैं बस । हे शिवे ! बाग्मतीको जलमा नुहाएर तिम्रो (वत्सलाको) दर्शन गरी..।४०। जो मानिस मलाई पुज्दछन् ती कैलास जान्छन् । जो मानिस मेरा नजिक वा गुह्येश्वरीका नजिक...।४१। भक्तिपूर्वक जपध्यान गर्दछन् ती मोक्ष हुन्छन्" । यसरी देवीले भगवान् शङ्करको आशीर्वाद सुनेपछि..।४२। (उनी) बाग्मतीको किनारमा "वत्सला" नामले बस्न थालिन् । (उता) विष्णुले त्यो पाशविमोचन गर्ने सिङलाई लगी.. ।४३। बाग्मतीको उत्तर दिशामा रहेको केही अग्लो सुन्दर किनारामा (शिवलिङ्गकारूपमा) स्थापना गर्नु भयो । यो गोकर्णेश्वर शिवलिङ्गले सबै खाले पाप पखाल्दछ ।४४। भदौको (कुशे) औंशीमा गोकर्ण नजिक गई जसले पिण्डदान (श्राद्ध) गर्दछ, उसका पितृहरू तृप्त (मोक्ष) हुन्छन् ।४५। गोकर्णेश्वर नजिक जसले भृगुपात गर्दछ उसका सबै मनोरथ सिद्ध हुन्छन्, यसमा शङ्का छैन ।४६। ब्रह्माले पनि आफ्नो हातको सिङ लगेर दक्षिणसार (भारतको समुद्रतटमा रहेको एक पर्वत, जुन केही कालपछि समुद्रमा डुबेको थियो) गोकर्णेश्वर नामको उत्तम शिवलिङ्गको स्थापना गर्नु भयो ।४७। गोकर्णेश्वरभन्दा दक्षिणको दक्षिण-गोकर्ण नामको यो उत्तम तीर्थ तीर्थहरूमा श्रेष्ठ तीर्थ हो । हे उत्तम द्विज ! इन्द्रले पनि आफ्नो

हातमा रहेको सिङलाई लगी अमरावती (स्वर्ग) मा..।४८। **सर्वकामफलदा नामक शिवलिङ्गको स्थापना गरे । बाग्मतीको किनारमा पशुपाशविमोचन लिङ्ग छ ।४९। श्लेष्मान्तक वनमा ( रहेको) त्यही शिवलिङ्ग पशुपतिका नामले प्रख्यात भएको छ (दुबै एकै हुन्) ।**

नोटः भृगुपातको अर्थ कुनै भीर वा पर्वतको चुचुरोबाट हाम फाल्नु भन्ने हुन्छ । गोकर्ण नजिक डरलाग्दा भीर पहरा पनि छन् । यसको अर्को कुनै अर्थ खोज्न सकिएन । भृगुको एउटा अर्थ पञ्चाग्नि ताप्नेजस्ता काम गरी तपस्या गर्नु भन्ने हुन्छ । तर अन्य प्रसङ्गहरू हेर्दा यहाँ पहिलो अर्थलाई बुझाउन खोजिएको देखिन्छ । प्रायः सबै शास्त्रमा आत्महत्यालाई अरुको हत्या गर्नु सरहको पाप हो भनी बताइएको हुनाले यस प्रसङ्गका बारेमा किटेर यसै भनिएको हो भन्न सकिएन ।

**जैमिनिरुवाच ॥** जैमिनि भन्नु हुन्छ-

**पार्वत्या सहिते रुद्रे स्थिते श्लेष्मान्तके वने ॥५०॥**
**किमकारि सुरैः सर्वैस्तन्ममाचक्ष्व सुव्रत ।**

श्लेष्मान्तक वनमा पार्वती र शिव रहन बस्न थालेपछि...।५०। हे सुव्रत ! सबै देवताहरूले के गरे ? हजुर मलाई बताउनु होस् ।

**मार्कण्डेय उवाच ॥** मार्कण्डेय भन्नु हुन्छ-

**स्थिते पशुपतौ तत्र सर्वे ये देवता गणाः ॥५१॥**
**स्वस्वक्षेत्रं परित्यज्य श्लेष्मान्तकवने स्थिताः ।**
**राढातः कालिका देवी श्लेष्मान्तकवने गता ॥५२॥**
**जयवागीश्वरी नाम्ना प्रसिद्धा क्षेत्रसत्तमे ।**
**येऽस्या भक्ता भविष्यन्ति यास्यन्ति परमां गतिम् ॥५३॥**
**याः स्त्रियश्चार्चयिष्यन्ति देव्यै हंसं मनोहरम् ।**
**अनुयास्यन्ति ताः सर्वाः प्रियं यमपुरं गतम् ॥५४॥**



पशुपति त्यहाँ बसेपछि सबै देवताहरू (पनि)..।५१। आआफ्ना तीर्थ छाडेर श्लेष्मान्तक वनमा रहन थाले । राढाबाट कालिका देवी श्लेष्मान्तक वनमा आइन् ।५२। उनी जयवागीश्वरीका नामले त्यो उत्तम क्षेत्रमा प्रसिद्ध भइन् (छिन्) । जो मानिस यिनका भक्त हुन्छन् ती मोक्ष हुन्छन् ।५३। जुन स्त्री यि देवीको पूजा गर्दछन् ती सुन्दर हाँसमाथि चढी पतिसहित यमपुर (मोक्षधाम) जान्छन् ।५४।

नोट : राढा भनेको (गौढं राष्ट्रमनुत्तमं निरुपमा तत्रापि राढापुरी- प्रवोधचन्द्रोदय, दोश्रो अङ्क, श्लोक ७), अहिलेको पूर्वी बङ्गालमा रहेको प्राचीन राज्य अन्तर्गतको एक शहर हो । यस पुराणको उल्लेखित प्रसङ्गमा वनकाली नै जयवागीश्वरी हुन् भनिएको छ । तर राजभोगमाला वंशावलीमा अहिले वनकाली रहेको स्थानमा वनकालीलाई खनीखोजी बाहिर लेराएको र त्यहीँ वनगणेशको समेत स्थापना गरेको प्रसङ्ग पाइन्छ । यही वंशावलीले जयवागीश्वरीको मूर्ति मानसरोवरबाट नदी तरी वा तारी आएको वा लेराइएको कुरा उल्लेख गरेको छ । राज वंशावलीमा पनि यही कुरा लेखिएको पाइन्छ ।

**त्रिपुरातः समायाता राजराजेश्वरी शिवा ।**
**अस्या दर्शनमात्रेण दरिद्रोऽतिसुखी भवेत् ॥५५॥**
**पातालमूलमुत्सृज्य वासुकिर्नागसत्तमः ।**
**उत्तरे देवदेवस्य स्थितो निजगणैर्वृतः ॥५६॥**

त्रिपुराबाट राजराजेश्वरी (पार्वतीको एकरूप) आएकी छिन् । यिनको दर्शन गर्नाले दरिद्र पनि सुखी हुन्छ ।५५। पाताललाई छाडेर नागराज वासुकि आए र आफ्ना गणसहित भगवान् पशुपतिका उत्तरतिर गई बसे ।५६।

नोट : अहिले भारतको मध्य प्रदेश समेत समेटिएको चेदी नामक एक प्राचीन देशको एक शहरलाई त्रिपुरा भनिन्थ्यो ।

**सौराष्ट्रदेशादागत्य बुद्धरूपी जनार्दनः ।**
**मणिधातौ गिरिवरे तपस्यामकरोद्वशी ॥५७॥**
**तपस्यतो गिरिवरे पञ्चाग्निज्वालया भृशम् ।**
**प्रस्वेदान्निर्गता सद्यो नाम्ना मणिमती नदी ॥५८॥**
**तपस्य कुर्वतस्तस्य बुद्धस्य गिरिजा तदा ।**

बुद्ध अवतार लिएका विष्णु सौराष्ट्रबाट आई मणिधातु पर्वतमा जितेन्द्रिय भई तपस्या गर्न लाग्नु भयो ।५७। त्यहाँ तपस्या गर्दा पञ्चाग्निको रापले उहाँको शरीरबाट जुन पसिना निस्कियो त्यो त्यहाँ तुरुन्तै मनोहरा नदी बन्न गयो ।५८। बुद्धको तपस्याले प्रसन्न भएकी पार्वती त्यहाँ वज्रजोगिनी नामले प्रसिद्ध हुन पुगिन् ।५९।

**तुष्टा बभूव प्रकटा नाम्ना सा वज्रयोगिनी ॥५९॥**
**उवाच गिरिजा बुद्धं वरं वरय सुव्रत ।**
**श्रुत्वा गिरिसुता वाक्यमुवाच भगवाँस्तदा ॥६०॥**
**सदाचारपरा लोका ह्यस्मिन् देशे भवन्त्विति ।**
**बुद्धवाक्यं शिवा श्रुत्वा प्राह तं भक्तवत्सला ॥६१॥**
**शिवेन रचितं क्षेत्रं भवताऽपि तपः कृतम् ।**
**अतः क्षेत्रोत्तमे बुद्ध शैवाचारपरायणाः ॥६२॥**
**बौद्धाचारपरा लोका भविष्यन्ति न संशयः ।**
**वाग्वत्या मणिमत्याश्च सङ्गमे क्षेत्रसत्तमे ॥६३॥**
**शिवधर्मपरो भूत्वा लिङ्गं संस्थापय प्रभो ।**
**श्रुत्वा गिरिसुतावाक्यं बुद्धः कारुणिकस्तदा ॥६४॥**
**सङ्गमे स्थापयामास लिङ्गं कारुणिकेश्वरम् ।**
**भाद्रमासे सिताष्टम्यां लिङ्गं कारुणिकेश्वरम् ॥६५॥**
**ये द्रक्ष्यन्ति नरा भक्त्या ते च वै स्वर्गगामिनः ।**
**तस्मिने प्रदेशे गिरिजा जाता वै वज्रयोगिनी ॥६६॥**
**भक्तलोकहितार्थाय स्थिता वै तत्र पर्वते ।**
**एवं च देवताः सर्वाः श्लेष्मान्तकवने शुभे ॥**
**तदा पशुपतिप्रेम्णा नानास्थानेषु संहिताः ॥६७॥**

गिरिजाले बुद्धलाई "हे सुव्रत ! वरदान माग" भनिन् । पार्वतीले यति भनेपछि बुद्ध भगवान् भन्न लाग्नु भयो..।६०। "हे देवी ! यस देशका बासिन्दा सदाचारी होउन्" । बुद्धका कुरा सुनी भक्तवत्सला पार्वतीले उहाँलाई भन्नु भयो-"यो शिवबाट रचना गरिएको तीर्थ हो । हजुरले तपस्या गर्नु भयो त्यसैले हे बुद्ध ! यो तीर्थमा शैवाचारी (एवं)..।६१-६२। बौद्धाचारी मानिस हुने छन् । यो कुरामा शङ्का छैन । किन कि **<u>बाग्मती र मनोहराको दोभान</u>**लाई उत्तम तीर्थस्थल (मानिएको) छ ।६३। हे बुद्ध प्रभू ! हजुर शैवधर्मी भएर शिवलिङ्ग स्थापना गर्नु होस् । पार्वतीका वचन सुनी दयालु (कारुणिक) बुद्ध भगवानले त्यो दोभान **<u>(शङ्खमूल)</u>** मा भाद्रशुक्ल अष्टमीका दिन **<u>कारुणिकेश्वर नामको शिवलिङ्ग</u>** स्थापना गर्नु भयो ।६४-६५। जो मानिस श्रद्धाभक्तिपूर्वक उनको पूजा गर्दछन् ती स्वर्ग जान्छन् । त्यही स्थानमा पार्वती वज्रजोगिनी रूपले रहेकी छिन् ।६६। भक्तजनका हितका लागि उनी त्यो पर्वतमा बस्दछिन् । यसरी नै देवगण पनि पशुपति प्रेमका कारण अनेक ठाउँबाट आई पवित्र श्लेष्मान्तक वनमा रहेबसेका छन् ।६७।

नोट : सौराष्ट्र वर्तमान भारतको गुजरात प्रान्त आसपासको प्राचीन राज्यको नाम हो । मणिधातु पर्वतको नाम मणिचूड पर्वत हो । पुराणमा मनोहरा खोलालाई "मणिमती" र उक्त खोलाको मुहान अर्थात् साँखु, काठमाडौंको बज्रयोगिनी मन्दिर रहेको डाँडोलाई मणिचूड पर्वत भनिएको पाइन्छ । गौतम बुद्धजस्तै त्यसअघि पनि अनेकौं बुद्धहरू थिए । ज्ञान प्राप्त व्यक्तिलाई वुद्ध भनिन्छ । उल्लेखित प्रसङ्गका बारेमा भने आजकल विवाद हुने गरेको पाइन्छ ।



**इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये पशुपतिप्रादुर्भावो नाम प्रथमोऽध्यायः ॥१॥**

स्कन्दपुराण, हिमवत्खण्ड, नेपालमाहात्यमका पशुपतिनाथको उत्पत्ति सम्बन्धी कुरा वर्णन भएको पहिलो अध्याय सकिएको छ ।१।

**श्लोकानामादितः समष्ट्यङ्काः-०+६७=६७**

शुरुदेखिको श्लोक सङ्ख्या :-०+६७=६७

(चित्रकार :- डा.हेनरी एम्ब्रुस ओल्डफिल्ड, श्रोत :- ब्रिटिश लाइब्रेरीको वेभसाइट, सङ्कलन :- मोहन प्रसाद सापकोटा)



श्रीपशुपतिनाथ, काठमाण्डौ, नेपाल (वि.सं.१९१३)

(चित्रकार :- डा.हेन्री एम्ब्रुस ओल्डफिल्ड, श्रोत :- ब्रिटिश लाइब्रेरीको वेबसाइट, सङ्कलन :- मोहन प्रसाद् सापकोटा)



गुह्येश्वरी मन्दिर, काठमाडौं (वि.सं.१९१३)

सङ्कलन : मोहन प्रसाद सापकोटा



काठमाडौं : पशुपतिमा रहेको वत्सला देवीको मन्दिर, ई.सं. १९०५-१९२५ (श्रोत: मदन पुरस्कार पुस्तकालय)



गोकर्णेश्वर मन्दिर, काठमाडौं । तस्विर श्रोत : पी.भी.सी. अल डिफिनव्याच । खिचिएको साल : वि.सं. २०३१

तस्विर श्रोत : दैनिक नेपाल, संकलन : मोहन प्रसाद सापकोटा



जयवागेश्वरी मन्दिर, काठमाडौं


सङ्कलन : मोहन प्रसाद सापकोटा
राजराजेश्वरी मन्दिर (शिखरशैलीको सेतो) एवं घाट, पशुपति क्षेत्र। तस्विर श्रोत : पी.सी.भी. हग हल। खिचिएको साल : वि.सं. २०२५।




पशुपतिनाथ परिसरमा रहेका पशुपति, वासुकी आदि मन्दिर, तस्विर श्रोत: मदन पुरस्कार पुस्तकालय, वि.सं.१९६७

संकलन : मोहन प्रसाद सापकोटा



वज्रयोगिनी मन्दिर, साँखु, काठमाडौं (तस्बिर श्रोत: विकिमेडिया)

## ॥ अथ द्वितीयोऽध्यायः ॥
## ॥ दोश्रो अध्याय ॥

**जैमिनिरुवाच ॥ जैमिनि भन्नु हुन्छ-**

**केषु स्थानेषु के देवाः श्लेष्मान्तकवने स्थिताः ।**
**वद सर्वं महाभाग श्रोतुमिच्छा प्रजायते ॥१॥**

श्लेष्मान्तक वनका कुन ठाउँमा कुन देवता बसे ? हे महाभाग ! सबै बताउनु होस् । मलाई सुन्न मन लागि रहेको छ ।१।

**मार्कण्डेय उवाच ॥ मार्कण्डेय भन्नु हुन्छ-**

**सन्ति तीर्थान्यनेकानि श्लेष्मान्तकवने शुभे ।**
**देवताः सकलास्तत्र स्थिता भक्तवरप्रदाः ॥**
**तथाऽपि मुख्यतीर्थानां कानिचित् कथयामि ते ॥२॥**

श्लेष्मान्तक नामक शुभ वनमा अनेक तीर्थ छन् । त्यहाँ भक्तलाई वर दिने भएका सबै देवता बस्न गएका थिए । म तिमध्ये केही प्रमुख तीर्थ वर्णन गर्दछु ।२।

**दोलागिरौ चम्पकवृक्षनिर्गतो**
**भक्तानुकम्पी गरुडध्वजो हरिः ।**
**यन्नाम संकीर्तनतो भुजङ्गमो**
**महाविषो निर्विषतामुपैति ॥३॥**

दोलागिरी पर्वत (चाँगु) मा चाँप वृक्षबाट उत्पन्न भई भक्तलाई अनुकम्पा गर्नु हुने, गरुडध्वज हरि रहनु भयो । जसको नाम जप्नाले महाविषधारी सर्प पनि विषलाई त्यागि दिन्छ र विषहीन हुन्छ ।३।

**जैमिनिरुवाच ॥ जैमिनि भन्नु हुन्छ-**

**कथं चम्पकवृक्षात् तु निर्गतो गरुडध्वजः ।**
**तद् ब्रूहि त्वं महाभाग श्रोतुकामास्तपोधन ॥४॥**

चाँपको रुखबाट भगवान् गरुडध्वज कसरी प्रकट हुनु भयो ? हे महाभाग ! हे तपोधन ! त्यो वृत्तान्त हजुर भन्नु होस् म सुन्न चाहन्छु ।४।



**मार्कण्डेय उवाच ॥ मार्कण्डेय भन्नु हुन्छ-**

**तपोधन कथामेतां मत्तः सावहितः शृणु ।**
**आसीत्सुदर्शनः कश्चित्तापसः कोपनः शुचिः ॥५॥**
**दोलागिरिवरे चक्रे तपोवनमनुत्तमम् ।**
**तस्यैका कपिला धेनुः कामधेनुरिवापरा ॥६॥**
**तस्या दुग्धेन स मुनिर्हव्यकव्यादिकं स्वयम् ।**
**प्राणयात्रां च विदधे यतात्माऽतिथिपूजकः ॥७॥**
**एकदा कपिला तस्य भ्रमन्ती चम्पके गता ।**
**चम्पकाद्बहिरागत्य पुरुषः कोऽपि शोभनः ॥८॥**
**तस्या दुग्धं स्वयं पीत्वा चम्पकाभ्यन्तरं ययौ । तस्या**
**दुग्धं मुनिर्नैव लेभे यज्ञपरायणः ॥९॥**
**याति चम्पकमूलं सा क्षीरं च पुरुषः पपौ ।**
**अलब्ध्वा कपिलाक्षीरं मुनिर्वै सप्त वासरान् ॥१०॥**
**चुकोपातीव संक्रुद्धो वचनं चेदमब्रवीत् ।**
**यः पिबत्येव कपिलादुग्धं हव्यनिमित्तिकम् ॥११॥**
**शिरश्छेत्स्यामि दुर्बुद्धेर्यद्यहं तपसो निधिः ।**
**इत्युक्त्वा सनकैर्विप्रः कपिलापृष्ठतो ययौ ॥१२॥**
**अलक्षिते तरुतले कपिला चम्पकं ययौ ।**
**चम्पकाद्बहिरागत्य कपिलायाः पपौ पयः ॥१३॥**
**यावत् पीत्वा तरुतलं तावत् स तपसो निधिः ।**

हे तपोधन ! यो कथा मबाट सावधान भई सुन्नु होस् । ( प्राचीनकालमा) सुदर्शन नामका एक रिसाहा तपस्वी थिए ।५। श्रेष्ठ दोलागिरी पर्वतको तपोवनमा उनी तपस्या गर्दथे । उसकी कामधेनु समान एउटी कैली गाई थिइन् ।६। तिनै गाईको दूधले उनी होम आदि कर्म, प्रसन्नतापूर्वकको जीवन गुजारा र अतिथि पूजा (समेत) गर्दथे ।७। एक दिन उनकी गाई चर्दै एउटा चाँपको रुख भएतिर गइन् । त्यहाँ त्यो रुखबाट कुनै एउटा सुन्दर पुरुष बाहिर आई उनको दूध पियो र पिइसकी फेरी उ चाँपको रुखमा गयो । (यसपछि) यज्ञ गर्ने (ती) मुनिले ती गाईबाट दूध पाएनन् ।८-९। (यसरी) ती गाई चाँपको रुखसम्म जान्थिन् र त्यो पुरुष (पनि चाँपको रुखबाट निस्केर) दूध पिउने गर्दथ्यो । एवं रीतले सात दिनसम्म ती तपस्वीले कैली गाईको दूध पाएनन् ।१०। अनि ती तपस्वीले रिसले मुरमुरिएर भने-"जसले यी (मेरी) कामधेनु समानकी गाईको मैले होमगर्ने गरेको दूध पिउने गर्दछ, यदि म तपस्वी हुँ भने म त्यसको टाउको छिनाल्दछु (छिनाल्न सकूँ)" । यति भन्दै ती तपस्वी गाईको पछिपछि गए ।११-१२। जरा नदेखिने चाँपको रुखसम्म ती गाई गइन्, अनि चाँपको रुखबाट बाहिर आई (एउटा) पुरुषले ती कैली गाईको दूध पियो ।१३। जब त्यो जरा नदेखिने रुखमुनि आई पुरुषले कपिला

शिरश्चिच्छेद खड्गेन पुरुषस्यातिकोपनः॥१४॥
विच्छिन्नशिरसस्तस्य पुरुषस्य तदा वपुः ।
शङ्खचक्रगदापद्मसमायुक्तं बभूव च॥१५॥
गरुडोपरि तं दृष्ट्वा विशिरस्कं तदा मुनिः ।
विषण्णोऽभवदत्यन्तं किं कृतं च मया पुनः॥१६॥
गर्हयामास चात्मानं भूयो भूयस्तपोधनः ।
मूर्छामवाप महतीं संज्ञां लब्ध्वा तपोधनः॥१७॥
निधनायोद्यतः सद्यः प्रायश्चित्तं चराम्यहम् ।
मरणायोद्यतं दृष्ट्वा प्राह नारायणो मुनिम्॥१८॥
माभैषीस्त्व मुनिश्रेष्ठ मा विषादो भवत्विति ।
त्वया कृतं सम्यगेव तुष्टोऽहं ते तपोधन॥१९॥
भयं त्यज मुनिश्रेष्ठ वरं वरय सुव्रत ।
निशाम्य नारायणवाक्यमुत्तमं
तपोधनो भीतिमुदस्य तत्क्षणात् ।
कृताञ्जलः प्राह महापकारिणे
वरं ददासीश विडम्बनं हि तत्॥२०॥
अधमं मां दुरात्मानं कर्म चाण्डालतां गतम् ।
सुदर्शनेन चक्रेण जहि मां मधुसूदन॥२१॥
यस्य देवाः सगन्धर्वा युद्धे सासुरमानुषाः ।
लोमछेत्तुं न शक्ताः स्युस्तस्यच्छिन्नं मया शिरः॥२२॥
श्रुत्वा सुदर्शनवचः प्राह नारायणस्तदा ।
श्रूयतां मुनिशार्दूल येनच्छिन्नं शिरो मम॥२३॥
आसीत् पुरा चण्डनामा दानवोऽतिपराक्रमः ।
वाराणस्यां तपस्तेपे शिवाराधनतत्परः॥२४॥
दानवेन्द्रे सुतुष्टोऽभूदुमानाथः शिवायुतः ।
वरं वरय दैत्येन्द्र तव यन्मनसेप्सितम्॥२५॥
महादेववचः श्रुत्वा दानवेन्द्रस्तपोधन ।
स्त्रियं विना सवसत्त्वावध्यं वव्रे वरं तदा॥२६॥
शुक्राचार्यस्य शिष्योऽभूत् सुमतिर्धर्मतत्परः ।
शिष्यः परशुरामस्य धनुर्विद्याविशारदः॥२७॥
सखा स दानवपतेरत्यन्तं प्रियदर्शनः ।
यानपानाशने तस्य निर्विशेषोऽभवद्द्विजः॥२८॥
शिवस्य वरलाभेन सुमतेश्च प्रसादतः ।
त्रैलोक्यराज्यं बुभुजे चण्डनामा स दानवः॥२९॥
पीडितास्तेन दैत्येन देवाः सेन्द्रपुरोगमाः ।
गत्वा च क्षीरजलधिं तुष्टुवुः कमलेक्षणम्॥३०॥
तुष्टो भूत्वा जगन्नाथः प्रोवाच बलसूदनम् ।
तवागमनकृत्यं यद्वद शीघ्रं करोम्यहम्॥३१॥
श्रुत्वा नारायणवचः प्रोवाच बलसूदनः ।
युद्ध्यस्व चण्डदैत्येन देवार्थं पुरुषोत्तम॥३२॥
स तथेति प्रतिज्ञाय दैत्यारिस्त्रिदशैः सह ।
ययौ चण्डपुरं योद्धुं दैत्येन्द्रेण बलीयसा॥३३॥
आगतं सुरसैन्यं च श्रुत्वा चण्डासुरो रुषा ।
असंख्यैर्दितिजैर्युक्तः स्वपुरान्निर्ययौ बहिः॥३४॥
ततः समभवद्युद्धं तुमुलं लोमहर्षणम् ।

गाईको दूध पिइ सकेको थियो तब ती तपस्वीले रिसाई धारिलो तरबारले उसको टाउको काटि दिए ।१४। टाउको काटिएको त्यो पुरुषका शरीरबाट (अकस्मात्) शङ्ख, चक्र, गदा र पद्म प्रकट भए ।१५। त्यसबेला ती तपस्वीले शिररहित त्यो पुरुषलाई गरुडमा चढिरहेको देखे र अत्यन्त दुःखी हुँदै भने-"यो मैले कस्तो गलत काम गरें" ।१६। ती तपस्वीले बारंबार आफूलाई धिक्कारे र डरलाग्दो गरी मूर्छा परे । होस आएपछि "यसैबाट मेरो मुक्ति हुन्छ" भन्ने सोची आफैंले आफूलाई मार्न तयार भए । यस्तो प्रयास गरिरुहेका ती तपस्वीलाई विष्णु भगवानले भन्नु भयो..।१७-१८। हे मुनिश्रेष्ठ ! नडराउ, पश्चाताप नगर, तिमीले राम्रै गर्‍यौ । हे तपोधन ! म तिमीसँग प्रसन्न छु ।१९। हे मुनिश्रेष्ठ ! नडराउ, हे सुव्रत ! वरदान माग । विष्णु भगवानका उत्तम वचन सुनी तपस्वीले डर नमानी हात जोडेर भने-"हे भगवान् ! मजस्तो ठूलो अपराधीलाई (पनि) हजुर वरदान दिनु हुन्छ, यो त अत्यन्त अचम्मको कुरा भयो" ।२०। हे मधुसूदन ! मजस्तो दुरात्मा, अधम र चाण्डाल- कर्म गर्ने व्यक्तिलाई सुदर्शन चक्रले मारि दिनु होस् ।२१। जुन भगवानको देवता, गन्धर्व, असुर र मानव युद्धमा रौं समेत उखेल्न सक्दैनन्, त्यस्ता भगवान्को मैले शिर (नै) काटि दिएँ ।२२। सुदर्शनका कुरा सुनेर भगवान् नारायण भन्नु भयो- "हे मुनिश्रेष्ठ ! मेरो टाउको काटिनु पछाडिको कारण सुन" ।२३। प्राचीनकालमा एउटा चण्ड नाम गरेको अति पराक्रमी दानव थियो । उसले वाराणसीमा शिवको ध्यान गर्दै कठोर तपस्या गरेको थियो ।२४। त्यो दानवेन्द्रको तपस्याबाट उमापति भगवान् शिव पार्वतीसहित प्रसन्न हुनु भई भन्नु भयो-"हे दैत्येन्द्र ! तिम्रो मनले चाहेको वरदान माग" ।२५। हे तपोधन ! महादेवका वचन सुनी त्यो दानवराजले "स्त्रीबाहेकअरु कुनै प्राणीबाट मेरो मरण नहोस्" भनी वरदान माग्यो ।२६। शुक्राचार्यका शिष्य, धर्मात्मा, परशुरामका (पनि) शिष्य धनुर्विद्यामा निपुण सुमति नामका..।२७। सुन्दर ब्राह्मण त्यो दानवपतिका मित्र थिए । सवारी चढ्न, पिउन र खानमा ती ब्राह्मण चण्ड दानव जस्तै थिए ।२८। चण्ड नामक त्यो दानवले शिवको वरदान तथा सुमतिको सहयोगले तीन वटै लोकको राज्य प्राप्त गरेको थियो ।२९। त्यो दानवबाट पीडित भएका देवताहरू इन्द्रको अगुवाईमा क्षीरसागरमा सुतिरहनु भएका कमलनेत्र (विष्णु) कहाँ गई उनलाई प्रसन्न पारे ।३०। जगन्नाथ प्रसन्न भई इन्द्रलाई त्यहाँ आउनुको कारण सोध्नु भयो र आफूले त्यसको समाधान चाँडै गरिदिने वचन दिनु भयो ।३१। विष्णुको वचन सुनी इन्द्रले "हजुरले देवताका लागि चण्ड दानवसँग युद्ध गरि दिनु पर्‍यो" भने ।३२। विष्णुले "हुन्छ" भनी देवतासँगै बलवान दैत्येन्द्रसँग युद्ध गर्न भनी चण्डपुर (बनेपा आसपासको कुनै प्राचीन शहर) तिर लाग्नु भयो ।३३। देवसेना (आफूसँग लड्न) आइरहेको सुनेर चण्ड पनि रिसाउँदै असंख्य दैत्यसेना लिई आफ्नो शहरबाट बाहिर निस्कियो ।३४। त्यसपछि देवता र दानवका बीचमा अनेक हातहतियार प्रहार भई रौं ठाडा हुने खालको डरलाग्दो युद्ध भयो ।३५। त्यहाँ रगतको डरलाग्दो खोलो बग्यो, रथका पाङ्ग्रा आदि

दानवानां सुराणां च नानाशस्त्रप्रहारिणाम् ॥३५॥
ततः प्रवर्तत नदी रुधिरेण भयावहा ।
रथचक्रग्राहवती मांसङ्घातकर्दमा ॥३६॥
छिन्नमुण्डचयैः पूर्णा केशशैवालसंयुता ।
शरोर्मिभीषणा घोरा देवासुरविनाशिनी ॥३७॥
शूरा गच्छन्ति तत्पारं विनिमज्जन्ति कातराः ।
तदा देवबलं भग्नं दैत्यैर्भीमपरमक्रमैः ॥३८॥
ततो भीमबलैर्दैत्यैर्मम युद्धमभून्मुने ।
मम शार्ङ्गच्युतैर्बाणैर्भग्न दैत्यवलं महत् ॥३९॥
भग्नां स्वावाहिनीं दृष्ट्वा चण्डो दैत्यपतिस्तदा ।
मया योद्धुं समायातो घोरैर्दैत्यबलैर्वृतः ॥४०॥
महता रथघोषेण नादयन् वै वसुन्धराम् ।
छादयन् बाणवर्षैर्मां दर्शयन् हस्तलाघवम् ॥४१॥
ततो युद्ध मभूद्घोरं मेघयोरिव वर्षतोः ।
त्रिभिर्बाणैर्ललाटे मे हृदये सप्तभिः शरैः ॥४२॥
गरुडं च त्रिषष्ट्या वै विव्याध दितिजाधिपः ।
मयाऽपि हृदयं तस्य भिन्नं पञ्चभिराशुगैः ॥४३॥
ललाटे चार्पिता बाणा दश वै मर्मभेदिनः ।
ततः क्रुद्धोऽतिदनुजो मा विव्याध त्रिभिः शरैः ॥४४॥
गरुडं चाष्टभिर्बाणैर्दारयामास दारुणः ।
गरुडस्य शरीरात् तु शुश्राव रुधिरं बहु ॥४५॥
गरुड विकलं दृष्ट्वा क्रोधो मे समजायत ।
मया च्छिन्नो ध्वजस्तस्य शरेण नतपर्वणा ॥४६॥
सारथेश्च शिरश्छिन्नं शरेणैकेन तत्क्षणात् ।
चतुर्भिश्चतुरो वाहा हतास्तस्य दुरात्मनः ॥४७॥
वर्मच्छिन्नं शरैकेण हृदये पञ्च सायकाः ।
अर्पिता दितिजेशस्य मया क्रोधेन तत्क्षणात् ॥४८॥
विरथश्छिन्नवर्मा च हताश्वो हतसारथिः ।
पदातिरभवच्छीघ्रं व्याकुलश्चाभवद्भृशम् ॥४९॥
दानवं पीडितं दृष्ट्वा मच्छरैरर्दितं भृशम् ।
त्रायन् द्विजवरः शीघ्रं सुमतिः प्रत्यपद्यत ॥५०॥
स कृत्वा पृष्ठतो दैत्यं रथेन महता द्विजः ।
अभ्ययान्मामतिक्रुद्धश्चण्डस्नेहसमाकुलः ॥५१॥
शिष्यः परशुरामस्य धनुर्विद्याविशारदः ।
मन्त्रशास्त्रे च शुक्रस्य प्रियशिष्यो द्विजोत्तमः ॥५२॥
तेन मे दारुणं युद्धमतीव प्रत्यपद्यत ।
आसीत् युद्धं सुतुमुलं सिंयोरिव कानने ॥५३॥
मम द्विजर्षभस्यापि देवलोकभयावहम् ।
आग्नेयास्त्रं मया क्षिप्तं पर्जन्यं विदधन्मुने ॥५४॥
वायव्यास्त्रं मया क्षिप्तं पर्वतास्त्रं स सृष्टवान् ।
सर्पास्त्रं तु मया क्षिप्तं गरुडास्त्रं स सृष्टवान् ॥५५॥
कृते प्रतिकृतं कुर्वन् सुमतिः शूरसत्तमः ।
विव्याध हृदयं घोरैर्मम सप्तभिराशुगैः ॥५६॥
नवत्या गरुडं विद्धा ननाद द्विजसत्तमः ।
भिन्नमर्मस्तु गरुडः आननाद्रुधिरं बमन् ॥५७॥

त्यो रगतको नदीमा गोही जस्तै र मृतकका मांस आदि हिलो जस्तै देखिन्थ्यो ।३६। त्यो रगतको नदीमा तैरिरहेका युद्धमा काटिएका देवदानवका शिरका रौं (पानीमा तैरिरहेका) भ्याउ जस्तै देखिन्थे ।३७। शूरहरू (त्यो रक्तनदी) तर्दथे (भने) डरछेरुवाहरू त्यसैमा डुब्दथे । (त्यो युद्धमा) दानवको वीरताका अगाडि देवताहरु पराजित भइरहेका थिए ।३८। त्यसपछि अती बलिया दानवहरूसँग मेरो युद्ध भयो । हे मुनि ! (मेरो) शार्ङ्ग धनुषबाट निस्केका बाणले अनेक दैत्यहरू (त्यो युद्धमा) मारिए ।३९। आफ्ना सेना नास भइरहेको देखी बलिया दैत्य लिई चण्ड मसँग युद्ध गर्न आयो ।४०। रथका भयङ्कर आवाजले पृथ्वीलाई शब्दमय बनाउँदै, बाणको वर्षाले ढाक्दै (अनि) हातको कौसल मलाई देखाउँदै त्यो चण्ड दानव (युद्धमैदानमा) आएको थियो ।४१। त्यसपछि वर्सिरहेको बादल जसरी भीषण युद्ध भयो । त्यो दैत्यले तीन वाण मेरा निधारमा, सात बाण मेरा छातीमा र त्रिसठ्ठी बाण गरुडलाई हान्यो । मैले पनि पाँच बाण हानेर उसको छातीमा प्वाल पारें ।४२-४३। उसका निधारमा मर्मभेदी दश बाण हाने । अनि रिसाएर त्यो दैत्यले मलाई तीन बाण हान्यो ।४४। (उसले) गरुडलाई डरलाग्दा आठ बाण हान्यो, त्यो बाण लागी गरुडका शरीरबाट धेरै रगत बह्यो । गरुड घाइते भएको देखी मलाई (पनि) रिस उठ्यो । मैले "नतपर्व" बाण हानी उसको झण्डा खसालिदिएँ ।४५-४६। एउटा बाणले उसको सारथीको टाउको छिनालें (अनि) त्यो दुरात्माका चार घोडा चार बाण हानी ढालिदिएँ ।४७। एक बाणले उसको फलामको कवच खसालिदिएँ र तुरुन्तै पाँच बाण उसका छातीमा हाने ।४८। कवचहीन, रथहीन, सारथी र घोडा मारिएको (अवस्थामा) त्यो दानव पैदल र आकुलव्याकुल हुन पुग्यो ।४९। मेरा बाणबाट अत्यन्त घायल त्यो दानवलाई देखी ब्राह्मणश्रेष्ठ सुमति उसलाई बचाउन ठूलो रथमा चढी त्यहाँ आए ।५०। चण्डलाई छेक्दै, उसका मायाले व्याकुल भई अति रिसाउँदै ती सुमति मेरा अगिल्तिर आएका थिए ।५१। ती श्रेष्ठ ब्राह्मण परशुरामका शिष्य, धनुर्विद्यामा निपुण, शुक्राचार्यका शिष्य र मन्त्रशास्त्रमा पोख्त थिए ।५२। उनीसँग मेरो भयङ्कर युद्ध भयो, यस्तो युद्ध कि मानौ जङ्गलमा दुई वटा सिंह जुधिरहेका छन् ।५३। मेरो र ती द्विजका बीचको युद्ध देवलोकलाई नै भयदायक थियो । मैले आग्नेयास्त्र हाने, उनले वर्षणशस्त्र हाने ।५४। मैले वायव्यास्त्र हाने, उनले पर्वतास्त्र हाने । मैले सर्पास्त्र हाने, उनले गरुडास्त्र हाने ।५५। म जे (शस्त्र प्रयोग) गर्दथें, उनी त्यसको प्रतिरोधी (शस्त्र प्रयोग) गरि हाल्दथे । शूरश्रेष्ठ सुमतिले मेरा छातीमा ७ वटा डरलाग्दा बाण हाने ।५६। नब्बे बाणले गरुडलाई घायल बनाई ती ब्राह्मण गर्जन लागे । मर्माहत भएका गरुड मुखबाट रगत बहाउन लागे ।५७। जसरी सुकेको रुख पृथ्वीमा ढल्दछ त्यसरी नै गरुड जमिनमा ढले । गरुड ढलेपछि म पैदल हुन पुगें ।५८। हे मुनि ! (यसपछि) देवताहरूमा अति दयनीय देखिने हाहाकार भयो । म जस्तो क्षमाशीलका मनमा (पनि) त्यतिखेर लाज र रिस दुबै एकैपटक उत्पन्न भए ।५९। भविष्यको प्रयोजन विशेषका लागि गौरव गर्दै

**पपात गरुडो भूमौ निश्चेष्टः पादपो यथा ।**
**अहं पदातिरभवं पतिते गरुडे भुवि ॥५८॥**
**हाहाकारो महानासीद्देवानामतिदारुणः ।**
**लज्जाक्रोधौ समुत्पन्नौ क्षमाशीलस्य मे मुने ॥५९॥**
**देवानां पश्यतां तत्र भाविनोऽर्थस्य गौरवात् ।**
**चक्रं सुदर्शनं क्षिप्तं मया ज्वालातिभीषणम् ॥६०॥**
**छिन्नं शिरस्तु चक्रेण ब्राह्मणस्य तदा मया ।**
**ब्रह्महत्या तदा घोरा मामियाय द्विजोत्तम ॥६१॥**
**शुक्राचार्यो युद्धभूमिमागत्य क्रोधविह्वलः ।**
**शशापाच्युत शिष्यस्य शिरश्छिन्नं त्वया यतः ॥६२॥**
**अतोऽस्य वंशजो विप्रः शिरश्छेत्स्यति ते हरे ।**
**एवं शापो मया लब्धः शुक्राचार्यात् सुदारुणः ॥६३॥**
**ब्रह्महत्याभिभूतेन देशा भ्रान्ता मया मुने ।**
**लब्धं शर्म न कुत्रापि भ्रमता द्विजसत्तम ॥६४॥**
**दोलागिरौ चम्पकवृक्षमध्ये**
**मया स्थितं पापवशेन विप्र ।**
**शुक्रस्य शापेन शिरो मदीयं**
**छिन्नं त्वया विप्र न तेऽस्ति दोषः ॥६५॥**
**अत्र दोलागिरौ स्थास्ये छिन्नशापो द्विजोत्तम ।**
**सुदर्शन त्वमत्रैव मम पूजापरो भव ॥६६॥**
**द्वादश्यां पौर्णमास्यां च तथैव बुधवासरे ।**
**ये द्रक्ष्यन्ति नरा भक्त्या ते वै वैकुण्ठगामिनः ॥६७॥**
**एवं दोलागिरौ रम्ये हरिश्चम्पकपादपात् ।**
**छिन्नशीर्षस्थितस्तत्र पूजकस्तु सुदर्शनः ॥६८॥**
**स्थितं दोलागिरौ वीक्ष्य सर्पा निर्विषतां गताः ।**
**गरुडस्य प्रसादेन जैमिने मुनिसत्तम ॥६९॥**

देवताले हेर्दाहेर्दै त्यहाँ मैले अति तेजस्वी सुदर्शन चक्रलाई छाडि दिएँ ।६०। जब मबाट छाडिएको त्यो चक्रले ती ब्राह्मणको टाउको काटि दियो । हे द्विजोत्तम ! तब भयानक ब्रह्महत्या मलाई (शरीरमा) लाग्न पुग्यो ।६१। (यति नै बेला) रिसले भुनभुनिँदै युद्धमैदानमा आएर शुक्राचार्यले मलाई श्राप दिए-"हे अच्युत ! मेरो शिष्यको टाउको तिमीले काटेका छौ, त्यसैले हे हरे ! तिम्रो टाउको (पनि) यसैको वंशजले काट्ने छन्" ।६२-६३। हे मुनि ! (त्यसपछि) ब्रह्महत्याको पाप बोकी मैले अनेक देश घुमे । तर, हे द्विजश्रेष्ठ ! (यसरी) घुम्दा पनि मैले कतै शान्ति पाउन सकिन ।६४। हे विप्र ! (यही) पापका कारण म (यस) दोलागिरी पर्वतको चाँपको रुखमा बसिरहेको थिएँ । शुक्राचार्यका श्रापका कारण तिमीले मेरो टाउको काट्यौ, यसमा तिम्रो कुनै दोष छैन ।६५। हे द्विजोत्तम ! म यो दोलागिरी पर्वतमा रहने छु । हे सुदर्शन ! तिमी (पनि) यहीँ बस र मेरो पूजा गर ।६६। द्वादशी, पूर्णिमा र बुधबार जो मानिस (श्रद्धाभक्तिपूर्वक) मेरो दर्शन गर्दछन् ती बैकुण्ठ जान्छन् ।६७। **<u>यसरी रमणीय दोलागिरी (चाँगु) मा चाँपका पातले सुरक्षित, छिन्नशीर्ष भएका, सुदर्शनबाट पूजिएका हरि रहने गर्नु हुन्छ ।६८।</u>** हे जैमिनि ! हे मुनिश्रेष्ठ ! यसरी दोलागिरि पर्वतमा मलाई देखी गरुडका प्रसादले सर्प (पनि) विषहीन हुने गर्दछन्, त्यहाँ सर्प-भय हुँदैन ।६९।



**इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये गरुडनारायणप्रादुर्भावो नाम द्वितीयोऽध्यायः ॥२॥**

श्रीस्कन्दपुराण, हिमवत्खण्ड, नेपालमाहात्म्यमा चाँगु नारायणको उत्पत्तिको विषय वर्णन गरिएको दोश्रो अध्याय समाप्त भएको छ ।२।

**श्लोकानामादितः समष्ट्यङ्का:-६७+६९=१३६**

शुरुदेखिको श्लोकसङ्ख्या :-६७+६९=१३६



चाँगुनारायणको मन्दिर, भक्तपुर, नेपाल । (तस्विर स्रोतः पर्सिभल ल्याण्डनले लेखेको र लण्डनबाट ई.सं.१९२८ (वि.सं.१९८५) मा प्रकाशन भएको "नेपाल" नामक पुस्तकबाट) । (सङ्कलन : मोहन प्रसाद सापकोटा) ।

## ॥ अथ तृतीयोऽध्यायः ॥
॥ तेश्रो अध्याय ॥

**मार्कण्डेय उवाच ॥** मार्कण्डेय भन्नु हुन्छ-

**आसीच्च तमसातीरे वाल्मीकिर्मुनिसत्तमः ।**
**वेदवेदाङ्गनिपुणस्तपःस्वाध्यायतत्परः ॥१॥**
**कदाचिद्वचनं तस्याकस्मिकं समजायत ।**
**नारदस्योपदेशेन प्रप्याज्ञां ब्रह्मणोऽपि च ॥२॥**
**रामायणकथां कर्तुं निश्चयं कृतवान् मुनिः ।**
**पप्रच्छ नारदमुनिं वाल्मीकिर्मुनिपुङ्गवः ॥३॥**
**कस्मिंस्थले मया स्थित्वा काव्यं कार्यमनुत्तमम् ।**
**कास्मिंस्थले वाग्विभूतिर्जायते मुनिसत्तम ॥४॥**
**स्थैर्यं च मनसः कुत्र सर्वोपद्रववर्जिते ।**
**जायते मुनिशार्दुल तत्र गत्वा करोम्यहम् ॥५॥**

वेदवेदाङ्गमा निपुण, तपस्या तथा वेद आदि अध्ययनमा लागि पर्ने मुनिश्रेष्ठ वाल्मीकि मुनि तमसा नदी (चितवनमा पर्ने एक नदी) को किनारामा बस्ने गर्नु हुन्थ्यो ।१। एक दिन उनका (मुखबाट) अचानक एउटा (श्लोक) वचन निस्कियो । तब नारदको उपदेश अनुसार तथा ब्रह्माको आदेशमा रामायणको कथा लेख्ने निश्चय गरी मुनिश्रेष्ठ वाल्मीकिले नारदसँग सोध्नु भयो ।२-३। हे मुनिश्रेष्ठ नारद ! कहाँ बसेर म यो उत्तम (महा) काव्यको रचना गरौं ? कुन ठाउँमा वाणी खुल्दछ ? कुन ठाउँ नित्य वाधा व्यवधान रहीत छ ? कुन ठाउँले मनमा धैर्य दिन्छ ? हे मुनिश्रेष्ठ ! (ता कि) म त्यहाँ गएर रामायणको रचना गर्न सकूँ ।४-५।

नोटः बाल्मीकिका मुखबाट निस्किएको उक्त श्लोक थियो- "मा निषाद प्रतिष्ठां त्वमगमः शाश्वतीः समाः । यत्क्रौञ्चमिथुनादेकमवधीः काममोहितम् ॥ हे निषाद ! (आर्यभन्दा प्राचीन एक अनार्य जाति) तिमीले मैथुनमा संलग्न भएको भाले कन्याङकुरुङ चरालाई मारेका छौ, यसैले अनेकौं वर्षसम्म तिमी यस वनमा नआउनु वा तिमीलाई सुखशान्ति नमिलोस् ।-वाल्मीकि रामायण, बालकाण्ड, सर्ग २, श्लोक १५।

**रामायणं नाम काव्यं मुने परमशोभनम् ।**
**श्रुत्वा वाल्मीकिवचनं नारदः प्राह शोभनम् ॥६॥**
**दोलागिरेरग्निभागे वीरभद्रानदीद्वयम् ।**
**तयोश्च सङ्गमे रम्ये नानापादपशोभिते ॥७॥**
**नारिकेलैश्च जम्बीरैः खर्जूरैरुपशोभिते ।**
**आम्रैश्च पनसैश्चैव बीजपूरैः समन्ततः ॥८॥**
**कोविदारैश्च बकुलैः कुटजैरुपशोभिते ।**
**पुष्पैर्नानाविधैरम्यैर्द्वितीय इव नन्दने ॥९॥**
**तत्र गत्वा मुनिश्रेष्ठ सर्वोपद्रववर्जिते ।**
**कुरु रामायणं काव्यं जनानां गतिदायकम् ॥१०॥**
**श्रुत्वा स नारदवचो वाल्मीकिर्मुनिसत्तमः ।**
**वीरभद्रासङ्गमेऽस्मिन् स गत्वा मुनिपुङ्गवः ॥११॥**
**भावि रामायणं काव्यं चक्रे परमशोभनम् ।**
**ततः प्रीतो मुनिवरः स्थलेऽनुग्रहमाचरत् ॥१२॥**
**आहूय तमसां वाक्यं सरितं निजगाद ह ।**
**त्वमप्यत्रैव तमसे मत्प्रीत्या सरितां वरे ॥१३॥**
**अन्तर्गुप्ता सङ्गमेऽस्मिन् वह शीघ्रं गतिप्रदे ।**
**मुनेर्वचनमाकर्ण्य तपसाऽन्तर्हिताऽवहत् ॥१४॥**



वाल्मीकिका कुरा सुनी नारदले यस्तो सुन्दर वचन भन्नु भयो-"हे मुनि ! अति शोभाले युक्त (यो जुन) रामायण नामको (महा) काव्य हो (त्यो) ।६। दोलागिरी (चाँगु) को आग्नेय (पूर्व र दक्षिणको बीच) दिशामा वीरभद्रा (हनुमानघाट) नामक दोभान छ । त्यो दोभान अनेक थरी सुन्दर वृक्षले शोभायमान छ । त्यहाँ नरिवल, ज्यामिर र खयरले शोभित तथा आँप, कटहर र बिमिरो चारैतिर छन् । कोइरालो, मौलसरी र ठूलोकुरोका रुख पनि छन् । अनेक थरीका फूलले ढाकेको त्यो उपवन दोश्रो स्वर्गको नन्दन वगैंचा नै हो कि जस्तो देखिन्छ ।७-९। हे मुनिश्रेष्ठ ! कुनै पनि उपद्रो नहुने त्यो ठाउँमा गएर मानिसलाई भुक्तिमुक्ति प्रदान गर्ने रामायण ( महा) काव्य लेख्नु होस् ।१०। **मुनिश्रेष्ठ वाल्मीकिले नारदको कुरा सुनेपछि यो वीरभद्रा नदीको दोभानमा आई अती शोभनीय भावी ( महा) काव्य रामायण लेख्नु भयो । मुनिले फेरी त्यो स्थानको ( केही) भलो (काम) पनि गर्नु भयो ।११-१२। उहाँले तमसा नदीलाई बोलाई "हे नदीमा श्रेष्ठ तमसा ! हे मोक्षदायिनी ! तिमी पनि मेरो प्रीतिले गुप्त भई यही दोभानमा (पनि) बग" भन्नु भयो । मुनिको कुरो सुनी तमसा नदी त्यहाँ (आई) गुप्तरूपले बहन लागिन् ।१३-१४।**

नोट : ठोस प्रमाणका अभावमा मानिसले पौराणिक इतिहाससँग सम्बन्धी स्थलहरू आफू अनुकूल हुनेगरी बनाउने वा व्याख्या गर्ने गरेको पाइन्छ । वाल्मीकि आश्रम पनि धेरै ठाउँमा छन् । नेपालमै पनि झापा र चितवन गरी दुई ठाउँमा भएका वाल्मीकि आश्रम बढी प्रचलित छन् । ऋषिहरुको मूल स्थानबाहेक अन्यत्र स्थिर बासस्थान हुँदैनथ्यो । विभिन्न प्रयोजनका लागि देशदेशावर घुमिरहन्थे र प्रयोजन सिद्ध नहुँदासम्म त्यतै नजिक आश्रम बनाएर बस्दथे । यस्ता अस्थाई आश्रमलाई पनि तिनै ऋषिको नामले नामाकरण गरिन्थ्यो । अती प्रसिद्ध ऋषिहरूको आश्रम प्रायः अत्यन्त एकान्तस्थलमा हुने गर्दथ्यो

। हालैका दिनमा चितवनको वाल्मीकि आश्रमलाई लिएर एउटा तरङ्ग उत्पन्न भएको छ । त्यहाँ रहेका तमसा नदी, नारायणी गङ्गा, अश्वमेध गरी छाडिएको घोडा लवकुशबाट समाती बाँधिएको स्तम्भ, सीता पाताल प्रवेश गरेको स्थान आदिले यही नै वास्तविक वाल्मीकि आश्रम हुनु पर्दछ भन्ने मत प्रवल हुँदै गएको छ । मानिसहरु अयोध्यासँग तुलना गर्दै दूरीलाई आधार बनाएर यति टाढा बाल्मीकि आश्रम हुन नसक्ने तर्क पनि दिन्छन् । तर ती अर्जुनले हिमालमा आएर शिवसँग बरदान लिएको तथा श्रीलङ्कादेखि आएर नेपालमा तपस्या गरेका रावण आदिका बारेमा भने दूरीका कुरा किन गर्दैनन् थाहा छैन । प्राचीन कालको इतिहास संस्कृत भाषमा लेखिएको, संस्कृत पढ्न काशीतिर नै जानुपर्ने, पुस्तक छपाउन वाराणसी नै धाउनु पर्ने आदि जस्ता बाध्यताले अनि अत्यन्त विकट नेपालको भूबनोटका कारणले पनि सत्यतथ्यप्रति नेपाल र भारत दुबैतिरका विद्वान अलमलिएका हुन सक्दछन् । सत्यतथ्य पत्ता लागे दुबै देश लाभान्वित हुने थिए । वर्तमान भारतका प्रायः सबै प्रसिद्ध पौराणिक व्यक्तित्वले हिमालतिर आई शक्ति आर्जन गरेको सत्यतथ्यलाई जति जति अस्वीकार गर्दै गयो उति उति भारत स्वयंको इतिहास पनि अधुरो र विलयशील हुँदै जानेछ । रोडा र सीमेण्टका नक्कली संरचनाले आत्मरती मात्र हुन्छ, टिकाउ हुँदैन । पेसा भने चल्दछ । यसरी नै हामीले धर्मलाई पेसा बनाउन बढी जोड दियौं भने हाम्रो धर्म चाँडै लोप हुनेछ । हरेक पुराणका प्रायः हरेक प्रसङ्ग हिमालतिर नै आएर ठोक्किएका छन् । विश्वभरका हिन्दूले यो कुरा गम्भीर ढङ्गले मनन गरौं ।

**यदा च रघुनाथेन सागरे सेतुबन्धनम् ।**
**कर्त्तव्यं वायुतनयस्तदाऽऽगत्य हिमालयम् ॥१५॥**
**उत्पाट्य हिमवच्छृङ्गं दोर्भ्यामादाय मारुतिः ।**
**वीरभद्रासङ्गमेऽतिश्रान्तः संस्थाप्य तं गिरिम् ॥१६॥**
**संस्थाप्य तु महालिङ्गं नाम्ना हनुमदीश्वरम् ।**
**विश्राम्य सलिलं पीत्वा दोर्भ्यामादाय तं गिरिम् ॥१७॥**
**विहायसगतिः शीघ्रं हनुमान् वायुनन्दनः ।**
**ततः प्रभृति तज्जातं हनुमत्तीर्थमुत्तमम् ॥१८॥**

जब भगवान् रामचन्द्रले (समुद्रमा) पुल बाँध्न शुरु गर्नु भयो तब पवनपुत्र हनुमान हिमालयमा आए र हिमालयको टाकुरो उखेलेर दुबै हातले बोकी लैजाँदा थकित भई (यही) वीरभद्रा संगममा त्यसलाई बिसाई थकाई मेट्न लागे । **त्यसबेला उनले एउटा विशाल शिवलिङ्ग स्थापना गरे, जसको नाम हनुमदीश्वर शिवलिङ्ग भयो ।** त्यसपछि आराम गरी जल पिएर पुनः त्यो पहाड बोकी चराको गतिमा चाँडै हनुमान हिँडे । त्यो बेलादेखि त्यो उत्तम तीर्थ हनुमत्तीर्थ हुन पुग्यो ।१५-१८।

नोट : हनुमानले पर्वत बिसाएको स्थललाई आजकल हनुमानघाट भनिन्छ र यो भक्तपुर जिल्लामा रहेको छ । त्यहाँ बहने (वीरभद्रा) नदी अहिले "हनुमन्ते खोला"का नामले चिनिन्छ । हनुमदीश्वर लिङ्ग हालको हनुमन्ते घाटमै कतै स्थापना गरिएको विश्वास गरिन्छ ।

**येऽत्र स्नानं करिष्यन्ति सङ्गमेऽतिसुदुर्लभे ।**
**न द्रक्ष्यन्ति मनुष्यास्ते भास्करेर्मुखपङ्कजम् ॥१९॥**
**प्रातः स्नानं करिष्यन्ति ये नरा भक्तिसंयुताः ।**
**धनयुक्ता भविष्यन्ति कृतार्थाः स्वर्गगामिनः ॥२०॥**
**किञ्चिद्दूरे सङ्गमस्य यज्ञभूमिं मनोहराम् ।**
**विधाय मुनिभिः सार्द्धं वाजपेयमथाकरोत् ॥२१॥**
**यज्ञं समाप्य वाल्मीकिर्नवनाडीमयं गिरिम् ।**
**आरुरोह द्विजश्रेष्ठो मुनिभिर्मुनिसत्तमः ॥२२॥**
**कटके तस्य शैलस्य नानानिर्भरशोभिते ।**
**लिङ्गं संस्थापयामास वाल्मीकिश्वरसंज्ञितम् ॥२३॥**
**स्थापयित्वा महालिङ्गं वाल्मीकिर्मुनिसत्तमः ।**
**स्वाश्रमे तमसातीरे ययौ मुनिगणैर्वृतः ॥२४॥**
**वाल्मीकिश्वरमालोक्य वाग्विभूतिः प्रजायते ।**
**अतो वागीश्वरं लिङ्गं प्रवदन्ति मनीषिणः ॥२५॥**
**आषाढे पौर्णमास्यां वै वागीश्वरविलोकनात् ।**
**अक्षयः स्वर्गवासः स्याज्जैमिने मुनिसत्तम ॥२६॥**

जो यो अति दुर्लभ संगममा नुहाउँदछन्, ती मानिसले सूर्यको अनुहार हेर्नु पर्दैन, मोक्ष हुन्छन् । भक्तिपूर्वक जो मानिस बिहान यहाँ नुहाउँदछन् ती धनी एवं कृतार्थ भएर स्वर्ग जान्छन् ।१९-२०। यहाँभन्दा केही पर मनोहर यज्ञभूमि बनाई वाल्मीकिले त्यहाँ ( अरु) मुनिहरूसँग मिलेर वाजपेय यज्ञ गर्नु भयो । हे द्विजश्रेष्ठ ! यज्ञ समाप्त गरी ती श्रेष्ठ मुनि वाल्मीकि अरु मुनिसँगै नवनाडी भएको पर्वत (वागेश्वरी) गए । उक्त पर्वतको केही माथि (नितम्ब भाग) झरनाले शोभायमान स्थानमा उनले एक लिङ्ग स्थापना गरे, जसलाई वाल्मीकीश्वर लिङ्ग भनेर चिनिन्छ । मुनिश्रेष्ठ वाल्मीकिले लिङ्ग स्थापना गरी मुनिहरूसँगै आफ्नो तमसा नदीको किनारमा रहेको आश्रममा आए । **बाल्मीकीश्वर महादेवको दर्शन गर्नाले वाणीको प्रभाव बढ्दछ । त्यसैले यो लिङ्गलाई विद्वानहरू वागीश्वर लिङ्ग पनि भन्ने गर्दछन् ।** असार पूर्णिमामा यो लिङ्गको दर्शन गर्नाले हे जैमिनि ! अक्षय स्वर्गको वास पाइन्छ ।२१-२६।

नोट : भद्रानदी र वीरानदि सङ्गम, वीरभद्रतीर्थ, श्री वाल्मीकेश्वर, भक्तपुरमा पर्दछ भनेर राजभोगमाला वंशावलीले ३८ औं शिवलिङ्गकारुपमा यसको गणना गरेको छ । वागीश्वर शिवलिङ्ग पनि भक्तपुरकै वागेश्वरीमा पर्दछ ।

**एवं ते कथितं विप्र किमन्यच्छ्रोतुमिच्छसि ।**
**कथयिष्यामि तत्सर्वं नावाच्यं विद्यते क्वचित् ॥२७॥**

हे विप्र ! यि कुरा बताएँ, अरु के सुन्ने इच्छा छ ? मेरा लागि केही कुरा पनि तिमीलाई बताउन नसक्ने वा नमिल्ने छैन, त्यसैले सबै बताउने छु ।२७।

**जैमिनिरुवाच** ॥ जैमिनि भन्नु हुन्छ-

**अच्युतः सुमतिं हत्वा ब्रह्महत्यां सुदारुणम् ।**
**लब्ध्वा देशान् स बभ्राव किमकारि सुरस्ततः ॥२८॥**

हे मार्कण्डेय मुनि ! विष्णुले सुमतिलाई मारेर ब्रह्महत्या लागेपछि अनेक देश घुम्नु भयो, त्यतिखेर देवताले के गरे ? ।२८।

**मार्कण्डेय उवाच** ॥ मार्कण्डेय भन्नु हुन्छ-

**ब्रह्महत्याऽभिभूतेऽस्मिन् जाते नारायणे प्रभो ।**
**त्रैलोक्यं तापयामास चण्डः परमकोपनः ॥२९॥**
**सुमतेर्वधसनतप्तः प्रत्यहं दितिजाधिपः ।**
**देवान् विद्रावयामास देवाः सर्वे पलायिताः ॥३०॥**
**अलब्धरक्षास्ते देवा ब्रह्माणं शरणं ययुः ।**
**तुष्टुवुर्वाग्भिरिष्टाभिर्देवाः शक्रपुरोगमाः ॥३१॥**
**तुष्टो ब्रह्मा प्रत्युवाच सर्वानेव दिवौकसः ।**
**किमागमनकृत्यं वः कथ्यतां पुरतो मम ॥३२॥**

नारायण ब्रह्महत्या लागेर पीडित भएपछि रिसले चूर भएको चण्डले तीनै लोकलाई सताउन थाल्यो । आफ्नो घनिष्ट मित्र सुमति मारिएकोमा पिरोलिएको त्यो चण्डले दिनहुँ सबै देवतालाई लखेट्न थाल्यो । देवता सबै भागे र बेसहारा भई ब्रह्मा भएका ठाउँमा गए । इन्द्रको अगुवाईमा देवताहरूले उत्कृष्ट वचनले ब्रह्माको स्तुति गरे ।२९-३१। प्रसन्न भई ब्रह्माले सबै देवतालाई भन्नु (सोध्नु) भयो-“हजुरहरू के कामले आउनु भयो, मलाई बताउनु होस्” ।३२।

**देवा ऊचु** ॥ देवताहरू भन्दछन्-



**हृताधिकारॉंश्चण्डेन त्वां प्रभो शरणं गतान् ।**
**अव नः कृपया ब्रह्मन् त्वं हि नः परमा गतिः ॥३३॥**

हे ब्रह्मा ! चण्डबाट अपदस्थ भएका हामी हजुरका शरणमा आएका छौं, अब हाम्रो परमरक्षक र बाटो दिने हजुर नै हुनु हुन्छ” ।३३।

**ब्रह्मोवाच** ॥ ब्रह्मा भन्नु हुन्छ-

**जानामि हृद्गतां पीडां भवतां सुरसत्तमाः ।**
**श्लेषमान्तकवनात् पूर्वं रक्तचन्दनकाननम् ॥३४॥**
**तद्वृक्षस्थां महादेवीं शरणं यान्तु देवताः ।**

हे देवश्रेष्ठ ! हजुरको मनको पीडा मलाई थाहा छ । श्लेष्मान्तक वनको पूर्वतिर रक्तचन्दनको वन छ ।३४। त्यहाँ (एउटा) वृक्षमा रहेकी देवीको शरणमा हजुरहरू जानु होस् ।

**मार्कण्डेय उवाच** ॥ मार्कण्डेय भन्नु हुन्छ-

**नत्वा ब्रह्मपदाम्भोजं रक्तचन्दनकाननम् ॥३५॥**
**यावद्गच्छन्ति ते देवास्तावद्वै नारदो मुनिः ।**
**सर्वान् देवान् परित्यज्य चण्डासुरपुरं ययौ ॥३६॥**
**आगतं नारदं श्रुत्वा चण्डो दैत्याधिपस्तदा ।**
**संत्यज्य चासनं चैव सपर्यापात्रसंयुतः ॥३७॥**
**सत्कृतं नारदमुनिं कृतासनपरिग्रहम् ।**
**विनयावनतो भूत्वा पप्रच्छ दनुजाधिपः ॥३८॥**
**कुत आगम्यते ब्रह्मन् किमपूर्वं विलोकितम् ।**
**पवित्रीकृतमस्माकं भवनं मुनिसत्तम ॥३९॥**
**याताः कृतार्थास्तु वयं दर्शनेन तवाधुना ।**
**किमागमनकृत्यं ते वद सर्वं करोम्यहम् ॥४०॥**

(ब्रह्माको जवाफ सुनी) देवता ब्रह्मालाई नमस्कार गरी (त्यो) रक्तचन्दनको वनतर्फ गए ।३५। जब देवगण उता लागे तब नारद सबै देवतालाई छोडेर चण्डासुरको शहरतिर लागे ।३६। नारद मुनि आएको सुनेर दैत्येन्द्रले आसनबाट उठी पूजासामग्रीले नारदको पूजा गरे र आसनमा राखी स्वागतसत्कार गरे । अनि नम्र भई दानवेन्द्रले नारदलाई सोधे ।३७-३८। हे नारद ! हजुर कहाँबाट आउनु भयो ? (बाटोमा) अचम्मको के कुरा देख्नु भयो ? हे मुनि ! हजुरले मेरो आश्रम पवित्र बनाइ दिनु भएको छ । आज हजुरको दर्शन पाएर म कृतार्थ भएको छु । हजुर यहाँ आउनुको प्रयोजन बताउनु होस्, म सबै काम गरिदिने छु ।३९-४०। चण्डासुरका कुरा सुनी नारद मनि दानवलाई भन्नु हुन्छ ।

श्रुत्वा चण्डासुरवचो नारदः प्राह दानवम् ।

**नारद उवाच ॥ नारद भन्नु हुन्छ-**

शूरोऽसि कृतविद्योऽसि शिवभक्तोऽसि दानव ॥४१॥
त्रैलोक्यं च वशं जातं देवताश्च वशीकृताः ।
नारायणोऽपि विमुखः समते ते बभूव हि ॥४२॥
कुबुद्धयः सुराः सर्वे वधार्थं तव दानव ।
मन्त्रयामुरत्युच्चैर्ब्रह्मणो निकटेऽधुना ॥४३॥
शूरं त्वां शिवभक्तं च ज्ञात्वा दानवसत्तम ।
दया तु हृदये जाता तदर्थमिह चागतः ॥४४॥

हे दानव ! तिमी शूर छौ, विद्वान छौ, शिवभक्त छौ ।४१। तिमीले देवता र तीनै लोकलाई आफ्ना वशमा पारेका छौ । विष्णुले पनि युद्धमा तिमीसँग मुख लुकाए । हे दानव ! कुबुद्धि भएका देवताहरूले तिमीलाई मार्न भनी ब्रह्मा समक्ष गई गम्भीर छलफल गरेका छन् । हे दानवश्रेष्ठ ! तिमी शूर र शिवभक्त हौ भन्ने जानी मनमा दया आयो । यसैले म (यो कुरा) बताउन भनी यहाँ आएको छु ।४२-४४।

**मार्कण्डेय उवाच ॥ मार्कण्डेय भन्नु हुन्छ-**

नारदस्य वचः श्रुत्वा जैमिने मुनिसत्तम ।
जातः परमसंत्रासश्चण्डदैत्यस्य तत्क्षणात् ॥४५॥
आस्थाय धैर्यं परमं चण्डो वचनमब्रवीत् ।
धन्योऽहं कृतकृत्योऽहं सफलं जीवितं मम ॥४६॥
मां विलोक्य यतो जाता भवतः करुणा मुने ।
कथयाशु समस्तं मे देवानां चरितं प्रभो ॥४७॥
श्रुत्वा प्रतिक्रियां तस्य करिष्ये मुनिसत्तम ।
इत्याकर्ण्य वचस्तस्य नारदः प्राह दानवम् ॥४८॥
शृणु दानव वक्ष्यामि मन्त्रणां हि सुपर्वणाम् ।
दत्तदुःखास्त्वया देवा ब्रह्माणं शरणं ययुः ॥४९॥
तुष्टो ब्रह्मा प्रत्युवाच श्रूयतां वचनं मम ।
चण्डासुरवधोपायो गोपनीयः प्रयत्नतः ॥५०॥
श्लेष्मान्तकवनात् पूर्वं रक्तचन्दनकाननम् ।
अस्ति दिव्यं महत् स्थानं तत्र चम्पकपादपः ॥५१॥
महाँस्तद्वनमध्यस्थस्तन्मध्ये जगदम्बिका ।
तां यात शरण यूयं सा वः कार्यं विधास्यति ॥५२॥
इत्युक्त्वा देवताः सर्वा ब्रह्माऽप्यन्तर्हितोऽभवत् ।
सर्वे देवा गतास्तत्र मया च तव सन्निधौ ॥५३॥
समागतं दैत्यपते कुरु कार्यमनन्तरम् ।
इत्युक्त्वा प्रययौ तत्र नारदो यत्र देवताः ॥५४॥
दैत्योऽपि दुःखितो भुत्वा चिन्तयामास मन्त्रिभिः ।
देवताः सकलाः शीघ्रं गत्वा श्लेष्मान्तकं वनम् ॥५५॥
वाग्वत्यां सरिति स्नात्वा दृष्ट्वा पशुपतिं प्रभुम् ।
गुह्येश्वरीं समालोक्य गोकर्णेशं विलोक्य च ॥५६॥
दृष्ट्वा वज्रां ततो देवा दोलागिरिमथारुहत् ।
नारायणमथा दृष्ट्वा तथा वागीश्वरं विभुम् ॥५७॥
गरुडोड्डोनमार्गेण देवतास्तद्वनं ययुः ।
भक्तियुक्ताः सुराः सर्वे तुष्टुवुर्जगदम्बिकाम् ॥५८॥
नारायणि जगन्मातः शिवे सर्वार्थसाधिके ।
शरणं ते प्रपन्नाः स्मः पाहि नः शरणागतान् ॥५९॥
हिमालयगिरेः कन्ये शिववक्षःस्थलस्थिते ।

नारदका कुरा सुनेर हे जैमिनि ! हे मुनिश्रेष्ठ ! चण्डलाई तत्क्षण ठूलो भय भयो । (अनि) धैर्यधारण गर्दै भन्न लाग्यो-म धन्य छु । कृतकृत्य छु । मेरो जीवन सफल भएको छ ।४५-४६।

हे मुनि ! मलाई देखेर हजुरलाई दया आएछ । (अब) चाँडै देवताका गतिविधि बताउनु होस् ।४७।

हे मुनि ! (हजुरका) कुरा सुनि सकेपछि (मात्र म) यसको प्रतिक्रिया (वा जवाफ) दिउँला । दानवका कुरा सुनेपछि नारदले दैत्यसँग भन्नु भयो..।४८।

हे दानव ! म देवताका सोच (योजना) बताउँदछु, तिमी सुन । तिमीले सताएका देवता ब्रह्माका शरणमा गए ।४९।

देवतासँग प्रसन्न भएका ब्रह्माले भने-हे देवता हो ! मेरा कुरा सुन । चण्ड असुरलाई मार्ने कुरा प्रयत्नपूर्वक गोप्य राख्नु पर्दछ ।५०।

श्लेष्मान्तक वनको पूर्वी भागमा रक्तचन्दनको वन छ, त्यहाँ ठूलो चाँपको रुख भएको एउटा दिव्य ठाउँ छ ।५१।

<u>त्यो चाँपको रुख वनको बीचमा छ । त्यो रुखको मध्यभागमा जगदम्बिका निवास गर्दछिन् । तिमीहरू उनकै शरणमा जाउ । उनले तिमीहरुको काम गरि दिने छिन् । सबै देवतालाई यति भनेपछि ब्रह्मा अन्तर्ध्यान हुनु भयो । सबै देवता त्यो वनमा गए, म (भने) तिमी समक्ष आएको छु ।५२-५३।</u>

हे दैत्यपति ! अब यसपछि आइपरेको काम गर । यति भनेर नारद देवता भएका ठाउँमा गए ।५४।

(नारद गएपछि) उ (चण्ड) दुःखी हुँदै मन्त्रीहरुसँग छलफल गर्न लाग्यो । (उता) सबै देवता तुरुन्त श्लेष्मान्तक वनमा गए । त्यहाँ पुगेर उनीहरुले बागमतीमा नुहाई पशुपतिको दर्शन गरे । गुह्येश्वरीको दर्शन गरी गोकर्णेश्वरका दर्शन गरे । (अनि) वज्रजोगिनीको दर्शन गरी चाँगुको डाँडो उक्ले । (त्यहाँ) नारायणको दर्शन गरी वागीश्वरको दर्शन गर्दै ती गरुड उड्ने बाटो हुँदै त्यो वनमा गए । त्यहाँ रक्तचन्दनको वनमा गई उनिहरूले भक्तिपूर्वक देवी भगवतीको आराधना गरे ।५५-५८।

हे नारायणी ! हे जगन्माता ! हे शिवे ! हे सर्वार्थसाधिके ! हे देवी ! हामी हजुरका शरणमा (आएका) छौं । शरण परेका हामीलाई रक्षा

भवसागरमग्नाँस्त्व पाहि दानवसूदिनि ॥६०॥
माहेश्वरि जगद्धात्रि सृष्टिस्थित्यन्तकारिणि ।
भक्तानुकम्पिनि शिवे पाहि नः शरणागतान् ॥६१॥
ब्रह्मा विष्णुश्च रुद्रश्च न तेऽन्तं वेत्ति चण्डिके ।
के वराका वयं सर्वे त्वां स्तोतुं जगदम्बिके ॥६२॥
चण्डासुरप्रतप्तानां सर्वेषां त्वं महेश्वरि ।
शरणं भव कल्याणि चण्डं नाशय दानवम् ॥६३॥
एवं स्तुता सुरैर्देवी तदा चम्पकवृक्षतः ।
बहिर्वभूव सहसा देवानां दृष्टिगोचरा ॥६४॥
दृष्ट्वा सर्वे प्रणेमुस्ते भक्त्या माहेश्वरीं सुराः ।
धूपैश्च धूपयामासुः पुष्पैर्नानाविधैस्तदा ॥६५॥
पूजयामासुरत्युच्चैर्नैवेद्यैर्बहुविस्तरैः ।
तुष्टा भगवती प्राह किमागमनकारणम् ॥६६॥
ब्रूत वत्साः कुतो जाता विपत्तिर्वा भवादृशाम् ।
प्रश्नं यावद्गिरिसुता करोति त्रिदशान् प्रति ॥६७॥
तावत् कोलाहलो देवैः श्रुतोऽतीव भयानकः ।
निरूपयन्ति ते देवा यावत् कालाहलं महत् ॥६८॥
दानवाधिपतेर्घोरं सर्वदेवभयावहम् ।
दृष्ट्वा तत् सैन्यमतुलं देवाः शक्रपुरोगमाः ॥६९॥
पक्षिरूपं समास्थाय दुद्रुवुस्ते दिशो दश ।
इन्द्रो रूपं समास्थाय मायूरमतिसुन्दरम् ॥७०॥
एकः पलायनं चक्रे सर्वदेवान् विहाय च ।
वायसं रूपमास्थाय यमः परमभीयुतः ॥७१॥
मुने दुद्राव वेगेन चण्डसैन्यविलोकनात् ।
चन्द्रश्चकोररूपेण पलायनपरोऽभवत् ॥७२॥
जीवञ्जीवकरूपेण रविणा च पलायितम् ।
हंसरूपं समास्थाय वरुणोऽपि पलायितः ॥७३॥
क्रौञ्चरूपं समास्थाय वायुर्भेजे दिशो दश ।
ईशेन वकरूपेण तपोधन पलायितम् ॥७४॥
नानापक्षिस्वरूपेण सर्वदेवैः पलायितम् ।
मुने भगवती शीघ्रं चम्पकाभ्यन्तरं ययौ ॥७५॥

गर्नु होस् । हे हिमामलयकी पुत्री ! हे शिवका छातीमा रहने भएकी ! हे दानवनाशिनी ! भवसागरमा डुब्नलागेका हाम्रो रक्षा गर्नु होस् । हे माहेश्वरी ! हे जगद्धात्री ! हे सृष्टि-पालन-नाशिनी ! हे भक्तानुकम्पिनी ! हे शिवे ! हामी शरणमा आएकाको रक्षा गर्नु होस् । हे चण्डिके ! ब्रह्मा, विष्णु र शिव पनि हजुरको अन्त जान्न सक्दैनन् (भने) हे देवी ! जाबा हामी हजुरको स्तुति कसरी गर्न सक्दछौं र ? चण्डासुरबाट पीडित हामी सबैको हे देवी ! कल्याण गर्नु होस्, चण्डलाई मार्नु होस् ।५९-६३।

यसरी देवताबाट स्तुति गरिएकी देवी अकस्मात चाँपको रुखबाट बाहिर प्रकट हुनु भयो र देवताका अगाडि देखिनु भयो । देवीको दर्शन पाएपछि सबै देवताले श्रद्धाभक्तिपूर्वक उहाँलाई प्रणाम गरे, धूप बालियो, अनेक थरी फूलहरू चढाइए । ठूलो स्वरमा मन्त्रहरू पाठ गरिए । अनेक पदार्थले बनेका नैवेद्य चढाइए । (अनि) प्रसन्न भई देवीले सोध्नु भयो- “हजुरहरू आउनुको कारण के हो ?” ।६४-६६।

हे पुत्रहरू ! तिमीहरू जस्ता देवतालाई (पनि) कहाँबाट कसरी आपत् आइलाग्यो ? यस्तो प्रश्न देवताहरूलाई देवी सोधिरहनु भएको थियो (कि) त्यत्तिखेरै देवताले ठूलो कोलाहल सुने । देवगण त्यो के को कोलाहल भनेर पत्ता लगाउन खोज्दै नै थिए, देवताका डरको कारण रहेको दैत्यपतिको विशाल सेना देखियो । इन्द्र आदि प्रमुख देवता चराको रूप लिँदै दश दिशातिर भाग्न थाले । इन्द्रले सुन्दर मुजुरको रुप लिई सबै देवतालाई त्यहीँ छाडी भागे । चण्डका सेनादेखी डराएका यमराजले कागको रूप लिई तुरुन्त त्यहाँबाट सुइँकुचा ठोके । चन्द्रमा पनि च्याँखुराको रूप लिएर भागे ।६७-७२।

सूर्य पनि एक थरी मयूर विशेष (जीवञ्जीवक) को रूप लिई भागे । हाँसको रूप लिएर वरुण र कन्याङकुरुङको रूप लिएर वायु दश दिशातिर भागे । हे तपोधन ! बकुल्लाको रूप लिएर शिव भागे । (यसरी) अनेक देवता अनेक रूप लिई त्यहाँबाट भागे । हे मुनि ! भगवती देवी (पनि) तुरुन्त चाँपको रुखभित्र छिर्नु भयो ।७३-७५।



इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये तृतीयोऽध्यायः ॥३॥

श्रीस्कन्दपुराण, हिमवत्खण्ड, नेपालमाहात्म्यमा हनुमन्ते खोला, हनुमानघाट, चण्डेश्वरी आदिको उत्पत्ति कथा वर्णन गरिएको तेश्रो अध्याय समाप्त भएको छ ।

श्लोकानामादितः समष्ट्यङ्काः-१३६+७५=२११

शुरुदेखिको श्लोक सङ्ख्या :-१३६+७५=२११

Source : Suzanne Akiyama (A PCV), Collector : Mohan Prasad Sapkota



शिवलिङ्ग तथा लक्ष्मी नारायण आदि, हनुमानघाट, भक्तपुर, तस्विर खिचिएको साल : वि.सं.२०२३

**॥ अथ चतुर्थोऽध्यायः ॥**

॥ चौथो अध्याय ॥

**जैमिनिरुवाच** ॥ जैमिनि भन्नु हुन्छ-

**मार्कण्डेय मुनिश्रेष्ठ देवलोके पलायिते ।**
**किं चकार तदा चण्डः सर्वसैन्यसमन्वितः ॥१॥**

हे मुनिश्रेष्ठ मार्कण्डेय ! जब देवताहरू भागे तब सेनासहितको चण्डले के गर्‍यो ? ।१।

**मार्कण्डेय उवाच** ॥ मार्कण्डेय भन्नु हुन्छ-

**पलायिते सुरगणे पक्षिरूपेण जैमिने ।**
**सर्वसैन्ययुतश्चण्डः प्रययौ चम्पकं तरुम् ॥२॥**
**दृष्ट्वा सपर्यासम्भारं सर्वदेवविवर्जितम् ।**
**देवैश्च रचितं दृष्ट्वा चिन्तयामास दानवः ॥३॥**
**अयं सपर्यासम्भारो मद्वधार्थं सुरैः कृतः ।**
**पूजिता च महादेवी साऽप्यत्रापि न दृश्यते ॥४॥**
**प्रायशश्चम्पकतरुं प्रविष्टा सिंहवाहिनी ।**
**विहाय पूजासम्भारं देवैरपि पलायितम् ॥५॥**
**योत्स्ये चण्डिकया सार्द्धं यावन्नो बलसंयुता ।**
**जायते तावदेवाशु कर्तव्या हि प्रतिक्रिया ॥६॥**
**इति कृत्वा मतिं दैत्यः खड्गेन दृढविक्रमः ।**
**चिच्छेद चम्कतरुं बहिर्याता महेश्वरी ॥७॥**
**सायुधाष्टभुजा देवी कोटिसूर्यसमप्रभा ।**
**सिंहारूढा महादेवी दैत्यं दृष्ट्वा जहास ह ॥८॥**
**दैत्यो गिरिसुतां दृष्ट्वा प्राह दानवपुङ्गवान् ।**
**गृह्यतां दानववरा इयं परमसुन्दरी ॥९॥**
**सुकुमारशरीरेऽस्याः प्रहारो नैव दानवाः ।**
**कर्तव्यः सहसा भव्या तस्मादेषा प्रगृह्यताम् ॥१०॥**
**इत्याज्ञां चण्डदैत्यस्य लब्ध्वा दैत्या महाबलाः ।**
**अभ्यधावन् शिवां धर्तुं नारीबुद्ध्या दुराशयाः ॥११॥**

हे जैमिनि ! पक्षिरूप लिई देवताहरू भागेपछि सबै सेनासहित चण्ड दानव चाँपको रुख नजिकै गयो ।२। उसले त्यहाँ पूजा सामानले युक्त देवताविहीन चाँपको रुखलाई देख्यो । त्यहाँ अबीर आदिले मण्डप पूर्ण थियो । तब उसले सोच्यो ।३। यि सबै पूजासामग्री देवताहरूले (पक्कै) मलाई मार्नका लागि नै ( तयार) गरेका थिए । पूजित देवी पनि यहाँ देखिन्नन् ।४। सिंहवाहिनी प्रायः (सम्भवतः) यही चाँपको रुखमा छिरेकी हुनु पर्दछ । पूजासामान छाडेर देवताहरू पनि भागि सकेछन् (क्यारे) ।५। (अब) वशमा नआउञ्जेलसम्म म ती देवीसँग लड्नेछु । यसो गर्दा नै ती देवतासँग मेरो बदला (पनि) पूरा हुनेछ ।६। यस्तो सोचेर त्यो दैत्यले धारिलो खड्ग निकाली बलपूर्वक त्यो चाँपको रुखलाई काटि दियो । त्यसपछि माहेश्वरी बाहिर आइन् ।७। करौडौं सूर्य समान तेजिली, सिंह माथि चढेकी र आठ हातमा हतियार बोकेकी देवीले दैत्यलाई देखी हाँस्न लाग्नु भयो ।८। दैत्यपतिले (पनि) देवीलाई देखेर (आफ्ना) दानव सेनापतिहरूलाई भन्यो-हे श्रेष्ठ दानव हो ! यि परम सुन्दरीलाई समात ।९। हे दानव हो ! यिनका कोमल शरीरमा नहिर्काउ, अकस्मात् (गएर) समात । यिनलाई चोटपटक नलाग्ने (गरी) काम गर ।१०। बलिया दानव सेनापतिहरूले मालिकको आदेश पाई "(यि) नारीलाई समात्न कति नै बेर लाग्दछ र !" भन्ने सोची ती दुष्टहरू शिवालाई समात्न (प्रतिस्पर्धा गर्दै) दौडन थाले ।११।



**आगतान् दानवान् दृष्ट्वा हुंकारेण तथाऽम्बिका ।**
**भस्मीचकार कोपेन निःश्वासान् मुमुचेऽथ सा ॥१२॥**

दैत्यहरू आउन लागेको देखी देवीले ललकार्दै ठूलो स्वर (हुंकार) गर्नु भयो । (त्यसैले नै) ती दैत्य खरानी भए । यसपछि देवी रिसाउँदै लामोलामो सास फेर्न थाल्नु भयो ।१२।

**निःश्वासेभ्यो गणा जाता महाबलपराक्रमाः ।**
**युयुधुस्ते तदा दैत्यैर्नानाशस्त्रास्त्रपाणयः ॥१३॥**
**ततः सुतुमुलं युद्धमभवल्लोमहर्षणम् ।**
**रजोभिः स्यन्दनोद्धूतैस्तुरगाणां खुराहतैः ॥१४॥**
**आच्छन्नाश्च दिशः सर्वा दृश्यते नैव किञ्चन ।**
**अभवच्चाकुलं सैन्यं पांसुभिश्च गजोद्धुतैः ॥१५॥**
**क्षतजेन क्षणात् जाता नदी परमदारुणा ।**
**शूराणां हर्षजननी भीरूणां भयवर्द्धिनी ॥१६॥**
**यमद्वारे महाघोरे दैत्यप्राणहराऽभवत् ।**
**रजःशान्तिस्तदा जाता सूर्योऽपि परिदृश्यते ॥१७॥**
**देवीगणैर्दैत्यबलं भग्नं परमदारुणम् ।**

निःश्वासका कारण त्यहाँ बलिया देवीका गण उत्पन्न भए । ती देवीका गण हातमा अनेक हातहतियार लिएर दैत्यसँग लड्न लागे ।१३। ( यसरी डरले) रौं नै ठाडा हुने (खालको) अत्यन्त भीषण युद्ध हुन थाल्यो । रथका पाङ्ग्रा र घोडाका खुरबाट उडेको धूलोले दिशाहरू ढाकिए, कतै केही नदेखिने भयो । हात्तीहरूले उडाएको धूलोले सेना आकुलव्याकुल हुन थाले ।१४-१५। शूरवीरलाई आनन्द लाग्ने एवं कातरलाई तर्साउने गरी काटिएका लाशका रगतले विशाल नदी बहन थाल्यो । त्यो नदी लाग्दथ्यो कि महा भयङ्कर यमद्वारमा रहेकी कुनै दैत्यका प्राण हर्ने कुनै राक्षसी नै पो हुन् ।( यसरी) देवीका गणले दैत्यसेना नाश गरे । अनि दिशामा व्याप्त धूल्यो हट्यो, सूर्य पनि देखिन थाले । अत्यन्त कारुणिकरूपमा

**भग्नं दैत्यबलं दृष्ट्वा चण्डः परमदारुणः ॥१८॥**
**अभ्ययाद्रथवेगेन दारयन्निव मेदिनीम् ।**
**चण्डो ववर्ष समरे शायकैरतिदारुणैः ॥१९॥**
**चिच्छेद बाहून् केषांचिद्गणानामतिदारुणः ।**
**शिरश्चिच्छेद केषांचिल्लघुहस्तः प्रतापवान् ॥२०॥**
**ऊरूँश्चिच्छेद केषांचिच्छरैराशीविषोपमैः ।**
**स्वबलं भग्नमालोक्य देवी परमकोपना ॥२१॥**
**अभ्ययादतिवेगेन चण्डं हन्तुं महाबलम् ।**
**चण्डोऽपि रथवेगेन अभ्याद्गिरिजां तदा ॥२२॥**
**आगतं दैत्यमालोक्य देवी सस्मितमब्रवीत् ।**
**युध्यस्वाद्य मया सार्द्धं स्थिरो भूत्वा महासुर ॥२३॥**
**इदानीं नाशयिष्यामि युद्धश्रद्धां महासुर ।**
**देवीवाक्यं समाकर्ण्य दानवो वाक्यमब्रवीत् ॥२४॥**

दैत्यसेना छिन्नभिन्न भइरहेको देखी..।१६-१८। रथको वेगले पृथ्वीलाई चिरौंला नै जसरी चण्ड दैत्य युद्ध मैदानमा आयो र भीषण तरिकाले बाणहरू हान्न थाल्यो ।१९। हृदय विदारक तरिकाले प्रतापी एवं दक्षहस्त त्यो दैत्यले कसैका हात काटि दियो त कसैका टाउको ।२०। सर्पसमानका बाणले कसैको तिघ्रा काटि दियो । आफ्ना गण नष्ट भइरहेको देखी देवीले अति रिसाउँदै...।२१। द्रुतगतिले चण्डलाई मार्न भनी आक्रमण गर्न लाग्नु भयो । चण्ड पनि अति वेगिलो रथ लिई देवी भएतिर हानियो ।२२। आइरहेको दैत्यलाई देखेर देवीले हाँसेर भन्नु भयो-"हे महासुर ! आज मसँग सावधान भई टिकेर लड..।२३। हे महासुर ! तिम्रो युद्धलालसा आज म नष्ट पारि दिनेछु" । देवीका कुरा सुनी चण्ड दैत्य भन्न लाग्यो ।२४।

दैत्य उवाच॥ दैत्य भन्दछ-

**तिष्ठ तिष्ठ रणे देवि मा शिवे गर्वमावह ।**
**त्वया हताः सदा दैत्या देवानुग्रहकारणात् ॥२५॥**
**मयाऽद्य दर्शनं जातं युद्धश्रद्धां हरामि ते ।**
**शरैर्ववर्ष तां देवीमित्युक्त्वा दैत्यपुङ्गवः ॥२६॥**

**शरास्त्रं तस्य चिच्छेद गिरिजा किल लीलया ।**
**देवीमुक्ताञ्शराँश्चापि चिच्छेद दनुजाधिपः ॥२७॥**
**महास्त्रानपि चिच्छेद देवीमुक्तान् दनोः सुतः ।**
**दैत्यमुक्तानि शस्त्राणि देवी चिच्छेद लीलया ॥२८॥**
**यतः परमसंक्रुद्धो दानवाधिपतिः शरैः ।**
**अर्दयामास गिरिजां दर्शयन् हस्तलाघवम् ॥२९॥**
**ततः परमसंक्रुद्धा दानवेन्द्रस्य चण्डिका ।**
**धनुश्चिच्छेद बाणेन शरेणैकेन सारथेः ॥३०॥**
**शिरश्चिच्छेद वेगेन ध्वजं बाणैरपातयत् ।**
**स च्छिन्नधन्वा दनुजो मुद्गरं घोरदर्शनम् ॥३१॥**
**भ्रामयित्वाऽभ्ययाद्वेगाद्देवीं हन्तुं महाबलः ।**
**दृष्ट्वाऽतिमुद्गरं घोरं देवी परमकोपना ॥३२॥**
**चिच्छेद तिलशस्तस्य हस्तस्थं मुद्गरं शरैः ।**
**छिन्ने च मुद्गरे दैत्यः खड्गं चर्म प्रगृह्य च ॥३३॥**
**अभ्ययादतिसंक्रुद्धश्चण्डिकाऽपि शितैः शरैः ।**
**खड्गं चर्म प्रचिच्छेद सायकैरप्यपीडयत् ॥३४॥**
**मत्वाऽऽत्मानं हीनबलं तां च मत्वा बलाधिकाम् ।**
**महादेववरं स्मृत्वा स्त्रीवध्यत्वं स दानवः ॥३५॥**
**ज्ञात्वा प्रोवाच गिरिजां भक्तिमास्थाय चातुलाम् ।**
**न प्राकृताऽसि गिरिजे त्वं जानामि महेश्वरीम् ॥३६॥**
**आद्याशक्तिस्त्वमेवासि त्वया सृष्टं जगत्त्रयम् ।**
**त्वया च निहता दैत्या देवानुग्रहकारणात् ॥३७॥**
**हन्तव्योऽहं त्वया देवि जानाम्येतन्न संशयः ।**
**यावत् स्नात्वा महादेवी लिङ्गं संस्थापयाम्यहम् ॥३८॥**

"हे देवी ! पख पख, हे शिवे ! युद्धमा (तिमी पनि) धाक नलगाउ । तिमीले सधैं देवताका कृपाका कारण दैत्यहरू मार्ने गरेकी छचौ ।२५। मलाई आज तिम्रो दर्शन भएको छ । तिम्रो युद्धलालसा ( म पनि आज) नष्ट पारि दिन्छु" । यति भनेपछि त्यो दैत्यश्रेष्ठले देवीमाथि बाण वर्षाउन शुरु गऱ्यो ।२६। उसले हानेका बाण र अस्त्र देवीले सजिलैसँग खसाली दिनुभयो । त्यो दैत्यपतिले पनि देवीले हान्नु भएका बाणलाई काटी दियो ।२७। त्यो दैत्येन्द्रले देवीले हान्नु भएका ठूला अस्त्र पनि काटि दियो । (उता) दैत्यले हानेका शस्त्र देवीले सहजै काटीदिनु भयो ।२८। त्यसपछि दैत्यले आफ्नो हस्तकौशल देखाउँदै अति रिसाएर बाण हानी देवीलाई पीडित बनायो ।२९। त्यसपछि देवीले पनि अति रिसाई उसको धनुष काटीदिनु भयो, अर्को एक बाणले सारथीको शीर ढालि दिनु भयो ।३०। फेरी वेगिलो बाणले उसको झण्डा काटी खसाली दिनुभयो । तब धनुषहीन दैत्यले भयङ्कर मुद्गर ..।३१। घुमाएर देवीलाई मार्न भनी देवी माथि जाइ लाग्यो । भयङ्कर मुद्गर देखी देवीले रिसले भाउन्न हुँदै..।३२। बाण हानी उसको हातको मुद्गरलाई चूर्णचूर्ण पारीदिनु भयो । मुद्गर नष्ट भएपछि दैत्यले खड्ग र छालाको ढाल लियो र ।३३। अति नै रिसाएर देवी भएतिर दौडियो । चण्डिकाले उसका खड्ग र ढाल पनि काटीदिनु भयो र बाणले उसलाई व्यथित पार्नु भयो ।३४। (अनि) आफूलाई निर्धो, ती देवीलाई अधिक बलियो र महादेवले दिएको "स्त्रीद्वारा मारिने" बरदान त्यो दानवले..।३५। जानी (वा सम्झी) असीम भक्तिपूर्वक गिरिजालाई भन्न लाग्यो-"हजुर सामान्य नारी होइन, मैले हजुरलाई महेश्वरी भनी चिने.. ।३६। हजुर आद्याशक्ति हुनु हुन्छ, हजुरले नै तीनै लोक रचना गर्नु भएको हो । देवताप्रति कृपा गरी हजुरले नै दैत्यको विनाश गर्नु भएको हो ।३७। देवी ! म हजुरबाट मारिनेछु, यो म जान्दछु, (यसमा) कुनै शङ्का छैन । ( तर) हे महादेवी ! जबसम्म म नुहाएर शिवलिङ्ग स्थापना गर्दिन..।३८।

**तावत् त्वमत्र समरे मद्वाक्यात् तिष्ठ चण्डिके ।**
**मां हत्वा तिष्ठ देवि त्वं रक्तचन्दनकानने ॥३९॥**
**नाम्ना चण्डेश्वरी भूत्वा भवानुग्रहकारिणी ।**

मेरो अनुरोधलाई मानी हे चण्डिका ! हजुर यही युद्धमैदानमा बसि रहनु होस् । (अनि) मलाई मारेर यही रक्तचन्दनको वनमा ...।३९। चण्डेश्वरीका नामले भक्तको कल्याणकारिणी भएर ( यहीँ) रहनु होस् ।

**मार्कण्डेय उवाच ॥ मार्कण्डेय भन्नु हुन्छ-**

**दानवेन्द्रवचः श्रुत्वा प्राह पर्वतनन्दिनी ॥४०॥**
**दानवेन्द्र त्वया लब्धं ज्ञानं परमदुर्लभम् ।**
**न स्थास्यन्त्यसुरश्रेष्ठ प्राणिनः केऽपि सर्वदा ॥४१॥**
**दृश्यं श्राव्यं च यत् किञ्चिन्नश्वर विद्धि दानव ।**
**शिवलिङ्गस्थापनेऽपि न ते चिन्ताऽस्तु दानव ॥४२॥**
**मया हतेऽसुरश्रेष्ठ शरीराल्लिङ्गमुत्तमम् ।**
**भविष्यत्यत्र सुखदं दिव्यं चण्डेश्वराभिधम् ॥४३॥**
**चण्डेश्वरीति ते नाम्ना स्थायाम्यत्रासुरोत्तम ।**
**त्वां हत्वा समरे तीक्ष्णं भक्तानुग्रहकाम्यया ॥४४॥**
**श्रुत्वा गिरिसुतावाक्यं ततो दानवपुङ्गवः ।**
**हर्षं च परमं लेभे रणे विक्रममादधौ ॥४५॥**
**उत्पाट्य पादपं दैत्यो भ्रामयित्वा महाबलः ।**
**चिक्षेप गिरिजां हन्तुं ननाद सुमहत् स्वनम् ॥४६॥**
**आपतन्तं तरुं दृष्ट्वा ततस्तु गिरिनन्दिनी ।**
**विच्छेद तिलशो बाणैः पश्यतस्तस्य तत्क्षणात् ॥४७॥**
**चूर्णीकृतं तरुं दृष्ट्वा ततो दानवपुङ्गवः ।**
**उत्पाट्य महतीं गुर्वीं शिलां परमयत्नतः ॥४८॥**
**चिक्षेप भ्रामयित्वोच्चैर्जगर्ज च महाबलः ।**
**आपतन्तीं शिलां दृष्ट्वा ततो भगवती रुषा ॥४९॥**
**चिच्छेद शायकैर्वेगात् खण्डं खण्डं तपोधन ।**
**शिलां च विफलां दृष्ट्वा दैत्यः परमकोपनः ॥५०॥**
**आययौ मुष्टिमुद्यम्य देवीं हन्तुं कृतश्रमः ।**
**समायान्तं ततो दृष्ट्वा दानवं सुरदुर्जयम् ॥५१॥**
**शूलेन हृदयं भित्त्वा पातयामास भूतले ।**
**चालयन् सकलां पृथ्वीं ससरिद्वनपर्वताम् ॥५२॥**
**पपात धरणीपृष्ठे वज्राहत इवाचलः ।**
**ववौ वायुः सुखस्पर्शः पुण्यगन्धवहस्तदा ॥५३॥**
**आसन् मार्गवहा नद्यः सुप्रभश्च दिवाकरः ।**
**अग्नयो जज्वलुस्तत्र हते तस्मिन् दुरात्मनि ॥५४॥**
**अस्य दैत्यस्य देहात् तु तेजोरूपमनुत्तमम् ।**
**जातं लिङ्गं महापुण्यं नाम्ना चण्डेश्वराभिधम् ॥५५॥**
**ये द्रक्ष्यन्ति नरा लिङ्ग रक्तचन्दनकानने ।**
**तेषां हस्तगता सिद्धिर्भविष्यति न संशयः ॥५६॥**
**एवं चण्डासुरवधं कृत्वा सा शैलनन्दिनी ।**
**भक्तलोकहितार्थाय स्थिता तत्रैव कानने ॥५७॥**
**अद्यापि वर्तते तत्र रक्तचन्दनपादपः ।**
**कृते प्रहारे निनदः श्रूयते नरशब्दवत् ॥५८॥**
**वैशाखपौर्णमास्यां तु देव्या चण्डासुरो हतः ।**

दानवपतिको वचन सुनेर पर्वतपुत्रीले भन्नु भयो-।४०। "हे दानवेन्द्र ! तिमीले परम दुर्लभ ज्ञान प्राप्त गरेका छौ । कुनै पनि जीव सधैं रहँदैन (बाँच्दैन, त्यसैले तिमी पीर नगर)) ।४१। हे दानव ! जेजति देखिने वा सुनिने कुरा छन् ती सबै नास हुन्छन् भनेर जान । शिवलिङ्ग स्थापना गर्ने चिन्ता पनि तिमीले लिनु पर्दैन ।४२। हे असुरश्रेष्ठ ! मबाट मारिएपछि तिम्रो शरीरबाट यहाँ सुखद र दिव्य चण्डेश्वर शिवलिङ्ग (उत्पन्न) हुनेछ ।४३। म पनि भक्तका कल्याणका लागि तिमीलाई तीक्ष्णताले मारी तिम्रा लागि चण्डेश्वरी नामले यहाँ बस्नेछु" ।४४। देवीको वचन सुनी दानवपतिले परमानन्द प्राप्त गऱ्यो र युद्धमा पराक्रम देखाउने निश्चय गऱ्यो ।४५। (त्यसपछि) दैत्यले एउटा वृक्ष उखेली बलले घुमाउँदै गिरिजालाई मार्न भनी फ्याँक्यो र ठूलो स्वरले ललकाऱ्यो ।४६। दैत्यले हेर्दाहेर्दै पार्वतीले आफूतिर आइरहेको वृक्षलाई बाणले हानी तत्काल  चकनाचूर पारीदिनु भयो ।४७। रुख ध्वस्त भएको देखी दैत्येन्द्रले एउटा विशाल पत्थर बल गरेर उचाली...।४८। देवी माथि फ्याँक्यो र ठूलो स्वरले गर्जियो । आफूतिर आइरुहेको पत्थर देखी भगवतीले रिसाउँदै...।४९। बाण हानी त्यसलाई टुक्राटुक्रा पारिदिनु भयो । पत्थर पनि विफल भएको देखी दैत्य अती रिसाई...।५०। देवीलाई मुड्कीले नै हानेर मार्ने शूर गऱ्यो । दुर्जय दैत्य यसरी आइरहेको देखी ( देवीले)..।५१। त्रिशूलले उसको छाती छेडी भुँईमा लडाइ दिनु भयो । नदी, वन र पर्वत सहित सारा पृथ्वीलाई हल्लाउँदै...।५२। पहाडमा चटयाङ्ग खसे जसरी त्यो दैत्य (पृथ्वीमा) लड्यो । ( त्यसपछि) पुण्यगन्ध सहितको सुखदायी स्पर्श गर्दै हावा चल्न थाल्यो ।५३। त्यो दुष्ट मरेपछि नदीहरु आफ्ना मार्गमा बहन थाले, सूर्य प्रभायुक्त भए र अग्नि बल्न थाल्यो ।५४। (मर्दा) उसका शरीरबाट जुन अनुपम तेज  निस्कियो त्यसबाट चण्डेश्वर नामको महापुण्यदायक लिङ्ग उत्पन्न भयो ।५५। जो मानिस रक्तचन्दन वनमा रहेको यो लिङ्गको दर्शन गर्दछन् तिनको हातमा सिद्धि प्राप्त हुन्छ, यसमा शङ्कै छैन ।५६। यसरी चण्डासुरलाई मारी लोककल्याणका लागि पार्वती त्यही वनमा रहन थाल्नु भयो ।५७। अहिले पनि त्यो वनमा रक्तचन्दनको रुख छ र त्यसमा हिर्काउँदा मानिसको जस्तो स्वर निस्कन्छ ।५८। वैशाख पूर्णिमाका दिन देवीले चण्डासुरलाई मार्नु भएको थियो । अतः त्यो रक्तचन्दनको वनमा त्यही दिन देवीको महोत्सव गरिनु पर्दछ ।५९। देवीलाई खुसी पार्न मानिसले त्यही दिन अर्थात् वैशाखपूर्णिमाका दिन (नै) यात्रा गर्नू ।६०।

**अतो महोत्सवस्तस्या रक्तचन्दनकानने ॥५९॥**
**तस्यां यात्रा नरै कार्या देवीसन्तोषहेतवे ।**
**वैशाखपौर्णमास्यां तु चण्डेशीप्रितये तदा ॥६०॥**
**दानं कुर्वन्ति ये भक्त्या तेषां स्वर्गो न संशयः ।**
**चण्डेश्वर्या महायात्रं ये द्रक्ष्यन्ति नरा भुवि ॥६१॥**
**श्रुत्वाऽध्यायमिमं पुण्यं महापापौघनाशनम् ।**
**वेदान्तवेत्ता विप्रः स्यात् क्षत्रियो विजयो भवेत् ॥**
**धनधान्ययुतां वैश्यः शूद्रः सद्गतिमाप्नुयात् ॥६२॥**

चण्डेश्वरीलाई खुसी पार्न उक्त दिन जो दान गर्दछन्, ति स्वर्ग जान्छन्, यसमा शङ्कै छैन । पृथ्वीका जो मानिस चण्डेश्वरीको यात्रा हेर्दछन्..।६१।
वा यो पापसमूह नाश गर्ने अध्यायलाई सुन्दछन् ती ब्राह्मण भए वेदान्तविज्ञ, क्षत्रिय भए विजयी, वैश्य भए धनधान्यशाली र शूद्र भए मोक्ष हुन्छन् ।६२।

**इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये देवीप्रादुर्भावो नाम चतुर्थोऽध्यायः ॥४॥**

श्रीस्कन्दपुराण, हिमवत्खण्ड, नेपालमाहात्म्यमा चण्डेश्वर र चण्डेश्वरी उत्पत्तिको कथा प्रसङ्ग वर्णन भएको चौथो अध्याय सकिएको छ ।४।

**श्लोकानामादितः समष्ट्यङ्काः-२११+६२=२७३**

शुरुदेखिको श्लोक सङ्ख्या :- २११+६२=२७३



Photographer & @ : Alfred Gregory, Collection : Mohan Prasad Sapkota

चण्डेश्वरी, बनेपा, काभ्रेपलाञ्चोक, तस्बिर खिचिएको साल : वि.सं.२०१६



Source : Suzanne Akiyama (A PCV), Collector : Mohan Prasad Sapkota

शीर मेमोरीयल अस्पतालबाट देखिएको चण्डेश्वरी, बनेपा, काभ्रेपलाञ्चोक, तस्विर खिचिएको साल : वि.सं.२०२३

Source : Suzanne Akiyama (A PCV), Collector : Mohan Prasad Sapkota



चण्डेश्वरीको रथ यात्रा, बनेपा, काभ्रेपलाञ्चोक, तस्विर खिचिएको साल : वि.सं.२०२३

**॥ अथ पञ्चमोऽध्यायः ॥**

॥ पाँचौ अध्याय ॥

**जैमिनिरुवाच** ॥ जैमिनि भन्नु हुन्छ-

**हते चण्डासुरे देव्या किमकारि सुरैस्ततः ।**
**तत्तत् सर्वं समाचक्ष्व मार्कण्डेय तपोधन ॥१॥**

देवीबाट चण्डासुर मारिएपछि देवताहरूले के गरे ? हे तपका धनी मार्कण्डेय ! यो वृत्तान्त पूरै मलाई बताउनु होस् ।१।

**मार्कण्डेय उवाच** ॥ मार्कण्डेय भन्नु हुन्छ-

**चण्डासुरं हतं दृष्ट्वा देव्या परमदुर्जयम् ।**
**पक्षिरूपं परित्याज्यगच्छँश्चण्डेश्वरी तदा ॥२॥**
**भक्तियुक्ताः सुराः सर्वे पूजयामासुरम्बिकाम् ।**
**पूजिता च महादेवी देवैर्धूपादिविस्तरैः ॥३॥**
**निवासमकरोत् तत्र रक्तचन्दनकानने ।**
**देवाश्चापि ततो दृष्ट्वा क्षेत्रं परमदुर्लभम् ॥४॥**
**स्वस्वनामाङ्कितं लिङ्गं स्थापयामासुरेव हि ।**
**धनेशः स्थापयामास धनेश्वरमिति ध्रुवम् ॥५॥**
**धनेश्वरमहालिङ्गं येद्रक्ष्यन्ति कलौ युगे ।**
**ते धनाढ्या भविष्यन्ति तपोधन न संशयः ॥६॥**

हराउन कठीन चण्डासुर देवीबाट मारिएको देखी सबै देवताहरू चराको रूप छाडी चण्डेश्वरी भएका ठाउँमा गए ।२। भक्तिपूर्वक सबै देवताले अम्बिकाको पूजा गरे । देवताबाट धूप आदिले विस्तारपूर्वक पूजिएकी महादेवीले पनि..।३। त्यहीँ रक्तचन्दनको वनमा निवास गर्नु भयो । देवताहरूले पनि त्यो अति नै दुर्लभ क्षेत्रलाई देखी..।४। आआफ्ना नामबाट (त्यो स्थल निकट) लिङ्गहरू स्थापना गरि दिए । कुबेरले धनेश्वर नामले प्रख्यात लिङ्गको स्थापना गरि दिए ।५। हे तपका खानी ! कलियुगमा धनेश्वर महालिङ्गको जसले दर्शन गर्दछन्, ती धनी हुन्छन्, यसमा शङ्कै छैन ।६। (धनेश्वर काभ्रेजिल्लाको बनेपा शहरभन्दा दक्षिणतिर रहेका छन्) । त्यसपछि कामधेनुले सबै चाहना पूरा गरिदिने उत्तम खुरेश्वर नामक लिङ्गको स्थापना गरि दिइन् ।७।

**कामधेनुस्ततो लिङ्गं सर्वकामफलप्रदम् ।**
**नाम्ना संस्थापयामास खुरेश्वरमनुत्तमम् ॥७॥**
**खुरेश्वरस्य ये भक्ता भविष्यन्ति नरोत्तमः ।**
**गोवृद्धिरतुला तेषां भविष्यति न संशयः ॥८॥**

हे नरश्रेष्ठ ! जो खुरेश्वरको भक्त हुन्छन् तिनको गाईवस्तु अतुलनीयरूपले वृद्धि हुन्छन्, यसमा शङ्का नगर ।८। ( खुरेश्वरलाई अहिले गौखुरेश्वर, भनिन्छ र यो काभ्रेपलाञ्चोकको धुलिखेलमा पर्दछ) । श्लेष्मान्तक वनदेखि पूर्वको यो रक्तचन्दन नामक वनको मानिसहरू गणना (वा प्रशंसा) गर्ने गर्दछन् ।९।

**श्लेष्मान्तकवनतात् पूर्वं गणना मुनिसत्तम ।**
**रक्तचन्दननाम्नोऽस्य वनस्य क्रियते नृभिः ॥९॥**
**ततः पर्वतमुल्लङ्घ्य कौशिक्याः संगमे शुभे ।**
**रोषमत्याः सङ्गमे च विश्वामित्रो मुनीश्वरः ॥१०॥**
**स्वनाम्ना स्थापयामास भुक्तिमुक्तिफलप्रदम् ।**
**कौशिकी सरितां श्रेष्ठा महापातकनाशिनी ॥११॥**
**विश्वामित्रस्य भगिनी नृणां दुर्मतिनाशिनी ।**
**तस्यास्तीरे महालिङ्गं विश्वामित्रेश्वरं शुभम् ॥१२॥**
**शिवरात्रिचतुर्दश्यां ये द्रक्ष्यन्ति मुनीश्वर ।**
**चतुवर्गोदयस्तेषां शीघ्रमेव न संशयः ॥१३॥**
**श्लेष्मान्तकवने क्षेत्रगणनाऽस्य न जायते ।**

त्यसपछि (केही) पहाड नाघेर कोशी र रोसी (नदी)को पवित्र दोभानमा मुनीश्वर विश्वामित्रले..।१०। आफ्नो नामबाट भुक्तिमुक्ति दिने लिङ्ग स्थापना गरि दिए । महापाप नाशगर्ने कोशीनदी नदीहरूमा श्रेष्ठ मानिन्छिन् ।११। विश्वामित्रकी बहिनी यि कोशीले मानिसका कुमतिलाई नाश गरिदिन्छिन् । तिनको किनारमा पवित्र विश्वामित्रेश्वर महालिङ्ग स्थापना गरिएको छ ।१२। हे मुनीश्वर ! शिवरात्री वा चतुर्दशीका दिन जसले यिनको दर्शन गर्दछन्, तिनमा धर्म, अर्थ, काम र मोक्षको चाँडै नै उदय हुन्छ, शङ्का नगर ।१३। यसको श्लेष्मान्तक वनमा क्षेत्रगणना छैन । (अहिलेको रोसी र कोशीको दोभान अर्थात कुशेश्वर नै विश्वामित्रेश्वर क्षेत्र हो) । यसपछि देवतासहीत इन्द्र प्रसन्न भए र.. ।१४। नीरामती र रोसी खोलाको रमणीय सङ्गममा सिद्धि प्रदायक इन्द्रेश्वर महालिङ्गको स्थापना गरि दिए ।१५। हे तपोधन ! जो इन्द्रेश्वरका भक्त हुन्छन्, तिनको अतुलनीय समृद्धि हुनेछ, यसमा शङ्का नगर ।१६। जेठ महिनाको पूर्णिमाका दिन नदीको सङ्गममा नुहाएर जसले इन्द्रेश्वरको दर्शन गर्दछन् तिनले स्वर्ग पाउँदछन्, यसमा (पनि) शङ्का नगर ।१७। हे नरोत्तम हो ! जो इन्द्रेश्वरका भक्त हुन्छन्, स्वयं इन्द्र प्रसन्न भई तिनको इच्छा पूरा

**ततः परमसन्तुष्टो देवैः सह पुरन्दरः ॥१४॥**
**नीरामत्या रोषमत्याः सङ्गमे सुमनोहरे ।**
**इन्द्रेश्वरमहालिङ्गं स्थापयामास सिद्धिदम् ॥१५॥**
**इन्द्रेश्वरस्य ये भक्ता भविष्यन्ति तपोधन ।**
**तेषां समृद्धिरतुला भविष्यति न संशयः ॥१६॥**
**ज्येष्ठमासे पौर्णमास्यां स्नानं कृत्वा तु सङ्गमे ।**
**इन्द्रेश्वरं च द्रक्ष्यन्ति तेषां स्वर्गो न संशयः ॥१७॥**

इन्द्रेश्वरस्य ये भक्ता भविष्यन्ति नरोत्तमाः ।
तेषामिन्द्रः स्वयं तुष्टः प्रदास्यति मनोरथान् ॥१८॥
चण्डासुरवधोत्पन्न-हर्षनिर्भरमानसाः ।
त्रिदशाः शैलमुत्तीर्य सरितोः सङ्गमे शुभे ॥१९॥
आशापूरेश्वरं लिङ्गं स्थापयामासुरुत्तमम् ।
ततो देवा वचः प्राहुः सन्तुष्टा द्विजसत्तम ॥२०॥
आशापूरेश्वरं लिङ्गं द्रक्ष्यन्ति मनुजा भुवि ।
तेषां नराणां सततमाशा पूर्णा भविष्यति ॥२१॥
इत्युक्त्वा देवताः सर्वाः स्वधामानि ययुस्तदा ।
इति ते सर्वमाख्यातं किमन्यच्छ्रोतुमिच्छसि ॥२२॥

गरि दिन्छन् ।१८। (यो काभ्रेपलाञ्चोकको पनौतीमा पर्दछ) । **चण्डासुरको वधबाट प्रसन्न हृदय भएका देवताहरू पहाडबाट झरेर नदीहरुका पवित्र सङ्गममा गए ।१९। त्यहाँ तिनले आशापूरेश्वर नामको लिङ्ग स्थापना गरे ।** (अनि) हे श्रेष्ठ ब्राह्मण ! देवता प्रसन्न भई भने -।२०। "जो मानिस पृथ्वीमा आशापूरेश्वरको दर्शन गर्दछन्, ती मानिसको सैयौं आशा पूरा हुने छन्" ।२१। (काभ्रेको सिपाडोल र नासिका गा.वि.स.को वा भक्तपुर र काभ्रेको सीमानामा पर्दछ) । यति भनी सबै देवताहरू आआफ्ना धामतिर लागे । यसरी मैले तिमीलाई सबै कुरा बताएँ । हे जैमिनि ! अरु के सुन्न चाहन्छौ ? ।२२।

**जैमिनिरुवाच ॥** जैमिनि भन्नु हुन्छ-

त्वत्तः श्रुता कथा ब्रह्मन् सर्वपापविनाशिनी ।
अन्यानि मुख्यस्थानानि कथयासु मम प्रभो ॥२३॥
निर्गतं त्वान्मुखाम्भोजात् कथामृतरसं प्रभो ।
पिबतो नान्ति मे तृप्तिः श्रोतुं श्रद्धा हि जायते ॥२४॥

हे प्रभू ! हे ब्रह्मन् ! हजुरका मुखारविन्दबाट सबै पापनाश गर्ने कथाहरू सुने, अरु मुख्य मुख्य ठाउँहरूका बारेमा (पनि) बताउनु होस् ।२३। हे प्रभू ! हजुरका मुखारविन्दबाट निस्केका कथारूपी अमृतरस पिएर मेरो तीर्खा मेटिँदैन, सुन्ने चाहना (झन्) बढ्दैबढ्दै जान्छ ।२४।

**मार्कण्डेय उवाच ॥** मार्कण्डेय भन्नु हुन्छ-

सन्ति तीर्थान्यनेकानि श्लेष्मान्तकवने मुने ।
मुख्यानि तानि स्थानानि तथाऽपि कथयामि ते ॥२५॥
अस्ति वाराणसी नाम पुरी शङ्करपालिता ।
यस्यां पुर्यां तनुत्यागान्मुक्तिमाप्नोति मानवः ॥२६॥
यस्यामासीद्द्विजश्रेष्ठः प्रियातिथिरिति स्मृतः ।
तस्य भार्या गुणवती शीलौदार्यसमन्विता ॥२७॥
पतिव्रता महाभागा सर्वलक्षणलक्षिता ।
चत्वारस्तनयास्तस्य मुनेर्जातास्तपोधन ॥२८॥
मेधातिथिर्गुणनिधिर्भरतो मलयस्तथा ।
त्रयः स्वाध्यायनिरताः पितृभक्ता गुणैर्युताः ॥२९॥
कनिष्ठो मलयो दुष्टो बभूव गुणवर्जितः ।
सदा द्यूतप्रियश्चौरः पिशुनः परवञ्चकः ॥३०॥
वारितो बहुधा यत्नैर्मात्रा पित्रा च बन्धुभिः ।
न सद्वृत्तो यदा जातः पित्रा त्यक्तस्तदा सुतः ॥३१॥
ततस्तु मलयो दुष्टो वेश्यागामी बभूव ह ।
चौर्येण वा वञ्चनेन साधयित्वा ततो धनम् ॥३२॥
वेश्यायै सर्वदाऽयच्छत् कर्मचाण्डालतां गतः ।
एकदा मलयो रात्रौ क्रीडन् वै वेश्यया सुखम् ॥३३॥
श्रान्तो जलभ्रमवशाद्वारुणीं सहसा पपौ ।
अन्यादृशं स्वादु लब्ध्वा वेश्यां पप्रच्छ तत्क्षणात् ॥३४॥
सुभगे सलिलभ्रान्त्या किं पीतमिदमद्भुतम् ।
पात्रं दृष्ट्वा ततो वेश्या प्राह तं द्विजसत्तम ॥३५॥
त्वया पीता सुरा दुष्ट मम पात्रस्थिताऽशुभा ।
वेश्यावचनमाकर्ण्य दुःखितो मलयोऽभवत् ॥३६॥

हे मुनि ! श्लेष्मान्तक वनमा अनेक (असंख्य) तीर्थ छन्, तिमध्ये मुख्य मुख्य स्थानका बारेमा म बताउँदछु ।२५। भगवान् शङ्करले पालनपोषण गरेको वाराणसी नाम गरिएको शहर छ, जुन शहरमा प्राण त्याग गर्नाले मानिसले मोक्ष प्राप्त गर्दछ ।२६। त्यो शहरमा प्रियातिथि नाम गरेका एक जना श्रेष्ठ ब्राह्मण थिए । तिनकी शीलस्वभाव राम्रो भएकी, उदार र गुणवती पत्नी थिइन् ।२७। हे तपोधन ! पतिव्रता, अती भाग्यवती एवं सबै लक्षणले युक्त भएकी ती स्त्रीबाट उनका चार छोराहरू भएका थिए ।२८। मेधातिथि, गुणनिधि, भरत र मलय (नामका चार छोराहरु) मध्ये तीन छोराहरू शास्त्र-अध्ययनशील, पितृभक्त र गुणवान् थिए ( भने) ।२९। कान्छो मलय भने गुणहीन दुष्ट भयो । उ सधैं जुवा खेल्ने, चोर्ने, चुगलिखोर गर्ने र ठग्ने गर्दथ्यो ।३०। बाउ, आमा र नातेदारले पनि उसलाई धेरै पटक सम्झाए । तर पनि उ सदाचारी नभए पछि उसलाई बाउले त्यागी दिए ।३१। त्यसपछि दुष्ट मलय वेश्यागामी हुन पुग्यो । चोरेर वा ठगेर धन लेराई..।३२। सधैं वेश्यालाई दिन थाल्यो । कर्म चाण्डाल हुन पुग्यो । एकरात उसले वेश्यासँग रमाइरहेको अवस्थामा...।३३। थाकेर पानी पिउन खोज्दा एक्कासी झुक्किएर मदिरा पिउन पुग्यो । बेग्लै स्वाद थाहा पाई उसले तत्काल वेश्यासँग सोध्यो-।३४। "पानीको भ्रममा मैले के यस्तो अचम्मको कुरा पिएँ ?" । अनि भाँडो हेर्दै वेश्याले द्विजोत्तमलाई भनी-।३५। "हे दुष्ट ! तिमीले मेरो अपवित्र भाँडामा राखिएको मदिरा (पो) पियौ । वेश्याको कुरा सुनेर मलय दुःखी भयो ।३६। पछुतो मान्दै मनमा अनेक थरी चिन्ता लिन लाग्यो । "मैले काशी विश्वनाथ नजिकै ब्राह्मणकुलमा जन्म लिएँ

चिन्तयामास हृदये परं निर्वेदमास्थितः ।
प्राप्तं द्विजकुले जन्म काश्यां विश्वेशसन्निधौ ॥३७॥
नाधीता हि मया वेदा न च तप्तं महत् तपः ।
नाराधितोऽपि विश्वेशो मणिकर्ण्यां निमज्जनम् ॥३८॥
न कृतं न च दानानि दत्तान्यपि कदाचन ।
द्यूतेऽनुरागो मे जातः प्रीतिर्वेश्याजने तथा ॥३९॥
वारुणी च मया पीता कथं मे निष्कृतिर्भवेत् ।
अतो ह्यात्मविशुद्ध्यर्थं महापातकनाशिनीम् ॥४०॥
स्नातुं सचैलो यास्यामि सर्वथा मणिकर्णिकाम् ।
इति चिन्तापरो भूत्वा लज्जामुत्सृज्य तत्क्षणात् ॥४१॥
मलयः प्रययौ शीघ्रं स्नातुं श्रीमणिकर्णिकाम् ।
ब्राह्मणैः क्षत्रियैर्वैश्यैः शूद्रैश्चापि समावृताम् ॥४२॥
ततो ददर्श मलयः सुपुण्यां मणिकर्णिकाम् ।
ब्राह्मणा यत्र कुर्वन्ति स्नानं परमपावनाः ॥४३॥
तत्रैव प्रययौ विप्रः स्नानार्थं मलयो मुने ।
समीपमागतं दृष्ट्वा मलयं दोषसागरम् ॥४४॥
चुकोप ब्राह्मणः कश्चिदुवाचेदं वचः पुनः ।
पापिष्ठ दुष्ट मलय वेश्यागामिन् नराधम ॥४५॥
स्पर्शं मा कुरु विप्राणां दूरेऽपसर लम्पट ।
इति विप्रवचः श्रुत्वा मलयः प्राह तं द्विजम् ॥४६॥
गच्छापसर विप्र त्वं किं कोपं कुरुषे मयि ।
मलयस्य वचः श्रुत्वा ब्राह्मणः प्राह तं पुनः ॥४७॥
लब्धं विप्रकुले जन्म द्यूतक्रीडारतः सदा ।
कृत्वा च वेश्यागमनं पीत्वा हालां नराधम ॥४८॥
मणिकर्णी समायातस्त्यक्तलज्जोऽसि लम्पट ।
पवित्रान् ब्राह्मणान् दृष्ट्वा कथं मूढ न लज्जसे ॥४९॥
इति विप्रवचः श्रुत्वा मलयो लज्जयाऽन्वितः ।
स्नात्वा सचैलो झटिति तत्तो विश्वेश्वरं ययौ ॥५०॥
दृष्ट्वा विश्वेश्वरं देवं मुक्तिमण्डपमागतः ।
पठतो वेदवेदाङ्गान् पुराणानि च तापसान् ॥५१॥
मुक्तिमण्डपमध्यस्थान् ददर्श द्विजपुङ्गवान् ।
तान् दृष्ट्वा दण्डवद्भूमौ प्रणम्य निजगाद ह ॥५२॥
अहं प्रियातिथेः पुत्रः कनिष्ठो मलयः स्मृतः ।
न वेदा पठिताश्चापि विश्वेशः पूजितो न च ॥५३॥
द्यूतक्रीडा कृता नित्यं प्रीतिर्वेश्याजनेषु च ।
अज्ञानाद्वारुणी पीता जलभ्रान्त्या तपोधनाः ॥५४॥
प्रायश्चित्तं दद्ध्वं तु येन शुद्धिर्भवेन्मम ।
भवन्तो निपुणाः सर्वे वेदवेदाङ्गपारगाः ॥५५॥
अतिदीने कृपां यूयं कुरुध्वं मयि सर्वथा ।
इति तस्य वचः श्रुत्वा न कश्चित् किञ्चदब्रवीत् ॥५६॥
मद्यपानं ब्राह्मणस्य सदाऽत्यन्तं विगर्हितम् ।
तन्मध्ये ब्राह्मणः कश्चिदुवाच मलयं ततः ॥५७॥
शुष्कां यष्टिमिमां धृत्वा तीर्थानि भ्रम यत्नतः ।
भविष्यत्यङ्कुरोऽस्याश्च यदा ब्राह्मणबालक ॥५८॥
अङ्कुरं त्वं विलोक्यैवं ततः शुद्धो भविष्यसि ।

।३७। (तर) न मैले वेद पढें, न कठोर तपस्या नै गरें । न विश्वनाथको आराधना गरें न मणिकर्णिकामा नुहाएँ नै ।३८। न मैले दान दिएँ, न त पुण्यकर्म नै गरें । मेरो जुवामा लत र वेश्यामा माया बस्यो ।३९। यहाँसम्म कि मैले मदिरा समेत पिएँ, अब के गरी प्रायश्चित होला ? । यसैले (अब) आत्मशुद्धिका लागि महापाप नाश गर्ने ..।४०। मणिकर्णिका नदीमा सवस्त्र नुहाउन तुरुन्त जान्छु" । यस्तो चिन्ता (विचार) गर्दै तुरुन्त लाजशरम छाडी..।४१। नुहाउन भनी मलय तुरुन्त मणिकर्णिकामा पुग्यो । त्यहाँ ब्राह्मण, क्षेत्री, वैश्य र शूद्र पनि एकत्रित थिए ।४२। त्यहाँ मलयले पुण्यदायी मणिकर्णिकालाई देख्यो जहाँ अति पवित्र ब्राह्मणहरू नुहाउने गर्दछन् ।४३। हे मुनि ! त्यही ठाउँमा नै मलय नुहाउन भनी गयो । नजिकै आइरहेको दोषको खानी मलयलाई देखी..।४४। एक जना ब्राह्मणले रिसाउँदै भने-" हे पापी, दुष्ट, वेश्यागामी, नराधम मलय !..।४५। हे लम्पट ! नछोउ, ब्राह्मणहरूलाई नछोउ, पर जाउ" । ब्राह्मणको यस्तो कुरा सुनी मलयले ती ब्राह्मणलाई भन्न लाग्यो-।४६। " हे ब्राह्मण ! (तिमी पनि) जाउ, पर जाउ, तिमी मलाई रिस गर्दछौ" । मलयका कुरा सुनी ब्राह्मणले उसलाई फेरी भने-।४७। "हे नराधम ! बाउनको कुलमा जन्मिएर पनि सधैं जुवा खेल्दछौ, वेश्यासँग सुतेर रक्सी पनि पियौ.. ।४८। हे लम्पट ! (अनि अहिले) लाजशरम पचाएर मणिकर्णिकामा (नुहाउन) आयौ । हे मूर्ख ! (यि पवित्र ब्राह्मणहरूलाई देखेर (पनि) तिमीलाई कसरी लाज नलागेको ?" ।४९। ती ब्राह्मणको यस्तो वचन सुनी लाज मान्दै तुरुन्त सवस्त्र नुहाएर मलय विश्वनाथको मन्दिरतिर गयो ।५०। विश्वेश्वरको दर्शन गरी मुक्तिमण्डपमा आयो जहाँ तपस्वीहरू वेद, वेदाङ्ग र पुराणहरू पढिरहेका थिए ।५१। मुक्तिमण्डपको बीचमा रहेका पवित्र ब्राह्मणहरूलाई देखी (मलय) दण्डवत् प्रणाम गर्दै भन्न लाग्यो-।५२। "म प्रियातिथिको कान्छो छोरो हुँ । मैले न वेद पढें न विश्वनाथको पूजा नै गरें ।५३। सधैं जुवा खेलें अनि वेश्यासँग मायाप्रीति गाँसे । हे तपोधन ! भूलवश पानी भनी मदिरा पिएँ ।५४। हजुरहरू सबै वेद र वेदाङ्गका विज्ञ हुनु हुन्छ, मलाई ( यस्तो) प्रायश्चितको विधि बताउनु होस् जसले मेरो शुद्धि होस् ।५५। अति दीन ममाथि हजुरहरू कृपा गर्नु होस्" । उसका कुरा सुनेर कसैले केही बोलेनन् ।५६। त्यसपछि ब्राह्मणमध्येका कुनै एक जनाले भने "मद्यपान ब्राह्मणका लागि सधैं कठोरताका साथ निषेधित छ.. ।५७। हे ब्राह्मणपुत्र ! यो सुकेको लौरो लिएर प्रयत्नपूर्वक तीर्थहरू भ्रमण गर । जब यसमा टुसा पलाउनेछ..।५८। तब त्यो टुसा हेरेर नै तिमी शुद्ध हुनेछौ" । उपहास गरेर उनले यस्तो भने, (वास्तवमा भने) मद्यपानको प्रायश्चित नै हुँदैन ।५९। मलयले यो कुरालाई सत्य मान्यो र तुरुन्त विश्वनाथ एवं ब्राह्मणहरूलाई पटकपटक नमस्कार गरी..।६०। लौरो लिएर तीर्थयात्रामा निस्कियो । मलयले तीन वर्षसम्म अनेक तीर्थहरू घुम्यो ।६१। (अन्तमा) देवताका लागि दुर्लभ मानिने श्लेष्मान्तक वनमा पुग्यो । (त्यहाँ) वागमतीमा नुहाएर पशुपतिनाथ प्रभूको दर्शन गर्‍यो ।६२। वज्रयोगिनीको

परिहासेन स प्राह नास्य शुद्धिर्भविष्यति ॥५९॥
मलयस्तथ्यमेवेदं चिन्तयामास तत्क्षणात् ।
ततो विश्वेश्वरं नत्वा विप्राँश्चैव पुनः पुनः ॥६०॥
गृहीत्वा मलयो यष्टिं तीर्थयात्रां जगाम ह ।
भ्रमँस्तीर्थान्यनेकानि मलयो वत्सरत्रयम् ॥६१॥
श्लेष्मान्तकवनं प्रापद्देवानामपि दुर्लभम् ।
स्नानं विधाय वाग्वत्यां दृष्ट्वा पशुपतिं प्रभुम् ॥६२॥
वज्रां विलोक्य तदनु दृष्ट्वा नारायणं प्रभुम् ।
आशापूरेश्वरं द्रष्टुं प्रविवेश महावनम् ॥६३॥
शैलाधस्तान्निधायाशु शुष्कयष्टिं ततो भुवि ।
स्नानं करोति मलयस्तावज्जातोऽङ्कुरोदयः ॥६४॥
जाताङ्कुरं ततो दृष्ट्वा मलयः परमाधमः ।
पूतं मेने तदाऽऽत्मानं परां प्रीतिमवाप च ॥६५॥
हृदये चिन्तयामास मलयो हर्षनिर्भरः ।
इदं पवित्रं परमं स्थानमत्यन्तदुर्लभम् ॥६६॥
अत्रैवाराधयिष्यामि व्रतस्थोऽहं महेश्वरम् ।
इति निश्चित्य मलयः स्थितस्तत्रैव कानने ॥६७॥
उग्रं नियममास्थाय तपस्तेपे सुदारुणम् ।
ततोऽस्य तपसा तुष्टो भगवान् पार्वतीपतिः ॥६८॥
भूमिं भित्त्वा महालिङ्गमुदतिष्ठत् तपोधन ।
मलय त्वं पवित्रोऽसि वरं वरय सुव्रत ॥६९॥
आकर्ण्य शम्भोस्तद्वाक्यं दण्डवत् प्रणिपत्य च ।
उवाच प्राञ्जलिर्वाक्यं मलयोऽतिशुभाशयः ॥७०॥
अत्र डोलेश्वरो नाम्ना भूत्वा शङ्कर सर्वदा ।
भक्तानामभयार्थाय तिष्ठ त्वं परमेश्वर ॥७१॥
मलयस्व समाकर्ण्य वचनं पार्वतीपतिः ।
प्राह तं मलयं तुष्टः स्थास्याम्यत्रैव कानने ॥७२॥
द्रक्ष्यन्ति कार्त्तिके ये मां मानवा भक्तिपूर्वकम् ।
तेषां कैलासवासो हि नात्र कार्या विचारणा ॥७३॥
धारातीर्थे नरः स्नात्वा दृष्ट्वा डोलेश्वरं विभुम् ।
मल्लोकमाप्नुयाद्धीरः सर्वथा नात्र संशमः ॥७४॥
अष्टम्यां वा चतुर्दश्यां ये मां द्रक्ष्यन्ति भक्तितः ।
तेषां भोगापवर्गस्य दाताऽहं नात्र संशयः ॥७५॥
मलय त्वं समाराध्य मां सदा भक्तिपूर्वकम् ।
योगिनामुत्तमो भूत्वा यास्यसि त्वं परं पदम् ॥७६॥
इत्युक्त्वा मलयं देवो लिङ्गेऽन्तर्धानमाययौ ।
मलयोऽपि समाराध्य डोलेश्वरमकल्मषम् ॥
योगिनामुत्तमो भूत्वा जगाम परमं पदम् ॥७७॥

दर्शन गरी चाँगू नारायण प्रभूको दर्शन गऱ्यो । (अनि) आशापूरेश्वरको दर्शन गर्न भनी महावनमा प्रवेश गऱ्यो ।६३। उसले पहाडको फेदीमा लौरो राखेको थियो । जब उसले नुहायो तब त्यो लौरो टुसायो ।६४। महा अधम मलयले लौरो पलाएको देखेर आफूलाई पवित्र भएको मान्यो र अती आनन्दित भयो ।६५। हर्षित मलयले मनमा सोच्यो "यो स्थान अति पवित्र र अत्यन्त दुर्लभ रहेछ.. ।६६। म यय क्षेत्रमा नै बसेर व्रत गरी शिवको उपासना गर्नेछु"-यस्तो सोची मलय त्यही वनमा नै रहन थाल्यो ।६७। उसले कठोर नियममा बसेर कठिन तपस्या गऱ्यो । त्यसपछि उसको तपस्या देखेर शिव प्रसन्न हुनु भयो ।६८। हे तपोधन ! जमिन छेडी एउटा ठूलो लिङ्ग बाहिर आयो । त्यही लिङ्गबाट आवाज आयो -"हे मलय ! तिमी पवित्र छौ, बरदान माग" ।६९। शिवको यस्तो वचन सुनी दण्डवत् प्रणाम गरी सदाशयपूर्वक मलयले हात जोरेर शिवलाई भन्न लाग्यो-।७०। "हे परमेश्वर ! हे शङ्कर ! हजुर यहाँ डोलेश्वर नामले भक्तजनलाई अभयदान दिनका लागि सधैं यहाँ रहनु होस्" ।७१। मलयका कुरा सुनी शिवले भन्नु भयो " हे मलय ! म तिमीसँग प्रसन्न छु, अतः तिम्रो प्रीतिका लागि म यहाँ नै बस्ने छु.. ।७२। जो मानिस कार्तिकमा भक्तिपूर्वक मेरो दर्शन गर्दछन् ती अवश्य नै कैलासवासी हुने छन् ।७३। जो मानिस धारातीर्थमा नुहाएर डोलेश्वर महादेवको दर्शन गर्दछ त्यो मेरो लोकमा अवश्य आउने छ, यसमा शङ्के छैन ।७४। अष्टमी वा चतुर्दशीका दिन जो भक्तिपूर्वक मेरो दर्शन गर्दछ, उसलाई भोग र मोक्ष दिने म हुन्छु, यसमा शङ्का छैन ।७५। हे मलय ! तिमी भक्तिपूर्वक मेरो आराधना गरी उत्तमयोगी भई मेरा धाममा आउने छौ ।७६। यति भनी शिव लिङ्गमा अलप हुनु भयो । मलय पनि शिवको पूजा आराधना गरी योगीहरूमा श्रेष्ठ भई मोक्ष भयो ।७७।



**इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये डोलेश्वरप्रादुर्भावो नाम पञ्चमोऽध्यायः ॥५॥**

श्रीस्कन्दपुराण, हिमवत्खण्ड, नेपालमाहात्म्यमा इन्द्रेश्वर, धनेश्वर, डोलेश्वर आदिको उत्पत्ति प्रसङ्ग वर्णन भएको पाँचौं अध्याय समाप्त भएको छ ।५।

**श्लोकानामादितः समष्ट्यङ्काः-२७३+७७=३५०**

शुरुदेखिको श्लोक सङ्ख्या :- २७३+७७=३५०



धनेश्वर मन्दिर, बनेपा, काभ्रे (श्रोतः विकिमेडिया)

Source : Suzanne Akiyama (A PCV), Collector : Mohan Prasad Sapkota



खुरेश्वर वा गौखुरेश्वर वा नील महादेव, धुलिखेल, काभ्रेपलाञ्चोक, तस्विर खिचिएको साल : वि.सं.२०२३



कुशेश्वर (विश्वामित्रेश्वर ?), दुम्जा, सिन्धुली (तस्विर श्रोत : सौरभ ढकाल)



आशापुरेश्वर, साँगा, भक्तपुर र काभ्रेको सीमाना (श्रोतः भक्तपुरन्युज)

## ॥ अथ षष्ठोऽध्यायः ॥
## ॥ छैटौं अध्याय ॥

**मार्कण्डेय उवाच ॥ मार्कण्डेय भन्नु हुन्छ-**

**डोलेशात् पश्चिमे भागे प्रकाण्डवनमुत्तमम् ।**
**पनसैः सहकारैश्च नारङ्गैरुपशोभितम् ॥१॥**
**बकैः कुरवकाशोकैश्चम्पकैश्च विराजितम् ।**
**अश्वत्थैः कोविदारैश्च न्यग्रोधैरुपशोभितम् ॥२॥**
**मल्लिकामालतीकुन्दकुसुमैरुपशोभितम् ।**
**मत्तभ्रमरसंह्लादनिनादैरुपशोभितम् ॥३॥**
**तस्मिन् वने द्विजः कश्चिन्नाम्ना गुणनिधिर्मुनिः ।**
**तपसा सूर्यसङ्काशः क्षमया पृथिवीसमः ॥४॥**
**तपः स्वाध्यायनिरतो वेदवेदाङ्गपारगः ।**
**भार्या लीलावती तस्य मुनेः परमसुन्दरी ॥५॥**
**स्वामिभक्ता महाभागा सदाऽतिथ्यर्चने रता ।**
**प्राणनाथोऽभवत् पुत्रो मुनेः परमसुन्दरः ॥६॥**
**बहिश्चरः प्राण इव गुणवाँश्चारुलोचनः ।**
**दिने दिने वर्द्धते स शुक्लपक्षे यथा शशी ॥७॥**
**शिवपादाब्जनिरतो मुनिर्गुणनिधिः सदा ।**
**प्रकाण्डवनमाश्रित्य गत्वा पशुपतिं प्रभुम् ॥८॥**
**वाग्वत्याः पयस स्नात्वा दृष्ट्वा भवनमेति च ।**
**दृष्ट्वा पशुपतिं नित्यं पाठयामास बालकम् ॥९॥**
**भार्या लीलावती तस्य प्रियाराधनतत्परा ।**
**पालयामास तनयं स्नेहेन परमेण सा ॥१०॥**
**एकदा प्राणनाथः स बभ्राम विपिने मुदा ।**
**ततः पपात धरणीपृष्ठे स मुनिबालकः ॥११॥**
**पतितं बालकं दृष्ट्वा मुनयः स्नेहतत्पराः ।**
**विहाय जपयागादि बालकं द्रष्टुमाययुः ॥१२॥**
**आश्रमेभ्यः स्त्रियः सर्वाः स्नेहाकुलितमानसाः ।**
**ऋष्याश्रमं हि तत् स्थानमद्यापि परिकीर्त्यते ॥१३॥**
**पतितो बालको यत्र जैमिने मुनिसत्तम ।**
**अङ्के संस्थापयामासुर्बालकं मुनिसत्तमाः ॥१४॥**
**व्यसुं दृष्ट्वा मुनिगणास्ततो गुणनिधिं ययुः ।**
**होमासक्तं गुणनिधिमूचुस्ते मुनिसत्तमाः ॥१५॥**
**मुने गुणनिधे पुत्रस्तव यः प्रियदर्शनः ।**
**अकस्मात् पतितो भूमौ द्रष्टुमायाहि तं मुने ॥१६॥**
**वज्रपातोपमं वाक्यं श्रुत्वा परमदारुणम् ।**
**पपात मोहितो भूमौ स मुनिः शोकमूर्छितः ॥१७॥**
**भार्या लीलावती तस्य निर्गत्य भवनात् सती ।**
**पतिमुत्थापयामास शोकोपहतचेतना ॥१८॥**
**यामो नाथ सुतो यत्र पतितो धरणीतले ।**
**भार्यावचनमाकर्ण्य मुनिरुत्थाय तत्क्षणात् ॥१९॥**
**जगाम भार्यासहितो बालको यत्र संस्थितः ।**
**मुनीनामङ्कगं दृष्ट्वा व्यसुं बालं ततो मुनिः ॥२०॥**

डोलेश्वरभन्दा पश्चिमतिर एउटा उत्तम **<u>"प्रकाण्ड" (हाल सूर्य विनायक)</u>** नामक वन छ । यो रुखकटहर, अती बास्नादार आँप र सुन्तलाका रुखले शोभायमान छ ।१। (त्यहाँ) गुम्पाती, रातो कपुरनली, अशोक र चाँप पनि छन् । पीपल, कोइरालो र वरका रुखले (पनि) शोभायमान छ ।२। जहाँ बेली,चमेली र कुन्द फूलिरहेका छन् तथा भमराहरू मत्त भएर भुनभुनाइ रहेका छन् ।३। त्यो वनमा एक जना गुणनिधि नाम गरेका मुनि ब्राह्मण रहन्थे । यि तपस्याका कारण सूर्यसमान तेजिला र क्षमामा पृथ्वी समान,..।४। तपस्या गर्न एवं शास्त्र अध्ययनमा तल्लिन हुने ती (मुनि) वेदवेदाङ्गमा पोख्त थिए । तिनकी लीलावती नाम भएकी अतिसुन्दरी स्त्री थिइन् ।५। उनी स्वामिभक्तिनी, भाग्यवती र अतिथि सत्कारमा लागिरहने खालकी थिइन् । ती मुनिको अतिसुन्दर प्राणनाथ नाम गरेको पुत्र भएको थियो ।६। पिताका शरीर बाहिर घुम्ने प्राण समानको गुणवान् र सुन्दर आँखा भएको त्यो बालक शुक्लपक्षाका चन्द्रमा बढेझैं हरेक दिन बढ्न हुर्कन लाग्यो ।७। शिवको चरण सेवामा अभ्यस्त गुणनिधि मुनि सधैं प्रकाण्डवनमा बसेर पनि पशुपति गएर...।८। वागमतीको जलले नुहाई पशुपतिनाथको दिनहुँ दर्शन गरी आउँदथे र छोरोलाई पढाउँदथे ।९। स्वामीसेवामा तत्पर रहने तिनकी पत्नी लीलावती अति नै माया गरेर छोराको पालनपोषण गर्दथिन् ।१०। एकदिन त्यो प्राणनाथ जब वनमा खुसीले घुमिरहेको थियो, तब उ जमिनमा (अकस्मात्) लड्न पुग्यो ।११। बालक लडेको देखेर मायाले गर्दा जप यज्ञ आदि छोडी मुनिगण बालकलाई हेर्न भनी आए (गए) ।१२। आश्रमका सबै महिलाहरू पनि स्नेहपूर्ण चित्त लिई त्यहाँ आए । त्यो ठाउँ अहिले पनि <u>"ऋष्याश्रम"</u> भनेर नै चिनिन्छ ।१३। हे जैमिनि ! हे मुनिश्रेष्ठ ! ती उत्तम मुनिहरूले जब त्यो बालकलाई (उठाई) काखमा लिए तब..।१४। मुनिगणले उसलाई प्राणहीन पाए । त्यसपछि उनीहरू गुणनिधि भएका ठाउँमा गए । होम गर्न मग्न भएका गुणनिधिलाई मुनिहरूले भने-।१५। हे मुनि गुणनिधि ! तिम्रो छोरो प्राणनाथ अकस्मात् भुइँमा लड्यो, उसलाई हेर्न आउ (हिँड) ।१६। वज्रपात समानको अती उदेकलाग्दो (यो) समाचार सुनेर ती मुनि मोहित हुँदै मुर्छा भई भुइँमा लडे ।१७। उनकी पत्नी लीलावती घरबाट बाहिर आई शोकसन्तप्त मनका (आफ्ना) पतिलाई उठाइन् ।१८। "हे स्वामि ! बालक लडेका ठाउँमा जाउँ" भन्ने पत्नीको कुरा सुनी मुनि तुरुन्त उठेर..।१९। पत्नीसमेत जहाँ बालक थियो त्यहाँ गए । त्यहाँ मुनिका काखमा मृत बालकलाई देखी ती मुनि..।२०। (हा) हरे ! (हा) हरे ! भन्दै मुनि पत्नीसमेत (जमिनमा) लडे । त्यसपछि ( अरु) मुनिहरूले उनलाई उठाए ।२१। त्यसपछि पत्नी समेत मुनि रुन कराउन र विलाप गर्न थाले । "हे पुत्र प्राणनाथ ! मेरो

हा हेति चोक्त्वा पतितो भार्यया सहितो मुनिः ।
तत उत्थापयामासुर्मुनयो मुनिसत्तमम् ॥२१॥
विललाप ततो दुःखी भार्यया सहितो मुनिः ।
प्राणनाथ कथं यासि मम प्राणान् विहाय च ॥२२॥
प्राणनाथ कथं यासि विहाय किल मातरम् ।
नय मां यत्र यासि त्वं जननीमपि दुःखिताम् ॥२३॥
नाकालमरणं चात्र न वा सर्पभयं भवेत् ।
न वा व्याघ्रभयं चात्र न च ग्रहभयं पुनः ॥२४॥
अनाथनाथो जगतां नाथः पशुपतिः प्रभुः ।
भार्यया सहितो बालममुमादाय सर्वथा ॥२५॥
गत्वाऽहं सर्वथा तत्र दृष्ट्वा पशुपतीश्वरम् ।
प्रायोपवेशनं कार्यं सर्वथा भार्ययाऽनया ॥२६॥
इति दृष्ट्वा मतिं कृत्वा ततो गुणनिधिर्द्विजः ।
गृहीत्वा बालकं स्कन्धे दुःखी पशुपतिं ययौ ॥२७॥
तमन्वयुर्मुनिगणाः शोकोपहतचेतसः ।
भार्या लीलावती तस्य रुदन्ती पृष्ठतो ययौ ॥२८॥
लीलावतीमन्वगच्छन् मुनीनामुत्तमाः स्त्रियः ।
रुदन्त्यः करुणायुक्ताः शिवस्मरणतत्पराः ॥२९॥
उत्तीर्य वाग्वतीं पुण्यां मुनयः संशितव्रताः ।
द्वारे पशुपतेर्बालं स्थापयामासुरेव हि ॥३०॥
सस्त्रीका मुनयः सर्वे त्यक्तसन्ध्यादिकाक्रियाः ।
प्रायोपवेशनं चक्रुः कीर्तयन्तः सदाशिवम् ॥३१॥
तत्र प्रायोपविष्टानां मुनीनां संयतात्मनाम् ।
सप्ताहानि व्यतीतानि सस्त्रीकानां तपोधन ॥३२॥
ततः पशुपतिर्देवः प्रभुर्वीक्ष्य तपोधन ।
दध्यौ कारुणिकः श्रीमान् हेतुना केन बालकः ॥३३॥
अकाले मृत एवायं मम क्षेत्रोत्तमे मुने ।
न सर्पभयमत्रास्ति न वा व्याघ्रभयं भवेत् ॥३४॥
ग्रहाणां न भयं चात्र क्षेत्रे परमदुर्लभे ।
ज्ञातं मया कारणं तु गणनाथः सुतो मम ॥३५॥
क्षेत्रस्नेहन च मया विस्मृतो नात्र संशयः ।
प्रकाण्डवनमागत्य गणनाथेन सत्वरम् ॥३६॥
जिज्ञासार्थं मुनेर्बालनाशो विघ्नः कृतो यतः ।
अतस्तु प्रकटः कार्यो गणनाथो न संशयः ॥३७॥
एवं विचार्य देवेशस्तदा पशुपतिः प्रभुः ।
मुनीनामग्रतस्तुष्टः प्रकटोऽभूदुमापतिः ॥३८॥
दृष्ट्वा पशुपतिं साक्षान्मुनयः संशितव्रताः ।
पेतुश्च दण्डवद्भूमौ रोम्णा चाङ्कितविग्रहाः ॥३९॥
पतिताँस्तान् मुनीन् दृष्ट्वा प्रोवाच गिरिजापतिः ।
न भेतव्यं मुनिगणाः शृणुध्वं वचनं मम ॥४०॥
श्लेष्मान्तकवनस्नेहान्मया पुत्रोऽपि विस्मृतः ।
दुःखाकुलितचित्तेन गणनाथेन कोपतः ॥४१॥
प्रकाण्डवनमागत्य गुप्तेन मुनिबालकः ।
मारितः प्रकटार्थं तु मम पुत्रेण तेजसा ॥४२॥
अतो बालकमादाय प्रकाण्डवनमोजसा ।

प्राणलाई छाडी तिमी कसरी गइरहेका छौ..।२२। हे प्राणनाथ ! आमालाई छाडेर तिमी कसरी जान्छौ ? मलाई र दुःखी आमालाई पनि (सँगै) लिएर जाऊ ।२३। यहाँ (यस पशुपति क्षेत्रमा) अकालमरण हुन्न, सर्पभय हुन्न, न बाघभय हुन्छ न त ग्रहभय नै हुन्छ (भनिन्थ्यो) ।२४। म अनाथका नाथ, जगन्नाथ प्रभू पशुपतिका समक्ष पत्नीसहित, यो बालकलाई लिएर जान्छु ।२५। त्यहाँ गएर भगवान् पशुपतिको दर्शन गरी यिनी पत्नीसहित ( बालक न बिउँतिएसम्म) उपवास बस्दछु" ।२६। यस्तो विचार गरी गुणनिधि ब्राह्मण दुःखी भएर (मृत) बालकलाई काँधमा बोकी पशुपति गए ।२७। शोकमग्न मुनिगण पनि उनका पछिपछि गए । उनकी पत्नी लीलावती पनि रुँदै पछिपछि गइन् ।२८। मुनिका स्त्रीहरू पनि लीलावतीका पछिपछि रुँदै कराउँदै हा शिव ! हा शिव ! भन्दै गए ।२९। मुनिगण पुण्य वागमती तरेर पशुपतिका ढोकामा गए र त्यहाँ (मृत) बालकलाई राखि दिए ।३०। सन्ध्याबन्धन त्यागेका पत्नीसहितका मुनिहरूले (त्यहाँ) शिव ! शिव ! भन्दै उपवास बस्न शुरु गरे ।३१। जब स्थिर एवं शान्त चित्तका मुनिहरूले सपत्नी उपवास बसेको सात दिन बित्यो तब,..।३२। हे तपोधन ! पशुपतिनाथलाई दया आयो र उहाँले दया गरी ध्यान गरेर "किन यो बालक पर्न गयो" भनी हेर्नु भयो ।३३। हे मुनि ! " मेरो क्षेत्रमा यसको अकालमरण किन हुन गयो ? यहाँ सर्प र बाघको समेत डर हुन्न..।३४। ग्रहको समेत डर नहुने यो अति दुर्लभ क्षेत्रमा (किन यस्तो भयो ?) ओहो ! मैले कारण थाहा पाएँ । कारण त मेरा पुत्र गणेश पो रहेछन् ।३५। यो ठाउँको मायाले मैले उनलाई बिर्सेछु यसमा कुनै शङ्कै छैन । ती गणेशले प्रकाण्डवनमा आएर हठात्..।३६। मेरो जिज्ञासा (ध्यान आकृष्ट गर्न) का लागि (यो) बालकलाई नाश गरेछन् । यो बाधा उपस्थित गरे छन् । अतः प्रष्ट भयो कि यो काम गणेशकै हो" ।३७। यस्तो सोची (वास्तविकता थाहा पाई) देवताका पनि देवता भगवान् पशुपतिनाथ प्रसन्न भई मुनिहरुका अगाडि प्रकट हुनु भयो ।३८। नियमित व्रतमा रहेका मुनिहरूले साक्षात् पशुपतिलाई (आफू अगाडि) देखेर पुलङ्कित शरीरले साष्टाङ्ग दण्डवत् गरे ।३९। लम्पसार परेर दण्डवत् गरिरहेका मुनिहरूलाई देखी शिव भगवानले भन्नु भयो-" हे मुनि हो ! नडराओ, मेरा कुरा सुन ।४०। श्लेष्मान्तक वनको प्रेमले मैले (आफ्नै) छोरोलाई समेत भुलेछु । यसैले दुःखित र आकुल मन लिई रिसाउँदै..।४१। तेजस्वी गणनाथले प्रकाण्डवनमा आई मलाई सम्झाउन गोप्य तरिकाले (यि) मुनिका पुत्रलाई मारे (छन्)।४२। अतः हे मुनि हो ! चाँडै बालकलाई लिई सबैजना प्रकाण्ड वनमा जाओ । (त्यहाँ मेरा पुत्र गणेशले यि मृत) बालकलाई बिउँताइ दिने छन् ।४३। गणनाथ अति तेजस्वी छन्, यसमा सोचविचार नगर । सूर्योदयका बेलामा (प्रकाण्ड वनको) जमिनमा जहाँ पहिलो किरण..।४४। देखिन्छ ( पर्दछ), मेरो पुत्र त्यहीँ गोप्य तरिकाले बस्दछन् (बसेका हुने छन्) । यति भनेर प्रभू पशुपति देव अन्तर्ध्यान हुनु भयो ।४५। त्यसपछि मुनिहरू पनि खुसी हुँदै (मृत) बालकलाई बोकी पत्नीसहित दौडेर प्रकाण्ड वनमा पुगे ।४६। प्रकाण्ड वनमा आई

गच्छन्तु मुनयः सर्वे जीवयिष्यति बालकम् ॥४३॥
गणनाथो महातेजा नात्र कार्या विचारणा ।
उदिते तु दिवानाथे किरणः प्रथमो भुवि ॥४४॥
दृश्यते यत्र पुत्रो मे गुप्तरूपेण तत्र हि ।
इत्युक्त्वान्तर्हितो देवः स्वयं पशुपतिः प्रभुः ॥४५॥
मुनयोऽपि तदा बालमादायात्यन्तहर्षिताः ।
जग्मुः प्रकाण्डविपिनं सस्त्रीकाश्चातिवेगतः ॥४६॥
प्रकाण्डवनमागत्य स्थले संस्थाप्य बालकम् ।
उपवासान्मुनिगणो निशामेकां निनाय हि ॥४७॥
प्रातस्तु उदिते सूर्ये मयूखः प्रथमोऽपतत् ।
तस्मिँस्थले तदा जग्मुर्मुनयो धर्मतत्पराः ॥४८॥
अस्मिँस्थले गणाधीशो गुप्तरूपेण वर्तते ।
इति निश्चित्य मुनयोऽस्तुवन् देवं गजाननम् ॥४९॥
जय देवगणाधीश विघ्नराज नमोऽस्तु ते ।
जय त्र्यक्ष महादेवप्रियपुत्र नमोऽस्तु ते ॥५०॥
नमस्ते भक्तिगम्याय देवदेवाय ते नमः ।
पार्वतीप्रियपुत्राय नमो गजमुखाय च ॥५१॥
चतुर्हस्ताय देवाय नमः परशुधारिणे ।
भक्तानां भयहन्त्रे च नमस्ते मोदकप्रिय ॥५२॥
पाशहस्त नमस्तेऽस्तु देवदेव नमोऽस्तु ते ।
अस्माकं भक्तिहीनानां बालकं जीवय प्रभो ॥५३॥
प्रकटो भव देवेन्द्र पाहि नः शरणागतान् ।
इति तेषां स्तुतिं श्रुत्वा गणनाथो महाबलः ॥५४॥
भूमिं भित्त्वोदतिष्ठद्वै मुनीनामग्रतः प्रभुः ।
ततस्तु प्रणतान् दृष्ट्वा तन्मुनीन् संशितव्रतान् ॥५५॥
गणनाथो जगादोच्चैः शृणुध्वं वचनं मम ।
रसमस्या लतायास्तु वदने बालकस्य तु ॥५६॥
स्थापयध्वं नेत्रयोश्च ममादेशान्मुनीश्वराः ।
गणनाथवचः श्रुत्वा मुनिर्गुणनिधिः स्वयम् ॥५७॥
रसं लताया वदने बालकस्य तदाऽर्पयत् ।
उत्तस्थौ सहसा बालः सुप्तोत्थितनरोपमः ॥५८॥
जयध्वनिर्मुनिमुखादुत्थितः सहसा तदा ।
पुष्पवृष्टिः पपातोर्व्यां नभसस्तु मनोहरा ॥५९॥
पुनः प्रोवाच गणपस्तान् मुनीन् हृष्टमानसान् ।
वरं ब्रूत महाभाग यद्वो मनसि संस्थितम् ॥६०॥
दण्डवत् प्रणिपत्योचुर्मुनयो गणनायकम् ।
अस्मिन् प्रकाण्डविपिने सदा तिष्ठ गणेश्वर ॥६१॥
मुनीनां वचनं श्रुत्वा गणेशः प्राह तान्मुनीन् ।
सूर्यावलोकनान्नाम मुने सूर्यविनायकः ॥६२॥
स्थास्याम्यत्रैव विपिने भक्तानां भयहा सदा ।
चतुर्थ्यां मङ्गलदिने ये मां द्रक्ष्यन्ति मानवाः ॥६३॥
तेषां विघ्नभयं नृणां कदाऽपि न भविष्यति ।
गणनाथप्रभावं ते विज्ञाय मुनयस्तदा ॥६४॥
भूयो भूयो नमस्कृत्य प्रययुश्चोत्तरां दिशम् ।
प्रकाण्डविपिने नित्यं स्थितः सूर्यविनायकः ॥६५॥

भुइँमा (मृत) बालकलाई राखी मुनिगणले उपवास बस्दै अर्को एक रात बिताए ।४७। बिहान सूर्य उदय भएपछि सूर्यको पहिलो किरण आएपछि (परेको स्थलमा) धर्ममा तत्पर मुनिहरू त्यस ठाउँमा जम्मा भए ।४८। "यही ठाउँमा गणेश गोप्य तरिकाले बस्नु भएको छ" भन्ने निश्चय गरी (त्यसपछि) मुनिहरू गणेशको स्तुति गर्न लागे ।४९। हे देव ! हजुरको जय होस् । हे गणाधीश ! हे विघ्नराज ! हजुरलाई नमस्का छ । हे त्रिनेत्र ! हजुरको जय होस् । महादेवका प्रिय पुत्र हजुरलाई नमस्कार छ ।५०। हे भक्तिबाट पाउन सकिने ! हे देवदेव ! हजुरलाई नमस्कार छ । पार्वतीका प्रियपुत्रलाई अनि गजमुखीलाई पनि नमस्कार छ ।५१। चार हात भएका एवं बञ्चरो बोक्ने देवतालाई नमस्कार छ । भक्तहरूको भय हरण गर्ने एवं लड्डु मन पराउनेलाई नमस्कार छ ।५२। हातमा पाश लिएकालाई नमस्कार छ । देवदेवलाई नमस्कार छ । हामी भक्तिहीनका (मृत) बालकलाई बिउँताइ दिनु होस् प्रभू ! ।५३। हे देवेन्द्र ! प्रकट हुनु होस् । हामी शरणमा आएकालाई रक्षा गर्नु होस् । यस्तो तिनको स्तुति सुनी महाबलशाली गणेश..।५४। पृथ्वी फुटाएर मुनिहरूका सामुन्ने प्रकट हुनु भयो अनि नियमित व्रतमा रहेका मुनिहरूलाई सामुन्ने देखी..।५५। गणनाथले भन्नु भयो-"हे मुनि हो ! मेरो कुरा सुन । यो लहरा(?)को रस (मृतक) बालकको मुखमा (अनि)..।५६। दुबै आँखामा मेरो आदेशानुसार हाल" । त्यसपछि गणेशको आदेश सुनी गुणनिधि मुनि आफैंले..।५७। (त्यो) लहराको रस बालकको मुखमा लगाइ दिए (हाले) । कुनै मानिस सुतेर उठी बसे जसरी त्यो (मृत) बालक अकस्मात् जुरुक्क उठ्यो ।५८। (यो देखेर) मुनिका मुखबाट ( सहसा) "जय" शब्द निस्कियो । आकाशबाट पृथ्वीमा फूलको वर्षा भयो ।५९। श्रीगणेशले खुसी मन भएका मुनिहरूलाई फेरी भन्नु भयो-"हे महा भाग्यमानी मुनिहरू हो ! मनले चिताएको वरदान माग" ।६०। **दण्डवत् प्रणाम गरी मुनिहरूले गणेशलाई भने-"हे गणेश्वर ! यो प्रकाण्ड वनमा हजुर सधैं निवास गर्नु होस्" ।६१। मुनिहरूको कुरा सुनी श्रीगणेशले ती मुनिहरूलाई भन्नु भयो-"सूर्यको दर्शन गरेर ( मलाई पाएका छौ) त्यसैले मेरो नाम सूर्यविनायक हुनेछ..।६२।** भक्तजनको भय हरणका लागि (अब देखी) यही वनमा म बस्नेछु । जो मानिस मङ्गल चौथीका दिन मेरो दर्शन गर्दछन्..।६३। ती मानिसलाई कहिल्यै विघ्नबाधाको डर हुने छैन । मुनिगणले श्रीगणेशको शक्ति (प्रभाव) जानी त्यसपछि..।६४। (उनलाई) बारम्बार नमस्कार गरी (त्यहाँबाट) उत्तर दिशातिर लागे । प्रकाण्डवनमा सूर्यविनायक सधैं रहनु हुन्छ ।६५। उहाँको दर्शन गर्नाले मात्र पनि बाधा आउँदैनन् । ( उत्तरतिर गएका मुनिजनले) उत्तर दिशामा एउटा मनोहर नदी भेटी..।६६। बालक सहित मुनिहरूले (त्यहाँ) नुहाए । अनि गुणनिधि सहितका मुनिहरूले खुसी हुँदै..।६७। छलफल गर्दै भने-"कुशल र तत्वगुणका खानी भएका जो मानिस यो दुःखी संसारमा सुख र आत्मज्ञान चाहन्छन्..।६८। तिनले यहाँ भुक्तिमुक्तिप्रदायक लिङ्ग स्थापना गरुन् । भक्तिमा लागेका जो मानिस शिवलिङ्गको स्थापना गर्दछन्...।६९। तिनलाई शिव

तस्य दर्शनमात्रेण न विघ्नैः परिभूयते ।
उत्तरां दिशमागत्य नदीं प्राप्य मनोहराम्॥६६॥
स्नानं चक्रुस्तदा बालसहिता मुनयो मुने ।
ततस्तैर्मुनिभिः सार्द्धं मुनिर्गुणनिधिर्मुदा ॥६७॥
मन्त्रयामास कुशलो ज्ञानं तत्त्वगुणाम्बुधिः ।
संसारे दुःखभूयिष्ठे यदीच्छेत् सुखमात्मनः ॥६८॥
मानवः स्थापयेल्लिङ्गं भुक्तिमुक्तिप्रदायकम् ।
शिवलिङ्गं स्थापयन्ति ये नरा भक्तितत्पराः ॥६९॥
तेषां ददाति संतुष्टः कैलासं पार्वतीपतिः ।
शिवस्यापि प्रियः पुत्रो गणेशो विघ्ननाशकः ॥७०॥
गणेशस्थापनाच्चापि न विघ्नैः परिभूयते ।
अत्राद्य नद्यास्तीरेऽहं गणनाथं महाप्रभुम्॥७१॥
स्थापयिष्यामि मुनयः शिवलिङ्गं फलप्रदम् ।
श्रुत्वा गुणनिधेर्वाक्यं मुनयो दीर्घदर्शिनः ॥७२॥
साधु साधु तदा सर्वे संप्रोचुर्हृष्टमानसाः ।
स्थापयामास गणपं ततो गुणनिधिर्मुनिः ॥७३॥
ऐशान्यां विघ्नराजस्य शिवलिङ्गमनुत्तमम् ।
स्थापयामास स मुनिर्मुनिभिः परिवारितः ॥७४॥
जीवितो बालको यस्य गणनाथप्रसादतः ।
महामङ्गलमस्माकं जातं परमदुर्लभम्॥७५॥
अतो गणेशनामेदं जातं मङ्गलविघ्नहा ।
मङ्गलेश्वरनामापि शिवस्य परिकीर्तितम्॥७६॥
जातं मङ्गलहेरम्बषण्मुखे सरिति ध्रुवम् ।
मङ्गलं नाम तत्तीर्थं महामङ्गलदायकम्॥७७॥
तीर्थे मङ्गलके स्नात्वा दत्वा मङ्गलदायकम् ।
मङ्गलेश्वरमालोक्य सर्वपापैः प्रमुच्यते ॥७८॥
ऐशान्यां गणनाथस्य तिलमाधवपश्चिमे ।
मङ्गलेश्वरलिङ्गं तन्महापातकनाशनम्॥७९॥
ततो गुणनिधिः पुत्रभार्यामुनिगणैर्युतः ।
मुदा परमया युक्तः स्वाश्रमं त्वरितो ययौ ॥८०॥
प्रादुर्भावं गणेशस्य शृणुयाद्योऽपि मानवः ।
शिवभक्तिमवाप्नोति न विघ्नैः परिभूयते ॥८१॥

खुसी भएर कैलास (वास) दिनु हुन्छ । शिवका प्रिय पुत्र विघ्ननाशक गणेशले पनि (कैलास वास) दिनु हुन्छ ।७०। श्रीगणेशको स्थापना गर्नाले विघ्नवाधा हट्दछन् । आज म यहाँ यो नदीको किनारामा महाप्रभू गणेशको...।७१। स्थापना गर्दछु । हे मुनिगण ! फलदायक शिवलिङ्गको पनि स्थापना गर्दछु" । गुणनिधिका कुरा सुनी दूरदर्शी मुनिहरू...।७२। सबैले हर्षले गद्गद हुँदै धन्य ! धन्य ! भने । त्यसपछि गुणनिधिले श्रीगणेशको स्थापना गरे ।७३। गणेशको ईशान दिशा (उत्तरपूर्व) मा उत्तम शिवलिङ्गको स्थापना गरे । त्यसबखत सबै मुनिहरू उनका वरिपरि (नै) थिए ।७४। श्रीगणनाथका प्रसादले जसको बालक जीवित हुन पुगेको छ यस्ता हामीहरूको आज अतिदुर्लभ महामङ्गल भएको छ ।७५।

यसैले आज विघ्ननाशक (यि स्थापित) गणनाथको नाम गणेश पनि भयो । यि (स्थापित) शिवको नाम पनि आजबाट मङ्गलेश्वर भयो ।७६। जहाँ मङ्गलेश्वर महादेव, गणेश र स्वामी कार्तिकेयका मूर्ति हुन्छन्, त्यहाँ त्यस्तो स्थानको नदी र त्यसका किनाराका जमिन महामङ्गलदायी मङ्गलतीर्थ भनेर प्रख्यात हुनेछ ।७७। (यो क्षेत्र भक्तपुरमा पर्दछ) । मङ्गलतीर्थमा नुहाएर मङ्गलदायक पदार्थ दान गर्नाले र मङ्गलेश्वरको दर्शन गर्नाले सबै पाप नाश हुन्छन् ।७८। श्रीगणेशको ईशान भागमा तथा तिलमाधवको पश्चिम भागमा रहेको जुन् मङ्गलेश्वर लिङ्ग छ त्यो महापाप नाशक लिङ्ग हो ।७९। त्यसपछि गुणनिधि, पुत्र, स्त्री र मुनिगण सहित परम आनन्द मान्दै चाँडै आफ्ना आश्रममा गए ।८०। जो मानिस श्रीगणेशको उत्पत्तिको यो कथा सुन्दछ उसले शिवभक्ति प्राप्त गर्दछ । विघ्नवाधाबाट हार खानु पर्दैन ।८१।

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये श्रीसूर्यविनायकप्रादुर्भावो नाम षष्ठोऽध्यायः ॥६॥

श्रीस्कन्दपुराण, हिमवत्खण्ड, नेपालमाहात्म्यमा सूर्यविनायकको उत्पत्ति,
महत्व आदि प्रसङ्ग वर्णन भएको छैटौं अध्याय समाप्त भएको छ ।

श्लोकानामादितः समष्ट्यङ्काः-३५०+८१=४३१
शुरुदेखिको श्लोक सङ्ख्या :-३५०+८१=४३१

तस्बिर श्रोतः पर्सिभल ल्याण्डनले लेखेको र लण्डनबाट ई.सं.१९२८ (वि.सं.१९८५) मा प्रकाशन भएको "नेपाल" नामक पुस्तकबाट) । (सङ्कलन : मोहन प्रसाद सापकोटा)



सूर्य विनायकको मन्दिर, भक्तपुर, नेपाल

**॥ अथ सप्तमोऽध्यायः ॥**

॥ सातौं अध्याय ॥

**जैमिनिरुवाच** ॥ जैमिनि भन्नु हुन्छ-

**भवन्मुखबहिर्यातं कथां पीयूषसन्निभाम् ।**
**श्रृण्वतो नास्ति मे तृप्तिर्माकण्डेय तपोधन ॥१॥**
**प्रष्टुमिच्छाम्यहं किञ्चित् पुनस्त्वां भक्तितत्परः ।**
**तिलमाधवनामेति कीर्तितं भवता हि यत् ॥२॥**
**तदुत्पत्तिमहं श्रोतुमिच्छामि मुनिसत्तम ।**

हे तपस्याका धनी मार्कण्डेय ! हजुरका मुखारवृन्दबाट निस्किएका अमृततुल्य कथा सुन्दा मलाई (कहिल्यै) तृप्ति हुँदैन ।१। अतः म भक्तिमा तत्पर हजुरलाई (थप) केही सोध्न चाहन्छु । हजुरले कथामा "तिलमाधव"को नाम लिनु भएको छ (थियो) ।२। हे मुनिश्रेष्ठ ! म उनको उत्पत्तिका बारेमा सुन्न चाहन्छु ।

**मार्कण्डेय उवाच** ॥ मार्कण्डेय भन्नु हुन्छ-

**साधु साधु मुनिश्रेष्ठ जैमिने धर्मतत्पर ॥३॥**
**तिलमाधवनाम्नस्तु सम्भवं कथयामि ते ।**
**श्लेष्मान्तकवने रम्ये वाग्वतीतटिनीतटे ॥४॥**
**खेटकेऽस्मिँश्चाभवद्वै धर्मदत्तो वणिग्जनः ।**
**विष्णुभक्तः सुशीलोऽतिप्रियवाक् प्रियदर्शनः ॥५॥**
**सर्वदा विपणिद्रव्यमादाय स वणिक् सुधीः ।**
**ग्रामाद् ग्रामान्तर याति जीविकार्थी गुणान्वितः ॥६॥**
**उत्तरायणसंक्रान्तावेकस्मिन् दिवसे वणिक् ।**
**भ्रमँस्तिलानि चादाय मङ्गलेश्वरमागतः ॥७॥**
**मङ्गलेश्वरमालोक्य प्राचीं चैव ययौ दिशम् ।**
**अविदरे हि संस्थाप्य तिलानि स वणिग्जनः ॥८॥**
**विक्रेतुमासने धीर आसन् वैष्णवसत्तमाः ।**
**यावल्लोकाः समायान्ति तिलग्रहणकामुकाः ॥९॥**
**तिलराशौ समुद्भूतस्तावद्देवो जनार्दनः ।**
**शङ्खचक्रगदापद्मधारिणं पीतवाससम् ॥१०॥**
**धर्मदत्तो वणिग्दृष्ट्वा प्रणनाम मुहुर्मुहुः ।**
**उत्थाय धर्मदत्तः स भक्तिनम्रो गुणान्वितः ॥११॥**
**पश्यतां सर्वलोकानां विष्णुदेहे विवेश सः ।**
**ततो जयध्वनिर्जाता लोकानां मुखपङ्कजात् ॥१२॥**
**नभसः पुष्पवृष्टिश्च पपात सुमनोहरा ।**
**तिलराशेः समुद्भूतो यतो देवा जनार्दनः ॥१३॥**
**तिलमाधवनामेति ततस्तस्य प्रतिष्ठितम् ।**
**तिलमाधवनामानं ये द्रक्ष्यन्ति नरा भुवि ॥१४॥**
**तेषां नारायणस्तुष्टः स्वस्थानं दास्यति स्वयम् ।**
**तिलमाधवनाम्ने यत् पुष्पं पत्रं फलं जलम् ॥१५॥**
**दीयते भक्तितो लौकैरक्षयं चोपजायते ।**
**संक्रान्तिदिवसे भक्ता गोदुग्धैः स्नापयन्ति ये ॥१६॥**
**तिलमाधवदेवाऽसौ दास्यत्यत्र मनोरथान् ।**
**द्वादश्यां पत्रपुष्पादि ये यच्छन्तीह मानवाः ॥१७॥**
**तेषां वैकुण्ठवासः स्यान्नात्र कार्या विचारणा ।**
**मया ते कथितं पुण्यं तिलमाधवसम्भवम् ॥१८॥**
**तत् सर्वं कथयिष्यामि यदन्यच्छ्रोतुमिच्छसि ।**

धर्ममा लगाव भएका हे मुनिश्रेष्ठ जैमिनि ! (हजुर) धन्यधन्य हुनु हुन्छ ।३। तिलमाधवको उत्पत्तिका बारेमा म हजुरलाई बताउँदछु । वागमतीका किनारामा रहेको रमणीय श्लेष्मान्तक वनमा ..।४। (एउटा) सानो वस्ती (खेटक) थियो । त्यहाँ धर्मदत्त नाम गरेका एक ब्यापारी बस्दथे । उनी विष्णुभक्त, सुशील, अति मृदुभाषी र सुन्दर थिए ।५। उनी असल नियत भएका ब्यापारी थिए । बजारमा बेच्न योग्य कुरा बोकेर गुणवान् उनी नित्य गाउँ गाउँ घुम्दथे ।६। एकपटक उनी उत्तरायणको मकर सङ्क्रान्तिका दिन तिल लिएर (बेच्न भनी) घुम्दै मङ्गलेश्वर आइपुगे ।७। मङ्गलेश्वरको दर्शन गरी उनी पूर्वतिर लागे । ती ब्यापारीले केही पर तिल (बेच्न) थुपारे ।८। (त्यसपछि तिल) बेच्नका लागि धैर्यतापूर्वक ती वैष्णव (एउटा) आसनमा बसे । तिल किन्ने मन गरी ग्राहकहरु आउन शुरु गर्दै गर्दा..।९। (एक्कासी) तिलको थुप्रोबाट (हातमा) शङ्ख, चक्र, गदा र पद्म लिएका एवं पहेँलो वस्त्र लगाएका श्रीविष्णु प्रकट हुनु भयो ।१०। उहाँलाई देखी धर्मदत्त ब्यापारीले पटक पटक नमस्कार गरे । त्यसपछि गुणी, भक्त र नम्र स्वभावका ती धर्मदत्त उठेर..।११। सबै लोकले देख्दादेख्दै भगवान् विष्णुका शरीरमा प्रवेश गरे । तब (त्यहाँ उपस्थित देख्ने) मानिसका मुखबाट जय जकार निस्कन पुग्यो ।१२। **तिलको थुप्रोबाट श्रीविष्णु प्रकट भएका कारण आकाशबाट सुन्दर फूलहरूको वर्षा भयो ।१३। यसैले उनको नाम "तिलमाधव" भनी रहन गयो ।** पृथ्वीमा जो मानिस तिलमाधव नामका यिनको दर्शन गर्दछन्..।१४। तीसँग श्रीविष्णु प्रसन्न भई (तिनलाई) स्वयं आफ्नो लोकमा लिएर जानु हुन्छ । तिलमाधवका नाममा जुन फूल, पात, फलफूल वा जल..।१५। भक्तिपूर्वक अर्पण गरिन्छ त्यो अक्षय हुन जान्छ । सङ्क्रान्तिका दिन जो भक्तजन उनलाई दूधले नुहाइ दिन्छन्..।१६। तिलमाधव तिनका मनका चाहना पूरा गरिदिनु हुन्छ । द्वादशीका दिन जो मानिस पात र फूल ( उहाँलाई) चढाउँदछन्..।१७। तिनको वैकुण्ठवास हुन्छ, यसमा सोचविचार गर्नै पर्दैन । मैले हजुरलाई पुण्यदायी तिलमाधवको उत्पत्तिको कथा बताएँ ।१८। (हजुरलाई) अरु के सुन्ने चाहना छ, त्यो पनि म सबै बताउने छु ।

**जैमिनिरुवाच** ॥ जैमिनि भन्नु हुन्छ-

**अन्यानि शिवलिङ्गानि श्लेष्मान्तकवने मुने ॥१९॥**
**तानि मुख्यानि कथय श्रोतुमुत्कण्ठितं मनः ।**

हे मुनि ! श्लेष्मान्तक वनमा रहेका अन्य शिवलिङ्गहरूमा..।१९। मुख्य मुख्य बताउनु होस् । (मेरो) मन सुन्न उत्सुक भइरहेछ ।

**मार्कण्डेय उवाच** ॥ मार्कण्डेय भन्नु हुन्छ-

**अन्यानि कथयिष्यामि श्रृणु सावहितो मुने ॥२०॥**
**मुख्यस्थानानि सर्वाणि कथयिष्यामि ते पुनः ।**
**ऋष्याश्रमस्था मुनयो दृष्ट्वा गुणनिधेः सुतम् ॥२१॥**
**मृतं च जीवितं दृष्ट्वा शिवभक्तिपरा ययुः ।**
**ऋष्याश्रमस्था मुनयः समस्ता धर्मकोविदाः ॥२२॥**
**किञ्चिद्दूरं ततो दृष्ट्वा समारुह्यैकपर्वतम् ।**
**स्थापयामासुरतुलं शिवलिङ्गं मनोहरम् ॥२३॥**
**शिवभक्तिप्रभावज्ञा यथाविधिपुरस्सरम् ।**
**अनन्तैर्मुनिभिर्यस्मात् स्थापितं लिङ्गमुत्तमम् ॥२४॥**
**तस्मादनन्तलिङ्गेति नाम तस्य व्यवस्थितम् ।**
**अनन्तलिङ्गमालोक्य सर्वपापैः प्रमुच्यते ॥२५॥**
**अनन्तलिङ्गं ये धीरा द्रक्ष्यन्ति सुमनोहरम् ।**
**प्राप्नुयुस्ते तदा लोके शिवभक्तिं सुदुर्लभाम् ॥२६॥**
**अनन्तलिङ्गभक्ता ये भविष्यन्ति कलौ युगे ।**
**तेषां प्रीतो महादेवो दास्यतीह मनोरथान् ॥२७॥**
**चतुर्दश्यामथाष्टम्यां संक्रान्तिदिवसे तदा ।**
**अनन्तलिङ्गं द्रक्ष्यन्ति तान् यास्यति महेश्वरः ॥२८॥**
**स्वर्णश्रृङ्गेश्वरो देवः कृष्णेन स्थापितः पुरा ।**
**कीलेश्वरोऽपि कृष्णेन स्थापितः स्वयमेव हि ॥२९॥**
**महेन्द्रदमनो दैत्यः प्रद्युम्नेन यदा हतः ।**

हे मुनि ! अरु पनि बताउँदछु, ध्यान दिएर सुन्नु होस् ।२०। सबै मुख्य स्थानका बारेमा हजुरलाई फेरी बताउँला नै । ऋष्याश्रमका रहेका मुनिहरूले गुणनिधिका पुत्र (देखेर)..।२१। मरेको पनि बिउँतिएको देखेर शिवभक्त भए । ऋष्याश्रमका सबै मुनि धर्मपण्डित थिए ।२२। केही पर उनीहरूले एक पर्वत (डाँडो) देखे, त्यहाँ गई उनीहरूले अती सुन्दर शिवलिङ्गको स्थापना गरे ।२३। **शिवभक्तिका कारण असंख्य (अनन्त) मुनिहरूले विधिपूर्वक स्थापना गरेको लिङ्ग भएका कारण...।२४। त्यो लिङ्गको नाम "अनन्त लिङ्ग" रहन गयो ।** अनन्त लिङ्गको दर्शन गर्नाले सबै पाप नष्ट हुन्छन् ।२५। धैर्यशाली जो जो मानिस मनोहर अनन्त लिङ्गको दर्शन गर्दछन् तिनले परम दुर्लभ शिवभक्ति प्राप्त गर्दछन् ।२६। कलिमा जो अनन्त लिङ्गका भक्त हुनेछन् शिव प्रसन्न भई तिनका चाहना पूरा गरिदिनु हुन्छ ।२७।
चतुर्दशी, अष्टमी वा सङ्क्रान्तिका दिन जसले अनन्त लिङ्गको दर्शन गर्दछन् भगवान् शिव तिनलाई मोक्ष दिनु हुन्छ ।२८। प्राचीन कालमा प्रद्युम्नबाट महेन्द्रदमन नामक दैत्य मारिए पछि ( प्रद्युम्नका पिता) **श्रीकृष्ण आफैंले स्वर्णश्रृङ्गेश्वर र कीलेश्वर लिङ्गको स्थापना गर्नु भएको थियो** ।२९-२९.५।



**जैमिनिरुवाच** ॥ जैमिनि भन्नु हुन्छ-

**महेन्द्रदमनो दैत्यः प्रद्युम्नेन कथं हतः ॥३०॥**
**स्वर्णश्रृङ्गेश्वरो देवस्तथा कीलेश्वरः प्रभुः ।**
**कथं वाऽस्थापि तल्लिङ्गद्वयं कृष्णेन मे वद ॥३१॥**

महेन्द्रदमन दैत्यलाई प्रद्युम्नले कसरी मारे ? ।३०। स्वर्णश्रृङ्गेश्वर र कीलेश्वर यि दुई लिङ्ग श्रीकृष्णले कसरी स्थापना गर्नु भयो मलाई बताउनु होस् ।३१।

**मार्कण्डेय उवाच** ॥ मार्कण्डेय भन्नु हुन्छ-

**वक्ष्याम्यहमशेषेण कीलेश्वरसमुद्भवम् ।**
**स्वर्णश्रृङ्गेश्वरोत्पत्तिं दैत्योऽपि च यथा हतः ॥३२॥**
**चम्पकारण्यविषये नगरी श्वेतकाभिधा ।**
**अस्ति सर्वगुणैर्युक्ता शक्रस्येवामरावती ॥३३॥**
**तादृशी नगरी पृथ्व्यां दुर्लभा हि तपोधन ।**
**तस्यां पुर्यां महीपालः सूर्यकेतुर्नृपोत्तमः ॥३४॥**
**विष्णुभक्तोऽतिधर्मात्मा प्रजापालनतत्परः ।**
**दाता प्रियम्वदो धीरः सत्यवाक् प्रियदर्शनः ॥३५॥**
**रिपुस्तस्याभवद्वीरो मिथिलाधिपतिर्महान् ।**

कीलेश्वरको उत्पत्ति, स्वर्णश्रृङ्गेश्वरको उत्पत्ति एवं दैत्य कसरी मारियो भन्ने कुरा पनि म नटुटाई बताउने छु ।३२। चम्पकारण्य क्षेत्र (चाँगु) को आसपास "श्वेतका" नाम गरिएको एउटा सानो शहर थियो जुन सर्वगुण सम्पन्न इन्द्रको अमरावती समान थियो ।३३। हे तपोधन ! पूरै पृथ्वीमा यस्तो शहर दुर्लभ नै थियो । त्यो शहरमा सूर्यकेतु नामका उत्तम राजा राज्य गर्दथे ।३४। उनी विष्णुभक्त, अति धर्मात्मा, प्रजापालनमा सदा लागिपर्ने, दानी, मधुरभाषी, धैर्यशाली, सत्यवक्ता र सुन्दर थिए ।३५। उनका ठूला शत्रू वीर एवं महापराक्रमी मिथिलाका महान् राजा हंसध्वज

हंसध्वज इति ख्यातो महाबलपराक्रमः ॥३६॥
आगत्य मिथिलाधीशो नगरीमुपरुध्य वै ।
संग्राममकरोदुग्रं सूर्यकेतुनृपेण हि ॥३७॥
पुरादबहिर्विनिर्गत्य सूर्यकेतुर्नराधिपः ।
युयोधानेन बलिना मिथिलापतिना तदा ॥३८॥
हंसध्वजेन भूपेन सूर्यकेतुर्नरेश्वरः ।
पराजितोऽतिबलिना हत्वा वीराननेकशः ॥३९॥
हतान् वीराँस्ततो दृष्ट्वा सूर्यकेतुर्नराधिपः ।
पलायनपरो भूत्वा विवेश नगरीं स्वकाम् ॥४०॥
प्रविश्य नगरीं राजा सूर्यकेतुर्हतप्रभः ।
चिन्तयामास हृदये कान्दिशीको मुहुर्मुहुः ॥४१॥
किं कर्त्तव्यं क्व गन्तव्यं क्व स्थातव्यमतः परम् ।
हंसध्वजो महावैरी पुररोधं चकार ह ॥४२॥
पराजितोऽस्मि शूरेण क्व गन्तव्यमतः परम् ।
यावच्चिन्तां नरपतिः करोति बहुधा मुने ॥४३॥
तावत् खलु समायातो नारदो मुनिसत्तमः ।
आगतं नारदं दृष्ट्वा सूर्यकेतुर्महीपतिः ॥४४॥
विधिवत् पूजयामास भक्तिमन्नम्रकन्धरः ।
विश्रान्तं नारदं वीक्ष्य राजा प्रहातिदुःखितः ॥४५॥
हंसध्वजेन नगरी रुद्धा मे मुनिसत्तम ।
भग्नश्च नगरो जातः स्थातुमत्र न शक्यते ॥४६॥
कस्मिंस्थले निवासो मे कर्तव्यस्तद्वदस्व मे ।
राज्ञो वचनमाकर्ण्य नारदः प्राह तं नृपम् ॥४७॥

थिए । ३६। (यी) मिथिलाका राजा आएर उनको शहर घेरे र सूर्यकेतु राजासँग भीषण युद्ध गरे ।३७। शहरबाट बाहिर आई श्रेष्ठ राजा सूर्यकेतुले बलिया मिथिलाका राजासँग युद्ध गरे ।३८। अति बलिया राजा हंसध्वजले अनेकौं वीर योद्धालाई मार्दै प्रतापी राजा सूर्यकेतुलाई जिते ।३९। श्रेष्ठ राजा सूर्यकेतुले (आफ्ना) वीरहरू मारिएको देखी भागी आफ्नो शहर भित्र छिरे ।४०। शहरमा पसी सूर्यकेतु हतास हुँदै मनमा कता जाने होला भनी सोच्न लागे ।४१। हडबडाउँदै "अब यसपछि के गरौं ? कहाँ जाउँ ? कहाँ बसौं ? महाशत्रू हंसध्वजले शहर घेरिरहेको छ" भनेर विचार गर्न लागे ।४२। "म ती योद्धासँग हारेको छु, अब कता जाने होला ?" यस्तो चिन्ता ती राजा पटक पटक गरिरहेका थिए ।४३। हे मुनि ! त्यतिखेरै साँच्चै मुनिश्रेष्ठ नारद आइ पुगे । नारद आएको देखी राजा सूर्यकेतुले..।४४। भक्तिपूर्वक नुहेर विधिवत् उनको पूजा गरे । नारदको थकाई मेटिएको देखी राजा दुःखी हुँदै भन्न लागे- ।४५। "हे मुनिश्रेष्ठ ! हंसध्वजले शहर घेरिरहेको छ, शहर पनि भताभुङ्ग भइरहेछ, यहाँ बस्न सकिन्न ।४६। म कहाँ गएर बसौं ? हजुर मलाई बताउनु होस्" । राजाको कुरा सुनी नारदले राजालाई भन्नु भयो-।४७।



**नारद उवाच ॥ नारद भन्नु हुन्छ-**

मृगेन्द्रशिखरं गत्वा निवासं कुरु पार्थिव ।
यत्रोत्पन्ना महारम्या वाग्वती सरितां वरा ॥
तस्मिन् स्थाने सुगुप्तं च निवासं कुरु भूपते ॥४८॥

हे राजा ! (तिमी) मृगेन्द्रशिखरमा गएर बस । जहाँ नदीहरूमा श्रेष्ठ, अती रमणीय वागमती नदी उत्पन्न भएकी छिन् । त्यहाँ ( गई) हे नरेश ! (तिमी) गोप्यरूपले बसोबास गर ।४८।

**सूर्यकेतुरुवाच ॥ सूर्यकेतु भन्दछन्-**

मृगेन्द्रशिखरे रम्ये वाग्वती सरितां वरा ॥४९॥
मुनीन्द्र कथमुत्पन्ना तदाख्याहि विशेषतः ।

"रमणीय मृगेन्द्रशिखरमा पवित्र बाग्मती नदी..।४९। हे मुनी ! कसरी उत्पन्न भइन् विशेष कृपागरी मलाई बताउनु होस्" ।

**नारद उवाच ॥ नारद भन्नु हुन्छ-**

मृगेन्द्ररूपमास्थाय भगवान् हरिरीश्वरः ॥५०॥
हिरण्यकशिपुं दैत्यं जघान नृपसत्तम ।
प्रह्लादं तु परित्रातुं भक्तिवश्यो जनार्दनः ॥५१॥
दैत्यं हत्वा परिश्रान्तो हिमवच्छिखरं ययौ ।
तमन्वेष्टुं महाभक्तो हिरण्यकशिपोः सुतः ॥५२॥
जपन् नृसिंहनामानि हिमवच्छिखरं ययौ ।
मृगेन्द्ररूपमास्थाय हिमवच्छिखरे हरिः ॥५३॥
स्थितो यस्मादतः शैलं मृगेन्द्रशिखरं विदुः ।

सिंहको रूप लिई जब भगवान् विष्णुले..।५०। भक्तिको वशमा परी प्रह्लादलाई बचाउन हिरण्यकशिपु दैत्यलाई मार्नु भयो तब हे नरेश !..।५१। दैत्यलाई मारेपछि थाकेर (थकाई मेट्न) हिमालय शिखरतिर जानु भयो । उनलाई खोज्दै महाभक्त हिरण्यकशिपुका पुत्र (पनि)..।५२। नृसिंह भगवान्को नाम जप्दै हिमालय शिखरतिर गए । सिंहको रूप लिएर श्रीविष्णु हिमालय शिखरमा ..।५३। रहनु भयो त्यसैले हिमालयको त्यो पर्वतखण्डलाई मृगेन्द्रशिखर भनिन्छ । हे नरेश ! प्रह्लाद पनि त्यो

**प्रह्लादोऽपि ततो गत्वा मृगेन्द्रशिखरं नृप ॥५४॥**
**अदृष्ट्वा नरसिंहं तु तप उग्रं चकार ह ।**
**समाः सहस्रं दैत्येन्द्रस्तपस्तेपे सुदारुणम् ॥५५॥**
**ततस्तुष्टो महादेवो हास्यमुच्चैश्चकार हि ।**
**हरहाससमुद्भूता निर्गता गिरिगह्वरात् ॥५६॥**
**फेनोर्मिमालाधवला नदी पुण्यजलाऽमला ।**
**शङ्करो वचनं चेदं प्राह दानवपुङ्गवम् ॥५७॥**
**वचनान्मम दैत्येन्द्र बहिर्याता यतो नदी ।**
**अतोऽस्या वाग्वती नाम भविष्यति न संशयः ॥५८॥**
**मृगेन्द्ररूपमास्थाय विष्णुरत्र यतः स्थितः ।**
**अतस्तु वैष्णवं क्षेत्रमिदं लोके भविष्यति ॥५९॥**
**अस्योर्ध्वभागे मत्स्थानं शिवलिङ्गमयं शुभम् ।**
**भविष्यति यतो लोकास्ततः शिवपुरीं जगुः ॥६०॥**
**प्रह्लाद गच्छ दैत्येन्द्र विष्णुभक्तिर्दृढाऽस्तु ते ।**
**दैत्यराजाधिपो भूत्वा राज्यं कुरुष्व पैतृकम् ॥६१॥**
**एतत्तु वैष्णवं स्थानं मृगेन्द्रशिखराह्वयम् ।**
**हिरण्यकशिपुं हत्वा विश्रान्तो नृहरिर्यतः ॥६२॥**
**त्वया दैत्यपते तेपे विष्णुभक्तेन दारुणम् ।**
**मम हास्याच्च संभूता वाग्वती परमा नदी ॥६३॥**
**अस्योर्ध्वभागे जातानि लिङ्गानि मम शक्तितः ।**
**वाग्वतीप्रभवे स्नात्वा दृष्ट्वा शिवपुरीं नरः ॥६४॥**
**जन्मान्तरकृतात्ते पापान्मुच्यते नात्र संशयः ।**
**इत्युक्त्वाऽन्तर्हितो देवः सगणो हि वृषध्वजः ॥६५॥**
**तुष्ट प्रह्लाददैत्योऽपि जगाम भवनं स्वकम् ।**
**मृगेन्द्रशिखरं याहि सूर्यकेतो नरेश्वर ॥६६॥**
**श्रीकृष्णस्यानुभावेन पुनरेष्यसि श्वेतकाम् ।**
**सशरीरो दिवं गन्ता भवानन्ते न संशयः ॥६७॥**
**इत्युक्त्वा नारदो यातो नृपेण परिपूजितः ।**
**नारदस्योपदेशेन सूर्यकेतुर्नरेश्वरः ॥६८॥**
**चन्द्रावत्या दुहित्रा च भार्यया च समन्वितः ।**
**शूरैरनेकैः संयुक्तो मृगेन्द्रशिखरं ययौ ॥६९॥**
**दृष्ट्वा मृगेन्द्रशिखरं वाग्वतीं प्रविलोक्य च ।**
**तत्रैव वसतिं चक्रे मुदा परमया युतः ॥७०॥**

मृगेन्द्रशिखरमा गएर..।५४। (नृसिंहलाई खोज्न थाले अनि) नरसिंह भगवानलाई नदेखी कठोर तपस्या गर्न थाले । यसरी एक हजार वर्षसम्म उनले कठोर तपस्या गरे ।५५। उनको तपस्या देखी महादेव (समेत) प्रसन्न हुनु भयो र खित्का छाडेर हाँस्नु भयो । शिवको हाँसोका कारण पर्वतको गुफाबाट..।५६। फिँज र तर अविच्छिन्न निकाल्दै कञ्चन पुण्यजलले युक्त निर्मल नदी निस्किइन् । तब शिवले श्रेष्ठ दानवलाई भन्नु भयो-।५७। "हे दैत्येन्द्र ! मेरो आवाज (वचन, वाक्) ले यि नदी उत्पन्न भएकी छिन् यसैले निःसन्देह यिनको नाम वाग्वती हुनेछ" ।५८। सिँहको रूप लिएर श्रीविष्णु यहाँ बस्नु भएको छ, अतः यो क्षेत्र वैष्णवक्षेत्र हुनेछ ।५९। यसको टुप्पोमा शिवलिङ्गमय मेरो पवित्र स्थान छ, जो शिवपुरीका नामले लोकमा प्रसिद्ध हुनेछ ।६०। हे प्रह्लाद ! जाउ, तिम्रो विष्णुभक्ति दृढ होस् । दैत्यराजका अधिपति भई पैत्रिक सत्ता सम्हाल ।६१। यो वैष्णव क्षेत्र हो । यसको शिखर मृगेन्द्रशिखर हो । यहाँ श्रीविष्णुले हिरण्यकशिपुलाई मारेर, बसी आराम गर्नु भएको छ ।६२। हे दैत्यपति ! तिमी विष्णुभक्तले पनि (यहाँ) कठोर तपस्या गरेका छौ, मेरो हाँसोले पवित्र वागमती नदी पनि (यहीँ) उत्पन्न भएकी छिन् ।६३। यसको थाप्लोमा मेरा शक्तिले लिङ्ग उत्पन्न भएको छ । वागमतीको उद्गमस्थलमा नुहाएर जुन मानिसले शिवपुरीको दर्शन गर्दछ...।६४। उसका जन्मजन्मान्तरका पाप सबै नष्ट हुन्छन्, यसमा शङ्का छैन" । यति भनी महादेव आफ्ना गणका साथ अन्तर्ध्यान हुनु भयो ।६५। दैत्य प्रह्लाद पनि खुसी हुँदै आफ्ना घरतिर लागे । हे नरश्रेष्ठ सूर्यकेतु ! (तिमी त्यही) मृगेन्द्रशिखरमा जाउ ।६६। (पछि) श्रीकृष्णका आशीर्वादले (तिमी) पुनः श्वेतका नगरीमा आउन पाउने छौ । अन्तमा तिमी सशरीर स्वर्ग जानेछौ, यसमा कुनै शङ्का छैन ।६७। यति भनेर राजाबाट पूजिई नारद आफ्ना धामतिर गए । नारदको उपदेश बमोजिम सूर्यकेतु राजा...।६८। छोरी चन्द्रावती , पत्नी र अनेक योद्धालाई सँगै लिएर मृगेन्द्रशिखरतिर लागे ।६९। (राजा सूर्यकेतु) मृगेन्द्रशिखर र बाग्मतीको दर्शन गरी आनन्दसँग त्यहीँ बस्न थाले ।७०।

**इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये सप्तमोऽध्यायः ॥७॥**

श्रीस्कन्दपुराण, हिमवत्खण्ड, नेपालमाहात्म्यमा तिलमाधव, शिवपुरी, वाग्द्वार आदि तीर्थस्थलको वर्णनको प्रसङ्ग भएको सातौं अध्याय समाप्त भएको छ ।७।

**श्लोकानामादितः समष्ट्यङ्काः-४३१+७०=५०१**

शुरुदेखिको श्लोक सङ्ख्या :-४३१+७०=५०१



अनन्तलिङ्गेश्वर, भक्तपुर (तस्बिर श्रोत : सनन्दन राज नेपाल)



भगवान श्रीकृष्णद्वारा स्थापना गरिएको कीलेश्वरको मन्दिर, चाँगु, भक्तपुर (श्रोत : फन्टुर डट ईयू)



बैशाख १ गते लाग्ने मेलाको एक दृश्य, बाग्द्वार, काठमाडौं, तस्बिर : आफ्नै

Source : Phil Good/Photo Museum Nepal, Collector : Mohan Prasad Sapkota



बागमतीको जोरपाटी स्थित पुरानो पुल, बागमती नदी, गोकर्णको वन र शिवपुरी डाँडो

**॥ अथाष्टमोऽध्यायः ॥**

॥ आठौं अध्याय ॥

**मार्कण्डेय उवाच ॥** मार्कण्डेय भन्नु हुन्छ-

**एतस्मिन्नन्तरे दैत्यो महेन्द्रदमनाभिधः ।**
**हरमाराध्य तपसा त्रैलोक्ये दुर्जयोऽभवत् ॥१॥**
**जित्वा महेन्द्रसहितान् देवान् समरदुर्जयः ।**
**अधस्ताच्चन्दनाशैलोत्तरस्यां दिशि सुप्रभाम् ॥२॥**

**दैत्यश्चक्रे पुरीं रम्यां नानारत्नचयैर्युताम् ।**
**महेन्द्रदमनस्यासीद्भगिनी मृगलोचना ॥३॥**
**नाम्ना प्रभावती देवी तत्तुल्या नैव भामिनी ।**
**आराधिता तया देवी वत्सला सुरपूजिता ॥४॥**
**संतुष्टा हिमवत्कन्या प्राह देवीं प्रभावतीम् ।**
**वरं वरय सुश्रोणि यत्ते मनसि काङ्क्षितम् ॥५॥**
**श्रुत्वा नगेन्द्रजावाक्यं प्राह देवीं प्रभावती ।**
**त्वमेव देवि जानासि प्राणिनां हृदयस्थितम् ॥६॥**
**श्रुत्वा प्रभावतीवाक्यं तां प्राह गिरिनन्दिनी ।**
**त्वच्चित्तस्थो मया ज्ञातः पुरुषो मृगलोचने ॥७॥**
**प्रद्युम्नः कृष्णतनयः स ते भर्त्ता भविष्यति ।**
**इति दत्वा वरं देवी सद्योऽन्तर्धानमागता ॥८॥**
**प्रभावती वरं लब्ध्वा सुप्रभां नगरीं ययौ ।**
**उद्यानं दानवश्चक्रे चन्दनागिरिमूर्धनि ॥९॥**
**प्रभावतीविनोदाय नन्दनाकारसुन्दरम् ।**
**मृगेन्द्रशिखराद्रम्याद्बहिर्यातां तु वाग्वतीम् ॥१०॥**
**रुरोध दानवो दर्पाद्गिरिणा गिरिसन्निभः ।**
**वाग्वत्यां चावरुद्धायां श्लेष्मान्तकवनं महत् ॥११॥**
**ह्रदीभूतं सुप्रभस्थो मुमुदे दानवो भृशम् ।**
**महेन्द्रदमनो दैत्यः सुप्रभायां स्वयं स्थितः ॥१२॥**
**मृगेन्द्रशिखरे चैव सूर्यकेतुर्नृपः स्थितः ।**
**एतन्मध्ये जलमयं कुमुदोत्पलमण्डितम् ॥१३॥**
**तडागवच्च तज्जातं श्लेष्मान्तकवनं महत् ।**
**महेन्द्रदमनं दैत्यं दृष्ट्वा परमदुर्जयम् ॥१४॥**
**रत्नानि दिव्यान्यादाय स्वयं भेजे नृपस्तदा ।**
**सूर्यकेतुस्तदा ज्ञात्वा निर्भयो वसति स्म ह ॥१५॥**
**कश्चिद्दैत्यो दानवस्य मृगेन्द्रशिखरं ययौ ।**
**तेन दृष्टा सुता तस्य सूर्यकेतोर्महीभुजः ॥१६॥**
**क्रीडन्ती विपिने बाला रम्भातोऽप्यतिसुन्दरी ।**
**दृष्ट्वा कन्यां नरपतेर्दानवस्त्वरितस्तदा ॥**
**महेन्द्रदमनस्याग्रे कथयामास विस्तरात् ॥१७॥**

यसपछि महेन्द्रदमन नाम गरेको दैत्य शिव भगवान्को आराधना गरी तपस्याको बलमा तीनै लोकमा अपराजित हुन पुग्यो ।१। लडेर जित्न नसकिने त्यो दैत्यले इन्द्र समेत सबै देवतालाई जिती “चन्दनपर्वत” को फेदी (थानकोट वा फर्पिङ्गको आसपास ?) को उत्तरतिर “सुप्रभा” नामको..।२। अनेक रत्नले सुसज्जित एउटा सुन्दर शहर बनायो । महेन्द्रदमनकी मृगका जस्ता सुन्दर आँखा भएकी (एउटी) बहिनी थिइन् ।३। प्रभावती नामकी ती कन्याको सुन्दरताको तुलना कसैसँग हुन सक्दैनथ्यो । ती कन्याले देवताबाट पूजित वत्सला देवीको आराधना गरिन् ।४। हिमालय पुत्रीले प्रसन्न भई प्रभावतीलाई भन्नु भयो-“हे सुन्दर कम्मर भएकी (कन्या) तिम्रो मनले सोचेको वरदान माग” ।५। पार्वतीको वचन सुनी प्रभावतीले भनिन्-“हे देवी ! हजुर नै सबै प्राणीको मनमा रहेको कुरा जान्नु हुन्छ (म के भनौं?)” ।६। प्रभावतीका कुरा सुनी पार्वतीले भन्नु भयो-“हे मृगका जस्ता आँखा भएकी ! तिम्रो मनमा रहेका पुरुषको बारेमा मैले जाने ।७। श्रीकृष्णका छोरा प्रद्युम्न तिम्रा पति हुनेछन्” । यस्तो वरदान दिएर देवी तुरुन्त अन्तर्ध्यान हुनु भयो ।८। प्रभावती वरदान पाएर सुप्रभा शहरमा गइन् । दानवले चन्दनपर्वतको थाप्लोमा बगैंचा बनाएको थियो ।९। प्रभावतीलाई मनोरञ्जन दिन ( बनाइएको त्यो बगैंचा) (स्वर्गको) नन्दन वनझैं सुन्दर थियो । रमणीय मृगेन्द्रशिखर(शिवपुरी)बाट (निस्की) बहने बाग्मती नदीलाई..।१०। पर्वत समान त्यो दैत्यले अभिमानपूर्वक रोकिदियो । वागमती अवरुद्ध भएपछि विशाल श्लेष्मान्तक वन..।११। दहमा परिणत भयो । सुप्रभा शहरको दैत्य (यो देखेर) अति खुसी भयो । सुप्रभा शहरमा महेन्द्रदमन नामको त्यो दैत्य आफैं बस्दथ्यो ।१२। मृगेन्द्रशिखरमा भने राजा सूर्यकेतु बस्ने गर्दथे । यि दुईको बीचमा पानी र कमलका फूलले भरिएको..।१३। ठूलो श्लेश्मान्तक वन तालझैं प्रतित हुन्थ्यो । जित्न नसकिने महेन्द्रदमन दैत्यलाई देखेर..।१४। राजा सूर्यकेतुले अनेक दिव्य रत्न आफैंले जोहो गरी भेटी चढाउन पठाए र आफूलाई सुरक्षित र त्रासरहित सम्झिए ।१५। एक पटक एउटा सेवक दैत्य मृगेन्द्रशिखर (घुम्दै) पुग्यो र राजा सूर्यकेतुकी छोरीलाई देख्यो ।१६। बगैंचामा खेलिरहेकी ती कन्या रम्भाभन्दा पनि धेरै सुन्दर थिइन् । राजाकी यस्ती कन्या देखेर त्या दानव तुरुन्त फर्कियो र महेन्द्रदमनका अगाडि (गई) सबैकुरा बेलिविस्तार लगायो ।१७।

**दानव उवाच ॥** दानव भन्दछ-

**श्रृणु दैत्येन्द्र मद्वाक्यं मृगेन्द्रशिखरे मया ॥१८॥**
**भ्रमता सूर्यकेतास्तु कन्या दृष्टा मनोहरा ।**
**नैतादृशी मानुषीषु सुन्दरी वर्त्तते क्वचित् ॥१९॥**
**स्त्रीरत्नमतुलं कन्या सूर्यकेतोर्महीभुजः ।**
**रत्नभोक्ता भवाँल्लोके सा च स्त्रीरत्नमुत्तमम् ॥२०॥**
**तस्या योग्यो भवान् भर्त्ता नान्यः कश्चिन्महीतले ।**
**इति तस्य वचः श्रुत्वा महेन्द्रदमनो मुदा ॥२१॥**
**युक्तः परमया प्राह तं दैत्यं दृढविक्रमम् ।**

“दैत्यपति ! मेरा कुरा सुन्नु होस्-मृगेन्द्रशिखरमा मबाट..।१८। घुमिदा राजा सूर्यकेतुकी सुन्दर कन्या देखिइन् । मानिसको जातमा यस्ती राम्री केटी कहीँ पनि छैन ।१९। राजा सूर्यकेतुकी कन्या अमूल्य स्त्रीरत्न छिन् । हजुर संसारमा रत्नभोक्ता हुनु हुन्छ र उनी (पनि एक) उत्तम स्त्रीरत्न छिन् ।२०। पृथ्वीमा हजुरजति योग्य पति तिनका लागि कोही छैन” । उसका कुरा सुनी महेन्द्रदमन अति खुसी हुँदै..।२१। बलशाली त्यो दैत्यलाई भन्न लाग्यो-

**महेन्द्रदमन उवाच ॥** महेन्द्रदमन भन्दछ-

**साधु साधु त्वया प्रोक्तं मत्पुरो दनुजोत्तम ॥२२॥**
**सूर्यकेतुः सुतां मह्यं ददाति च यथा किल ।**
**तथा प्रकारो भवता क्रियतां दानवोत्तम ॥२३॥**
**मृगेन्द्रशिखरं गत्वा त्वया दानवसत्तम ।**
**मदर्थे याच्यतां कन्या सूर्यकेतुं नराधिपम् ॥२४॥**
**तस्याज्ञां प्राप्य दैत्योऽसौ मृगेन्द्रशिखरं ययौ ।**
**ददर्श भूपं दैत्योऽसौ सभायां मन्त्रिभिर्युतम् ॥२५॥**
**मन्त्रिभिर्दानवं दृष्ट्वा निषीदेति वचोऽब्रवीत् ।**
**किमर्थमागतं दैत्य त्वया तदिह कथ्यताम् ॥२६॥**
**नृपतेर्वचनं श्रुत्वा दानवो वाक्यमब्रवीत् ।**
**महेन्द्रदमनो राजा दैत्यानां वाणनन्दनः ॥२७॥**
**ते कन्यां प्रार्थयत्येनां तस्मै दातुं त्वमर्हसि ।**
**महेन्द्रदमनो रत्नभोक्ता शम्भोः प्रसादतः ॥२८॥**
**चन्द्रावती च स्त्रीरत्नं तस्माद्दातुं त्वमर्हसि ।**
**इति दूतवचः श्रुत्वा सूर्यकेतुर्भयान्वितः ॥२९॥**
**विचार्य मनसा वाक्यं दूतमेवमुवाच ह ।**

हे दानवोत्तम ! तिमी धन्य छौ, राम्रो (सही) कुरा भन्यौ ।२२। “हे उत्तम दानव ! जे जसो गर्नाले सूर्यकेतु मलाई छोरी दिन्छन् तिमी त्यो उपाय गर ।२३। हे श्रेष्ठ दानव ! मृगेन्द्रशिखरमा गएर तिमी मेरा लागि राजा सूर्यकेतुकी छोरी माग” ।२४। उसको आदेश पाई त्यो दैत्य मृगेन्द्रशिखरतिर गयो । त्यहाँ उसले मन्त्रीहरू सहितको सभामा राजालाई देख्यो ।२५। मन्त्रीहरूले पनि दानवलाई देखी “बस” भने । “दैत्य ! के प्रयोजनका लागि आयौ ? त्यो तिमीबाट यहाँ बताइयोस्” (भनी राजाले भने) ।२६। राजाको कुरा सुनी दानवले यो कुरा भन्यो-“वाणासुरका पुत्र दैत्यराज महेन्द्रदमन...।२७। हजुरकी कन्यालाई चाहन्छन् । हजुर उनलाई कन्या दिनु होस् । शिवको वरदानका कारण महेन्द्रदमन रत्नभोगी छन् ।२८। चन्द्रावती पनि स्त्रीरत्न हुन् त्यसैले हजुरबाट दिन योग्य छिन्” । दूतको यस्तो सन्देश सुनी सूर्यकेतु डराउँदै..।२९। मनले सोचविचार गरी दूतलाई भन्न लागे-



**सूर्यकेतुरुवाच ॥** सूर्यकेतु भन्दछन्-

**भवान् यदाह तत्सर्वं सत्यमेव न संशयः ॥३०॥**
**महेन्द्रदमनो राजा त्रैलोक्याधिपतिः प्रभुः ।**
**स चेत् प्रार्थयते कन्यां कोऽस्ति धन्यतरो मम ॥३१॥**
**चन्द्रावती च मे कन्या परमत्यन्तवालिका ।**
**यदा विवाहसमयो मत्कन्याया भविष्यति ॥३२॥**
**महेन्द्रदमनस्याज्ञा कर्तव्यैव न संशयः ।**
**इति भूपवचः श्रुत्वा दूतः संहृष्टमानसः ॥३३॥**
**महेन्द्रदमनं गत्वा ततः सर्वं न्यवेदयत् ।**
**सूर्यकेतुर्महीपालश्चिन्तयामास दुःखितः ॥३४॥**
**कष्टात् कष्टतरं लब्धं किं कर्तव्यमतः परम् ।**
**श्वेतकायाः परित्यागो दैत्यः प्रार्थयते सुताम् ॥३५॥**
**स्थातुं नैव मया शक्यं मृगेन्द्रशिखरे पुनः ।**

“हजुरले जे भन्नु भो त्यो सत्य नै हो, यसमा कुनै शङ्कै छैन ।३०। राजा महेन्द्रदमन तीनै लोकका स्वामी हुन् । उनले (मेरी) कन्या माग्दछन् भने, मभन्दा भाग्यमानी को हुन सक्ला र ? ।३१। तर, मेरी छोरी चन्द्रावती अहिले सानी छिन्, जब मेरी छोरीको बिहे गर्ने बेला हुनेछ..।३२। (तब) म महेन्द्रदमनको आदेश निःसन्देह मान्ने नै छु । राजाको यस्तो वचन सुनी दूत खुसीहुँदै..।३३। महेन्द्रदमन भएका ठाउँमा गयो र सबै कुरा निवेदन गर्‍यो । (यता) राजा सूर्यकेतु (भने) दुःखी हुँदै चिन्ता गर्न लागे ।३४। उनलाई दुःखमाथि दुःख थपियो । “अब यसपछि के गर्ने होला ? (आफ्नो देश) श्वेतका शहर गुमाएपछि अब दैत्य (मेरी) छोरी माग्न थालेको छ ।३५। (अब) फेरी मृगेन्द्रशिखरमा पनि म टिक्नबस्न नसक्ने हुन्छु क्यारे !” राजा सूर्यकेतु यस्तै चिन्ता गर्दै थिए

इति चिन्ताकुलो यावत् सूर्यकेतुर्नराधिपः ॥३६॥
तावत् तत्र समायातो नारदो मुनिसत्तमः ।
तमागतमभिप्रेक्ष्य सूर्यकेतुर्नराधिपः ॥३७॥
भक्तितः पूजयामास यथाशास्त्रपुरस्सरम् ।
उवाच नारदं भूपः कृतासनपरिग्रहम् ॥३८॥
महेन्द्रदमनो दैत्यः कन्यां प्रार्थयते मम ।
मृगेन्द्रशिखरे स्थित्वा कथं दैत्येन विग्रहः ॥३९॥
नारदात्र प्रतीकारः कर्तव्यस्तु कथं मया ।
इति भूपवचः श्रुत्वा नारदो वाक्यमब्रवीत् ॥४०॥

कि..।३६। त्यहाँ श्रेष्ठमुनि नारद (टुप्लुक्क) आइपुगे । उनी आएको देखी राजा सूर्यकेतुले...।३७। शास्त्र अनुसार भक्तिपूर्वक उनको पूजा गरे । (नारद) आसनमा बसिसकेपछि राजा नारदलाई भन्न लागे-।३८। “महेन्द्रदमन दैत्य मेरी कन्या माग्दछ, मृगेन्द्रशिखरमा बसेर उसँग विद्रोह पनि कसरी गर्नु ? ।३९। हे नारद ! मबाट उसको प्रतिकार (अवज्ञा) कसरी होला ?” । राजाका यस्ता कुरा सुनी नारद भन्दछन्-।४०।

**नारद उवाच॥ नारद भन्नु हुन्छ-**

सूर्यकेतो नृपश्रेष्ठ न भेतव्यं त्वया पुनः ।
चन्द्रावती तव सुता प्रद्युम्नाय प्रदीयताम् ॥४१॥
द्वारकायां मया गत्वा दृष्ट्वा च मधुसूदनम् ।
रौक्मिणेय इहानेयो भयमुत्सृज्यतामिति ॥४२॥
नारदस्य वचः श्रुत्वा सूर्यकेतुनरेश्वरः ।
प्राह तं नारद मुनिं त्रातोऽस्मि भवता सदा ॥४३॥
भूपमामन्त्र्य स मुनिर्जगामाकाशवर्त्मना ।
गच्छता तेन मुनिना चन्दनागिरिमूर्धनि ॥४४॥
उद्यानविषये दृष्टा दैत्यकन्या प्रभावती ।
प्रभावत्याश्च सविधे आजगाम स नारदः ॥४५॥
प्रभावती नमस्कृत्य नारदं प्राह सुन्दरी ।
किमागमनकृत्यं ते तपोधन वदस्व मे ॥४६॥

“हे नृपश्रेष्ठ सूर्यकेतु ! तिमीले फेरी डराउनु पर्दैन । तिम्री छोरी चन्द्रावती प्रद्युम्नलाई देउ ।४१। म द्वारका गई मधुसूदनको दर्शन गरी रुक्मिणीपुत्र (प्रद्युम्न) लाई यहाँ लेराउँदछु, (तिमी) भय त्याग ।४२। नारदका कुरा सुनी नृपश्रेष्ठ सूर्यकेतुले ती नारद मुनिलाई “हजुरले सधैं मेरो रक्षा गर्नु हुन्छ” भने ।४३। राजासँगको कुराकानी सकी ती मुनि हिँडे । आकाशमार्गबाट जाँदै गर्दा ती मुनिले चन्दनगिरीको थाप्लोमा..।४४। रहेको बगैंचामा दैत्यकन्या प्रभावतीलाई देखे । ती नारद (त्यसपछि) प्रभावतीका नगिचै आइपुगे ।४५। सुन्दरी प्रभावतीले नारदलाई नमस्कार गरी भन्न लागिन्-“हे तपोधन ! हजुरको आगमनको कारण के हो मलाई बताउनु होस्” ।४६।



**नारद उवाच॥ नारद भन्नु हुन्छ-**

तुभ्यं दत्तो वरो देव्या प्रद्युम्नस्ते पतिः पुरा ।
भविष्यति न चाद्यापि नैति त्वां कृष्णनन्दनः ॥४७॥

चन्द्रावती सूर्यकेतोः कन्या परमसुन्दरी ।
कल्पिता कृष्णपुत्राय भ्राता तां याचते तव ॥४८॥
प्रद्युम्नानयनार्थाय गम्यते द्वारकापुरी ।
प्रद्युम्नोऽपि समागत्य त्वया योगमुपैष्यति ॥४९॥
नारदस्य वचः श्रुत्वा मुनिं प्राह प्रभावती ।

“हे प्रभावती ! पहिले देवीले तिमीलाई प्रद्युम्न पति हुनेछन् भनी वरदान दिएकी थिइन् । तर अहिलेसम्म पनि श्रीकृष्णका पुत्र ( तिमीलाई) लिन आएनन् ।४७। सूर्यकेतुकी छोरी चन्द्रावती अती सुन्दरी छिन् । उनले (आफ्नी) छोरी प्रद्युम्नलाई दिने निधो गरेका छन् भने उता चन्द्रावतीलाई तिम्रो दाजू चाहन्छन् ।४८। म प्रद्युम्नलाई लिन द्वारका जान लागेको छु । प्रद्युम्न आइपुगेपछि तिम्रो समागम होला” ।४९। नारदका कुरा सुनी प्रभावती नारदलाई भन्दछिन्-

**प्रभावत्युवाच॥ प्रभावती भन्दछिन्-**

सर्वं त्वं हि विजानासि त्रिकालज्ञ मुनीश्वर ॥५०॥
विलद्वारि महाभीमः शङ्खनामा महासुरः ।
वाग्वतीद्वारबन्धस्य रक्षकः कच्छपासुरः ॥५१॥
भ्राताऽपि मम दुर्द्धर्षः प्रद्युम्नः कथमेष्यति ।
प्रभावतीवचः श्रुत्वा नारद प्राह तां पुनः ॥५२॥

“हे त्रिकालज्ञ मुनीश्वर ! हजुर नै सबै कुरा जान्नु हुन्छ ।५०। विलद्वार (नाका ?) मा शङ्ख नामको अति बलियो महाअसुर (पहरा दिइरहेको) छ । वागमती थुनिएको ठाउँमा कच्छपासुर पहरा दिइरहेको छ ।५१। मेरा दाई पनि अति बलिया छन्, (यस्तो स्थितिमा) प्रद्युम्न कसरी (यहाँ) आउलान् खोई ?” । प्रभावतीका कुरा सुनी नारदले उनलाई फेरी भन्न लागे-।५२।

**नारद उवाच॥ नारद भन्नु हुन्छ-**

**यत् प्रोक्तं मृगशावाक्षि सत्यमेव न संशयः ।**
**सुप्रभा नैव गन्तव्या स्थीयतामत्र भामिनि ॥५३॥**
**तव भ्रातुः प्रतापेन भयमत्र न विद्यते ।**
**इत्युक्त्वा प्रययौ धीमान् नारदो द्वारकां पुरीम् ॥५४॥**
**प्रभावती स्थिता तत्र चन्दनागिरिमूर्धनि ।**
**स गत्वा द्वारकां शीघ्रं सभायां कृष्णमास्थितम् ॥५५॥**
**ददर्श नारदो धीमान् यदुभिः परिवारितम् ।**
**आगतं नारदं वीक्ष्य यथाविधिपुरस्सरम् ॥५६॥**
**पूजयित्वा च गोविन्दः स्मितं कृत्वाऽब्रवीद्वचः ।**

"हे मृगका बच्चाका जस्ता आँखा भएकी ! तिमीले भनेको कुरा सही हो, यसमा शङ्के छैन । हे कन्या ! तिमी यहीँ बस, सुप्रभा नगरमा नजाउ ।५३। तिम्रो दाजुको प्रभावले यहाँ कुनै डर (पनि) छैन" । यति भनेर बुद्धिमान् नारद द्वारकातिर प्रस्थान गरे ।५४। प्रभावती चन्दनगिरीको थाप्लोमै बसिरहिन् । चाँडै द्वारका पुगेका बुद्धिमान् नारदले यदुहरूको सभामा बसिरहेका श्रीकृष्णको दर्शन गरे । नारद आएको देखी शास्त्र अनुसार श्रीकृष्णले उनको पूजा गर्नु भयो ।५५-५६। पूजा सकी गोविन्दले मुस्कुराउँदै सोध्नु भयो-

**गोविन्द उवाच॥ गोविन्द भन्नु हुन्छ-**

**कुत आगम्यते ब्रह्मन् किमपूर्वं विलोकितम् ॥५७॥**
**पवित्रीकृतमस्माकं भवनं मुनिसत्तम ।**
**पावितं नः कुलं सर्वं किमागमनकारणम् ॥५८॥**
**गोविन्दस्य वचः श्रुत्वा नारदो हृष्टमानसः ।**
**कृताञ्जलिपुटो भूत्वा वचनं चेदमब्रवीत् ॥५९॥**

"हे ब्रह्मन् ! कहाँबाट आउनु भयो ? अचम्मका कुरा के देख्नु भयो ? ।५७। हे मुनिश्रेष्ठ ! हजुरले हाम्रो घर पवित्र पारि दिनु भयो । कुल सबै पनि पवित्र पारि दिनु भयो । अउनुको कारण बताउनु होस्" ।५८। श्रीकृष्णका कुरा सुनी खुसीले गद्गद हुँदै नारद अँजुली बाँधेर यि कुरा भन्न लागे ।५९।

**नारद उवाच॥ नारद भन्नु हुन्छ-**

**श्रृणु गोविन्द वक्ष्यामि यदर्थमहमागतः ।**
**हंसध्वजभयाद्भीतः सूर्यकेतुर्नराधिपः ॥६०॥**
**विहाय श्वेतकां शीघ्रं मृगेन्द्रशिखरं ययौ ।**
**चन्द्रावती तस्य कन्या प्रद्युम्नाय प्रकल्पिता ॥६१॥**
**तां याचते महाभीमो महेन्द्रदमनोऽसुरः ।**
**दैत्यस्य भगिनी दिव्या नाम्ना देवी प्रभावती ॥६२॥**
**तस्यै पतिः पुरा क्लृप्तः प्रद्युम्नो गिरिकन्यया ।**
**प्रद्युम्नः प्रेष्यतां तत्र महेन्द्रदमनोऽसुरः ॥६३॥**
**हन्तव्यस्तव पुत्रेण नात्र कार्या विचारणा ।**
**प्रद्युम्नः प्रेष्यतामत्र मया साकं सुरेश्वर ॥६४॥**
**प्रभावत्या विवाहश्च चन्द्रावत्यास्तथैव च ।**
**महेन्द्रदमनश्चैव हन्तव्यस्तव सूनुना ॥६५॥**



"हे श्रीकृष्ण ! म यहाँ आउनुको कारण बताउँदछु सुन्नु होस् । हंसध्वजको डरले राजा सूर्यकेतु..।६०। (आफ्नो) श्वेतका नगरी छाडी तुरुन्त मृगेन्द्रशिखर तिर गए । तिनकी चन्द्रावती नामकी छोरी प्रद्युम्नका लागि (भनी) निश्चय गरिएकी छिन् ।६१। अति बलशाली महेन्द्रदमन नामको असुर उनलाई मागि रहेको छ । त्यो दैत्यकी प्रभावती नाम गरेकी परम सुन्दरी बहिनी छिन् ।६२। पार्वतीले प्रद्युम्न तिम्रा पति हुने छन् भनी (उनलाई) पहिले नै बरदान दिई सकेकी छिन् । त्यहाँ प्रद्युम्नलाई पठाउनु होस् र महेन्द्रदमन असुरलाई...।६३। हजुरको पुत्रका हातबाट मार्न लगाउनु होस्, यसमा सोचविचार नगर्नु होस् । हे देवेश्वर ! मसँग प्रद्युम्नलाई पठाइयोस् ।६४। (त्यहाँ) हजुरको पुत्रले महेन्द्रदमनलाई मारुन् र प्रभावती तथा चन्द्रावतीसँग बिहे गरुन् ।६५। (यसपछि श्रीकृष्ण सोध्नु हुन्छ)

**श्रीकृष्ण उवाच॥ श्रीकृष्ण भन्नु हुन्छ-**

**अहत्वा दुर्जयं दैत्यं चन्द्रावत्यास्तपोधन ।**
**कथं विवाहो भविता प्रद्युम्नेन सुतेन मे ॥६६॥**
**भूया गत्वा स हन्तव्यस्त्वया साकं मुनीश्वर ।**

"हे तपोधन ! जित्न मुस्किल (त्यो) दैत्यलाई नमारी चन्द्रावतीसँग मेरो छोरो प्रद्युम्नको विवाह कसरी हुन्छ ? ।६६। हे मुनीश्वर ! हजुरसँगै गएर मैले (त्यसलाई) मार्नु पर्दछ" ।

**नारद उवाच॥ नारद भन्नु हुन्छ–**

**महेन्द्रदमनो दैत्यस्तव वध्यो न माधव॥६७॥**
**प्रद्युम्नस्यैव वध्योऽसौ ब्रह्मणो वदनाच्छ्रुतम्।**

हे माधव ! महेन्द्रदमन दैत्य हजुरबाट मारिन्न ।६७। उ प्रद्युम्नका हातबाटै मारिन सक्दछ भनेर मैले ब्रह्माका मुखबाट सुनेको छु ।

**श्रीकृष्ण उवाच॥ श्रीकृष्ण भन्नुहुन्छ–**

**कथं ब्रह्ममुखाद्विप्र श्रुतं तत्कथ्यतां मम॥६८॥**
**महेन्द्रदमनो दैत्यः कस्य पुत्रश्च कीदृशः ।**
**कथं महेन्द्रो विजितस्तदाचक्ष्व पुरो मम॥६९॥**

हे विप्र ! हजुरले ब्रह्माका मुखबाट कसरी सुन्नु भयो ? मलाई भन्नु होस् ।६८। महेन्द्रदमन दैत्य कसको छोरो हो ? कस्तो छ ? कसरी इन्द्रलाई जित्यो ? त्यो सबै मलाई बताउनु होस् ।६९।

**नारद उवाच॥ नारद भन्नुहुन्छ–**

**वाणासुरो दैत्यराजः शोणिताख्ये पुरेऽभवत्।**
**भार्या च रोहिणी तस्य पतिभक्तिपरायणा॥७०॥**
**तस्यां पुत्रः समुत्पन्नः सर्वदेवभयावहः ।**
**तस्मिन् संजातमात्रे तु प्रचचाल मही भृशम्॥७१॥**
**वामं चक्षुः प्रास्फुरच्च सहस्राक्षस्य तत्क्षणात्।**
**इन्द्रस्य दमन यस्मात् करिष्यति महाबलः॥७२॥**
**अतो महेन्द्रदमनो नाम चक्रे तु भार्गवः ।**
**संप्राप्तयौवनो दैत्यः शुक्रं पप्रच्छ भक्तितः॥७३॥**
**शक्रो जेतुं कथं शक्यस्तदाचक्ष्व गुरो मम ।**
**श्रुत्वा तस्य वचः शुक्रः प्राह दानवपुङ्गवम्॥७४॥**

शोणितपुर नामक शहरमा वाणासुर नामको दैत्यराज बस्दथ्यो । उसकी पतिभक्ता रोहिणी नामकी पत्नी थिइन् ।७०। उसको सबै देवतालाई तर्साउने छोरो भयो । उ जन्मदै खेरी पृथ्वीमा ठूलो भूकम्प गयो ।७१। (त्यसबेला) इन्द्रको देब्रे आँखो फरफराएको थियो । यो महाबलशालीले इन्द्रलाई दमन गर्नेछ भनेर...।७२। शुक्राचार्यले उसको नाम महेन्द्रदमन राखे । जवान भएपछि दैत्यले भक्तिपूर्वक शुक्राचार्यलाई सोध्यो ।७३। हे गुरू ! म इन्द्रलाई कसरी जित्न सक्दछु, मलाई बताउनु होस् । उसका कुरा सुनी शुक्राचार्यले दानवश्रेष्ठलाई भने- ।७४।



**शुक्र उवाच॥ शुक्राचार्य भन्नु हुन्छ–**

**तपसा लभ्यते सिद्धिस्तपस्यां कुरु दानव ।**
**शक्रं जेष्यसि सङ्ग्रामे तपस्यायां सुदुर्जयम्॥७५॥**
**गुरूपदेशमासाद्य महेन्द्रदमनोऽसुरः ।**
**रुद्रधारोदये तीर्थे चकार विमलं तपः॥७६॥**
**सहस्रं शरदां तत्र वायुभक्षो जितेन्द्रियः ।**
**तपस्यया घोरया तु समाहूष्टो जगद्गुरुः॥७७॥**
**विमानेनार्कवर्णेन प्रादुरासीच्चतुर्मुखः ।**
**पितामहं समालोक्य दण्डवत् प्रणिपत्य च॥७८॥**
**महेन्द्रदमनो दैत्य इदं वचनमब्रवीत्।**
**यदि तुष्टोऽसि देवेन्द्र वरं देहि ममेप्सितम्॥७९॥**
**अजेयः सर्वदेवैश्च भविष्यामि सदा रणे ।**
**दैत्यस्य वचनं श्रुत्वा प्राह वाक्यं पितामहः॥८०॥**
**यदीप्सितं मनसि ते तत्तथाऽस्त्विति दानव ।**
**इति तस्मै वरं दत्वा यथाभिलषितं प्रभुः॥८१॥**
**विमानेनार्कवर्णेन ब्रह्मलोकं जगाम ह ।**
**ततो लब्धवरो दैत्यो वीरैर्दैत्यैः समन्वितः॥८२॥**
**भार्गवेणाभिषिक्तस्तु दैत्यराज्ये रराज ह ।**
**संमन्त्र्य सचिवैः सार्धं महेन्द्रदमनाऽसुरः॥८३॥**

हे दानव ! तपस्याबाट सिद्धि प्राप्त हुन्छ, अतः तपस्या गर । तपस्याबाट तिमी जित्न नसकिने इन्द्रलाई (पनि) जित्नेछौ ।७५। गुरूको उपदेश मानी महेन्द्रदमन दैत्यले रुद्रधारोदय तीर्थ ( शङ्खमूल)मा (गई) दोषहीन तपस्या गऱ्यो ।७६। जितेन्द्रिय भई हजार वर्षसम्म वायु मात्र पिएर त्यहाँ कठोर तपस्या गर्दा ब्रह्मा प्रसन्न हुनु भयो (र) ।७७। सूर्यवर्णको विमानमा चढी चतुर्मुख ब्रह्मा प्रकट हुनु भयो । ब्रह्मालाई देखी दण्डवत् प्रणाम गरी.. ।७८। महेन्द्रदमन दैत्यले यि कुरा भन्यो-यदि हजुर मसँग प्रसन्न हुनु हुन्छ भने मलाई मनले चिताएको वरदान दिनु होस् ।७९। म युद्धमा सबै देवताबाट जित्न नसकिने होउँ । दैत्यका कुरा सुनी ब्रह्माले भन्नु भयो- ।८०। हे दानव ! तिम्रो मनमा जे चाहना छ त्यो सफल होस् । यसरी उसलाई मनले चाहेको वरदान दिई प्रभू..।८१। सूर्यवर्णको विमान चढी ब्रह्मलोक जानु भयो । त्यसपछि बरदान पाएको त्यो दैत्य वीर दैत्यहरुका साथ...।८२। शुक्राचार्यबाट राज्याभिषेक गरिई दैत्यराज (भई) गद्दीमा बस्यो । (अनि एकदिन) मन्त्रिहरूसँग सल्लाह गरी महेन्द्रदमन दैत्यले...।८३। कूष्माण्ड नामक दैत्यलाई दूत बनाएर इन्द्रलोकमा पठायो । त्यसपछि इन्द्रसभामा गएर अति पराक्रमी

कूष्माण्डं प्रेषयामास दूतं देवेन्द्रसन्निधौ ।
ततो गत्वा शक्रसभां कूष्माण्डो घोरविक्रमः ॥८४॥
पुरन्दरं जगादेदं देवानां तत्र पश्यताम् ।
स्वयम्भुवा स्वामिनो मे राज्यं दत्तं पुरन्दर ॥८५॥
राज्यानि वीरभोग्यानि त्यक्तुं तस्मात्त्वमर्हसि ।
कूष्माण्डवचनं श्रुत्वा रोषाकुलितमानसः ॥८६॥
अब्रवीदुत्तरं वाक्यं सभायां बलसूदनः ।
राज्यानि वीरभोग्यानि सत्यमेव न संशय ॥८७॥
राज्यं वीरा न त्यजन्ति विना युद्धेन दानव ।
बाणासुरसुतं ब्रूहि कूष्माण्ड वचनं मम ॥८८॥
यत्ते वीर्यं बलं तेजस्तद्दर्शय ममाग्रतः ।
इति शक्रवचः श्रुत्वा दूतः परमकोपनः ॥८९॥
आगत्य कथयामास दैत्याग्रे शक्रभाषितम् ।
दूतवाक्यं तदा श्रुत्वा महेन्द्रदमनोऽसुरः ॥९०॥
शङ्खासुरं पुरस्कृत्य भ्रातरं कच्छपानुजम् ।
दैत्यसैन्यं पुरस्कृत्य ययौ शक्रपुरीं शुभाम् ॥९१॥
उपरुध्येन्द्रनगरीं महेन्द्रदमनोऽसुरः ।
नन्दनाधिष्ठितो भूत्वा तस्थौ संग्रामकामुकः ॥९२॥

कूष्माण्डले..।८४। सबै देवताका सामु इन्द्रलाई भन्यो-हे इन्द्र ! स्वामी इन्द्रदमनलाई ब्रह्माले राज्य (वरदान) दिनु भएको छ ।८५। अतः वीरले भोग्न योग्य (यो स्वर्गको) राज्य हजुर छाड्नु होस् । कूष्माण्डका कुरा सुनी रिसले व्याकुल हुँदै..।८६। इन्द्रले देवसभामा उसलाई (यस्तो) उत्तर दिए- राज्यहरू वीरहरूबाटै भोगिन्छन्, साँचो हो, कुनै शङ्कै छैन ।८७। (परन्तु) हे दानव ! वीरहरू नलडी राज्य छाड्दैनन् । हे कूष्माण्ड ! मेरा कुरा वाणासुरका पुत्रलाई लगेर सुनाउ ।८८। उसको जुन तेज पराक्रम छ, त्यो मेरा अगिल्तिर देखाउ (भन) । इन्द्रको यस्तो कुरा सुनी दूत अति रिसाउँदै..।८९। दैत्यका अगाडि आएर इन्द्रले भनेका सबै कुरा सुनायो । दूतका कुरा सुनी महेन्द्रदमन दैत्यले...।९०। भाई शङ्खासुर, दाई कच्छपासुर र दैत्येसेनालाई (समेत) अगाडि लगाएर शुभ (शहर) इन्द्रपुरतिर प्रस्थान गर्‍यो ।९१। (त्यहाँ पुगी) युद्धप्रेमी महेन्द्रदमनले इन्द्रको शहरलाई घेर्‍यो र नन्दनवनमा छाउनी बसायो ।९२।

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये महेन्द्रदमनोपाख्यानं नामाष्टमोऽध्यायः ॥८॥
श्रीस्कन्दपुराण, हिमवत्खण्ड, नेपालमाहात्म्यमा महेन्द्रदमन दानवको कथा वर्णन भएको आठौं अध्याय समाप्त भएको छ ।८।



श्लोकानामादितः समष्ट्यङ्काः-५०१+९२=५९३
शुरुदेखिको श्लोक सङ्ख्या :-५०१+९२=५९३

## ॥ अथ नवमोऽध्यायः ॥
## ॥ नवौं अध्याय ॥

**नारद उवाच ॥ नारद भन्नुहुन्छ–**

नन्दनाधिष्ठितं दृष्ट्वा महेन्द्रदमनासुरम् ।
देवसैन्यं पुरस्कृत्य निर्ययौ बलसूदनः ॥१॥
रथदुन्दुभिनिर्घोषैर्हयानां ह्रेषितैस्तथा ।
गजानां बृंहितैश्चापि न चाश्रूयत किंचन ॥२॥
नानादातिशयं शङ्खः स्वरेण महता तदा ।
पपात शरवृष्टिश्च सेनयोरुभयोरपि ॥३॥
तदा दैत्यबलैर्भग्नं देवसैन्यं दुरात्मभिः ।
पलायिते देवसैन्ये आजगाम पुरन्दरः ॥४॥
महता शरवर्षेण-च्छादयामास दानवान् ।
दानवानां च केषां चिच्चिच्छेद चरणद्वयम् ॥५॥
केषां चित् पातयामास शिरांसि निशितैः शरैः ।
प्रभग्नां वाहिनीं दृष्ट्वा स्वरेण महता नदन् ॥६॥
अभ्ययादतिसंक्रुद्धः शङ्खो दानवपुङ्गवः ।
पुरन्दरस्य शङ्खेन युद्धमासीत् सुदारुणम् ॥७॥
कृते प्रतिकृतिं कुर्वन् शङ्खः परमदारुणः ।
विव्याध सप्तभिर्बाणैः शक्रस्य हृदयं दृढैः ॥८॥
विद्धोऽपि बलभित् क्रुद्धो दर्शयन् हस्तलाघवम् ।
चतुर्भिश्चतुरो वाहान् शरेणैकेन सारथिम् ॥९॥
विव्याध हृदयं तस्य दशभिर्मर्मभेदिभिः ।
शङ्खं च विकलं दृष्ट्वा महेन्द्रदमनो रुषा ॥१०॥
चूर्णयामास समरे रथं शक्रस्य सुन्दरम् ।
रथान्निपतितं शक्रं यावद्गृह्णाति दानवः ॥११॥
तावत् तस्य भयत्रस्ता मुक्तकेशोऽमराधिपः ।
उत्पपात नभस्तूर्णं परित्यज्य रणस्थलीम् ॥१२॥
महेन्द्रदमनो दैत्यः प्रविवेशामरावतीम् ।
क्षणेन तत्र संप्राप्तो विमानेन चतुर्मुखः ॥१३॥
रणे विजयिनं दृष्ट्वा दैत्येन्द्रमिदमब्रवीत् ।

महेन्द्रदमन नन्दनवनमा डेरा जमाएर बसेको देखी इन्द्र (युद्ध गर्न) देवसेना अगाडि लगाएर निस्किए ।१। (त्यसबेला) रथ र दुन्दुभि (एक थरी बाजा, ठूलो दमाहा) का आवाजले, घोडा हिनहिनाएका शब्दले तथा हात्ती कराएका आवाजले, (अरु) केही सुनिदैनथ्यो ।२। त्यसपछि शङ्ख दैत्य खूब गर्जियो (?) (शङ्ख बजेको ठूलो स्वर सुनियो) । दुबै सेनामाथि बाणको वर्षा हुन लाग्यो ।३। अनि दुष्ट दैत्यका सेनाले देवसेनालाई भगाए । देवसेना भागेको देखी (युद्ध मैदानमा) इन्द्र आए ।४। उनले तीव्ररूपमा बाणहरू वर्षाएर दानवहरुलाई ढाकिदिए तथा कुनै कुनै दानवको दुबै गोडा काटिदिए ।५। तीखा बाणले कसैका टाउको काटेर खसाले । (आफ्ना) सेना छिन्नभिन्न (भएको) देखी ठूलो स्वरले चिच्याउँदै...।६। अति रिसाउँदै दानवश्रेष्ठ शङ्ख (रणमैदानमा) आयो । (त्यसपछि) इन्द्रको शङ्खसँग अत्यन्त क्रूर युद्ध शुरु भयो ।७। प्रतिकार गर्दै शङ्खले निर्ममतापूर्वक सात बाण हानी इन्द्रको छाती दृढतापूर्वक भेदन गरे ।८। घाइते भएर पनि इन्द्रले (आफ्नो) हस्तकौशल देखाउँदै चार बाणले चार घोडा र एक बाणले सारथि (तथा)..।९। दश मर्मभेदी बाणले उसको छाती भेदन गरे । शङ्खासुर व्याकुल भएको देखी महेन्द्रदमन रिसाएर (आई)..।१०। युद्धभूमिमा इन्द्रको सुन्दर रथलाई ध्वस्त पारि दियो । रथबाट खसेका इन्द्र, दानवले समात्नु भन्दा अघि नै...।११। उसँग डराएका एवं खुला कपाल भएका स्वर्गपति युद्धमैदान छोडी झटपट आकाशमा उडेर गए ।१२। (त्यसपछि) महेन्द्रदमन स्वर्गमा प्रवेश गर्‍यो । त्यसैबेला विमान चढेर ब्रह्मा त्यहाँ आइपुग्नु भयो ।१३। (र) युद्ध विजयी दैत्यपतिलाई देखी यसो भन्न लाग्नु भयो ।



**ब्रह्मोवाच ॥ ब्रह्मा भन्नुहुन्छ–**

पुरन्दर पुरे धीर न स्थातव्यं ममाज्ञया ॥१४॥
कीर्त्तिश्च परमा लब्धा नाम सत्यं त्वया कृतम् ।
सुप्रभायां त्वया स्थेयं दानवैः समरोद्धतैः ॥१५॥
त्रैलोक्ये यानि रत्नानि वीरभोग्यानि दानव ।
सुप्रभायां गमष्यन्ति सर्वाणि मम शासनात् ॥१६॥
इति ब्रह्मवचः श्रुत्वा महेन्द्रदमनस्तदा ।
सुप्रभा नगरीं रम्यां प्रययौ दानवैर्वृतः ॥१७॥
रणस्तत्रं सुरेन्द्रं च ब्रह्मा वचनमब्रवीत् ।
प्रादुर्भूते शचीनाथ मथुरायां मधुद्विषि ॥१८॥
प्रद्युम्नस्तनयस्तस्य भविष्यति मनोरथः ।

"हे धैर्यशाली (दानव) ! मेरो आदेश मानी (तिमी) स्वर्गमा नबस ।१४। तिमीले ठूलो यश कमायौ, सत्यकर्म गर्‍यौ । तिमीले युद्धरत दानवसहित सुप्रभा (नगरी) मा (नै) बस्नु ।१५। हे दानव ! तीनलोकमा जेजति वीरले भोग गर्ने रत्न छन्, ती सबै मेरो आदेशमा सुप्रभा नगरमै जाने छन्" ।१६। ब्रह्माको वचन सुनी महेन्द्रदमन दानव त्यसपछि (आफ्ना) सेना अघिपछि लगाई सुन्दर सुप्रभा शहरतिर लाग्यो ।१७। (अनि) युद्धत्रस्त इन्द्रलाई ब्रह्माले भन्नु भयो–"हे शचीका पति ! मथुरामा श्रीकृष्णको जन्म भएपछि..।१८। भगवान् शिवबाट भष्म गरिएका कामदेव महेन्द्रमनलाई मार्ने (भई) ती श्रीकृष्णका पुत्रकारूपमा जन्म लिने

**महेन्द्रदमनं हन्ता कामो दग्धो हरेण यः ॥१९॥**
**गौतमस्य वधूर्भुक्ता त्वया कपटरूपिणा ।**
**अतः पुरा कृतं कर्म त्वया भुक्तं पुरन्दर ॥२०॥**
**पराजयः शत्रुहस्तान्मरणादतिरिच्यते ।**
**अतः संत्यज्यतां शक्र वैराग्यं मदनुज्ञया ॥२१॥**
**आश्वस्तो ब्रह्मणा शक्रः प्रविवेशामरावतीम् ।**

छन् ।१९। हे इन्द्र ! तिमीले कपटी रूप लिएर गौतमकी पत्नीलाई भोगेका थियौ, त्यसैले पहिले गरेको (कु)कर्मको फल भोग ।२०। शत्रुका हातबाट हार्नु मृत्युभन्दा पनि कष्टकारी हुन्छ, अतः हे इन्द्र ! मेरो आज्ञाले तिमी वैराग्य छाड ।२१। त्यसपछि ब्रह्माबाट आश्वासन पाएका इन्द्र स्वर्गमा छिरे ।

**नारद उवाच ॥** नारद भन्नुहुन्छ–

**अत एव हि गोविन्द महेन्द्रदमनोऽसुरः ॥२२॥**
**प्रद्युम्नेनैव हन्तव्यो दारुणोऽपि न संशयः ।**
**प्रद्युम्नोऽपि मया साकमतो गच्छतु सुप्रभाम् ॥२३॥**
**प्रातस्त्वयाऽपि गोविन्द समागन्तव्यमेव हि ।**

यसैले हे गोविन्द ! महेन्द्रदमन दैत्य...।२२। बलियो भएपनि निश्चय नै प्रद्युम्नबाट नै मारिने छ । अतः प्रद्युम्न पनि मसँगै सुप्रभा नगरमा जाउन् ।२३। बिहान हजुर पनि त्यहाँ आउनु होला नै ।

**मार्कण्डेय उवाच ॥** मार्कण्डेय भन्नुहुन्छ–

**इति नारदवाक्यान्ते प्रद्युम्नं मधुसूदनः ॥२४॥**
**सुप्रभां प्रेषयामास नारदेन समं तदा ।**
**आरुह्य गरुडं शीघ्रं प्रद्युम्नः प्राप तत्क्षणात् ॥२५॥**
**चन्दनाशैलशिखरं यत्रास्ते हि प्रभावती ।**
**सर्वर्त्तुकुसुमाकीर्णे नानावृक्षामनोहरे ॥२६॥**
**विचित्रमण्डपे खट्वासुप्ता देवी प्रभावती ।**
**आविलोक्य शरज्ज्योत्स्नां हृदयेन विदूयता ॥२७॥**
**संचिन्तयन्ती प्रद्युम्नं गिरिजावरदानतः ।**
**शशाङ्कं निन्दयामास कामबाणप्रपीडिता ॥२८॥**

नारदका यि कुरा सुनेपछि श्रीकृष्णले प्रद्युम्नलाई..।२४। नारदसँग सुप्रभा नगरीमा पठाउनु भयो । गरुडमाथि चढेर प्रद्युम्न तुरुन्त (त्यहाँ) पुगे..।२५। जहाँ सबै ऋतुमा फुल्ने फूल फुलिरहेका र अनेक थरी रूखले भरिएको मनोरम चन्दरपर्वतको शिखरमा प्रभावती थिइन् ।२६। (त्यहाँ) अद्भुत मण्डपमा सुत्दै देवी प्रभावती शरदकालीन जूनलाई हेर्दै खिन्न मनले...।२७। पार्वतीका वरदानबाट ढुक्क भई (पति) प्रद्युम्नलाई सम्झँदै कामबाणले पीडित हुँदा चन्द्रमालाई गाली गर्न लागिन् ।२८।

**प्रभावत्युवाच ॥** प्रभावती भन्दछिन्–

**जन्म क्षीरपयोनिधौ निवसति शम्भोः सदा मस्तके ।**
**पीयूषाम्बुधितां गतः क्रतुभुजां शैत्यं स्वभावस्तव ॥**
**भूत्वा चण्डकरो निहंसि कुपितो बालामनाथां भृशं ।**
**नो जानामि कलानिधान भवता किं कारणं कथ्यताम् ॥२९॥**
**चकोरनेत्रसुखद चन्द्र चन्दनशीतल ।**
**जगदाह्लादको भूत्वा मां हंसि कृपणां कथम् ॥३०॥**
**मम कान्तमुखेन त्वं जितोऽसि शशलाञ्छन ।**
**अतस्तस्य प्रियां हंसि करैरतिसुदुस्सहैः ॥३१॥**
**शशाङ्क क्षीणतामेषि वियोगिजनपीडनात् ।**
**तथाऽपि जायते चित्ते न घृणा ते वधूवधे ॥३२॥**
**कृतान्ततुल्यः शशलाञ्छन त्वं**
**करोमि किं वा सविधे न कान्तः ।**
**प्राणापहर्त्ता मदनो दुरन्तः सत्यं भविष्यत्यचिरान्मदन्तः ॥३३॥**
**कुसुमानि दहन्ति मानसं**
**विपरीतः पवनोऽपि दक्षिणः ।**
**भ्रमतामलिनां हि सुस्वरै-**
**र्बधिरे मे श्रवणे कृते भृशम् ॥३४॥**

क्षीरसागरमा जन्मिएर सधैं शिवका टाउकामा बस्दछौ, अमृत पानगरी देवतुल्य भएका तिम्रो स्वभाव शीतल छ, तै पनि तिमी रिसाउँदै (आफ्ना) तिखा किरणले (म जस्ती) अनाथ बालिकालाई सताउँदछौ, किन यसो गर्दछौ ? मलाई कारण भन ।२९। च्याखुरा (चन्द्रकिरण हेरेर वा पिएर बाँच्ने किंवदन्ती रहेको एक चरा) का आँखालाई आनन्द दिने चन्दनझैं शीतल एवं संसारलाई मोहित बनाउने तिमी, म अवलालाई (चाहीँ) किन ( यसरी) मार्दछौ ? ।३०। मेरा प्रेमी (प्रद्युम्न)को (अती सुन्दर) मुखसँग तिमी डाह गर्दछौ, त्यसैले उनकी प्रेमिका (म) लाई ( तिमी) कठोर एवं असहनीय किरणले सताइरहेका छौ ।३१। हे चन्द्र ! बिछोडिनेहरूलाई पीडा दिनाका कारण तिमी खिइने गर्दछौ, तै पनि तिम्रो चित्तमा (म जस्ती) वियोगिनीलाई पीडा दिँदा (अलिकति पनि) घृणा छैन हैन ? ।३२। हे चन्द्र ! तिमी यमराज जस्तै छौ, म मेरा पति (प्रेमी) सँग छैन, के गरौं ? प्राणहारी कामदेवले चाँडै नै साँच्चै मेरो पनि प्राण हरण गर्ने छन् ।३३। (लौन अब त ) यि फूलले पनि मेरो मन पोल्न थालेको छ, मन्द पवन पनि विपरित भई दक्षिणतिर बहन थालेको छ,

**कोकिलाकलरवेन मानसं**
**जायते हि भृशमाकुलं मम ।**
**पार्श्वमेषि न हि माधवात्मजः**
**किं करोमि मदनः सुदारुणः ॥३५॥**
**शिरीषसुकुमाराङ्गी बालाऽहं नवयौवना ।**
**चाण्डालादधिकश्चण्डो धनुःपाणिर्मनोभवः ॥३६॥**
**वरो दत्तो गिरिजया प्रद्युम्नो दयितस्तव ।**
**नाद्यापि स समायाति किं कर्त्तव्यमतः परम् ॥३७॥**
**इत्थं बहुविधैर्वाक्यैर्याचन्द्रं विनिन्दति ।**
**तावदाकाशमार्गेण प्रद्युम्नो मुनिना सह ॥३८॥**
**ददृशे च तयाऽत्यन्तभीतया मुनिसत्तम ।**
**किमयं भास्करो देवः किमुताग्निः समागतः ॥३९॥**
**एवं प्रभावती यावन्निरूपयति सत्वरम् ।**
**तावत् प्रद्युम्नसहितो नारदः पुरतः स्थितः ॥४०॥**
**वीणापाणिं मुनिं दृष्ट्वा प्रद्युम्नसहितं स्वयम् ।**
**उत्थाय प्रणतिं चक्रे तदा देवी प्रभावती ॥४१॥**
**तावत् प्रभावतीं प्राह नारदो मुनिसत्तमः ।**

घुमिरहेका यि भमराका आवाजले पनि मेरा दुबै कान बहिरा हुन आँटिसके ।३४। मेरो मन कोइलीको मीठो आवाजले व्याकुल भइरहेको छ, श्रीकृष्णका पुत्र प्रद्युम्न मेरा छेउमा छैनन्, हरे ! कामदेव (पनि) कति निष्ठूर भएका होलान् ? म के गरौं ? ।३५। चाण्डालले (बोक्ने दण्ड) भन्दा पनि कठोर धनुष हातमा लिएर कामदेव यहाँ उपस्थित भएका छन् । म शिरिषको फूलजस्ती कोमल अबला के गरौं ? यो (काम) पीडा कसरी सहुँ ? ।३६। पार्वतीबाट "प्रद्युम्न तेरो पति हुनेछ" वरदान पाएकी थिएँ, उनि अहिलेसम्म आउँदैनन्, अब यसपछि म के गरौं ? ।३७। यसरी उनी अनेक कुराले चन्द्रमालाई गाली गरिरहेकी थिइन्, त्यसैबेला आकाशको बाटो हुँदै मुनिसँगै प्रद्युम्नलाई..।३८। हे मुनिश्रेष्ठ ! तिनले देखिन् र अती डराउँदै "यो के हो ? सूर्य हुन् कि अग्नि नै आएका हुन् ?" ।३९। यसरी प्रभावती (के हो भनी) खुटचाउन खोज्दै थिइन् कि तुरुन्त प्रद्युम्नसँगै नारद अगाडि देखिए ।४०। त्यसपछि हातमा बीणा लिएका नारदलाई प्रद्युम्न सहित देखेर देवी प्रभावतीले उठेर नमस्कार गरिन् ।४१। (अनि) मुनिश्रेष्ठ नारदले प्रभावतीलाई भन्नु भयो ।

**नारद उवाच ॥** नारद भन्नुहुन्छ–

**अयं ते पतिरायातः प्रभावति हरेः सुतः ॥४२॥**
**यो निर्दिष्टो गिरिजया सौन्दर्यालयतां गतः ।**
**गान्धर्वेण विवाहेन भजस्वामुं हरेः सुतम् ॥४३॥**
**पूर्णो मनोरथो चास्तु तवाद्य हरिणेक्षणे ।**



यि तिम्रा पति श्रीकृष्णका पुत्र (प्रद्युम्न) आएका छन् ।४२। पार्वतीले निश्चित गरिदिए अनुसार श्रीकृष्णका पुत्रसँग गान्धर्व विवाह गरी सौन्दर्य-गृहमा गई यिनको सेवा गर ।४२। हे हरिणका जस्ता आँखा भएकी ! अब तिम्रो मनको चाहना पूरा होस् (भलो होस्) ।

**मार्कण्डेय उवाच ॥** मार्कण्डेय भन्नुहुन्छ–

**जैमिने नारदवचः श्रुत्वा देवी प्रभावती ॥४४॥**
**कृताञ्जलिपुटा भूत्वा भूयः प्रोवाच नारदम् ।**

हे जैमिनि ! नारदका कुरा सुनी देवी प्रभावतीले..।४४। अँजुली जोरेर नारदलाई भन्न लागिन् ।

**प्रभावत्युवाच ॥** प्रभावती भन्दछिन्–

**मुने प्रष्टुमिच्छामि श्रूयतां मुनिसत्तम ॥४५॥**
**महेन्द्रदमनो भ्राता ममास्ति बलवान् प्रभुः ।**
**वासवो येन समरे विजितः स्वेन तेजसा ॥४६॥**
**अयं च सुकुमाराङ्गः सम्यगप्राप्तयौवनः ।**
**यदि जानाति दैत्येन्द्रः कथं स्वस्ति भविष्यति ॥४७॥**

हे मुनि ! म केही कुरा अनुरोध गर्दछु, मुनिश्रेष्ठ ! सुन्ने कृपा गर्नु होस् ।४५। हे प्रभू ! मेरा दाई महेन्द्रदमन बलशाली छन् जसले युद्धमा आफ्नो तेजोबलले इन्द्रलाई समेत जितेका छन् ।४६। यी (प्रद्युम्न) कोमल अङ्गका र राम्ररी जवान पनि भइ सकेका छैनन् । यो कुरा दैत्येन्द्रले थाहा पाए भने कसरी भलो हुन्छ ? ।४७।

**मार्कण्डेय उवाच ॥** मार्कण्डेय भन्नुहुन्छ–

**श्रुत्वा प्रभावतीवाक्यं पुनः प्रोवाच तां मुनिः ।**

प्रभावतीका कुरा सुनी नारद उनलाई फेरी भन्न लाग्नु भयो ।

**नारद उवाच॥** नारद भन्नुहुन्छ–

**श्रूयतां मृगशावाक्षि हितं यत् ते वदाम्यहम्॥४८॥**
**महेन्द्रदमनाद्भ्रातुर्मा भयं कुरु भामिनि ।**
**अनेन निहतः सङ्ख्ये दुर्जेयः कालशम्बरः॥४९॥**
**महेन्द्रदमनं दैत्यमयमेव हनिष्यति ।**
**देवि प्रभाते विमले महद्युद्धं भविष्यति॥५०॥**
**आगमिष्यति ते देवि श्वसुरो गरुडासनः ।**
**प्रद्युम्नस्य सहायार्थं श्वः प्रभाते न संशयः॥५१॥**
**हत्वा महेन्द्रदमनं दुर्जयं देवकण्टकम् ।**
**चन्द्रवत्या विवाहोऽपि कर्त्तव्योऽनेन भामिनि॥५२॥**
**द्वारवत्यां त्वया गत्वा पत्याऽनेन मृगेक्षणे ।**
**भोक्तव्या विविधा भोगा दैवैरपि सुदुर्लभाः॥५३॥**

हे मृगनयगनी ! म तिम्रो भलोका लागि भन्दैछु, सुन ।४८। हे भामिनी (रिसाउने स्त्री) ! दाइ महेन्द्रदमनसँग नडराउ । यिनले जित्न कठिन कालशम्बरलाई सङ्ख्य(?) मा मारेर (आएका) छन् ।४९। महेन्द्रदमन दैत्यलाई पनि यिनले नै मार्ने छन् । हे देवी ! (भोलि) बिहान ठूलो युद्ध हुनेछ ।५०। हे देवी ! तिम्रा ससुरा श्रीकृष्ण प्रद्युम्नको सहायता गर्न बिहान आफैं आउने छन्, यसमा शङ्का नमान ।५१। हे भामिनी ! देवताको काँडो अविजित महेन्द्रदमनलाई मारी चन्द्रावतीसँग यिनले विवाह पनि गर्ने छन् ।५२। हे मृगनयनी ! यि पतिसँगै तिमी द्वारका गई देवतालाई पनि दुर्लभ मानिएका अनेक थरी भोग् भोग ।५३।

**मार्कण्डेय उवाच॥** मार्कण्डेय भन्नुहुन्छ–

**इति नारदवाक्यान्ते पुनः प्राह प्रभावती ।**

नारदको यो कुरा सुनी प्रभावती फेरी भन्दछिन् ।

**प्रभावत्युवाच॥** प्रभावती भन्दछिन्–

**पत्याऽनेन मम भ्राता हन्तव्यो यदि नारद॥५४॥**
**जीवनेन सुखेनापि न कार्यं विद्यते मम ।**
**अकीर्त्तिः सर्वलोकेषु भविष्यति न संशयः॥५५॥**
**प्रभावत्या हि पत्यर्थं स्वभ्राता विनिपातितः ।**
**अतो नारद नेच्छामि प्रद्युम्नं पतिमुत्तमम्॥५६॥**
**अकीर्त्तितः परं भीत्या यात्वयं स्वगृहं मुने ।**

हे नारद ! यि पतिले मेरो दाईलाई मार्दछन् भने त..।५४। मेरो यो सुखी जीवनबाट मलाई के फाइदा ? निःसन्देह सबै लोकमा (यसबाट) मेरो अबजस फैलिने छ ।५५। "लोग्नेका लागि प्रभावतीले आफ्नै दाजुलाई (पनि) मार्न लगाई" (भन्ने छन्) । यसैले, हे नारद ! (यस स्थितिमा) म प्रद्युम्नलाई उत्तम पतिकारुपमा पाउन चाहन्न ।५६। हे मुनि ! (मैले) यस्तो अबजस खप्नुभन्दा त बरु यि आफ्नै घर फर्कियुन् ।

**मार्कण्डेय उवाच॥** मार्कण्डेय भन्नुहुन्छ–

**इति वाक्यं तदा श्रुत्वा पुनः प्रोवाच नारदः॥५७॥**

त्यसपछि यस्तो कुरा सुनी नारद फेरी भन्न लागे ।५७।

**नारद उवाच॥** नारद भन्नुहुन्छ–

**अस्मिन्नर्थे मा विषादस्तवास्तु वरवर्णिनि ।**
**पितुः कुलाधिकं कान्तमिच्छन्ति च वरस्त्रियः॥५८॥**
**भवितव्यं भवत्येव प्रयासस्तु निरर्थकः ।**
**अत एवं न शोचन्ति पण्डिता मृगलोचने॥५९॥**
**इदं विधात्रा रचितं श्रूयतां वरवर्णिनि ।**
**प्रद्युम्नस्ते पतिर्भावी सत्यं पङ्कजलोचने॥६०॥**
**महेन्द्रदमनो दैत्यो हन्तव्योऽनेन सर्वथा ।**
**इति ज्ञात्वा वरारोहे विषादं मुञ्च भामिनि॥६१॥**
**मृगेन्द्रशिखरं यामि प्रातरेष्यामि तेऽन्तिके ।**

हे वरवर्णिनी ! यस सम्बन्धमा तिम्रो चिन्ता व्यर्थ छ । स्त्रीहरू पिताको कुलभन्दा पनि उत्तम कुलको केटो (बिहे) गर्न चाहन्छन् ।५८। हे मृगनयनी ! हुने कुरो (भएरै छाड्दछ) टारेर टर्दैन, प्रयास गर्नु व्यर्थ हुन्छ । त्यसैले पण्डितजन यस विषयमा चिन्ता गर्दैनन् ।५९। हे वरवर्णिनी ! विधाताले यही कुरा लेखेका छन् कि " हे वरवर्णिनी ! प्रद्युम्न नै तिम्रा पति हुने छन्", यो सत्य हो ।६०। यिनले महेन्द्रदमन दानवलाई अवश्य नै मार्ने छन् । यो कुरा जानी हे वरारोहे ! हे भामिनी ! तिमी पीर नगर ।६१। (अहिले म) मृगेन्द्रशिखर जान्छु, तिम्रा सामु भोलि बिहान आउँला ।

**मार्कण्डेय उवाच ॥ मार्कण्डेय भन्नुहुन्छ–**

इत्युक्त्वा नारदमुनिमृगेन्द्राशिखरं ययौ ॥६२॥
गत्वा तत्कथयामास सूर्यकेतोः प्रभोः पुरः ।
गते मुनिवरे देवी प्रद्युम्नाय स्वमासनम् ॥६३॥
ददौ च लज्जिता भूत्वा न हि प्रोवाच किंचन ।
त्रपानतमुखीं देवीं प्रद्युम्नः प्राह सादरम् ॥६४॥
त्वद्रूपसम्पदं श्रुत्वा नारदस्य मुखान्मया ।
लब्धा निद्रा मया नैव सदा त्वद्गतचेतसा ॥६५॥
इत्यादिविविधं वाक्यमुक्त्वा माधवबालकः ।
उपयेमे विवाहेन गान्धर्वेण प्रभावती ॥६६॥
ततोऽङ्कमध्यमारोप्य राजपुत्रीं प्रभावतीम् ।
प्रद्युम्नो रूपिणां श्रेष्ठ इदं वचनमब्रवीत् ॥६७॥
कान्तिमान् नयनानन्दजननो जनमोहनः ।
प्रयाति पश्य पूर्णेन्दुस्त्वद्वक्रस्योपमां प्रिये ॥६८॥
संकुचत्यब्जनिकरं विहाय कमलोत्पलम् ।
प्रयाति मधुलिट् कोऽपि विकसत्कुमुदोदरम् ॥६९॥
भृङ्गराजभराक्रान्तकेशरं कुमुदं प्रिये ।
पीताधरमिवाभाति रत्यन्ते कामिनीमुखम् ॥७०॥
मन्दमारुतविक्षिप्तैः प्रचलद्भिः सुकोमलैः ।
पल्लवाञ्जलिभिः पुष्पं क्षिपन्ति तरवः प्रिये ॥७१॥
स्मितपुष्पोद्गममयं रुचिराधरपल्लवम् ।
भ्रूलतानृत्यबहुलमुद्यानमिव त्वन्मुखम् ॥७२॥
इत्युक्त्वा प्रियवाक्येन प्रियां प्रेमप्रवर्त्तकः ।
रेमे स रुक्मिणीसूनू रम्ये गिरिवरे तदा ॥७३॥
ततः स्फूरत्पद्मरागपिञ्जरा
तरङ्गमालारुचिरा कलावृता ।
प्रभावती हंसकलप्रतापिनी
सरोरुहिण्या उपमानतां ययो ॥७४॥

यति भनी नारद मुनि मृगेन्द्रशिखरतिर जानु भयो ।६२। त्यहाँ पुगी सूर्यकेतुलाई नारदले भएभरको कुरा सुनाउनु भयो । (उता) नारद हिँडेपछि प्रभावतीले प्रद्युम्नलाई आफ्नो आसन.. ।६३। दिइन् र लाजले भुतुक्क हुँदै केही पनि नबोली बसिरहिन् । (लाजले) नतमस्तक भएकी देवीलाई आदरपूर्वक प्रद्युम्न भन्न लागे ।६४। “(हे प्रिये !) नारदका मुखबाट तिम्रो रूपसौन्दर्यको बखान सुनेपछि मेरो मन सधैं तिमीमा लागिरह्यो, मलाई (रातभर) निद्रा पनि लागेन” ।६५। आदि इत्यादि अनेक कुरा गर्दै प्रद्युम्नले प्रभावतीसँग गान्धर्व विधिले विवाह गरे ।६६। त्यसपछि रूपमा श्रेष्ठ प्रद्युम्नले राजकुमारी प्रभावतीलाई काखमा राखेर यि कुरा भन्न लागे ।६७। “हे प्रिये ! तिम्रो अनुहार जस्तै चहकिला, आँखालाई आनन्द दिने र लोकलाई मोहित बनाउने पूर्ण चन्द्रमालाई हेर त ।६८। कुनै एउटा भमरा ओइलाएको कमलको फूललाई छाडी फुलिरहेको (अर्को) कमलको फूलतिर आइरहेको छ ।६९। हे प्रिये ! भमराको बोझले पीडित केशरयुक्त (त्यो) कमल, रतिसंयोग पछि म्वाइ खाइएका स्त्रीका ओठझैं शोभायमान भइरहेको छ ।७०। हे प्रिये ! मन्द पवनबाट हल्लाइँदा कोमल तरिकाले हलचल गरी वृक्षहरू पालुवारूपी अँजुलीले फूलहरू फालिरहेका छन् ।७१। तिम्रो फूलेको फुलझैं देखिने (मुस्कान), सुन्दर पालुवा जस्ता देखिने ओठ र लहराजस्तै नाचिरहेका आँखीभौंले युक्त अनुहार बगैंचा जस्तै शोभायमान भइरहेको छ ।७२। यस्ता प्रेमयुक्त कुरा गर्दै प्रेमप्रवर्तक रुक्मिणी पुत्र (प्रद्युम्न) प्रियाका साथ त्यो शिखरको बगैंचामा रमण गर्न लागे ।७३। त्यसबेला ती प्रभावती, फुलेको कमलको परागझैं पहेंली, जलतरङ्ग (पानीको छाल) झैं तरङ्गित, हाँसजस्तै (मसिनो र मिठो बोली) बोल्ने, कमलिनी जस्तै देखिइन् ।७४।



**इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये नवमोऽध्यायः ॥९॥**

श्रीस्कन्दपुराण, हिमवत्खण्ड, नेपालमाहात्म्यमा महेन्द्रदमन दानवकी छोरी प्रभावती र श्रीकृष्णका छोरा प्रद्युम्न बीचको प्रेम र विवाह प्रसङ्ग वर्णन भएको नवौं अध्याय समाप्त भएको छ ।९।

**श्लोकानामादितः समष्ट्यङ्काः–५९३+७४=६६४**

शुरुदेखिको श्लोक सङ्ख्या :–५९३+७४=६६४

**॥ अथ दशमोऽध्यायः ॥**

॥ दशौं अध्याय ॥

**मार्कण्डेय उवाच** ॥ मार्कण्डेय भन्नुहुन्छ-

**वारूणीदिशमापन्ने शशाङ्के फेनसन्निभे ।**
**संप्राप्तं नारदं दृष्ट्वा प्रद्युम्नो वाक्यमब्रवीत् ॥१॥**

फिँज जस्तै सेता चन्द्रमा जब पश्चिम दिशामा अस्ताइरहेका थिए तब नारद (टुप्लुक्क) आइपुगेको देखेर प्रद्युम्नले भने ।१।

**प्रद्युम्न उवाच** ॥ प्रद्युम्न भन्दछन्-

**कथं जेयः स देवर्षे दानवेन्द्रः सुदुर्जयः ।**
**सुव्यक्तं बालभावेन स्वल्पवीर्येण वै मया ॥२॥**

हे देपर्षि ! जित्न अति नै मुस्किल दानवेन्द्र महेन्द्रदमनलाई स्पष्ट बालपनको एवं (अपेक्षाकृत) कम बलियो मबाट कसरी पराजित गर्न सकिन्छ ? ।२।

**मार्कण्डेय उवाच** ॥ मार्कण्डेय भन्नुहुन्छ-

**तस्य तद्वचनं श्रुत्वा प्रद्युम्नस्य महात्मनः ।**
**अब्रवीदीदृशं वाक्यं भगवान् नारदो मुनिः ॥३॥**

ती महात्मा प्रद्युम्नका त्यस्ता कुरा सुनी भगवान् नारद मुनि यि कुरा भन्नु हुन्छ ।३।

नारद उवाच ॥ नारद भन्नुहुन्छ-

**जेष्यसि त्वं महाबाहो दानवेन्द्रं सुदुर्जयम् ॥४॥**
**ब्रह्मणो वचनादेव दैत्येन्द्रेण दुरात्मना ।**
**जितं लोकत्रयं तेन लोकपालाभिरक्षितम् ॥५॥**

हे महाबाहु ! तिमी जित्न मुस्किल दानवराजलाई जित्नेछौ ।४। किनकि ब्रह्माको वचन यही छ र दुष्ट दानवराजले लोकपालहरूबाट सुरक्षित तीन वटै लोकलाई (पनि) जितेको छ ।५।



**मार्कण्डेय उवाच** ॥ मार्कण्डेय भन्नुहुन्छ-

**ततः प्रहृष्टहृदयो हर्षाद्रोमाञ्चितः प्रियाम् ।**
**अब्रवदीदृशं वाक्यं श्रीमान् मकरकेतनः ॥६॥**

त्यसपछि हर्षले रोमाञ्चित भई प्रसन्न मन गर्दै प्रद्युम्नले आफ्नी प्रिया (प्रभावती) लाई यसो भन्न लागे ।६।

**प्रद्युम्न उवाच** ॥ प्रद्युम्न भन्दछन्-

**महर्षेर्वचनं चैतच्छ्रुतं ते कमलानने ।**
**क्रियतां मङ्गलं देवि जयार्थं मम सर्वथा ॥७॥**

हे कमलानने ! नारद मुनिका कुरा तिमीले सुनि हाल्यौ, अब मेरो विजयका लागि मङ्गल कार्य पूर्णरूपमा गर ।७।

**मार्कण्डेय उवाच** ॥ मार्कण्डेय भन्नुहुन्छ-

**ततः प्रभावती देवी वाष्पपूर्णविलोचना ।**
**मङ्गलं रचयामास पत्युर्जयविधायिनी ॥८॥**
**मङ्गलं रचितं देव्या दृष्ट्वा मकरकेतनम् ।**
**अब्रवीद्धृष्टहृदयो नारदो मुनिसत्तमः ॥९॥**

त्यसपछि पतिको विजय चाहने प्रभावतीले रसिला आँखा लिएर मङ्गल (युद्ध यात्रामा निस्कँदा शुभ हुने कुरा) बनाइन् ।८। देवीबाट मङ्गल विधि गरिएको देखी मुनिश्रेष्ठ नारदले प्रसन्न मन गर्दै प्रद्युम्नलाई भन्नु भयो ।९।

**नारद उवाच॥ नारद भन्नुहुन्छ–**

**त्वत्पिता भगवान् विष्णुः शङ्खचक्रगदाधरः ।**
**अद्य त्वद्विजयं द्रष्टुं गरुडेनागमिष्यति ॥१०॥**
**तवैव विजयं द्रष्टुं प्रहृष्टस्त्रिदशैः सह ।**
**आगमिष्यति भो वत्स भगवान् पाकशासनः ॥११॥**
**शङ्खो नाम दुराधर्षः शङ्खदुन्दुभिनिःस्वनः ।**
**सेतुं संरक्ष्य यत्नेन वर्तते देवकण्टकः ॥१२॥**
**बलात् पादेन संपीड्य जयार्थेनात्मनस्त्वया ।**
**पूरणीयो दुराचारो यथा जायेत वै स्वनः ॥१३॥**
**तस्य नादेन घोरेण वज्रनिर्हादवर्चसा ।**
**भविष्यति महात्रासो दानवानां दुरात्मनाम् ॥१४॥**
**हत्वा दैत्यं दुरात्मानं सानुजं बलदर्पितम् ।**
**पूरणीयस्त्वया पुत्र देवेन्द्रस्य मनोरथः ॥१५॥**

शङ्ख, चक्र, गदा र कमलको फूल हातमा लिनु भएका तिम्रा पिता भगवान् विष्णु तिम्रो विजय हेर्न गरुड चढेर (यहाँ) आउनु हुनेछ ।१०। हे बाबु ! प्रसन्न भएका देवतासँगै भगवान् इन्द्र (पनि) तिम्रो जित हेर्न (यहाँ) आउने छन् ।११। शङ्ख र नगरा बजेको जस्तो आवाज निकालेर लोकलाई थर्काउने, वशमा गर्न हराउन वा जित्न कठिन भएको, बलियो एवं देवताको मार्गको काँडो, शङ्ख नाम गरेको (दानव) बाँध (वा पुल) को प्रयत्नपूर्वक रक्षा गरेर बसिरहेको छ ।१२। आफ्नो जितको लागि तिमीबाट उसले यसरी बलपूर्वक लात्ती खाओस् कि उ (पीडाले) चित्कार निकाल्न लागोस् ।१३। उसको चटयाङ परेको जस्तो भयानक चित्कारको आवाजले दुष्टचित्त भएका दानवहरुमा ठूलो सन्त्रास छाउनेछ ।१४। बलको अभिमानी त्यो दैत्यलाई (उसका) भाइहरूसहित मारेर तिमी इन्द्रको चाहना पूरा गर ।१५।

**मार्कण्डेय उवाच॥ मार्कण्डेय भन्नुहुन्छ–**

**इत्युक्त्वा मुनिना शीघ्रं जयाशीर्भीः प्रपूजितः ।**
**प्रययौ रुक्मिणीसूनू रम्यं शङ्खालयं गिरिम् ॥१६॥**
**स्थित्वा शङ्खविलद्वारे कृतनादो महाबलः ।**
**सेतोर्विदारणरम्भं चकार मकरध्वजः ॥१७॥**
**ततः शङ्खो विनिष्क्रम्य स्वविलाद्बलदर्पितः ।**
**अब्रवीद्भीषणं वाक्यं दंष्ट्रादीप्तविलोचनः ॥१८॥**

यति भने पछि नारदबाट विजयका लागि प्रयत्नशील आशिर्वचनले पूजा गरिएका प्रद्युम्न शङ्खासुर बस्ने गरेको सुन्दर पर्वततिर लागे ।१६। (त्यहाँ पुगी) शङ्ख बस्ने (गुफा वा प्वाल) स्थानको ढोकाका गएर ठूलो स्वरले कराए । अनि बाँध भत्काउन थाले ।१७। त्यसपछि आफ्नो गुफाबाट बाहिर निस्की त्यो दाह्राले आँखा चम्किरहेको देखिने बलको घमण्डी शङ्ख दैत्य भयङ्कर आवाजले भन्न लाग्यो ।१८।



**शङ्ख उवाच ॥ शङ्ख भन्दछ–**

**कस्याज्ञया त्वया क्रूर मम वीर्याभिरक्षितम् ।**
**अगम्यं त्रिदशैश्चापि क्रियते सेतुदारणम् ॥१९॥**

"तँ कसका आदेशले यो देवताले पनि आँट गर्न नसकेको मेरो बलले संरक्षित बाँध क्रूरतापूर्वक भत्काउन लागि रहेछस् ?" ।१९।

**मार्कण्डेय उवाच॥ मार्कण्डेय भन्नुहुन्छ–**

**इत्युक्त्वा सहसा दैत्यो रक्तास्यो रक्तलोचनः ।**
**तलेनाहत्य प्रद्युम्नं चकारातीव विह्वलम् ॥२०॥**
**ततः क्षणात् समुत्थाय बाहुयुद्धेन दानवम् ।**
**भूमौ निपातयामास प्रद्युम्नो बलिनां वरः ॥२१॥**
**भूमौ निपतितं शङ्खं विष्णुशङ्खसमस्वनम् ।**
**पादेनक्रम्य जठरे पुपूरेऽतिशयं तदा ॥२२॥**
**शङ्खनादेन घोरेण प्रबुद्धः कच्छपासुरः ।**
**जलान्निष्क्रम्य बलवान् ननादातिशयं भयात् ॥२३॥**
**ततो विराधं घनोरनिःस्वनं**
**महामुखं मण्डललोचनद्वयम् ।**
**ददर्श वीरो मधुसूदनात्मजो**

यसो भन्दै राता आँखा र रातो अनुहार भएको त्यो दैत्यले अचानक एक चड्कन हानेर प्रद्युम्नलाई रन्थन्याइ दियो ।२०। त्यसपछि तुरुन्त उठेर बलवान् प्रद्युम्नले (पनि) बाहुयुद्ध गर्दै ( त्यो) दानवलाई भुइँमा पछारि दिए ।२१। अनि भुइँमा पछारिएको विष्णुको शङ्ख समान आवाज निकाल्ने त्यो दैत्यको पेटमा लात्तले हानेर डम्म हुनेगरी फुलाइ दिए ।२२। शङ्ख कराएको तीखो आवाजले गर्दा कच्छपासुर बिउँझियो । मुखले पानी फाल्दै उ अति डराएर चिच्यायो ।२३। त्यसपछि पानीमा बस्ने, पहाड जत्रो शरीर भएको, बादल गर्जेको जस्तो आवाज निकाल्ने, विशाल मुख भएको, गोला आँखा भएको विराध दैत्यलाई श्रीकृष्ण पुत्र प्रद्युम्नले देखे ।२४। अनि शङ्खको आर्तनाद र विराधको

जलोषितं शैलसमानविग्रहम् ॥२४॥
ततः शङ्खनिनादेन विराधस्य स्वनेन च ।
विलं प्रकम्पितं दृष्ट्वा किमेतज्जातविभ्रमः ॥२५॥
परिशङ्कय रिपोः किंचिद्भयं भयविधायिभिः ।
निमित्तैः सहसा राजा खड्गबाणधनुर्धरः ॥२६॥
सन्नद्धकवचो घोरैर्योधैः कतिपयैर्वृतः ।
शैलश्रृङ्गप्रतिकाशो भिन्नवैडूर्यसुप्रभः ॥२७॥
ममाज्ञातप्रभावः को विराधाख्यं ममानुजम् ।
विरोधयति दुर्बुद्धिरित्युक्त्वा क्रोधमूर्छितः ॥२८॥
निष्क्रम्य स्वविलात् तस्थौ श्रीमानसुरसत्तमः ।
समक्षमागतं दृष्ट्वा महेन्द्रदमनं रुषा ॥२९॥
ततो विरोधिनं त्यक्त्वा विराधं कूर्मरूपिणम् ।
दैत्येन्द्राभिमुखस्तस्थौ रथमारुह्य कैशविः ॥३०॥
समक्षमागतं दृष्ट्वा प्रद्युम्नं युद्धकाङ्क्षिणम् ।
वाक्यं क्रूरतरं प्राह श्रीमानसुरसत्तमः ॥३१॥
कस्याज्ञया त्वया क्रूर बाध्यते मम कच्छपः ।
कस्य पुत्र इति त्वं च ज्ञातुमिच्छामि तद्वद ॥३२॥
तस्य तद्वचनं श्रुत्वा दैत्येन्द्रस्य महात्मनः ।
अब्रवीन्मधुरं वाक्यं प्रद्युम्नो बलिनां वरः ॥३३॥
निपातितो मया शङ्खः शङ्खदुन्दुभिनिःस्वनः ।
विराधं पातयिष्यामि दुरात्मानं जलोषितम् ॥३४॥
प्रद्युम्न इति विख्यातो विष्णोर्भगवतः सुतः ।
प्राप्तो युष्मद्विनाशाय देवेन्द्रस्य शुभेच्छया ॥३५॥
तस्य तद्वचनं श्रुत्वा रोषाद्रक्तविलोचनः ।
उवाच निष्ठुरं वाक्यं विहस्यासुरसत्तमः ॥३६॥
यदि केशवपुत्रस्त्वं संप्राप्तो भद्रकं कृतम् ।
चिरकालं मया ध्यातं लब्धं सदर्शनं तव ॥३७॥
तां विलोक्य रणे सुप्तं रुधिरश्रावविप्लुतम् ।
शम्बरस्य वधाज्जातो मन्युर्मे शान्तिमेष्यति ॥३८॥
इत्युक्त्वा दमनैस्तीव्रैरभिपीडयाधरं स्वकम् ।
ववर्ष शरवर्षौघं श्रीमानसुरसत्तमः ॥३९॥
ततस्तस्मिन् क्षणे शीघ्रं प्रद्युम्नोऽपि महाबलः ।
जगाद कुपितो वाक्यं मुदितादित्य सन्निभः ॥४०॥
त्वां निपात्य दुरात्मानं त्रिदशाधिपकण्टकम् ।
चन्द्रावत्या विवाहं च निर्विघ्नं वर्तयाम्यहम् ॥४१॥
इत्युक्त्वा रुक्मिणीसूनुः कृतगाण्डीवमण्डलः ।
मुमाच सहसा बाणं रुक्मपुङ्खविभूषणम् ॥४२॥
ततस्तस्मिन् क्षणे घोरे वर्तमाने रणोत्सवे ।
गरुडेनागतः शीघ्रं शङ्खचक्रगदाधरः ॥४३॥
प्रहृष्टैस्त्रिदशैः सार्धमप्सरोगणवेष्टितः ।
पूजार्थं रुक्मिणीसूनोः संप्राप्तस्त्रिदशेश्वरः ॥४४॥
ततो मुमोच दैत्येन्द्रो ज्वलत्तकोपानलाकुलः ।
उल्कामुखं बिडालस्यं ज्वालामालातिभीषणम् ॥४५॥
तच्छस्त्रं वारयामास प्रद्युम्नोऽपि महाबलः ।
गृद्धकङ्कमुखं चैव काकोलूकमुखं शरम् ॥४६॥

चित्कारले गुफा (वा वासस्थान) हल्लिएको देखी शङ्का गर्दै दानवराजले "के हो यस्तो यो ?" भने ।२५। डरलाग्दा अपशगुनका कारण शत्रुभयको शङ्का गऱ्यो र दानवराज तुरुन्त खड्ग, बाण, धनुष बोकी ..।२६। कवच लगाएर अनेकौं डरलाग्दा योद्धा अघिपछि लगाई पर्वतको शिखर समान उवं अर्कै वैदूर्यमणि जस्तै चम्किलो देखिने गरी (आयो र भन्न लाग्यो)..।२७। "मेरो तागत थाहा नपाउने कुन चाहीँ मूर्ख मेरा भाईहरूसँग वैर गरिरहेछ ?" यसोभन्दै रिसले भुनभुनिंदै..।२८। आफ्नो गुफा ( वा बासस्थान) बाट बाहिर निस्कियो । रिसाएको महेन्द्रदमन अगिल्तिर आएको देखी..।२९। कछुवा रुपधारी शत्रु विराधलाई त्यत्तिकै छाडी रिसाउँदै केशवका पुत्र रथ चढी दानवराजका सामुन्ने उपस्थित भए ।३०। युद्ध चाहने प्रद्युम्नलाई अगिल्तिर आएको देखी दानवराजले यस्ता क्रूर वचन भन्न लाग्यो..।३१। "हे दुष्ट ! कसका आदेशले तिमी मेरो भाई कच्छपलाई दुःख दिइ रहेका छौ ? तिमी कसको छोरा हौ ? म यो जान्न चाहन्छु बताउ" ।३२। महात्मा दैत्येन्दका यस्ता कुरा सुनी बलश्रेष्ठ महात्मा प्रद्युम्न मीठो वचन भन्न लागे..।३३। "शङ्ख र दमाहा जस्तो स्वर निकाल्ने शङ्खलाई मैले मारें । जलमा रहने दुष्ट विराधलाई पनि ( अब) म मार्नेछु ।३४। म भगवान् श्रीविष्णुका पुत्र प्रद्युम्न हुँ । इन्द्रको चाहना अनुसार तिम्रो नाश गर्न आएको छु" ।३५। उनका यस्ता कुरी रिसले आँखा राताराता पार्दै (तर खिस्याएर) हाँस्दै दैत्येन्द्र यस्तो कठोर वचन भन्न लाग्यो ।३६। "यदि तिमी विष्णुपत्र हौ भने तिमीले यहाँ आएर राम्रै गऱ्यौ । मैले तिम्रा बारेमा धेरै दिनदेखि सोची राखेको थिएँ, आज दर्शन पाएँ ।३७। हे प्रद्युम्न ! युद्धमा रगतले लतपतिएको तिमीलाई देख्दा शम्बरासुर मारिनाका कारण उठेको मेरो रिस (अब भने) मर्नेछ" ।३८। यति भनी दाँतले आफ्नो ओठ टोक्दै त्यो असुरराज वाणको वर्षा गर्न लाग्यो ।३९। अनि तुरुन्तै चम्किला सूर्यसमान अति बलिया प्रद्युम्नले (पनि) रिसाउँदै (दानवराजलाई) यसो भन्न लागे ।४०। "हे इन्द्रका शत्रु, हे दुरात्मा ! तिमीलाई मारेर म ( अब) निर्विघ्नरूपमा चन्द्रावतीसँग बिहे गर्नेछु" ।४१। यति भनेपछि पद्युम्नले तुरुन्त आफ्नो धनुषलाई गाण्डीव धनुषभैंं झुकाएर स्वर्णप्वाँखले सजिएका बाण प्रहार गर्न लागे ।४२। यसरी घमासान युद्ध भइरहेका बेलामा गरुडमाथि चढेर तुरुन्त श्रीविष्णु (त्यहाँ) आइपुग्नु भयो ।४३। प्रसन्न देवताहरूसँगै अप्सराले घेरिएका इन्द्र (पनि) प्रद्युम्नको पूजाका लागि (त्यहाँ) आइपुगे ।४४। त्यसपछि रिसले मुरमुरिएको त्यो दैत्यपतिले आगो बलिरहेको बिरालाको मुखजस्तो मालाकार अग्निमुख नामको डरलाग्दो शस्त्र प्रहार गऱ्यो ।४५। त्यो शस्त्रलाई महाबलशाली प्रद्युम्नले गिद्ध-ढुङ्गीफोरमुखी तथा काग-लाटोकोसेरोमुखी बाण हानी रोकिदिए ।४६। महाबाहु महेन्द्रदमनले त्यसपछि बाघ, सिंह, स्याल तथा कुकुरको जस्तो मुख भएका (अनेक) शस्त्र प्रहार गरे ।४७। बलश्रेष्ठ प्रद्युम्नले ती शस्त्रलाई बाण हानेर रोके । एकएक वटा मुख्य मुख्य अस्त्रले एकएक जना उत्तम वीरलाई ..।४८। प्रद्युम्नले युद्धका बेलामा

मुमोच स महाबाहुर्महेन्द्रदमनस्तथा ।
व्याघ्रसिंहश्रृगालास्यैः सारमेयमुखैस्तथा ॥४७॥
तच्छरं वारयामास प्रद्युम्नो बलिनां वरः ।
एकेकैनास्त्रमुख्येन वीरमेकैकमुत्तमम् ॥४८॥
प्रद्युम्नः पातयामास तत्क्षणात् समरान्तरे ।
स्तोकावशिष्टं स्वबलं प्रसमीक्ष्य महासुरः ॥४९॥
प्रद्युम्नस्य विनाशाय नागास्त्रं सन्दधे तदा ।
ततो मुमोच दैत्येन्द्रो महेन्द्रमनो रुषा ॥५०॥
विषाग्निज्वलिताकाशं नागास्त्रं घोररूपिणम् ।
नागास्त्रं पतितं दृष्ट्वा विषवह्निकलापिनम् ॥५१॥
हाहाशब्दो महाञ्जातो देवता समरे तदा ।
नागास्त्रदग्धः प्रद्युम्नः पतितश्चातिविह्वलः ॥५२॥
पक्षवातेन ताक्ष्यर्स्य लब्धचेता बभूव ह ।
नागास्त्रोऽपि दुराधर्षस्ताक्ष्यर्पक्षनिपीडितः ॥५३॥
पपात सहसा भूमौ छिन्नमूल इव द्रुमः ।
एवंविधे महद्युद्धे नारदो मुनिसत्तमः ॥५४॥
प्रद्युम्नं प्राह चागत्य वधोपायं शृणुष्व मे ।
ब्रह्मणा भाषितं पूर्वं स्मर वाक्यं मनोभव ॥५५॥
मागा विह्वलतां वीर पुत्रोऽसि मधुविद्विषः ।
शस्त्रेणायं त्वया जेतुं न शक्यो दानवोत्तमः ॥५६॥
मुष्टिमुद्यम्य वेगेन हन्यतामस्य मूर्धनि ।
इति नारदवाक्येन वेगान्निःसृत्य कैशविः ॥५७॥
मुष्टिमुद्यम्य वेगेन शिरस्येनमताडयत् ।
ततः पपात दैत्येन्द्रः कम्पयन्निव मेदिनीम् ॥५८॥
उद्वमन् रुधिरोद्गारं मुखेन नयनेन च ।
सुप्रभावासिनः सर्वे संहते शक्रतापने ॥
पातालं विविशू रम्यं प्रद्युम्नभयपीडिताः ॥५९॥
विचित्रपुष्पाणि निपेतुरम्बरा-
द्धते सुरेन्द्रे हरिबालकेन ।
नेतुस्तदा दुन्दुभयो मनोज्ञा
जयेति देवा अपि चुक्रुशुर्मुदा ॥६०॥
हते तस्मिने महादैत्ये वाग्वती सरितां वरा ।
नारीरूपधरा भूत्वा जगाम मधुसूदनम् ॥६१॥
विष्णो जिष्णो हृषिकेश चक्रपाणे चतुर्भुज ।
उपेन्द्र देवकीपुत्र भद्रकीर्ते नमोऽस्तु ते ॥६२॥
केशवो रुक्मिणीनाथो माधवो मधुसूदनः ।
सत्यभामापतिश्चासि द्वारकावासि सुप्रिय ॥६३॥
कंसासुररिपुश्चासि रुक्मणीपतिरेव च ।
नमोऽस्तु लक्ष्मीपतये धरणीपतये नमः ॥६४॥
स्थूलं कूर्मवपुः कृत्वा मन्दरं विधृतं त्वया ।
वराहरूपमास्थाय त्वयैव धरणी धृता ॥६५॥
कार्त्तवीर्यनिहन्ताऽसि त्वं हि भार्गवनन्दनः ।
निहन्ता रावणस्यापि त्वमेव रघुवंशजः ॥६६॥
त्राता त्राणार्थिनां चासि दाता सर्वसुखस्य च ।
स्थितिकर्ता च लोकानां त्वमेव परिवर्तसे ॥६७॥

तत्काल मारि दिए । आफूसँग थोरै सैन्यबल बचेको देखी महान् असुर दैत्यपति..।४९। महेन्द्रदमनले प्रद्युम्नलाई मार्न भनी नागास्त्र धनुषमा चढायो र अति रिसाउँदै प्रहार गर्‍यो ।५०। विषालु आगो बलिरहेको अति भयानक नागास्त्र आकाशमा छोडेको देखी त्यसको विषाग्निले गर्ने असर प्रति व्याकुल हुँदै..।५१। देवसमूहमा भयङ्कर हाहाकार मच्चियो । नागास्त्रले डढेका प्रद्युम्न अती पीडित हुँदै लड्न (लडी मूर्छाहुन) पुगे ।५२। गरुडका पखेँटाका हावाले उनको होस खुल्यो । भीषण नागास्त्र पनि गरुडका पखेँटाले पीडित हुँदै..।५३। काटिएको रुख ढलेझैं भुइँमा अचानक ढल्न पुग्यो । यसरी युद्ध चलिरहँदा मुनिश्रेष्ठ नारद (आई)..।५४। प्रद्युम्नलाई भन्न लाग्नु भयो-"हे प्रद्युम्न ! यसलाई मार्ने उपाय मसँग सुन । हे कामदेव ! पहिले ब्रह्माले भन्नु भएको कुरा (तिमी) सम्झ ।५५। हे वीर ! तिमी श्रीकृष्णका पुत्र हौ, ( यसरी) अशान्त नहोउ । यो उत्तम दानवलाई तिम्रा हतियारले जित्न (वा मार्न) सकिन्न ।५६। दौडेर गएर यसको टाउकामा मुक्काले हान" । नारदका यस्ता कुरा सुनी प्रद्युम्न दौडँदै गई..।५७। बेस्सरी मुड्की उजाएर उसका टाउकामा हाने । त्यसपछि पृथ्वीलाई हल्लाउँदै दानवपति .. ।५८। मुख एवं आँखाबाट पनि रगत निकाल्दै लड्यो (मर्‍यो) । इन्द्रपीडक मारिएपछि सुप्रभा नगरका निवासी सबै प्रद्युम्नका डरले सुन्दर पातालतिर भासिए र उतै बसे ।५९। हरिपुत्रबाट दैत्यपति मारिएपछि आकाशबाट विचित्र पुष्पहरू वृष्टि भयो सुन्दर दमाहाहरू बजे । देवगण आनन्द मानी जयजकार गर्न लागे ।६०। त्यो महादैत्य मारिएपछि श्रेष्ठनदी बाग्मती नारीको रूप लिएर श्रीकृष्णका अगिल्तिर उपस्थित भइन् (र श्रीकृष्णको स्तुती गर्न लागिन्)।६१। हे विष्णु ! हे जिष्णु ! हे हृषिकेश ! हे चक्रपाणि ! हे चतुर्भुज ! हे उपेन्द्र ! हे देवकीपुत्र ! हे भद्रकीर्ते ! हजुरलाई नमस्कार छ ।६२। हे केशव ! हे रुक्मिणीनाथ ! हे माधव ! हे मधुसूदनः ! हे सत्यभामापति पनि ! हे द्वारकावासि ! हे सुप्रिय ! ।६३। हे कंस असुरका शत्रू ! हे रुक्मणीपति हजुर ! हे लक्ष्मीका पति ! हजुरलाई नमस्कार छ । पृथ्वीका पतिलाई नमस्कार छ ।६४। (समुन्द्रमन्थन गर्दा) हजुरले विशाल कछुवाको रूप लिई मन्दराचल पर्वतलाई उचाल्नु भयो । अनि वराह रूप लिई हजुरले नै पृथ्वीलाई पनि उचाल्नु भयो ।६५। कार्तवीर्य अर्जुनलाई मार्ने जमदग्निका पुत्र परशुराम पनि हजुर नै हुनुहुन्छ । रावणलाई पनि मार्ने रघुवंशमा उत्पन्न राम पनि हजुर नै हुनुहुन्छ ।६६। हे शरणमा पर्नेका रक्षक ! तथा सबै सुखका दाता हजुर ! लोकहरूको पालन र परिवर्तन पनि हजुर नै गर्नुहुन्छ ।६७। हे हृषीकेश ! ( यो) बाँध एवं पुल भत्काउन हजुर सक्षम हुनु हुन्छ । हजुरको निगाह भए म गङ्गाको दर्शन गर्न जाने थिएँ (बग्न पाउने थिएँ) ।६८। बाग्मतीका कुरा सुनी हर्षले आँखा फैलाउँदै भगवान् श्रीकृष्णले सुदर्शन चक्रले बाँध भत्काइ दिनु भयो ।६९। विष्णु एवं महाविष्णुले बाँध एवं पुल भत्काइ दिएपछि अति भयानक विराध नाम गरेको कच्छपासुर उत्पात मचाउन लाग्यो ।७०। बाँध एवं पुल भत्किएको देखी रिसाएको त्यो कच्छपासुरले देब्रे हातले

**समर्थोऽसि हृषीकेश सेतुबन्धविदारणे ।**
**गङ्गा द्रष्टुं गमिष्यामि त्वत्प्रसादाज्जनार्दन ॥६८॥**
**वाग्वत्या वचनं श्रुत्वा हर्षोत्फुल्लविलोचनः ।**
**सेतुं विदारयामास चक्रेण भगवान् हरिः ॥६९॥**
**सेतुबन्धे प्रभिन्ने तु विष्णुना प्रभविष्णुना ।**
**उत्पपात महाघोरो विराधः कच्छपासुरः ॥७०॥**
**प्रभिन्नसेतुमालोक्य स क्रूरः कच्छपासुरः ।**
**वामहस्तेन दोलाद्रिं स्वर्णश्रृङ्गं परेण तु ॥७१॥**
**धृत्वा पातितुमारेभे सेतुबन्धस्य कारणात् ।**
**शैलद्वयं दानवेन धृतं वीक्ष्य चतुर्भुजः ॥७२॥**
**मनसाऽप्यतिवेगेन गत्वा दोलाचलं प्रभुः ।**
**कीलेश्वरं स्थापयित्वा स्वर्णश्रृङ्गं जगाम ह ॥७३॥**
**तत्र स्वर्णेश्वरं लिङ्गं स्थापयित्वा जनार्दनः ।**
**भूयो जगाम तत्रैव यत्रास्ते कच्छपासुरः ॥७४॥**
**एवं लिङ्गद्वयं विप्र कृष्णेन स्थापित स्वयम् ।**
**लिङ्गद्वयस्य ये भक्ता भविष्यन्ति नरा भुवि ॥७५॥**
**तेषां मनोरथप्राप्तिर्भविष्यति न संशयः ।**
**चैत्रकृष्णचतुर्दश्यां कीलेश्वरमनुत्तमम् ॥७६॥**
**पूजयिष्यन्ति ये लोकास्ते वै कैलासवासिनः ।**
**शिवरात्रिचतुर्दश्यां स्वर्णश्रृङ्गेश्वरान्तिके ॥७७॥**
**दीपमालां करिष्यन्ति भयं तेषां न भाष्करेः ।**
**स्वर्णश्रृङ्गेश्वरं देवं तथा कीलेश्वराभिधम् ॥७८॥**
**द्रक्ष्यन्ति ये नरा विप्र ते कृतार्था न संशयः ।**
**स्वर्णश्रृङ्गेश्वरोत्पत्तिं तथा कीलेशसम्भवम् ॥७९॥**
**श्रोष्यन्ति ये नरा भक्त्या तेषां पापं विनश्यति ।**
**विद्यालाभो ब्राह्मणस्य क्षत्रियो विजयी भवेत् ॥८०॥**
**वैश्यो धनसमृद्धः स्याच्छूद्रः कामानवाप्नुयात् ।**
**विद्यार्थी लभते विद्यां धनार्थी लभते धनम् ॥८१॥**
**गुर्विणो जनयेत् पुत्रं मोक्षार्थी मोक्षमाप्नुयात् ।**
**बहुनोक्तेन किं कार्यं यं यं प्रार्थयते नरः ॥**
**तं तं काममवाप्नोति नात्र कार्या विचारणा ॥८२॥**

चाँगुको डाँडो र दाहिने हातले स्वर्णश्रृङ्ग डाँडो (?) लाई..।७१। समातेर (भत्किएको बाँध थुन्ने मनशायले) उचाल्न लाग्यो । दानवले दुई वटा पर्वत उचालेको देखी श्रीकृष्ण..।७२। **<u>प्रभूले मनभन्दा पनि चाँडो गएर चाँगुमा कीलेश्वरको स्थापना गरी स्वर्णश्रृङ्ग पुग्नु भयो ।७३। त्यहाँ स्वर्णेश्वर लिङ्ग स्थापना गरी श्रीकृष्ण त्यही ठाउँमा आउनु भयो जहाँ कच्छपासुर थियो ।७४।</u>** हे जैमिनि ! यसरी श्रीकृष्ण स्वयंले यि दुई लिङ्ग स्थापना गर्नु भएको थियो । पृथ्वीका जो मानिस यि दुई लिङ्गका भक्त हुन्छन्.. ।७५। तिनको मनको चाहना पूरा हुन्छ, यसमा कुनै शङ्का छैन । चैत्रकृष्ण चतुर्दशीका दिन उत्तम कीलेश्वरको..।७६। जुन मानिसले पूजा गर्नेछ ती कैलासमा बस्न पाउँदछन् । शिवरात्रि र चतुर्दशीमा स्वर्णश्रृङ्गेश्वरका नजिक..।७७। जसले दीपमाला बाल्दछन् तिनलाई सूर्यको (पनि) डर हुने छैन । स्वर्णश्रृङ्गेश्वर तथा कीलेश्वर देवताको..।७८। हे जैमिनि ! जो मानिस दर्शन गर्दछन् ती सफल हुनेछन्, यसमा शङ्का छैन । स्वर्णश्रृङ्गेश्वर तथा कीलेश्वर उत्पत्तिको..।७९। (यो कथा) जो मानिस भक्तिपूर्वक सुन्दछन् तिनको पाप नाश हुनेछ । ब्राह्मणलाई विद्यालाभ हुनेछ र क्षत्रिय विजयी हुनेछ ।८०। वैश्य धनी हुनेछ र शूद्रका कामना पूरा हुनेछन् । विद्या चाहनेले विद्या र धन चाहनेले धन पाउनेछ ।८१। गर्भिणीले छोरो पाउँदछे भने मोक्ष चाहनेले मोक्ष पाउँदछ । धेरै के भन्नु मानिस जो जसले जे चाहना गर्दछ त्यही त्यही पाउँदछ, यसमा सोचविचार गर्नु पर्दैन ।८२।



**इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये दशमोऽध्यायः ॥१०॥**

श्रीस्कन्दपुराण, हिमवत्खण्ड, नेपालमाहात्म्यमा प्रद्युम्न एवं श्रीकृष्णबाट विभिन्न दानव तथा कीलेश्वर आदि शिवलिङ्गको स्थापना वृत्तान्त वर्णन भएको दशौं अध्याय समाप्त भएको छ ।१०।

**श्लोकानामादितः समष्ट्यङ्काः-६६४+८२=७४६**

शुरुदेखिको श्लोक सङ्ख्या :-६६४+८२=७४६




चोभारको गल्छी : जहाँबाट श्रीकृष्ण (वा मञ्जुश्रीले) पहाड काटी उपत्यकाको दह खोलेका थिए (तस्बिर श्रोत : म्युजियमसिण्डिकेट डटकम)

## ॥ अथैकादशोऽध्यायः ॥
## ॥ एघारौं अध्याय ॥

**जैमिनिरुवाच ॥** जैमिनि भन्नुहुन्छ–

**मार्कण्डेय मुनिश्रेष्ठ लिङ्गं कीलेश्वराभिधम् ।**
**स्वर्णश्रृङ्गेश्वरं लिङ्गं स्थापयित्वा जनार्दनः ॥१॥**
**किं चकार तदाख्याहि कच्छपोऽपि चकार यत् ।**
**महेन्द्रदमनास्यापि कथाऽत्यन्तमनोहरा ॥२॥**
**श्रूत्वा त्वत्तो महाभाग न तृप्तिमधियाम्यहम् ।**

हे मुनिश्रेष्ठ मार्कण्डेय ! जनार्दन भगवानले कीलेश्वर र स्वर्णश्रृङ्गेश्वर लिङ्ग स्थापना गरेपछि ...।१। (अरु) के (के) गर्नु भयो ? अनि कच्छपासुरले के गर्‍यो ? महेन्द्रदमनको कथा पनि बडो रोचक रहेछ ।२। हे अति भाग्मानी ! हजुरसँग कथा सुनेर कहिल्यै तृप्ति हुँदैन ।

**मार्कण्डेय उवाच ॥** मार्कण्डेय भन्नुहुन्छ–

**साधु साधु महाभाग जैमिने मुनिसत्तम ॥३॥**
**श्रूयतामभिधास्यामि यच्चकार जनार्दनः ।**
**लिङ्गद्वये थापिते तु विष्णुना प्रभविष्णुना ॥४॥**
**पर्वतद्वयमूलं तु गतं पातालमेव च ।**
**उत्पातुं न च शक्तोऽभूत्तौ शैलो कच्छपासुरः ॥५॥**
**बाहुयुद्धेन युयुधे प्रद्युम्नेन बलीयसा ।**
**नारदोऽपि तदा शीघ्रं प्रद्युम्नमिदमब्रवीत् ॥६॥**

हे अति भाग्यमानी उत्तम मुनि जैमिनि ! तिमी धन्य धन्य छौ ।३। जनार्दन भगवान्ले जे गर्नु भयो त्यो (म) बताउँदछु सुन्नुहोस् । विष्णु एवं महाविष्णुले (यि) दुई लिङ्गको स्थापना गरिसकेपछि...।४। (ती) दुबै पर्वतको जरो (वा जग) पातालसम्म पुग्यो । कच्छपासुर ती पर्वतलाई उखेल्न समर्थ भएन ।५। उ बलिया प्रद्युम्नसँग बाहुयुद्ध गर्न लाग्यो । त्यतिखेरै नारदले तुरुन्त (गएर) प्रद्युम्नलाई यसो भन्न लाग्नु भयो ।६।

**नारद उवाच॥** नारद भन्नुहुन्छ–



**कृत्वोत्तानं दुरात्मानं विराधं दानवाधमम् ।**
**अस्य कुक्षिगतं रत्नं शीघ्रमादातुमर्हसि ॥७॥**

(हे प्रद्युम्न !) तिमी यो दुष्ट एवं अधम दानव विराधलाई उत्तानो पारेर यसका कोखमा भएको रत्न चाँडो निकाल ।७।

**मार्कण्डेय उवाच ॥** मार्कण्डेय भन्नुहुन्छ–

**महर्षेर्वचनं श्रुत्वा कृत्वोत्तान बलेन तम् ।**
**आददे सर्वरत्नानि खड्गेन लघुविक्रमः ॥८॥**
**परिवृत्त्य पुनः शीघ्रं संक्रुद्धः कच्छपासुरः ।**
**प्रद्युम्नं त्रासयामास नर्दमानं पुनः पुनः ॥९॥**
**अव्यक्तजीवितं दृष्ट्वा संक्रुद्धं कच्छपासुरम् ।**
**हरिपुत्रं पुनः प्राह नारदो मुनिपुङ्गवः ॥१०॥**

महर्षिको वचन सुनेर (प्रद्युम्नले) त्यस दानवलाई बलपूर्वक उत्तानो पारी खड्गले अलिकति बल गरी सबै रत्न निकाले ।८। कच्छपासुर पुनः तुरुन्त पल्टिएर रिसाएर चिच्याउँदै पटकपटक प्रद्युम्नलाई तर्साउन लाग्यो ।९। अज्ञात जीवन (मृत्यु के मा छ भन्ने नजानिने)को रिसाएको कच्छपासुरलाई देखी मुनिश्रेष्ठ नारदले प्रद्युम्नलाई पुनः भन्न लाग्नु भयो ।१०।

**नारद उवाच ॥** नारद भन्नुहुन्छ–

**अत्र दानववीराणां प्रसादाच्छूलधारिणः ।**
**वाग्वतीजलसंश्लेषात् वधस्तेषां न विद्यते ॥११॥**
**तस्माद्विक्षेप यत्नेन पक्षेन गरुडस्य च ।**
**पश्चाच्छिरोऽस्य च्छेतव्यं चक्रेण मकरध्वज ॥१२॥**

भगवान् शिवका वरदानका कारण यहाँ बाग्मतीको पानीमा त्यो वीर दानवलाई मार्न सकिन्न ।११। त्यसैले प्रयत्नपूर्वक गरुडको पखेंटाले तर्साउँदै यसलाई (बाग्मतीको जलबाट) पर लैजाउ, हे प्रद्युम्न ! त्यसपछि चक्रले यसको टाउको काट ।१२।

**मार्कण्डेय उवाच॥** मार्कण्डेय भन्नुहुन्छ-

**महर्षेर्वचनं श्रुत्वा गरुडेन महौजसा ।**
**कच्छपः प्रापितः सद्यः स्थलं पक्षधरेण तु॥१३॥**
**स्थलस्थं कच्छपं दृष्ट्वा तरुणादित्यवर्चसम् ।**
**शिरश्चिच्छेद कूर्मस्य पेतुश्चक्रेण कैशविः ॥१४॥**
**विराधं निहतं दृष्ट्वा विस्मयोत्फुल्ललोचनाः ।**
**ववर्षुः कुसुमं देवाः प्रद्युम्नोपरि हर्षिताः ॥१५॥**
**बभूव सन्ध्यासमये कुङ्कुमारुणसुन्दरः ।**
**तमसा पूरिते व्योम्नि ज्योत्स्नानिकरसंवृतः ॥१६॥**
**तदुत्सवादिवोद्भूतो रराज रजनीकरः ।**
**तस्यां रात्रौ चक्रपाणिर्वासं तत्र चकार हि॥१७॥**
**नारदोऽपि महाहृष्टो मृगेन्द्रशिखरं ययौ ।**
**सूर्यकेतोर्नृपस्याग्रे सर्वामाचष्ट तां कथाम्॥१८॥**
**हर्षनिर्भरसंयुक्तः सूर्यकेतुर्नराधिपः ।**
**तस्यां रजन्यां सगणो विष्णुमभ्युद्भवस्थलीम् ॥१९॥**
**अधित्यकां ययौ शीघ्रं नारदेन समन्वितः ।**
**सन्तुष्टं भूपतिं प्राह नारदो मुनिसत्तमः ॥२०॥**

महर्षिका कुरा सुनी प्रद्युम्नले तेजस्वी गरुडको पखेंटा मार्फत तुरुन्त कच्छपासुरलाई (तर्साउँदै) जमिनमा ल्याई पुऱ्याए ।१३। जमिनमा पुगेको तरुण-सूर्यसमान तेजिलो कच्छपासुरलाई देखी प्रद्युम्नले त्यो कछुवाको टाउको चक्र प्रहार गरी काटे ।१४। विराध मारिएको (यो घटनालाई) आश्चर्यसँग आँखा च्यातेर हेरिरहेका देवताहरूले खुशी हुँदै प्रद्युम्न माथि पुष्पवर्षा गरे ।१५। (अनि) साँझ पऱ्यो । (पश्चिम आकाशमा) सूर्य केसरी जस्तै सुन्दर देखिए । (बिस्तारै) आकाशलाई अन्धकारले छोप्यो । (अनि) जून लाग्यो ।१७। त्यो उत्सवमा अद्भूत रूपको जस्तो भई चन्द्रमाले राज गरे । त्यो रात श्रीकृष्ण त्यहीँ बस्नु भयो ।१७। नारद पनि अति खुशी हुँदै मृगेन्द्रशिखरतिर जानु भयो र राजा सूर्यकेतुलाई भएभरको सबै कथा सुनाउनु भयो ।१८। (नारदका कुरा सुनी) प्रसन्न भएका राजा सूर्यकेतु आफ्ना गणका साथ त्यही रात श्रीविष्णु प्रकट हुनुभएको थलीतिर गए ।१९। (उनी) चाँडै नारदसहित अधित्यका (पहाडमाथिको सम्म परेको जमिन) पुगे । (अनि) सन्तुष्ट भएका राजालाई मुनिश्रेष्ठ नारदले भन्नु भयो-।२०।

**नारद उवाच॥** नारद भन्नुहुन्छ-



**अद्य नायास्यति विभुर्नृपते मधुसूदनः ।**
**त्वया मयाऽत्र स्थातव्यं विष्णुदर्शनवाञ्छया ॥२१॥**

हे नरेश ! आज श्रीकृष्ण यहाँ आउनु हुन्न । तिमी र म श्रीविष्णुको दर्शनको चाहना गर्दै यहीँ (कुरेर) बस्नु पर्दछ ।२१।

**मार्कण्डेय उवाच॥** मार्कण्डेय भन्नुहुन्छ-

**नारदस्य वचः श्रुत्वा प्राह भूपतिसत्तमः ।**

नारदका कुरा सुनी श्रेष्ठ राजा भन्न लागे ।

**सूर्यकेतुरुवाच॥** सूर्यकेतु भन्दछन्-

**श्रीकृष्णदर्शनोत्कण्ठा जायते महती मम॥२२॥**
**नारायणस्य प्रतिमा कर्तव्याऽत्र मया मुने ।**
**नान्यथा चित्तशान्तिर्मे भविष्यति तपोधन॥२३॥**

"श्रीकृष्णको (अहिल्यै) दर्शन गर्ने मेरो ठूलो चाहना छ (थियो) ...।२२। (अहिले उहाँ नआउने भए) हे मुनि ! म यहाँ नारायणको मूर्ति स्थापना गर्दछु । हे तपोधन ! नत्र मेरो मनमा शान्ति हुने छैन ।२३।

**मार्कण्डेय उवाच॥** मार्कण्डेय भन्नुहुन्छ-

**नृपतेर्वचनं श्रुत्वा नारदः प्राह भूपतिम् ।**

राजाको कुरा सुनी नारदले भन्नु भयो ।

**नारद उवाच॥** नारद भन्नुहुन्छ-

**धन्योऽसि विष्णुभक्तोऽसि स्थापय प्रतिमां प्रभोः ॥२४॥**
**प्रातर्द्रष्टासि गोविन्दं प्रद्युम्नसहितं नृप ।**

हे विष्णुभक्त ! तिमी धन्य छौ, प्रभूको मूर्ति स्थापना गर ।२४। बिहान प्रदुम्न सहित गोविन्द भगवानको दर्शन गर्नेछौ ।

**मार्कण्डेय उवाच ॥** मार्कण्डेय भन्नुहुन्छ-

**इति नारदवाक्यान्ते प्रतिमां मधुविद्विषः ॥२५॥
जलस्थां स्थापयामासनन्तस्थां नरपालकः ।
अनन्तभोगशयनं विष्णुं द्रक्ष्यन्ति ये नराः ॥२६॥
तेषां नारायणस्तुष्टः स्वस्थानं दास्यति ध्रुवम् ।
विष्णुं संस्थाप्य नृपतिर्महाविभवविस्तरैः ॥२७॥
महोत्सवेन रजनीं निनाय नरपालकः ।
ततः प्रभाते विमले सूर्यकेतुर्नराधिपः ॥२८॥
जगाम मुनिसंयुक्तो यत्रास्ते मधुसूदनः ।
स विलोक्य जगन्नाथं सूर्यकेतुर्नराधिपः ॥२९॥
प्रणम्य दण्डवद्भूमौ रोमाञ्चाङ्कितविग्रहः ।**

नारदको कुरा सकिए पछि **श्रीनारायणको मूर्तिलाई..।२५। राजाले जलभित्र शेषनागमाथि स्थापना गरे । शेषनागको फणामा (मुनि) सुतिरहेका (यि) विष्णुको** जो मानिस दर्शन गर्दछन्..।२६। तीसँग नारायण सन्तुष्ट भई निश्चय नै बस्न प्रेमपूर्वक आफ्नो ठाउँ दिनु हुन्छ । विष्णुको मूर्ति स्थापना गरी धूमधामसँग राजाले...।२७। उत्सव गर्दै राजाले रात बिताए । बिहान उज्यालो भएपछि राजा सूर्यकेतु...।२८। मुनिसँगै जहाँ मधुसूदन हुनुहुन्थ्यो त्यहाँ गए । राजा सूर्यकेतुले जगन्नाथको दर्शन पाएर...।२९। रोमाञ्चित हुँदै दण्डवत् प्रणाम गरी भन्न लागे ।

**सूर्यकेतुरुवाच ॥** सूर्यकेतु भन्दछन्-

**नमस्ते देवकीपुत्र नमस्ते मधुसूदन ॥३०॥
नमोऽस्तु ते हृषीकेश कैटभारे नमोऽस्तु ते ।
नमस्ते भगवन् विष्णो जिष्णो कंसनिषूदन ॥३१॥
त्राहि मां शेषशयन जगदीश नमोऽस्तु ते ।
मुरारेऽस्तु नमस्तुभ्यं वामनाय नमोऽस्तु ते ॥३२॥
रामचन्द्र नमस्तेऽस्तु श्रीकृष्णाय नमोऽस्तु ते ।
नमस्ते कमलाकान्त नमस्ते धरणीधर ॥३३॥
नमः पङ्कजनेत्राय पद्मनाभाय ते नमः ।
नमो वराहरूपाय कूर्मरूपाय ते नमः ॥३४॥
नमस्ते जगदाधार नृसिंहाय नमोऽस्तु ते ।**

हे देवकीपुत्र ! हे मधुसूदन ! हजुरलाई नमस्कार छ ।३०। हे हृषीकेश ! हे कैटभारे ! हजुरलाई नमस्कार छ । हे भगवान् विष्णु ! हे जिष्णु ! हे कंसहन्ता ! हजुरलाई नमस्कार छ ।३१। हे शेषशायी ! मेरो रक्षा गर्नु होस् । हे जगदीश ! हजुरलाई नमस्कार छ । हे मुरारी ! हजुरलाई नमस्कार छ । हे वामन ! हजुरलाई नमस्कार छ ।३२। हे रामचन्द्र ! हजुरलाई नमस्कार छ । हे श्रीकृष्ण ! हजुरलाई नमस्कार छ । हे कमलाकान्त ! हे धरणीधर ! हजुरलाई नमस्कार छ ।३३। कमलनयन लाई नमस्कार छ, नाइटोमा कमल हुने हजुरलाई नमस्कार छ । वाराह एवं कूर्मरूपी हजुरलाई नमस्कार छ ।३४। जगत्का आधारलाई नमस्कार छ, नृसिंहलाई नमस्कार छ ।



**मार्कण्डेय उवाच ॥** मार्कण्डेय भन्नु हुन्छ-

**इति स्तुत्वा सूर्यकेतुः श्रीकृष्णचरणद्वयम् ॥३५॥
शिरस्याधारयत् तस्थौ प्राञ्जलिर्भक्तिसंयुतः ।
ज्ञात्वा भक्तं सूर्यकेतुं प्रोवाच मधुसूदनः ॥३६॥**

सूर्यकेतुले यसरी स्तुति गर्दै श्रीकृष्णका दुबै चरण..।३५। ( आफ्नो) शिरमा धारण गरी भक्तिपूर्वक हात जोडेर बसी रहे । ( त्यसपछि) मधुसूदनले सूर्यकेतुलाई भक्त भनी जानी (यि कुरा) भन्नु भयो ।३६।

**श्रीकृष्ण उवाच ॥** श्रीकृष्ण भन्नुहुन्छ-

**सूर्यकेतो नृपोत्तिष्ठ भक्तोऽसि मम सर्वथा ।
वरं ब्रूहि महाभाग यत्ते मनसि वर्तते ॥३७॥**

हे राजा सूर्यकेतु ! उठ, तिमी सधैं मेरा भक्त छौ । हे महाभाग ! मनमा जे छ त्यो वरदान माग ।३७।

**मार्कण्डेय उवाच ॥** मार्कण्डेय भन्नुहुन्छ-

**इति कृष्णवचः श्रुत्वा सूर्यकेतुर्जगाद ह ।**

श्रीकृष्णका यस्ता वचन सुनी सूर्यकेतुले भने ।

**सूर्यकेतुरुवाच ॥** सूर्यकेतु भन्दछन्-

**यदि तुष्टोऽसि गोविन्द मृगेन्द्रशिखरे त्वया ॥३८॥**
**मया साकं प्रगन्तव्यं मत्कार्यं समुपस्थितम् ।**
**प्रद्युम्नाय मया देया कन्या चन्द्रावती शुभा ॥३९॥**

हे गोविन्द ! हजूर मसँग प्रसन्न हुनुहुन्छ भने मृगेन्द्रशिखरमा..।३८। मेरो कार्यका लागि हजूर मसँगै हिँडि दिनु हवस् । मेरी शुभ कन्या चन्द्रावती प्रद्युम्नलाई (बिवाहगरी) दिनु छ ।३९।

**मार्कण्डेय उवाच ॥** मार्कण्डेय भन्नुहुन्छ-

**सम्पादयित्वा तत्कार्यं द्वारका गम्यतां प्रभो ।**
**तथेत्युक्त्वा मुनिवरः प्रतस्थे गरुडध्वजः ॥४०॥**
**गत्वा पशुपतिस्थानं स्नात्वा वै वाग्वतीजले ।**
**सन्ध्यामुपास्य विधिवत् संतर्प्य च पितामहान् ॥४१॥**
**विलोक्य वत्सलां देवीं ययौ पशुपतिं प्रभुः ।**
**दृष्ट्वा पशुपतिं देवं पूजयित्वा यथाविधि ॥४२॥**
**प्रदक्षिणं विधायापि दक्षिणद्वारमाययौ ।**
**तत्रोपविष्टो भगवान् जपं चक्रे समाहितः ॥४३॥**
**आगतं माधवं श्रुत्वा स्थाने पशुपतेः शुभे ।**
**आगता ब्राह्मणाः सर्वे दोलागिरिनिवासिनः ॥४४॥**
**तपः स्वाध्यायनिरता वेदवेदाङ्गपारगाः ।**
**ऋष्याश्रमस्था मुनयः सर्व एव समागताः ॥४५॥**
**आगता मुनयः सर्वे वागीश्वरनिवासिनः ।**
**ये च श्लेष्मान्तकवने संस्थिता मुनयः सदा ॥४६॥**
**ते सर्वेऽथ समायाताः कृष्णदर्शनकाङ्क्षया ।**
**तानागतान् मुनीन् दृष्ट्वा वेदवेदाङ्गपारगान् ॥४७॥**
**ब्रह्मण्यदेवो भगवान् ननाम च मुहुर्मुहुः ।**
**तेभ्यो दानान्यनेकानि ददौ च परमेश्वरः ॥४८॥**
**मुनिमध्ये महातेजा नेमिरुग्रतपोनिधिः ।**
**दक्षिणं बाहुमुत्थाप्य शास्त्रसारं वचो जगौ ॥४९॥**

त्यत्ति काम सकेपछि प्रभू द्वारका जानु होला । हे मुनि ! ( त्यसपछि) "हुन्छ नि त" भनी श्रीकृष्ण जानु भयो ।४०। पशुपति क्षेत्र गई बाग्मतीको पानीमा नुहाएर सन्ध्यावन्दन र विधिपूर्वक पितृहरूलाई तर्पण गरी..।४१। वत्सला देवीको दर्शन गरेर प्रभु पशुपति जानु भयो । भगवान् पशुपतिको दर्शन र विधिपूर्वक पूजा गरी...।४२। परिक्रमा गर्दै प्रभु (पशुपतिको) दक्षिणपट्टि जानु भयो । त्यहाँ बसेर एकाग्रचित्तले जप गर्नुभयो ।४३। पवित्र पशुपतिनाथ क्षेत्रमा श्रीकृष्ण आउनु भएको सुनी दोलागिरीमा रहेका सबै ब्राह्मणहरू (त्यहाँ) आए ।४४। तपस्या र शास्त्र अध्ययनमा लागिरहने एवं वेद तथा वेदाङ्गमा निपुण ऋष्याश्रममा रहेका सबै मुनिहरू पनि (त्यहाँ) आइपुगे ।४५। वागीश्वरमा वसोवास गर्ने सबै मुनिहरू तथा नित्य श्लेष्मान्तक वनमा बस्ने मुनिहरू पनि आए ।४६। ती सबै मुनिहरू श्रीकृष्णको दर्शनको अभिलाषाले आएका थिए । (यसरी) आएका वेदवेदाङ्गमा पारङ्गत मुनिहरूलाई देखेर...।४७। ब्राह्मणभक्त श्रीकृष्णले सबैलाई बारम्बार नमस्कार गर्नु भयो । परमेश्वरले उनीहरूलाई अनेक थरी दान पनि दिनु भयो ।४८। (त्यसपछि ती) मुनिहरुमध्ये महातेजस्वी र उग्रतपस्वी <u>नेमि</u> नामका (एक) मुनिले दाहिने हात उठाएर शास्त्रसाररूपी (यस्ता) वचन भन्न लागे ।४९।



**नेमिरुवाच ॥** नेमि भन्दछन्-

**अहो भाग्यमहो भाग्यं तपस्या सफला हि नः ।**
**एकत्र हि यतो दृष्टौ देवौ हरिहरौ प्रभू ॥५०॥**
**वयं कृतार्था धन्याश्च यद्दृष्टौ मांसचक्षुषा ।**
**देवौ हरिहरौ साक्षात् पुराणपुरुषावुभौ ॥५१॥**
**यो हरिं हररूपेण हरं च हरिरूपिणम् ।**
**यः पश्यति स एव स्याद्वैष्णवः शैव एव च ॥५२॥**
**हरौ हरे च ये भेदं कुर्वन्ति मनुजाधमाः ।**
**पाखण्डिनो वेदवाह्यास्ते वै निरयगामिनः ॥५३॥**
**गङ्गागौर्योरभेदं तु तथा शङ्करकृष्णयोः ।**
**ये पश्यन्ति नरा धन्यास्ते कृतार्था न संशयः ॥५४॥**

ओहो ! कस्तो भाग्य भाग्य, तपस्याकै फलले हुनु पर्दछ हामीले भगवान् शिव र भगवान् विष्णुलाई (आज यहाँ) एकै ठाउँमा देख्न पायौं ।५०। भौतिक आँखाले साक्षात् पुराणपुरुष शिव एवं विष्णुलाई देखेर हामी (आज) कृतार्थ र धन्य भयौं ।५१। जो विष्णुलाई शिवकारूपमा तथा शिवलाई विष्णुकारूपमा देख्दछन् ती नै (यथार्थमा) वैष्णव र शैव हुन्छन् ।५२। जो शिव र विष्णुमा भिन्नता गर्दछन् त्यस्ता ती पाखण्डी एवं वेदभन्दा बाहिरका अधम मानिस नरक जान्छन् ।५३। जो गङ्गा र बाग्मतीमा तथा शङ्कर र कृष्णमा भेद गर्दैनन्, समान देख्दछन्, ती मानिस निःसन्देह धन्य एवं कृतार्थ हुन् ।५४।

**मार्कण्डेय उवाच॥** मार्कण्डेय भन्नुहुन्छ-

**इति नेमिवचः श्रुत्वा देवः पशुपतिर्हरिः ।**
**बभूवातीव मुदितो मुनीनामग्रतः स्थितः ॥५५॥**
**जैमिने मुनिशार्दूल श्रूयतां वचनं मम ।**
**ततःप्रोवाच सन्तुष्टो देवः पशुपतिर्मुनिम् ॥५६॥**

नेमिका यस्ता कुरा सुनी मुनिहरूका अगिल्तिर रहनुभएका भगवान् शिव र विष्णु अति प्रसन्न हुनु भयो ।५५। हे श्रेष्ठमुनि जैमिनि ! मेरा कुरा सुन्नु हवस् । त्यसपछि प्रसन्न हुनु भएका भगवान् पशुपतिनाथले (ती नेमि) मुनिलाई भन्नुभयो ।५६।

**श्रीपशुपतिरुवाच॥** श्रीपशुपतिनाथ भन्नुहुन्छ-

**नेमे मुनिगणश्रेष्ठ तुष्टोऽहं ते वदाम्यहम् ।**
**अस्मिन् श्लेष्मान्तकवने मृगरूपेण वै मया ॥५७॥**
**यत्र भ्रान्तं जलं पीतं यत्र सुप्तं स्थितं मया ।**
**तत्र तत्रैव तीर्थं मे जातं ब्राह्मणसत्तम ॥५८॥**
**अस्मिन् श्लेष्मान्तकवने तपो वासुकिना पुरा ।**
**तप्तं वासुकिनाम्ना वै क्षेत्रमेतद्भविष्यति ॥५९॥**
**नेमे त्वमस्य क्षेत्रस्य मुनीनामग्रणीर्भव ।**
**पालनीयं त्वया क्षेत्रं वचनान्मे तपोधन ॥६०॥**

हे मुनिश्रेष्ठ नेमि ! तिम्रा कुरा सुनेर म प्रसन्न भई भन्दछु कि यो श्लेष्मान्तक वनमा म मृगरूप लिएर...।५७। हे ब्राह्मणश्रेष्ठ ! जहाँ घुमे, जहाँ पानी पिएँ, जहाँ सुतें र जहाँ रहें ती ती मेरा तीर्थ हुन् ।५८। यो श्लेष्मान्तक वनमा पहिले वासुकिले तपस्या गरेका थिए । वासुकिले तपस्या गरेका कारण यो क्षेत्रको नाम <u>वासुकि-क्षेत्र</u> हुनेछ ।५९। हे नेमि ! तिमी मुनिहरूमा श्रेष्ठ हुनेछौ । मेरो आज्ञाले हे तपोधन ! तिमीले यो क्षेत्रलाई पालना गर्नू ।६०।

**मार्कण्डेय उवाच॥** मार्कण्डेय भन्नुहुन्छ-

**ततः प्रभृति तज्जातं क्षेत्रं नेपालसंज्ञकम् ।**
**नेमिना मुनिना यस्मात् पालितं पुण्यकर्मणा ॥६१॥**
**क्षेत्रं हिमवतः कुक्षावतो नेपालसंज्ञकम् ।**
**ततो नारदप्रद्युम्नसहितो मधुसूदनः ॥६२॥**
**युक्तः समस्तैर्मुनिभिः सूर्यकेतुनृपेण च ।**
**आज्ञां पशुपतेर्लब्ध्वा द्रष्टुं गुह्येश्वरीं ययौ ॥६३॥**
**दृष्ट्वा गुह्येश्वरीं देवीं गोकर्णेशं विलोक्य च ।**
**महोत्साहेन सहितो मृगेन्द्रशिखरं ययौ ॥६४॥**
**वाग्वतीप्रभवे स्नात्वा दत्वा दानान्यनेकशः ।**
**महेन्द्रस्यालयमिव सूर्यकेतोर्गृहं ययौ ॥६५॥**
**सूर्यकेतुर्ददौ कन्यां विधिना नारदान्वितः ।**
**प्रद्युम्नाय महाभागस्तदा चन्द्रावतीं शुभाम् ॥६६॥**
**देवदुन्दुभयो नेदुः पुष्पवृष्टिः पपात ह ।**
**माल्याम्बरैर्विचित्रैश्च चित्रैराभरणैस्तथा ॥६७॥**
**पूजयामास देवेन्द्रं सपुत्रं मधुसूदनम् ।**
**ननर्तार्प्सरसां वृन्दो नूपुरध्वनिभिस्तदा ॥६८॥**
**गन्धर्वाः प्रजगुर्गीतं किन्नराश्च जगुर्मुदा ।**
**प्रववावनिलश्चापि पुण्यगन्धवहः शुचिः ॥६९॥**
**वधूं चन्द्रावतीं दृष्ट्वा चन्द्रलेखामिवापराम् ।**
**तुतोष भगवान् विष्णुर्विस्मयोत्फुल्लमानसः ॥७०॥**
**देवी चन्द्रावती चापि विशेषकृतभूषणा ।**
**रराज राजलक्ष्मीव प्रद्युम्नं समुपस्थिता ॥७१॥**
**जामातरं समासाद्य प्रद्युम्नं बलिनां वरम् ।**
**तुतोषातिशयं श्रीमान् सूर्यकेतुर्नराधिपः ॥७२॥**



<u>त्यो बेलादेखि (नेमि मुनिले पालना गर्न थालेपछि) त्यो क्षेत्रको नाम "नेपाल" भनी रहन गयो । नेमि मुनिले पुण्यकर्म गरी पालना गरेको हुनाले..।६१। हिमालयको काखमा रहेको यो क्षेत्रको नाम नेपाल रहन गयो ।</u> त्यसपछि नारद एवं प्रद्युम्न सहित श्रीकृष्ण...।६२। सबै मुनिगण र राजा सूर्यकेतु समेत पशुपतिको आज्ञा लिई गुह्येश्वरीको दर्शन गर्न गए ।६३। गुह्येश्वरीको दर्शन पश्चात् गोकर्णेश्वरको समेत दर्शन गरी (ती) सबै ठूलो उत्साहका साथ मृगेन्द्रशिखरतिर गए ।६४। (त्यहाँ) बाग्मतीको उद्गमस्थलमा नुहाएर विविध कुरा दान दिई इन्द्रको शहर समान सूर्यकेतुका घर(शहर) तर्फ गए ।६५। (त्यहाँ) नारदसहित भई अतिभाग्यमानी सूर्यकेतुले आफ्नी शुभ कन्या चन्द्रावतीलाई विधिपूर्वक प्रद्युम्नसँग विवाह गरिदिए ।६६। (त्यस अवसरमा) देवताहरूले दमाहा बजाए र फूल बर्साए । विचित्रका माला तथा आभूषणले...।६७। (राजाले) देवेन्द्र श्रीकृष्ण र प्रद्युम्नको पूजा गरे । (त्यस अवसरमा) घुँगुरा बजाउँदै अप्सरागण नाच्न लागे ।६८। खुशी हुँदै गन्धर्व र किन्नर गाउन लागे । वायु पनि सुगन्धित र पवित्र भई वहन थाल्यो ।६९। चन्द्रलेखा (एक अप्सरा) समानकी बुहारीलाई देखेर (पाएर) भगवान् विष्णु (पनि) खुशीले प्रफुल्ल एवं अनन्दित हुनु भयो ।७०। विशेष किसिमका गरगहनाले सजिएकी देवी चन्द्रावती पनि राजलक्ष्मी जस्तै देखिई प्रद्युम्नसित (खूब) सुहाइन् ।७१। बलश्रेष्ठ प्रद्युम्नलाई ज्वाइँकारूपमा पाएर राजा सूर्यकेतु (पनि) अति खुशी भए ।७२। (त्यसपछि) शरीरमा हरिचन्दन दलिएका, इन्द्रनीलमणि समान तेजिला, शङ्ख-चक्र-गदा-कमल हातमा लिएका, देवगन्धर्वले

हरिचन्दनलिप्ताङ्ग इन्द्रनीलसमप्रभः ।
शङ्खचक्रगदापाणिर्देवगन्धर्वपूजितः ॥७३॥
मुनिभिर्देवशब्देन सन्तुष्टो लोमहर्षणः ।
आरुरोह गरुत्मन्त भगवान् मधुसूदनः ॥७४॥
देवीं चन्द्रावतीं चापि राजपुत्रीं प्रभावतीम् ।
रथमारोपयामास प्रद्युम्नः केशवाज्ञया ॥७५॥
स्त्रीरत्नैः सर्वरत्नौघैः पूरितं रथमुत्तमम् ।
आरुरोह स प्रद्युम्नः कामगं हेमनिर्मितम् ॥७६॥
सकुटुम्बः सूर्यकेतुः कामगं केशवाज्ञया ।
आरुरोह रथं दिव्यं पुष्पकं धनदो यदा ॥७७॥
उत्पपात तदाकाशमिन्द्रनीलसमप्रभम् ।
मुनिना सहितो मारसंयुतो हर्षसंयुतः ॥७८॥
विलोक्य क्षेत्रमतुलं वाग्वतीं सरितां शुभाम् ।
प्रहृष्टो भगवान् विष्णुरिदं वचनमब्रवीत् ॥७९॥

पूजिएका... ।७३। तथा मुनिहरूले गरेको वेदपाठबाट सन्तुष्ट भएका लोमहर्षण भगवान् श्रीकृष्ण गरुडमा चढ्नु भयो ।७४। श्रीकृष्णको आदेश अनुसार देवी चन्द्रावती र राजपुत्री प्रभावतीलाई प्रद्युम्नले रथमा चढाए ।७५। सबै रत्नले सुसज्जित स्त्रीरत्न (द्वय) लाई लिएर ती प्रद्युम्न इच्छानुसार चल्ने सो सुनको रथमा चढे ।७६। सूर्यकेतु र उनका आफन्त (पनि) श्रीकृष्णको आज्ञा अनुसार इच्छा अनुसार चलाउन सकिने कुबेरको पुष्पक विमान सरहको (अर्को) रथमा चढे ।७७। अनि त इन्द्रनीलमणिको तेज जस्तो त्यो रथ नारद र प्रद्युम्न सहित हर्षले युक्त हुँदै आकाशमा उड्यो ।७८। (आकाशमा जाँदै गर्दा) अनुपम (पाशुपत) क्षेत्र र शुभ एवं श्रेष्ठ नदी बाग्मतीलाई देखेर खुशी हुनु भएका भगवान् विष्णुले भन्नु भयो ।७९।

**श्रीकृष्ण उवाच ॥ श्रीकृष्ण भन्नुहुन्छ–**



पश्य दक्षिणभागेन मृगश्रृङ्गस्य भूभृतः ।
चन्द्रदीप्तितटः पुण्यः स मे स्थानं भविष्यति ॥८०॥
सिंहवक्त्रवपुर्भूत्वा स्थितोऽहं यत्र सर्वदा ।
पूजयिष्यन्ति लोकाश्च मम भक्तिपरायणाः ॥८१॥
इन्द्रेश्वरं प्रतिष्ठाप्य शक्रनद्याः शुभे तटे ।
चकार भगवानिन्द्रो यत्र यज्ञं मनोहरम् ॥८२॥
वासो मे सर्वदा रम्ये दोलाशिखरमूर्धनि ।
शिखरं श्रेष्ठमित्येव कीर्तयिष्यन्ति भूतले ॥८३॥
पूजयिष्यन्ति लोकाश्च सुव्यक्तं मकरध्वज ।
ब्राह्मणा बहवोऽप्यत्र सन्ति स्वाध्यायशालिनः ॥८४॥
सान्निध्यं सर्वदा तत्र सन्ध्याकाले विशेषतः ।
पश्य कर्कोटकह्रदं सर्वौषधितले शुभे ॥८५॥
रमन्ते यत्र नागेन्द्रा कर्कोटकपुरस्सराः ।
वाग्वत्या मणिमत्याश्च संभेदे लोकपूजिते ॥८६॥
गच्छामीत्युक्तमात्रेण भूयात् पापप्रणाशनम् ।
संभेदे मणिमत्याश्च गर्भे यावत् कृतं पदम् ॥८७॥
तावते वर्षशतं स्वर्गे मोदते शिवभक्तिमान् ।
वाग्वत्या मणिमत्याश्च संभेदे लोकपूजिते ॥८८॥
स्नायते सततं यस्तु पुण्यवान् कीर्त्यते स तु ।
तत्समीपे समुद्भूता रुद्रधारेति योच्यते ॥८९॥
कल्पिता देवदेवेन लोकानुग्रहकारणात् ।
भुक्तिमुक्तिप्रदं पुण्यं शिवमायोपलक्षितम् ॥९०॥
रुद्र धारोदयं दृष्ट्वा सर्वपापैः प्रमुच्यते ।
गयाया नैमिषाद्वाऽपि कुरुक्षेत्राच्च पुष्करात् ॥९१॥
स्नानं दशगुणं ज्ञेयं मणिमत्याश्च सङ्गमे ।
वीरभद्रासङ्गमं च पश्य नारद सुन्दरम् ॥९२॥
लिङ्गं संस्थापितं यत्र स्वयं हनुमता पुरा ।
वीरावतरणे तीर्थे भद्रनद्याश्च सङ्गमे ॥९३॥

<u>**मृगश्रृङ्ग पर्वत**</u>को दक्षिणतिरको (उ त्यो पाखो) पुण्य <u>**चन्द्रदीप्ति किनार**</u> (छ नि हो) त्यो मेरो स्थान (क्षेत्र) हुनेछ ।८०। जहाँ <u>**सिँहमुखी शरीर**</u> (नृसिंहको रूप) लिएर म सदा बसिरहेको हुन्छु । मेरो भक्ति गर्ने मानिसहरू यसलाई पूजा गर्ने छन् (गर्दछन्) ।८१। (उ) यहाँ <u>**इन्द्रनदी**</u>को पवित्र किनारमा भगवान् इन्द्रले <u>**इन्द्रेश्वर**</u>को स्थापना गरी मनोहर यज्ञ गरेका थिए ।८२। रमणीय <u>**दोलाशिखर**</u>को थाप्लोमा मेरो सधैं वास हुन्छ । यसको "सर्वोत्तम दोलाशिखर" भनी पृथ्वीमा गुणगान गाइनेछ (गाइन्छ) ।८३। हे प्रद्युम्न ! लोकले यो (शिखरको) पूजा पनि गर्नेछन् । यो शिखरमा अनेकौं ब्राह्मणहरू शास्त्र अध्ययनरत छन् ।८४। यहाँ सधैं मेरो वास हुने भएता पनि सन्ध्याकालमा विशेष वास हुन्छ । हेर त <u>**सर्वौषधि(पर्वत)**</u>को तल पवित्र <u>**कर्कोटक दह (टौदह ?)**</u> छ ।८५। बाग्मती र <u>**मणिमती**</u>का दोभानमा लोकले पूजा गरिएका नागहरु वरिपरि राखेर नागका राजा कर्कोटक बस्ने गर्दछन् ।८६। मणिमतीको यो दोभानमा "म जान्छु" भन्नाले मात्र पनि गर्भदेखिका सारा पाप नाश हुन्छन् ।८७। बाग्मती र मणिमतीको सबैले पूजा गर्ने दोभानमा जो जान्छन् ती शिवभक्त भई सय वर्षसम्म स्वर्गमा बस्दछन् ।८८। जो यहाँ नित्य नुहाउँदछन् ती पुण्यात्मा भनिन्छन् । त्यहाँ नजिकै उत्पन्न भएको (उ त्यो) धारालाई "रुद्रधारा" भनिन्छ ।८९। लोकको हीतका लागि भुक्तिमुक्ति दिने (यो धारा) भगवान् शिवको मायाबाट कल्पना गरिएको (बनाइएको) हो ।९०। <u>**रुद्रधारा**</u>को मूल देखेपछि सबै पापबाट मुक्त हुइन्छ । गया, नैमिषारण्य क्षेत्र, कुरुक्षेत्र र पुष्करक्षेत्रभन्दा पनि ..।९१। दश गुणा बढी फल यो मणिमतीको सङ्गममा नुहाउनाले प्राप्त हुन्छ । हे नारद ! हजूर (उ त्यो) <u>**वीरभद्रा**</u>को सङ्गमलाई हेर्नु होस् (त) ।९२। जहाँ <u>**भद्रावती**</u>को सङ्गममा रहेको यो <u>**वीरावतरण तीर्थ**</u>मा प्राचीन कालमा हनुमान स्वयंले लिङ्ग स्थापना गरेका थिए ।९३। यहाँ जो विधिपूर्वक

**स्नायते विधिना यस्तु वीरलोकं स गच्छति ।**
**रामायणकथाऽप्यत्र कृता वाल्मीकिना पुरा ॥९४॥**
**चम्पानदीसङ्गमजं तीर्थं पापप्रणाशनम् ।**
**तिलमाधवतीर्थं तु मुनिभिः कथितं यतः ॥९५॥**
**इमां मनोहरां पश्य मनोहरजलां नदीम् ।**
**हंसकारण्डवाकीर्णां चक्रवाकोपशोभिताम् ॥९६॥**
**मनोहराया वाग्वत्या मध्ये वा वर्तते मही ।**
**धर्मभूमिरियं ख्याता सदा धर्मविवर्धिनी ॥९७॥**
**इमां पुण्यजलां पश्य महापातकनाशिनीम् ।**
**वाग्वतीं सरितां श्रेष्ठां महादेवमुखोद्भवाम् ॥९८॥**
**वाग्वती सरितां श्रेष्ठा यत्र कुत्रावगाह्यते ।**
**तत्र तत्र फलं विद्याद्वाजपेयाश्वमेधयोः ॥९९॥**
**मनोहराया वाग्वत्याः सङ्गमं पश्य सुन्दरम् ।**
**यत्र स्नानेन मनुजो ब्रह्मलोकं स गच्छति ॥१००॥**
**नदीं विष्णुपदी पश्य फेनोर्मिधवलां शुभाम् ।**
**यत्र स्नानेन मनुजो विष्णुलोकं प्रपश्यति ॥१०१॥**
**वाग्वत्या विष्णुमत्याश्च मध्ये या वर्तते मही ।**
**सिद्धिभूमिस्तु सा प्रोक्ता तत्र पापं न विद्यते ॥१०२॥**
**पुलहाश्रममूले तु रुद्रमत्याश्च सङ्गमे ।**
**अर्यमा तुष्यते तत्र सूर्यलोकं स गच्छति ॥१०३॥**
**विष्णुनद्यास्तटे तीर्थे पश्य टङ्केश्वरं विभुम् ।**
**वाग्वत्या विष्णुमत्याश्च संभेदमतिपुण्यदम् ॥१०४॥**
**यत्र लिङ्गानि पञ्चापि वर्तन्ते मकरध्वज ।**
**पञ्चलिङ्गाह्वयं तीर्थं नाम तस्य प्रतिष्ठितम् ॥१०५॥**
**पञ्चलिङ्गाह्वये तीर्थे सङ्गमे स्नानमाचरेत् ।**
**न तस्य वर्तते देहे पापं पुत्र कदाचन ॥१०६॥**
**वाग्वत्या विष्णुमत्याश्च सङ्गमे सुमनोहरे ।**
**पुराऽत्र हरिणा छिन्नो जानुः सत्या हरार्थतः ॥१०७॥**
**अस्मिन् पीठे ये जपन्ति कृतार्थास्ते न संशयः ।**
**सर्वौषधिगिरेश्चैव दक्षिणे गिरिगह्वरे ॥१०८॥**
**तत्रापि च ममवासो भविता मकरध्वज ।**
**क्षेत्रपालप्रभावेण गोपितं लोकदुर्गमम् ॥१०९॥**
**सुगमं चापि तत्रैकं भविष्यति झषध्वज ।**
**पश्य त्वद्धस्तनिहतं विराधं कच्छपासुरम् ॥११०॥**
**कूर्मपर्वतमित्येवं कीर्तयिष्यन्ति मानवाः ।**
**परितं तस्य शैलस्य प्रभावादासुरात् तथा ॥१११॥**
**शस्यवृद्धिर्विशेषेण भविष्यति न संशयः ।**
**अस्मिन् कूर्मगिरौ पुण्ये पुण्यकृद्भिर्निषेविते ॥११२॥**
**यत्र यत्र स्थितं तोयं तीर्थं तत्र भविष्यति ।**
**कच्छपाचलमूले हि वाग्वत्या जलसङ्गमे ॥११३॥**
**पश्चिमतटमासाद्य स्नात्वा कामफलं लभेत् ।**
**अस्य कूर्मगिरेर्मूले वाग्वत्याः पश्चिमेन तु ॥११४॥**
**भविष्यति जलादन्तर्गणेशो लोकपूजितः ।**
**तत्रापि च मम स्थानं दुर्विज्ञेयं भविष्यति ॥११५॥**
**स्नानादपि च वाग्वत्यां जायते पुण्यवान् नरः ।**

नुहाउँदछ उ वीरलोकमा जान्छ । पहिले वाल्मीकिले रामायणको कथा पनि यहीँ बसेर लेखेका थिए ।९४। (त्यहाँ) पापनाशक तिलमाधव नामक तीर्थ **चम्पानदी**को सङ्गममा छ । मुनिहरूले यसलाई तिलमाधव तीर्थ भनेका छन् ।९५। (अनि यता) हाँस एवं कोणेरले भरिभराउ तथा चखेवाले शोभायमान मनोहर जल भएकी यि मनोहरालाई हेर्नु होस् ।९६। मनोहरा र बाग्मतीका बीचमा रहेको यो जमिन (पृथ्वी) धर्मभूमि हो र (यो जमिन) सदा धर्म बढाउने हुन्छ ।९७। महादेवको मुखबाट निस्किएकी नदीहरूमा श्रेष्ठ महापाप नाशक यि बाग्मती नदीको जललाई हेर्नु होस् ।९८। नदीहरूमा श्रेष्ठ बाग्मती नदीमा जतासुकै नुहाए पनि (तिनले) त्यसको वाजपेय र अश्वमेध यज्ञ गरेको फल पाउँदछन् ।९९। (उ त्यो) मनोहरा र बाग्मतीको सुन्दर दोभानलाई हेर्नु होस्, जहाँ नुहाउनाले मानिस ब्रह्मलोक जान्छन् ।१००। फिँजको मालाले सेतो देखिएकी पवित्र विष्णुमतीलाई हेर्नु होस्, जहाँ नुहाउनाले मानिस विष्णुलोक पुग्दछन् ।१०१। बाग्मती र विष्णुमतीको बीचमा जुन जमिन रहेको छ, त्यसलाई सिद्धिभूमि भनिन्छ, यहाँ पाप रहँदैन ।१०२। **पुलहाश्रमको मूलमा (अर्थात्) रुद्रमती (धोबीखोला) र बाग्मतीको दोभानमा** रहेका **अर्यमा देवता**लाई खुशीपार्ने मानिस सूर्यलोक जान्छन् ।१०३। विष्णुमतीको किनारमा रहेका प्रभू **टङ्केश्वर**लाई हेर, जहाँ बाग्मती र विष्णुमतीको अति पुण्यशाली दोभान रहेको छ ।१०४। हे प्रद्युम्न ! यहाँ एकै ठाउँमा पाँच वटा लिङ्ग छन् । त्यसैले यो **पञ्चलिङ्गतीर्थ**का नामले प्रसिद्ध छ ।१०५। पञ्चलिङ्गतीर्थमा जो नुहाउँदछ, हे पुत्र ! त्यसका शरीरमा कहिल्यै पाप रहँदैन ।१०६। **बाग्मती र विष्णुमतीको रमणीय दोभानमा प्राचीन कालमा श्रीशिवका लागि श्रीविष्णुले मृतक सतिदेवीको घुँडा काटि दिएका थिए** ।१०७। यस पीठमा जो जप गर्दछन् ती निसन्देह कृतार्थ हुन्छन् । **सर्वौषधि पर्वतको दक्षिणतिर रहेको गुफामा..**।१०८। हे **प्रद्युम्न ! त्यहाँ पनि मेरो बास छ । क्षेत्रपालको प्रभावले (पहिले) त्यहाँ दुर्गम (कठिन) बाटो थियो (अहिले) त्यो गोप्य बनाइएको छ ।१०९। हे प्रद्युम्न ! अब सुगम (सजिलो) बाटो मात्र बाँकी छ । त्यो यो हो कि जो मानिस तिमीले मारेको कच्छपासुर विराधलाई देख्दछ उसको यात्रा सफल र सुगम हुन्छ ।११०।**

यस स्थानलाई मानिस **कूर्मपर्वत** भन्दछन् । **त्यो पर्वतको चारैतिर त्यो दैत्यका प्रभावले ...।१११। अनाज विशेष राम्रो फल्दछ, यसमा कुनै शङ्का छैन** । यो पवित्र कूर्मपर्वत पुण्यात्माहरूबाट सेवित गरिने गर्दछ ।११२। त्यो पर्वतको जहाँ जहाँ पानी छ, त्यहाँ त्यहाँ तीर्थ हुनेछ (छ) । **कच्छपाचल**को फेदमा रहेको बाग्मतीको जल सङ्गममा..।११३। पश्चिम किनारातिर जो मानिस नुहाउँदछ उसले मनले चाहेको फल पाउँदछ । **यो कूर्मपर्वतको मूलभाग एवं बाग्मतीको पश्चिमतिर..।११४। जलको बीचमा लोकले पूजा गर्ने गणेशको उत्पत्ति हुनेछ, जसलाई "अन्तर्गणेश" भनिनेछ** ***। त्यहाँ रहेको मेरो स्थल पनि थाहा पाउन कठिन हुनेछ***।११५। बाग्मतीमा नुहाउनाले मात्र पनि मानिस पुण्यात्मा हुने गर्दछ । भत्काइएको बाँधको किनारको सुन्दर **चन्दनागिरी पर्वतमा...**।११६। **विष्णुतीर्थ**

भिन्नसेतुतटे रम्ये पर्वते चन्दनागिरौ ॥११६॥
विष्णुतीर्थमिति ख्यातं स्थानं मम भविष्यति ।
मीनचक्रह्रदे पुण्ये पुरतो मम सम्भवः ॥११७॥
द्वादश्यां स्नानमात्रेण मम लोके महीयते ।
पतिव्रतासु नारीषु ब्राह्मणे वेदपारगे ॥११८॥
मम क्षेत्रे च यद्दत्तं तदक्षयमिति स्मृतम् ।
चन्दनागिरिमूले तु पश्य तीर्थं प्रकामदम् ॥११९॥
अत्र पुत्र महादेव्या स्वयं घृष्टं च चन्दनम् ।
सुप्रभाभवनं भग्नं नानारत्नप्रभायुतम् ॥१२०॥
हतावशेषास्त्वसुरा गतवन्तो रसातलम् ।
इत्युक्त्वा भगवान् विष्णुः सगणो देवपूजितः ॥
गरुडादवतीर्णोऽभूत् क्षेत्रे परमदुर्लभे ॥१२१॥

नामको मेरो स्थल हुनेछ । पवित्र मीनचक्रदहका सामुन्ने मेरो उत्पत्ति हुनेछ ।११७। त्यहाँ द्वादशीका दिन नुहाउने मानिस मेरो लोकमा जान्छ । पतिव्रता नारी र वेदज्ञ ब्राह्मणलाई...।११८। मेरो (यो) क्षेत्रमा जे दान दिइन्छ त्यो कहिल्यै नाश हुँदैन । चन्दनागिरिको फेदमा रहेको प्रकामद नामक तीर्थलाई हेर ।११९। यहाँ महादेवका पुत्र गणेश आफैंले चन्दन पर्वतलाई घोटी नानाथरी रत्नले सुसज्जित भएको सुप्रभा शहरका भवन नष्ट गर्नु भएको थियो ।१२०। (किन कि त्यहाँ दानव बसी जनतालाई दुःख दिन थालेका थिए) उहाँको डरले बचेखुचेका दैत्य पातालतिर भागे । यति भन्दै देवताबाट पूजित भगवान् विष्णु गणहरूका साथ त्यो परम दुर्लभ क्षेत्रमा गरुडबाट ओर्लनु भयो । त्यहाँ नुहाएर उहाँले रत्न, मोती र सुन दान दिनु भयो ।१२१।

**इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये एकादशोऽध्यायः ॥११॥**

श्रीस्कन्दपुराण, हिमवत्खण्ड, नेपालमाहात्म्यमा बूढानीलकण्ठ आदि तीर्थस्थलको स्थापना, नेपाल नाम रहनुको कारण आदि प्रसङ्ग वर्णन भएको एघारौं अध्याय समाप्त भएको छ ।११।

**श्लोकानामादितः समष्टयङ्काः-७४६+१२१=८६७**

शुरुदेखिको श्लोक सङ्ख्या :-७४६+१२१=८६७



भगवान् श्रीकृष्णद्वारा स्थापना भएको गोपालेश्वर शिवलिङ्गको मन्दिर, फर्पिङ, काठमाडौं (तस्विर श्रोत: दक्षिणकालीमन डट जीओभी डट एनपी)

(चित्रकार :- डा.हेन्री एम्ब्रुस ओल्डफिल्ड, श्रोत :- ब्रिटिश लाइब्रेरीको वेबसाइट, सङ्कलन :- मोहन प्रसाद सापकोटा)



वुढानीलकण्ठ, काठमाडौं (वि.सं.१९१३)



बूढानीलकण्ठ, काठमाडौं । (तस्विर स्रोतः सिल्भेन लेभीले फ्रेन्च भाषामा लेखेको र पेरिसबाट ई.सं.१९०५ (वि.सं.१९६२) मा प्रकाशन भएको "दि नेपाल" नामक पुस्तकबाट) । (संकलन : मोहन प्रसाद सापकोटा) ।

## ॥ अथ द्वादशोऽध्यायः ॥
## ॥ बाह्रौं अध्याय ॥

**मार्कण्डेय उवाच ॥ मार्कण्डेय भन्नुहुन्छ-**

ततोऽतितुष्टो गोविन्दः सपुत्रो मुनिसंयुत ।
लिङ्गं संस्थापयामास गोपालेश्वरमुत्तमम् ॥१॥
प्रद्युम्नश्चापि सन्तुष्टः पितृभक्तिसमन्वितः ।
शिवनारायणनाम्ना स्थापयामास यत्नतः ॥२॥
कृष्णेन स्थापितं लिङ्गं गोपालेश्वरमुत्तमम् ।
येद्रक्ष्यन्ति नरा भाग्यास्ते कृतार्था न संशयः ॥३॥
पप्रद्युम्नस्थापितां विष्णुमूर्त्तिं द्रक्ष्यन्ति ये नराः ।
इह लोके सुखं स्थित्वा यान्ति ते परमां गतिम् ॥४॥
नेपाले दुर्लभे क्षेत्रे कृष्णेन स्थापितं स्वयम् ।
गोपालेश्वरनामानं ये द्रक्ष्यन्ति कलौ युगे ॥५॥
तेषां तुष्टो मुररिपुर्विष्णोर्लोकं प्रयच्छति ।
संस्थाप्य लिङ्गं गोविन्दो नारद वाक्यमब्रवीत् ॥६॥

यसपछि अति प्रसन्न हुनुभएका श्रीकृष्णले (त्यहाँ) नारद एवं प्रद्युम्नसँगै उत्तम <u>गोपालेश्वर</u> लिङ्गको स्थापना गर्नु भयो ।१। पितृभक्तिमा तत्पर रहने प्रद्युम्नले पनि सन्तुष्ट हुँदै प्रयत्नपूर्वक <u>शिवनारायण</u>को स्थापना गरे ।२। श्रीकृष्णले स्थापना गरेको उत्तम गोपालेश्वर लिङ्गको जो मानिस दर्शन गर्दछ उ निःसन्देह भाग्यशाली एवं कृतार्थ हुन्छ ।३। प्रद्युम्नले स्थापना गरेको विष्णुको मूर्तिलाई जो मानिसले दर्शन गर्दछन्, ती यो लोकमा सुखपूर्वक बाँची (मृत्युपछि) मोक्ष हुन्छन् ।४। दुर्लभ नेपाल क्षेत्रमा श्रीकृष्ण स्वयंले स्थापना गर्नु भएको गोपालेश्वर नामक शिवलिङ्गको कलियुगमा जसले दर्शन गर्दछन्...।५। तीसँग प्रसन्न भई श्रीविष्णुले विष्णुलोक दिनु हुन्छ । (गोपालेश्वर) लिङ्ग स्थापना गरिसकेपछि श्रीकृष्णले नारदलाई भन्नुभयो ।६।

**श्रीकृष्ण उवाच ॥ श्रीकृष्ण भन्नुहुन्छ-**

गच्छ द्वारावतीं विप्र वेगेन महता पुनः ।
प्रद्युम्नविजयः शीघ्रमुग्रसेनाय कथ्यताम् ॥७॥
श्वेतकायामहं गत्वा सपुत्रो धातृनन्दन ।
करिष्यामि च राजानां सूर्यकेतु मदाश्रयम् ॥८॥

हे ब्राह्मण ! तिमी फेरी छिटोभन्दा छिटो द्वारका जाउ र प्रद्युम्नको विजयको खबर उग्रसेनलाई बताउ ।७। हे नारद ! म छोरोलाई लिएर श्वेतका नगर जान्छु र मेरो आश्रयमा रहेका (यि) सूर्यकेतुलाई (त्यहाँको) राजा बनाउँदछु ।८।



**मार्कण्डेय उवाच ॥ मार्कण्डेय भन्नुहुन्छ-**

इति माधववाक्यान्ते नारदो द्वारकां ययौ ।
गत्वा च कथयामास राज्ञे सर्वं विशेषतः ॥९॥
आदिदेश ततो राजा पुरशोभा विधीयताम् ।
रुक्मिण्यपि तदा श्रुत्वा सुतस्य जयमुत्तमम् ॥१०॥
आहूय च सखीः सर्वा हर्षाद्वचनमब्रवीत् ।
महेन्द्रदमनं हत्वा दुर्जयं देवकण्टकम् ॥११॥
प्रभावतीमुपादाय दैत्यस्य भगिनीं शुभाम् ।
सूर्यकेतोः सुतां रम्यां नाम्ना चन्द्रावतीं शुभाम् ॥१२॥
गृहीत्वा हि समायाति प्रद्युम्नस्तनयो मम ।
प्रद्युम्नं यदि द्रक्ष्यामि मृत्योरास्यादुपागतम् ॥१३॥
क्रियतां मङ्गलं तस्मात् सर्वाभिर्वचनान्मम ।
अथ ता मङ्गलं चक्रू रुक्मिणीवचनात्तदा ॥१४॥
गृहीतपूर्णकलशास्तस्थुः पङ्कजलोचनाः ।
दीपद्रुमकराः काश्चित् काश्चिद्धूपकरास्तथा ॥१५॥
चित्रमाल्याम्बरधरा विलोलायतलोचनाः ।
रक्तभाजनहस्ताश्च स्थिताः काश्चिद्वराङ्गनाः ॥१६॥
द्वारकावासिनः सर्वे विशेषकृतभूषणाः ।
सपुत्रं केशवं द्रष्टुं निर्ययुर्माल्यधारिणः ॥१७॥

श्रीकृष्णका यस्ता कुरा (सुने) पछि नारद द्वारका गए । त्यहाँ पुगेर विशेष गरी राजालाई सबै कुरा बताए ।९। त्यसपछि राजा ( उग्रसेन)ले (द्वारका) शहरलाई सिँगार्न आदेश दिए । त्यसबेला रुक्मिणीले पनि छोराको विजयको उत्तम खबर सुनेर...।१०। सबै साथीसङ्गिनीलाई बोलाएर खुशीको समाचार भन्न लागिन्-"देवताको शत्रु जित्न कठिन महेन्द्रदमनलाई मारेर... ।११। त्यो दैत्यकी असल बहिनी प्रभावतीलाई पाई अनि सूर्यकेतुकी चन्द्रावती नामकी सुन्दर एवं असल कन्यालाई ...।१२। लिएर मेरो छोरो प्रद्युम्न आउँदैछ (रे) । मृत्युको मुखबाट फर्केर आइरहेको छोरो प्रद्युम्नलाई देख्न पाउँदैछु...।१३। त्यसैले हजूरहरू मेरो अनुरोधमा मङ्गल कर्महरू गर्नु होस्" । त्यसपछि तीनले रुक्मिणीको अनुरोध अनुसार मङ्गल कर्म गर्न शुरु गरे ।१४। एउटी कमलनयनी (सखी) ले पूर्णकलश हातमा बोकिन्, कसैले दीप बालिएको तुलसीको बोट भएको भाँडो (गमला) त कसैले धूपदानी हातमा लिए ।१५। चञ्चल एवं लाम्चिला आँखा हुने कसैले चित्रविचित्रका वस्त्र र माला बोके त कुनै स्त्रीले शुभसाइतको प्रतिक रातो रङ्को भाँडा बोके ।१६। सबै द्वारका निवासी विशेष वस्त्रअलङ्कारले सजिएर एवं माला लगाई छोरो

**नानावादित्रनिर्घोषैः कम्पयन्तो वसुन्धराम् ।**
**निर्ययुर्यादवाः सर्वे बलभद्रपुरोगमाः ॥१८॥**
**तस्थुः सर्वे पुरद्वारि कृष्णागमनकामुकाः ।**
**माधवोऽपि ततः शीघ्रं सूर्यकेतुसमन्वितः ॥१९॥**
**सपुत्रः प्रययौ शीघ्रं श्वेतकां नगरीं शुभाम् ।**
**अवतीर्णः पुरद्वारि सगणो मधुसूदनः ॥२०॥**
**आगतं माधवं श्रुत्वा हंसध्वजमहीपतिः ।**
**प्रत्युद्यम्य चादरेण सपर्यापात्रसंयुतः ॥२१॥**
**पूजयित्वा यथान्यायं गोविन्दं भूपतिस्तदा ।**
**कृताञ्जलिपुटो भूत्वा वचनं निजगाद ह ॥२२॥**

सहितका श्रीकृष्णलाई हेर्न भनी बाहिर निस्किए ।१७। अनेक थरी बाजाका स्वरले पृथ्वीलाई कपाउँदै बलरामलाई अगि लगाएर सबै यादवहरू शहरबाट निस्किए ।१८। श्रीकृष्णको आगमनको प्रतिक्षामा ती सबै शहर बाहिरको (प्रवेश) द्वारमा (कुरेर) बसे । (उता) श्रीकृष्ण पनि त्यसपछि चाँडै सूर्यकेतुलाई लिएर...।१९। पुत्रसहित शुभ श्वेतका नगरमा जानु भयो र गणसहित शहरको प्रवेशद्वारमा ओर्लनु भयो ।२०। श्रीकृष्ण आएको सुनी राजा हंसध्वजले शास्त्रीय विधान बमोजिमका पूजाका सरजाम सहित त्यहाँ उपस्थित भएर...।२१। श्रीकृष्णको विधिविधानले पूजा गरे अनि राजा अँजुली बाँधेर यि कुरा भन्न लागे ।२२।

**हंसध्वज उवाच ॥** हंसध्वज भन्दछन्-

**सफलं जन्म गोविन्द तव दर्शनतो मम ।**
**प्रविश्य तां पुरीं शीघ्रं पवित्रीकुरु मे गृहम् ॥२३॥**
**दासोऽहं तव गोविन्द कृपां कुरु दयानिधे ।**
**अद्य विश्राम्य गन्तासि प्रभाते द्वारकां पुरीम् ॥२४॥**
**अजेयः सुरनाथेन महेन्द्रदमनोऽसुरः ।**
**तव प्रसादाद्गोविन्द प्रद्युम्नेन यतो हतः ॥२५॥**
**सूर्यकेतुरयं धन्यो सम्बन्धी यस्य माधवः ।**
**इयं प्रभावती देवी देवी चन्द्रावती तथा ॥२६॥**
**अन्तःपुरं प्रविश्यासु सत्कारं लभतामिति ।**
**आज्ञापय ऋषीकेश किं करोमि तव प्रभो ॥२७॥**

(आज) हजुरको दर्शन पाएर मेरो जन्म सफल भएको छ । हजुर चाँडै शहर भित्र प्रवेश गरी मेरो घरलाई पवित्र पार्नु हवस् ।२३। हे गोविन्द ! हे दयासागर ! म हजुरको सेवक हुँ, ममाथि कृपा गर्नुहोस् । आज यहाँ बसेर भोली द्वारकातिर प्रस्थान गर्नु होला ।२४। इन्द्रबाट जित्न नसकिएको महेन्द्रदमन दानव हजुरका आशिर्वादले प्रद्युम्नद्वारा मारियो ।२५। (यि) सूर्यकेतु जसका सम्धी श्रीकृष्ण छन् यि पनि धन्य छन् । यि प्रभावती देवी अनि देवी चन्द्रावती...।२६। चाँडै अन्तपुर गई (त्यहाँको) स्वागतसत्कार ग्रहण गरुन् । हे प्रभु ! हे हृषीकेश ! हजूरको म के सेवा गरौं, आज्ञा होस् ।२७।



**मार्कण्डेय उवाच ॥** मार्कण्डेय भन्नुहुन्छ-

**इति तस्य वचः श्रुत्वा गोविन्द प्राह तं नृपम् ।**

उनका त्यस्ता कुरा सुनी राजालाई श्रीकृष्ण भन्न लाग्न भयो ।

**श्रीगोविन्द उवाच ॥** श्रीकृष्ण भन्नुहुन्छ-

**साधु साधु नृपश्रेष्ठ हंसध्वजमहीपते ॥२८॥**
**श्रूयतां नृपशार्दूल यदर्थमहमागतः ।**
**सूर्यकेतुश्च सम्बन्धी मद्भक्तो नरसत्तमः ॥२९॥**
**त्वयाऽस्य सकलं राज्यं हृतं बाहुबलेन च ।**
**तदस्मै दीयतां राज्यं हंसध्वजमहीपते ॥३०॥**
**मम वाक्यान्महीपाल नात्र कार्या विचारणा ।**
**दत्वाऽस्मै श्वेतकाराज्य मिथिलां व्रज भूपते ॥३१॥**

हे नृपश्रेष्ठ राजा हंसध्वज ! तिमी धन्य धन्य छौ ।२८। हे नरोत्तम ! म यहाँ आउनुको कारण सुन । मेरा सम्धी यि सूर्यकेतु मेरा भक्त छन् ।२९। तिमीले आफ्नो बाहुबलले यिनको सबै राज्य लिएका छौ । हे राजा हंसध्वज ! यिनको राज्य यिनैलाई फिर्ता देउ ।३०। हे नरेश ! यो मेरो आदेश भो, सोचविचार नगर । यिनलाई श्वेतका राज्य दिएर नरेश तिमी मिथिला जाउ ।३१।

**मार्कण्डेय उवाच ॥** मार्कण्डेय भन्नुहुन्छ-

**गोविन्दवचनं श्रुत्वा प्राह हंसध्वजो नृपः ।**

श्रीकृष्णका वचन सुनी राजा हंसध्वज भन्दछन् ।

**हंसध्वज उवाच ॥ हंसध्वज भन्दछन्-**

धन्योऽहं कृतकृत्योऽहं सफलं जीवनं मम ॥३२॥
शरीरमर्थं प्राणांश्च भवते विनिवेदये ।
सूर्यकेतुनृपायास्मै श्वेतका दीयते मया ॥३३॥
पवित्रीकुरु मद्गेहं सर्वथा गरुडध्वज ।

म धन्य छु, कृतकृत्य छु, मेरो जीवन सफल भयो ।३२। (म मेरो यो) शरीर, धन र ज्यान हजुरलाई समर्पण गर्दछु । सूर्यकेतु राजालाई (यो) श्वेतका नगरी मबाट दिइनेछ ।३३। हे गरुडध्वज ! मेरो घर पवित्र पारी दिनु होस् ।

**मार्कण्डेय उवाच ॥ मार्कण्डेय भन्नुहुन्छ-**

ततोऽतितुष्टो गोविन्दो हंसध्वजनृपालयम् ॥३४॥
प्रविवेश महाबाहुः सूर्यकेतुसमन्वितः ।
स्वर्णसिंहासने रम्ये निविष्टं मधुसूदनम् ॥३५॥
नृपतिः पूजयामास नानारत्नैरुदारधीः ।
सूर्यकेतुर्नृपायापि श्वेतकां प्रददौ नृपः ॥३६॥
अनुज्ञां प्राप्य गोविन्दात्ततो हंसध्वजो नृपः ।
मिथिलां प्रययौ धीमान् सगणः सपरिच्छदः ॥३७॥
सूर्यकेतुस्ततो लब्ध्वा राज्यं गोविन्दतेजसा ।
मेने कृतार्थयात्मानं परमानन्दसंयुतः ॥३८॥
पूजयामास गोविन्दं महाविभवविस्तरैः ।
प्रणम्य दण्डवद्भूमौ कृताञ्जलिपुटोऽब्रवीत् ॥३९॥

त्यसपछि अति प्रसन्न हुँदै महाबाहु श्रीकृष्ण हंसध्वजको दरबारमा ...।३४। सूर्यकेतुसँगै प्रवेश गर्नुभयो । सुन्दर सुनको सिंहासनमा श्रीकृष्णलाई बसाएर...।३५। राजाले अनेक थरी रत्नले उदार भएर पूजा गरे । राजाले सूर्यकेतु राजालाई श्वेतका राज्य (फिर्ता) दिए ।३६। त्यसपछि श्रीकृष्णको आज्ञा पाई बुद्धिमान् राजा हंसध्वज आफ्ना सेवक र रानीहरू सहित मिथिला गए ।३७। श्रीकृष्णको प्रभावले राज्य पाएका राजा सूर्यकेतुले आनन्द हुँदै आफूलाई भामग्यमानी सम्झिए ।३८। (अनि) धूमधामसँग उनले श्रीकृष्णको पूजा गरे र जमिनमा दण्डवत् प्रणाम गरी अँजुली बाँधेर भन्न लागे ।३९।

**सूर्यकेतुरुवाच ॥ सूर्यकेतु भन्दछन्-**



त्वया नाथेन गोविन्द राज्यं परमदुर्लभम् ।
मया लब्धं प्रयत्नेन कीर्तिः परमदुर्लभा ॥४०॥
नाथवन्तो वयं जाता त्वया नाथेन माधव ।
इदानीं न यमस्यापि भयमस्ति मम प्रभो ॥४१॥
अद्य विश्राम्यतां नाथ गेहे मे मधुसूदन ।
प्रातर्गन्तासि नगरीं द्वारकां सह बान्धवैः ॥४२॥
पवित्रं कुरु मे वीर शिरश्चरणरेणुना ।
दासे कृपां कुरु सदा भक्तवत्सल माधव ॥४३॥

हे नाथ ! हे गोविन्द ! हजुरका प्रयासले अति दुर्लभ यो राज्य र कीर्ति मलाई प्राप्त भएको छ ।४०। हे माधव ! हजुरलाई स्वामीका रूपमा पाएर म नाथवान् हुन पाएको छु । हे प्रभु ! अब मलाई यमराजको पनि डर रहेन ।४१। हे नाथ ! हे मधुसूदन ! आज मेरै घरमा विश्राम गरेर भोलि बिहानै बन्धुबान्धवसँगै द्वारकातिर प्रस्थान गर्नु होला ।४२। हे वीर ! आफ्ना चरणकमलका धुलोले मेरो शिरलाई पवित्र पारि दिनु होस् । हे भक्तवत्सल ! हे माधव ! म दासमाथि सदा कृपा गर्नु होस् ।४३।

**मार्कण्डेय उवाच ॥ मार्कण्डेय भन्नुहुन्छ-**

इत्याकर्ण्य वचस्तस्य भूपतेर्मधुसूदनः ।
जगाद वचनं भूया मेघगम्भीरया गिरा ॥४४॥

ती राजाका यस्ता कुरा सुनी श्रीकृष्णले बादल समान गम्भीर वचन भन्नु भयो ।४४।

**श्रीकृष्ण उवाच ॥ श्रीकृष्ण भन्नुहुन्छ-**

साधु साधु महाभाग सूर्यकेतुमहीपते ।
मद्भक्तोऽसि कृतज्ञोऽसि धन्योसि बलवानसि ॥४५॥
इह लोके सुखं भुक्त्वा महाविभवविस्तरैः ।
सशरीरो दिवं गन्ता भवानन्ते न संशयः ॥४६॥

हे भाग्यमानी राजा सूर्यकेतु ! हजुर धन्य धन्य हुनुहुन्छ । हजुर मेरा भक्त हुनु हुन्छ, कृतज्ञ हुनु हुन्छ, भाग्यमानी हुनु हुन्छ र बलवान् हुनु हुन्छ ।४५। ठूलो वैवभसहितको यसलोकको सुख भोग गरी (अन्तमा) निःसन्देह हजुर सशरीर स्वर्ग जानु हुनेछ ।४६।

**मार्कण्डेय उवाच॥** मार्कण्डेय भन्नुहुन्छ-

**सूर्यकेतुस्ततस्तुष्टो नानारत्नैर्मनोहरैः ।**
**पूजयामास गोविन्दं प्रद्युम्नं च विशेषतः ॥४७॥**
**प्रभावत्यै ददौ राजा दिव्यानि वसनानि च ।**
**रत्नानि च विचित्राणि दासीश्च समलङ्कृताः ॥४८॥**
**चन्द्रावत्यै महार्हाणि वसनाभरणानि च ।**
**निष्ककोटीः शत दासीः प्रददौ भूपसत्तमः ॥४९॥**
**सूर्यकेतुमहीपालपूजितं गरुडध्वजम् ।**
**पूजयामासुरत्युच्चैर्यादवा जातविस्मयाः ॥५०॥**
**ततः सपुत्रः पुरकामिनीकरै-**
**र्विमुक्तमन्दाररजोरुणच्छविः ।**
**जनार्दनो दानवदर्पसूदनो**
**मनोरमां द्वारवतीं विवेश हि ॥५१॥**
**यः पठेत् प्रयतो नित्यं प्रद्युम्नविजयं शुभम् ।**
**नश्यन्ति रिपवस्तस्य सङ्ग्रामे जयमाप्नुयात् ॥५२॥**
**विद्यार्थी लभते विद्यां धनार्थी धनमाप्नुयात् ।**
**कन्यार्थी लभते कन्यामपुत्रः पुत्रमाप्नुयात् ॥५३॥**
**प्रद्युम्नविजयं रम्यं क्षत्रियो यः श्रृणोति च ।**
**रिपून् सर्वान् विनिर्जित्य महाराजो भवेदिह ॥५४॥**
**प्रद्युम्नविजयं रम्यं यो वैश्यः श्रृणुयाच्छुभम् ।**
**धनधान्यसमृद्धः स्यादन्ते याति परां गतिम् ॥५५॥**
**शूद्रः श्रृणोति चेद्भक्त्या प्रद्युम्नविजयं शुभम् ।**
**इह लोके सुखं भुक्त्वाऽप्यन्ते याति परां गतिम् ॥५६॥**
**प्रद्युम्नविजयं श्रुत्वा गुर्विणी जनयेत् सुतम् ।**
**यं यं प्रार्थयते कामं तं तं काममवाप्नुयात् ॥५७॥**
**हृतराज्येन भूपेन श्रोतव्यं च विशेषतः ।**
**अलभ्यं लभते राज्यं नात्र कार्या विचारणा ॥५८॥**
**श्राद्धकाले पठेद्यस्तु प्रद्युम्नविजयं शुभम् ।**
**पितरस्तस्य तृप्यन्ति शरदामयुतं पुनः ॥५९॥**

त्यसपछि राजा सूर्यकेतुले प्रसन्न भई अनेक सुन्दर रत्नले विशेषरूपले श्रीकृष्ण र प्रद्युम्नलाई पूजा गरे ।४७। राजाले प्रभावतीलाई दिव्य वस्त्रहरू, विचित्र रत्नहरू र दासदासीले अलङ्कृत गरी दिए ।४८। राजाले (छोरी) चन्द्रावतीलाई बहुमूल्य वस्त्र, एक करोड सुनका असर्फी र सय वटी दासी दाइजो दिए ।४९। (द्वारका पुगेपछि) सूर्यकेतु राजाबाट पूजित श्रीकृष्णलाई अचम्म मान्दै धूपधामसँग यादवहरूले पूजा गरे ।५०। त्यसपछि प्रद्युम्न सहित नगरका सुन्दरीहरूबाट घेरिएर, मन्दारफूलको रजका कारण अरुण जस्तै देखिएका, दानवका घमण्ड चूर गर्ने भगवान् श्रीकृष्ण सुन्दर द्वारका शहरमा प्रवेश गर्नु भयो ।५१। जोजसले प्रद्युम्नविजयको यो शुभ (कथा) दिनहुँ पढ्दछ, उसका शत्रु नाश हुन्छन् र (उसले) युद्धमा विजय पाउँदछ ।५२। विद्यार्थीले विद्या, धन चाहनेले धन, कन्या चाहनेले कन्या र पुत्र नहुनेले पुत्र पाउँदछ ।५३। जो क्षत्रिय प्रद्युम्न विजयको यो सुन्दर कथा सुन्दछ उ सबै शत्रु जिती महाराजधिराज हुन्छ ।५४। जो वैश्य प्रद्युम्नविजयको यो रमणीय कथा सुन्दछ उ धनधान्यले समृद्ध भई मोक्ष हुन्छ ।५५। शूद्र यदि भक्तिपूर्वक प्रद्युम्न विजयको यो कथा सुन्दछ भने उसले यसलोकमा सुख भोगगरी अन्तमा मोक्ष हुन्छ ।५६। गर्भवतीले प्रद्युम्नविजयको कथा सुने पुत्र जन्माउँदछे । (यो श्रवण गर्नाले) जो जो जे जे चिताउँदछन् त्यो त्यो पाउँदछन् ।५७। विशेष गरी राज्य खोसिएको राजाले ( यो कथा) सुने निःसन्देह अप्राप्य राज्य पाउँदछ ।५८। यो शुभ प्रद्युम्न विजयको कथालाई श्राद्धका बेलामा जसले पढ्दछ, उसका पितृहरू हजार वर्षसम्म तृप्त हुन्छन् ।५९।



**इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये द्वादशोऽध्यायः ॥१२॥**

श्रीस्कन्दपुराण, हिमवत्खण्ड, नेपालमाहात्म्यमा श्रीकृष्णको छोरा प्रद्युम्न र दुई वटी नेपाली बुहारी सहितको द्वारका फिर्ती प्रसङ्ग वर्णन भएको बाह्रौं अध्याय समाप्त भएको छ ।

**श्लोकानामादितः समष्ट्यङ्काः-८६७+५९=९२६**

शुरुदेखिको श्लोक सङ्ख्या :-८६७+५९=९२६

## ॥ अथ त्रयोदशोऽध्यायः ॥
### ॥ तेह्रौं अध्याय ॥

**जैमिनिरुवाच** ॥ जैमिनि भन्नुहुन्छ-

**तपोधन मुनिश्रेष्ठ त्वद्वक्त्राम्बुजनिर्गतम् ।**
**प्रद्युम्नविजयं श्रुत्वा न तृप्तिमधियाम्यहम् ॥१॥**
**नेपाले दुर्लभे क्षेत्रे यान्यन्यानि तपोधन ।**
**तानि लिङ्गानि कथय श्रोतुमिच्छा प्रजायते ॥२॥**

हे तपोधन मुनिश्रेष्ठ ! हजुरका मुखारविन्दबाट निस्केको प्रद्युम्न विजयको कथा सुनेर (पनि) म अघाइन ।१। हे तपोधन ! दुर्लभ क्षेत्र नेपालमा जेजति अरु लिङ्ग छन्, ती (पनि) मलाई बताउनु होस्, मलाई सुन्न मन लागिरहेको छ ।२।

**मार्कण्डेय उवाच** ॥ मार्कण्डेय भन्नुहुन्छ-

**सन्ति लिङ्गान्यनेकानि नेपाल क्षेत्रसत्तमे ।**
**सोमलिङ्गसमं लिङ्गं न भूतं न भविष्यति ॥३॥**
**सोमेश्वरं कृतयुगे त्रेतायां सोमनाथकम् ।**
**सोमशम्भुं द्वापरे हि सोमलिङ्ग कलौ युगे ॥४॥**
**युगे युगे नाम तस्य वदन्ति मुनयो द्विज ।**
**गुप्तं मुने सोमलिङ्ग न सर्वो वेत्ति मानवः ॥५॥**

(हे जैमिनि !) उत्तम क्षेत्र नेपालमा अनेकौं लिङ्गहरू छन् । (तर) सोमलिङ्ग समान लिङ्ग न थियो न त हुने नै छ ।३। यो लिङ्ग **सत्ययुगमा सोमेश्वर, त्रेतामा सोमनाथ र द्वापरमा सोमशम्भुका नामले प्रख्यात थियो र कलिमा सोमलिङ्गका नामले प्रख्यात हुनेछ** ।४। हे द्विज ! मुनिजन त्यो लिङ्गको नाम युग युग अनुसार (बेग्लै) बताउँदछन् । हे मुनि ! यो सोमलिङ्ग गुप्त भएकाले सबै मानिस थाहा पनि पाउँदैनन् ।५।

**जैमिनिरुवाच** ॥ जैमिनि भन्नुहुन्छ-

**सोमेश्वरसमुत्पत्तिं ब्रह्मन् कथय मे पुरः ।**
**श्रद्धा मे महती तस्मिन् सोमलिङ्गे द्विजोत्तम ॥६॥**



हे ब्रह्मन् ! हे उत्तम द्विज ! (उसोभए) मलाई सोमलिङ्गको उत्पत्तिका बारेमा बताउनु होस्, मलाई सोमलिङ्गप्रति ठूलो श्रद्धा पैदा भएको छ ।६।

**मार्कण्डेय उवाच** ॥ मार्कण्डेय भन्नुहुन्छ-

**श्रृणु सावहितो वत्स सोमेश्वरसमुद्भवम् ।**
**यस्य श्रवणमात्रेण नरो मुच्येत पातकात् ॥७॥**
**ओषधीनामधिपतिः पुरा कृतयुगे मुने ।**
**सोमो बभूव राजेन्द्रः सर्वविद्याविशारदः ॥८॥**
**वशं चकार त्रैलोक्यं निजबाहुबलेन च ।**
**एकदा गुरुमाहूय चन्द्रमा बलदर्पितः ॥९॥**
**प्रश्रयावनतो भूत्वा वचनं चेदमब्रवीत् ।**

हे बाबु ! सोमेश्वर उत्पत्तिको कुरो ध्यान दिएर सुन, जुन सुन्नाले मात्र पनि मानिस पापबाट मुक्त हुन्छ ।७। हे मुनि ! पहिले सत्ययुगमा औषधीका मालिक एवं सबै विद्यामा पोख्त भएका सोम (चन्द्रमा) राजा भएका थिए ।८। (उनले) आफ्नो बाहुबलले तीनै लोकलाई वशमा पारेका थिए । एकदिन बलको फूर्ति देखाउँदै चन्द्रमाले (आफ्ना) गुरुलाई बोलाएर...।९। उनको शरणमा पर्दै यस्ता कुरा भने ।

**चन्द्रमा उवाच** ॥ चन्द्रमा भन्दछन्-

**बृहस्पते द्विजश्रेष्ठ श्रूयतां वचनं मम ॥१०॥**
**राजसूयेन यज्ञेन यष्टुमिच्छामि सर्वथा ।**
**मां याजय गुरो भक्तं शरणं त्वामुपागतम् ॥११॥**

हे द्विजश्रेष्ठ बृहस्पति ! मेरा कुरा सुन्नु हवस् ।१०। म राजसूय यज्ञ यजन गर्न चाहन्छु । गुरु ! म हजुरका शरणमा परें, मबाट त्यो यज्ञ गराउनु होस् ।११।

**मार्कण्डेय उवाच** ॥ मार्कण्डेय भन्नुहुन्छ-

**श्रुत्वा चन्द्रमसो वाक्य वाचस्पतिरुवाच ह ।**

चन्द्रमाका कुरा सुनी बृहस्पतिले भने ।

**बृहस्पतिरुवाच** ॥ बृहस्पति भन्दछन्-

**राजसूयसमो यज्ञो कश्चिन्नान्योऽस्ति निश्चितम्॥१२॥**
**राजसूयेन यज्ञेन न यष्टव्यं त्वया विभो ।**
**राजसूये महाविघ्ना जेतव्या सकला मही॥१३॥**
**कर्ता दुःखमवाप्नोति याजकोऽपि ततोऽधिकम् ।**
**अत एव कलानाथ राजसूयो भयावहः॥१४॥**
**तस्मात् त्वया न यष्टव्यं राजसूयेन सर्वथा ।**

राजसूय यज्ञ समानको यज्ञ अरु छैन भन्ने कुरा सही (त) हो ।१२। (तर) हे चन्द्रमा तिमी यो राजसूय यज्ञ नगर । राजसूय यज्ञमा सबै पृथ्वी जित्नु पर्दछ, ठूलठूला बाधाहरु आउँदछन् ।१३। राजसूय गर्नेले त दुःख पाउँदछ पाउँदछ, गराउनेले पनि दुःख पाउँदछ । यसैले हे चन्द्र ! राजसूय यज्ञ भयदायक हुन्छ ।१४। त्यसैले तिमी राजसूय यज्ञ नगर ।

**मार्कण्डेय उवाच** ॥ मार्कण्डेय भन्नुहुन्छ-

**श्रुत्वा वाक्यं गुरोः सोमः पुनः प्रोवाच सादरम्॥१५॥**

बृहस्पतिका कुरा सुनेपछि चन्द्रमा आदरपूर्वक उनलाई फेरी भन्दछन् ।१५।

**सोम उवाच** ॥ चन्द्रमा भन्दछन्-

**अवश्यमेव यष्टव्यं राजसूयेन भो मया ।**
**त्वत्सहायस्य मे नाथ नासाध्यं विद्यते क्वचित्॥१६॥**
**त्वया श्रमेण मा मुञ्च जीव मे वरदो भव ।**

हे नाथ ! मलाई त राजसूय यज्ञ नगरी नै भएको छैन । ( त्यसमाथि) हजूरको सहयोग पाएपछि मैले गर्न नसक्ने भन्ने केही कुरा छैँदा पनि छैन ।१६। हे बृहस्पति ! मेहनत गरी मलाई पार लगाई दिनुहोस्, वरदान दिनु होस् ।

**मार्कण्डेय उवाच** ॥ मार्कण्डेय भन्नुहुन्छ-



**बृहस्पतिः सोमवचः श्रुत्वा प्राहं कलानिधिम्॥१७॥**

चन्द्रमाका कुरा सुनी बृहस्पतिले उनलाई भने ।१७।

**बृहस्पतिरुवाच** ॥ बृहस्पति भन्दछन्-

**एवं ते निश्चयः सोम राजसूयक्रतुं शिवम् ।**
**अवश्यं याजयिष्यामि भवन्तं हि कलानिधे॥१८॥**
**निर्जित्य सकलां पृथ्वीं नानारत्नान्युपाहर ।**

हे चन्द्रमा ! यदि तिमीले कल्याणकारी राजसूय यज्ञ गर्ने अठोट नै गरिसकेका छौ भने म अवश्य तिम्रा लागि त्यो यज्ञ गराउँला ।१८। (त्यसका लागि) तिमी सारा पृथ्वीलाई जितेर अनेक थरी रत्न लेराऊ ।

**मार्कण्डेय उवाच** ॥ मार्कण्डेय भन्नुहुन्छ-

**एक एव कलानाथो रथेनैकेन केवलम्॥१९॥**
**एकेन धनुषा चापि जित्वा च सकलां महीम् ।**
**ततः सुमरुनिकटे यज्ञशालां विधाय च॥२०॥**
**सम्भारं कारयामास नक्षत्राणामधीश्वरः ।**
**यावन्ति यज्ञपात्राणि सौवर्णानि चकार हि॥२१॥**
**अन्नानां पर्वताँश्चक्रेः सुमेरुसदृशाँस्तथा ।**
**नानाविधानां सूपानां नद्य एव विनिर्मिताः॥२२॥**
**मधुकुल्या दुग्धकुल्याः सर्पिकुल्याः विनिर्मिताः ।**
**दधिकुल्यास्तैलकुल्याः कोटिशो रचितास्तदा॥२३॥**
**आसनानि विचित्राणि राङ्कवस्तरणानि च ।**
**कम्बलानामसंख्यातं नानादेशाहृतं तथा॥२४॥**

चन्द्रमा एक्लैले केवल एउटै रथमा चढी...।१९। एउटै धनुषका भरमा सारा पृथ्वी जितेर त्यसपछि सुमेरु पर्वतका नजिकै यज्ञशाला बनाई...।२०। चन्द्रमाले सबै सामग्री जोरजाम गरे । यज्ञमा प्रयोग हुने सबै भाँडाकुँडा सुनका त बनाउन लगाए नै ।२१। अनाजको पनि सुमेरु पर्वत जत्रै थुप्रो बनाए । अनेक थरी दाल (तरकारी आदि) नदी जस्तै (छेलोखेलो) बनाए ।२२। मह, दूध र घिउ का कुला बनाइए । त्यसबेला दही र तेलका करोडौं कुला चलाइए ।२३। विचित्र किसिमका आसनी, रंक नामक मृगका रौंले बनेका वस्त्र तथा अनेक देशबाट असंख्य कम्बल..।२४। चन्द्रमाले आफ्ना बाहुबलले लेराए । जलभण्डारण र जलपान स्थल अनेक रत्न राखेर बनाइए ।२५।

आजहार तदा सोमो निजबाहुबलेन च ।
स्वापभूमिः पानभूमिर्नानारत्नैर्विनिर्मिता ॥२५॥
ततो बृहस्पतिर्दीक्षां कारयामास तं विधुम् ।
एवं महाविधे यज्ञे प्रवृत्ते सर्वदेवताः ॥२६॥
आजग्मुश्च सपत्नीका महादेवपुरोगमाः ।
हाहाहूहूप्रभृतयो गन्धर्वाः समुपागताः ॥२७॥
विद्याधराः समायाता अप्सराभिः समन्विताः ।
आयाताश्च नृपाः सर्वे सप्तद्वीपनिवासिनः ॥२८॥
आगता मुनयः सर्वे नानादेशनिवासिनः ।
वैदिकास्तार्किका ये च काव्यकोषविदस्तथा ॥२९॥
वैद्या ज्योतिर्विदश्चापि सर्व एव समागताः ।
गायका नर्तकाश्चापि वादकाश्च समागताः ॥३०॥
वाराङ्गनाः समायाता भिक्षुकाश्च तथैव च ।
दीयतां भुज्यतां चेति श्रूयते निनदो महान् ॥३१॥
शास्त्रचर्चा काव्यचर्चा वेदचर्चा तथैव च ।
पुराणानां तथा चर्चा नान्यचर्चा हि विद्यते ॥३२॥
आगतेभ्यो ददौ सोमो वाञ्छितादधिकं धनम् ।
ततो निवर्तयामास राजसूयं कलानिधिः ॥३३॥
ततोऽवभृथमारेभे नक्षत्राणामधीश्वरः ।
सौवर्णपूर्णकुम्भैश्च नानामन्त्राभिमन्त्रितैः ॥३४॥
चतुर्वेदोक्तमन्त्रैश्च जयघोषैर्मनोहरैः ।
नानावादित्रनिर्घोषैः स्नानं चक्रे कलानिधिः ॥३५॥
स्नानान्ते चन्द्रमास्तारां गुरोः पत्नीं मनोहराम् ।
वीक्ष्य कामाभिभूतोऽभूद्भाविनोऽर्थस्य गौरवात् ॥३६॥
तारा चन्द्रमसं वीक्ष्य नेत्रानन्दकरं शुभम् ।
चकमे गुरुकामा च चाञ्चल्यं स्त्रीषु सर्वदा ॥३७॥

त्यसपछि बृहस्पतिले ती चन्द्रमालाई यज्ञको दीक्षा दिए । यस्तो महाविधिले गर्न लागिएको यज्ञमा सबै देवता...।२६। ( यहाँसम्मन् कि) महादेव आदि पनि पत्नीसहित आए । हाहाहूहू आदि गन्धर्वगण पनि आए ।२७। अप्सरा सहित विद्याधरहरू पनि आए । सात वटै द्वीपमा बस्ने सबै राजाहरू पनि आए ।२८। अनेक देशमा बस्ने सबै मुनिहरू, वैदिकजन, तार्किकजन, काव्यकोषविज्ञ तथा ।२९। वैद्यहरू र ज्योतिषहरू सबैका सबै नै आए । गायक, नर्तक र बाजा बजाउनेहरू पनि आए ।३०। नगरवधूहरू तथा भिक्षुकहरू पनि सबै आए । "ए द्याओ न द्याओ र खाओ न खाओ" भनेको ठूलो आवाज (यत्रतत्र) सुन्न थालियो ।३१। (त्यहाँ सबतिर) शास्त्रचर्चा, काव्यचर्चा, वेदचर्चा तथा पुराणचर्चा बाहेक अरु केही चर्चा सुनिदैनथ्यो ।३२। चन्द्रमाले ( सबै) आगन्तुकलाई तिनले आश गरेभन्दा बढी धन दिए । यसप्रकार चन्द्रमाले राजसूय यज्ञ पूरा गरे ।३३। त्यसपछि चन्द्रमाले अनेक मन्त्रले अभिमन्त्रित सुनको जलपूर्ण घडाले यज्ञको समापन-स्नान गर्न शुरु गरे ।३४। चारै वेदका मन्त्र, कर्णप्रिय जयजकारको शब्द र अनेक थरी वाद्यवादनको स्वरले गुञ्जायमान वातावरणमा चन्द्रमाले समापन-स्नान गरे ।३५। यज्ञ समापन-स्नान सकिएपछि भविष्यको दैवी योजनाले आकर्षित हुँदै गुरुपत्नी सुन्दरी तारालाई देखेर चन्द्रमा कामाशक्त हुन पुगे ।३६। तारा पनि शुभ एवं आँखालाई आनन्द दिने चन्द्रमालाई देखेर कामवासनामा परी आकर्षित भइन् । स्त्रीमा सधैं चञ्चलता हुन्छ नै ।३७।



मार्कण्डेय उवाच ॥ मार्कण्डेय भन्नुहुन्छ-

ततो जग्राह तां तारां गुरोरग्रे कलानिधिः ।
स्वाग्रे गृहीतां रमणीं वीक्ष्य प्राह गुरुस्तदा ॥३८॥

त्यसपछि गुरुका अगिल्तिरै चन्द्रमाले तारालाई समाते । आफ्नै अगिल्तिर समातिएकी (पत्नी) तारालाई देखेर बृहस्पतिले भने ।३८।

बृहस्पतिरुवाच ॥ बृहस्पति भन्दछन्-

राजसूयक्रतुं कृत्वा गुरुपत्न्या विशेषतः ।
हरणे रजनीनाथ न ते धर्मभयं कथम् ॥३९॥
लज्जामपि परित्यज्य देवब्राह्मणसन्निधौ ।

हे चन्द्रमा ! राजसूय (जस्तो ठूलो)) यज्ञ गरेर (पनि) गुरुपत्नी हरण गर्न तिमीलाई किन धर्मको डर भएन ? ।३९। हे चन्द्र ! लाजशरम छोडेर (यत्रा) देवता र ब्राह्मणका सामु तिमी (किन) यस्तो गरिरहेछौ ।

मार्कण्डेय उवाच ॥ मार्कण्डेय भन्नुहुन्छ-

तेन धर्मविधैर्वाक्यैर्वारितोऽपि कलानिधिः ॥४०॥
अन्तःपुरं विवेशाथ तारया वरहारया ।
हाहाकारो महानासीत् त्रिष्टपनिवासिनाम् ॥४१॥

यस्ता धर्मका कुराले तिनले सम्झाउँदा सम्झाउँदै (पनि) चन्द्रमा...।४०। मोतिका माला लगाएकी तारालाई लिएर अन्तपुरमा छिरे । त्यसपछि स्वर्गका निवासीहरुमा ठूलो

रेमे तया कलानाथः कामशास्त्रविशारदः ।
जीवोऽपि दुःखसन्तप्तः सुरनाथं जगाद हि ॥४२॥

हाहाकार मच्चियो ।४१। यसरी कामशास्त्रमा निपुण चन्द्रमाले तारासँग रमण गरी छाडे । त्यसपछि अति दुखित बृहस्पतिले इन्द्रलाई भने ।४२।

**बृहस्पतिरुवाच ॥ बृहस्पति भन्दछन्-**

देवेन्द्र सर्वदेवस्य नियन्ताऽसि भवान् यतः ।
पुरोहितस्य विप्रस्य भवदग्रे विशेषतः ॥४३॥
चन्द्रेण ह्रियते पत्नी किं वदामि तवाग्रतः ।
त्रिविष्टपस्य रक्षार्थमिन्द्रत्वे स्थापितो भवान् ॥४४॥
ब्रह्मणा लोकगुरुणा सर्वप्राणिनमस्कृतः ।
बलिभिः पीड्यमानस्य राजा षष्ठांशमाहरन् ॥४५॥
यदि रक्षां न कुरुते रौरवं नरकं व्रजेत् ।
पुत्रे भ्रातरि चामात्ये निर्धने पुक्कसेऽथ वा ॥४६॥
समं च कुरुते न्यायं स राजा स्वर्गमाप्नुयात् ।
प्रजानां रक्षणाद्राजा प्रजानां रक्षणे यदि ॥४७॥
नाद्योगं कुरुते मोहान्मात्सर्ये यः प्रवर्तते ।
तस्य राज्ञो राज्यभ्रंशो भवत्येव न संशयः ॥४८॥

हे इन्द ! हजुर सबै देवताका नियन्त्रक हुनुहुन्छ (र पनि) म ब्राह्मण पुरोहितकी पत्नी हजुरकै अगाडि ...।४३। चन्द्रमाबाट हरण गरिएकी छिन् । यहाँभन्दा बढी म के भनौ ? स्वर्गको रक्षाका लागि नै हामीले हजूरलाई राजा बनाएका थियौं (होइन र ) ।४४। जगत्का गुरु ब्रह्मा तथा सबै प्राणिबाट नमस्कार गरिएका एवं छैटौं भाग (कर) पाउने राजा बलियाबाट पीडित (निर्धा) हरूको...।४५। यदि रक्षा गर्दैन भने त्यो (राजा) रौरव नरकमा जान्छ । छोरो, दाजुभाई, मन्त्री, निर्धन र अधम (का बीचमा)...।४६। समान न्यायको व्यवहार गर्ने राजा स्वर्ग जान्छ । प्रजाको रक्षा गर्ने हुनाले उसलाई “राजा” भनिन्छ । यदि प्रजाको रक्षा गर्नमा...।४७। मोहमा परी प्रयाश गर्दैन र मात्सर्यता देखाउँदछ भने त्यो राजा निसन्देह नष्ट हुन्छ ।४८।

**मार्कण्डेय उवाच ॥ मार्कण्डेय भन्नुहुन्छ-**

इति नानाविधैर्वाक्यैर्बोधितो गुरुणा तदा ।
तूष्णीमासीद्वज्रपाणिश्चन्द्रविक्रमभीतितः ॥४९॥
न सूर्यो वरुणो नैव न वायुर्बलिनां वरः ।
न कुबेरो न वा वह्निरुत्तस्थौ चन्द्रभीतितः ॥५०॥
न देवा न च गन्धर्वा न यक्षा नासुरास्तथा ।
न राजानः समुत्तस्थुश्चन्द्रतेजोऽतिविस्मिताः ॥५१॥
चन्द्रविक्रमभीतौँस्तु सदेवासुरमानुषान् ।
वीक्ष्य तस्थौ महादेवो वचनं च जगाद ह ॥५२॥



यसरी बृहस्पतिले अनेक तरहले सचेत र सजग गराउँदा पनि इन्द्र चन्द्रमाको डरले (केही नबोली) चूपचाप बसे ।४९। न सूर्य न त वरुण, न बलियाभन्दा पनि बलिया वायु न त कुबेर तथा न अग्निले नै चन्द्रमाको डरले गर्दा (चुइँक्क) एक शब्द बोले ।५०। न (कुनै) देवता न त गन्धर्व, न यक्ष न असुर, न त कुनै राजा (त्यहाँ) उपस्थित (कसैले पनि) चन्द्रमाको तेजको डरले केही बोले ।५१। (तब) चन्द्रमाबाट भयभीत भइरहेका देवता, असुर र मानिसलाई देखेर त्यहाँ रहनुभएका महादेवले यसो भन्न लाग्नु भयो ।५२।

**श्रीमहादेव उवाच ॥ श्रीमहादेव भन्नुहुन्छ-**

इमां देवसभां धिग्धिग्देवानां विक्रमं च धिक् ।
अनादृत्य सुरान् सर्वान् तथा दानवभूमिपान् ॥५३॥
मां च विष्णुमनादृत्य विधुना दुष्टबुद्धिना ।
धर्मपत्नी ब्राह्मणस्य गुरोश्चैव विशेषतः ॥५४॥
राजसूयक्रतुं कृत्वा ह्रियते ज्ञानलाघवात् ।
अहं पिनाकमादाय कृत्त्वा चन्द्रमसं रणे ॥५५॥
करिष्यामि क्षणेनैव गुरोरश्रुप्रमार्जनम् ।

यो देवसभा, यि देवता अनि यिनको पराक्रमलाई पनि धिक्कार छ । (यहाँ उपस्थित) सबै देवता, दानव र राजाको अनादर गरी...।५३। (यहाँसम्मकी) मेरो र विष्णुको (समेत) अनादर गरी दुष्टबुद्धि भएको चन्द्रमाले (यि) ब्राह्मण गुरुकी धर्मपत्नीलाई...।५४। राजसूय यज्ञको थोरै ज्ञान भएका कारण हरण गरेको छ । म पिनाक धनुष बोकी चन्द्रमासँग युद्ध गरी ( यसलाई दण्ड दिएर).।५५। एकछिनमै गुरुको आँशु पुछि दिन्छु ।

**मार्कण्डेय उवाच ॥ मार्कण्डेय भन्नुहुन्छ-**

इत्युक्त्वा गिरिजानाथो धृत्वा दिव्यं महद्धनुः ॥५६॥
उत्तस्थौ सगणः कोपात् त्रिलोकीं निर्दहन्निव ।
पिनाकपाणिमायान्तं युद्धाय रजनीकरः ॥५७॥

श्रीशिव यसो भन्दै दिव्य एवं विशाल धनुष उचालेर...।५६। आफ्ना गणसहित रिसले तिन वटै लोकलाई भष्म पारौंला झैं गरी उठ्नु भयो । (उता) चन्द्रमा (पनि) महादेव युद्ध गर्न

श्रुत्वा रथं समारुह्य निर्ययौ भवनात् ततः ।
ततश्चकम्पे वसुधा चेलुः सर्वे महीधराः ॥५८॥
ववौ च परुषो वायुः पेतुरुल्काः सहस्रशः ।
दिशः सतिमिरा मेघा ववर्षू रुधिरं बहु ॥५९॥
हाहाकारो महानासीत् त्रिविष्टपनिवासिनाम् ।
ततः समभवद्युद्धं चन्द्रशङ्करयोस्तदा ॥६०॥
बाणान्धकारसञ्छन्नं जगदासीत् समाकुलम् ।
पश्यतां सर्वदेवानां निजवीर्यं प्रदर्शयन् ॥६१॥
युयुधे चन्द्रमा विप्र शङ्करेण समं तदा ।
छादयामास विशिखैः शङ्करं बलदर्पितः ॥६२॥
ततोऽतिक्रुद्धो भगवान् पार्वतीप्राणवल्लभः ।
शरैर्विध्वंसयामास चन्द्रमुक्ताञ्छराँस्तथा ॥६३॥
आग्नेयास्त्रं प्रयुयुजे चन्द्रं हन्तुं महेश्वरः ।
आग्नेयास्त्रं समालोक्य पर्जन्यं ससृजे विधुः ॥६४॥
आग्नेयास्त्रं समालोक्य शान्तं देवो महेश्वरः ।
रजनीशविनाशाय पर्वतास्त्रं समाददे ॥६५॥
पर्वतास्त्रं समायान्तं वीक्ष्य चन्द्रो महाबलः ।
पर्वतास्त्रविनाशाय वायव्यास्त्रं हि सन्दधे ॥६६॥
ततस्तु गिरिजानाथो विनाशाय कलानिधेः ।
नागास्त्रं सन्दधे घोरं ज्वालामालातिभीषणम् ॥६७॥
नागास्त्रमागतं वीक्ष्य लेलिहानमिवान्तकम् ।
क्षपाकरः क्षणादेव गरुडास्त्रं स सृष्टिवान् ॥६८॥
ततो गौरीपतिः शीघ्रं रौद्रास्त्रेण कलानिधिम् ।
बबन्ध पश्यतां तत्र सासुरोरगरक्षसाम् ॥६९॥

आएको...।५७। सुनेपछि रथमा चढेर भवनबाट बाहिर निस्किए । त्यसबेला सारा पृथ्वी काम्यो, सबै पर्वत हल्लिए ।५८। दुःखदायी हावा बहन लाग्यो । हजारौं उल्का-वर्षा भयो । सबै दिशा अन्धकारमय भयो । बादल मुसलधारे रगत वर्षा गर्न थाल्यो ।५९। स्वर्ग बस्नेहरुका बीचमा ठूलो हाहाकार मच्चियो । त्यसपछि चन्द्रमा र शिवका बीचमा युद्ध शुरु भयो ।६०। बाणको वर्षाका कारणले संसार अन्धकारमय हुन पुग्यो । सबै आकुलब्याकुल हुन गए । सबै देवतालाई आफ्नो पराक्रम देखाउँदै...।६१। हे विप्र ! चन्द्रमाले श्रीशिवसँग युद्ध गरे । बलको घमण्डी चन्द्रमाले भगवान् शिवलाई बाण हानेर (छपक्क) छोपी दिए ।६२। त्यसपछि रिसले मुरमुरिँदै भगवान् शिवले उसका बाणलाई ( आफ्ना) बाणले (काटेर) नष्ट गरिदिनु भयो ।६३। श्रीशिवले चन्द्रमालाई मार्न भनी आग्नेयास्त्र हान्नु भयो (सन्धान गर्नु भयो)। आग्नेयास्त्र आएको देखी चन्द्रमाले पर्जन्यास्त्र हाने ।६४। आग्नेयास्त्र शान्त भएको (खेर गएको) देखी भगवान् शिवले चन्द्रमालाई नाश गर्न भनी पर्वतास्त्र प्रहार गर्नु भयो ।६५। महाबलिया चन्द्रमाले पर्वतास्त्र (आफूतिर) आइरहेको देखी ( त्यो) पर्वतास्त्र नष्ट गर्न वायव्यास्त्र प्रहार गरे ।६६। त्यसपछि श्रीशिवले चन्द्रमालाई नाश गर्न मालाकाररूपमा ज्वाला निस्किरहेको अति भयानक नागास्त्र प्रहार गर्नु भयो ।६७। दन्किएर आइरहेको नागास्त्र देखी चन्द्रमाले तुरुन्त गरुडास्त्र प्रहार गरे ।६८। त्यसपछि गौरीपतिले देवता, असुर र सर्पले हेदाहेर्दै तुरुन्त रौद्रास्त्र हानी चन्द्रमालाई बाँधि दिनु भयो ।६९।



**मार्कण्डेय उवाच ॥ मार्कण्डेय (अगाडि) भन्नुहुन्छ-**

विकलं विधुमालोक्य खड्गेन गिरिजापतिः ।
शिरश्छेत्तुं समारेभि हाहाकारो महानभूत् ॥७०॥
ततो निवारयामास सर्वलोकपितामहः ।

चिन्तित एवं असमर्थ चन्द्रमालाई देखी श्रीशिवले खड्गले उनको टाउको काट्न आँट्नु भयो । अनि त ठूलो हाहाकार भयो ।७०। त्यसपछि सबै लोकका पिता ब्रह्माले (तुरुन्त) आएर ( श्रीशिवलाई) भन्नु भयो ।

**ब्रह्मोवाच ॥ ब्रह्मा भन्नुहुन्छ-**

न हन्तव्यो न हन्तव्यो द्विजराजो महेश्वर ॥७१॥
त्यज्यतां गिरिजानाथ कोपं संकर शङ्कर ।

हे महेश्वर ! नमार्नु होस्, चन्द्रमालाई नमार्नु होस् ।७१। हे शङ्कर ! हजुर आफ्नो रिसलाई त्याग्नु होस् ।

**मार्कण्डेय उवाच ॥ मार्कण्डेय भन्नुहुन्छ-**

पितामहवचः श्रुत्वा निजगाद महेश्वरः ॥७२॥

ब्रह्माका कुरा सुनी महादेव भन्न लाग्नु भयो ।७२।

**महादेव उवाच ॥ महादेव भन्नुहुन्छ-**

ददातु गुरवे तारां त्यज्यते रजनीकरः ।
नो चेन्निहन्मि रजनीनाथं दुष्टं तवाग्रतः ॥७३॥

(यो) चन्द्रमाले गुरुलाई (उनकी पत्नी) तारा बुझाओस् नत्र म हजुरकै सामुन्ने यो दुष्ट चन्द्रमालाई मारिदिन्छु ।७३।

**मार्कण्डेय उवाच॥** मार्कण्डेय भन्नुहुन्छ-

**इति शम्भुवचः श्रुत्वा ब्रह्मा प्रोवाच शङ्करम्।**

श्रीशिवका यस्ता कुरा सुनेपछि श्रीशिवलाई ब्रह्मा भन्न लाग्नु भयो ।

**ब्रह्मोवाच॥** ब्रह्मा भन्नुहुन्छ-

**तारां दास्यति जीवाय मुच्यतामेष चन्द्रमाः ॥७४॥**

बृहस्पतिलाई तारा दिइनेछ, हजूर चन्द्रमालाई मुक्त गरि दिनु होस् ।७४।

**मार्कण्डेय उवाच॥** मार्कण्डेय भन्नुहुन्छ-

**ततो मुमोच भगवान् शङ्करो रजनीकरम्।**
**चन्द्रमा लज्जितो भूत्वा तस्थौ शङ्करपाददृक्॥७५॥**

त्यसपछि श्रीशिवले चन्द्रमालाई मुक्त गरीदिनु भयो । चन्द्रमा लज्जित हुँदै श्रीशिवका चरणतिर हेर्दै उभिइ रहे ।७५।

**इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये त्रयोदशोऽध्यायः ॥१३॥**

श्रीस्कन्दपुराण, हिमवत्खण्ड, नेपालमाहात्म्यमा चन्द्रमा र बृहस्पतिकी पत्नी ताराको प्रसङ्ग एवं शिव-चन्द्रमा युद्धका बारेमा बताइएको तेह्रौं अध्याय समाप्त भएको छ ।१३।

**श्लोकानामादितः समष्ट्यङ्काः-९२६+७५=१,००१**

शुरुदेखिको श्लोक सङ्ख्या :-९२६+७५=१,००१

## ॥ अथ चतुर्दशोऽध्यायः ॥
॥ चौधौं अध्याय ॥

**मार्कण्डेय उवाच** ॥ मार्कण्डेय भन्नुहुन्छ-

**ततः सुरसभा जाता सासुरोरगभूमिपा ।**
**महाविह्वलतां प्राप्ता यथा चित्रार्पिता सभा ॥१॥**
**तारां समानयामास चन्द्रमा हरभीतितः ।**
**युयुधे चन्द्रमा यावत् शङ्करेण महात्मना ॥२॥**
**तावत् प्रासूत तनयमौरस हिमदीधितेः ।**
**ततः समागता तारा सपुत्रा चन्द्रगेहतः ॥३॥**
**तां वीक्ष्य विस्मितास्तस्थुर्देवताः सकलास्तदा ।**
**ततः प्रोवाच तां तारां सर्वलोकपितामहः ॥४॥**

त्यसपछि असुर, सर्प, (पृथ्वीका) राजा आदि सहितको देवताको सभा बस्यो । त्यो सभा (कुनै) चित्रमा भएको सभाजस्तै एकदम निस्तब्ध थियो ।१। त्यस सभामा श्रीशिवका डरले चन्द्रमाले तारालाई लिएर आए । चन्द्रमा शङ्कर भगवान्सँग लड्दै गर्दा ...।२। चन्द्रमाका तेजले औरस पुत्र जन्मि सकेका थिए । त्यो सभामा तारा चन्द्रमाका घरबाट पुत्रसहित (छोरो लिएर बाहिर) आइन् ।३। तारालाई पुत्रसहित आएको देखेर सबै देवता ( त्यसबेला) अचम्ममा परेका थिए । अनि ब्रह्माले तारालाई सोध्नु भयो ।४।

**ब्रह्मोवाच** ॥ ब्रह्मा भन्नुहुन्छ-

**अयं कस्य सुतस्तारे गुरोश्चन्द्रस्य वा पुनः ।**

यो कस्को छोरा हो तारा ? बृहस्पतिको कि चन्द्रमाको ?

**मार्कण्डेय उवाच** ॥ मार्कण्डेय भन्नुहुन्छ-

**श्रुत्वा ब्रह्मवचस्तारा नोवाच किल लज्जया ॥५॥**
**एककालं तदा चक्रुरट्टहासं सुरा मुहुः ।**
**देवानामट्टहासेन तारापुत्रो हि लज्जितः ॥६॥**
**भूत्वा जगाद जननीं देवानां पश्यतां तदा ।**
**मातस्तांतं कथय मे नो चेत् प्राणाँस्त्यजाम्यहम् ॥७॥**
**हसन्ति देवताः सर्वा मां वीक्ष्य पुरतस्तव ।**
**ततः प्रोवाच सा तारा पुत्रमुच्चस्वरेण हि ॥८॥**
**क्षेत्रे गुरोश्चन्द्रमसो जातोऽसि तनय ध्रुवम् ।**
**प्राह वाक्यं विधिर्जीवं श्रुत्वा तारावचस्तदा ॥९॥**



ब्रह्माका कुरा सुनेर (पनि) तारा लाजले केही बोलिनन् ।५। अनि सबै देवता खिसी गर्दै एकैपटक (गलल) हाँसे । देवता खिसी गर्दै हाँसेकोमा ताराका छोरा पनि लजाए ।६। अनि देवताका अगिल्तिरै तिनले आफ्नी आमालाई भन्न लागे-"हे माता ! मेरा पिता को हुन् बताउनु होस्, नत्र म प्राण त्यागि दिन्छु ।७। सबै देवता हजुरका अगिल्तिर नै मलाई देहेर हाँसिरहेका छन्" । त्यसपछि ताराले छोरालाई ठूलो स्वर गरेर भनिन् ।८। "हे छोरा तिमी गुरुका क्षेत्रमा चन्द्रमाबाट जन्मिएका हौ" । ताराका कुरा सुनेपछि ब्रह्माले बृहस्पतिलाई भन्नु भयो...।९।

**ब्रह्मोवाच** ॥ ब्रह्मा भन्नुहुन्छ-

**गृह्यतां सुभगा तारा पुत्रश्चन्द्राय दीयताम् ।**

तारालाई तिमी लैजाउ अनि छोरो चन्द्रमालाई दिइयोस् ।

**मार्कण्डेय उवाच** ॥ मार्कण्डेय भन्नुहुन्छ-

**श्रुत्वा भगवतो वाक्यं जीवः प्राह पितामहम् ॥१०॥**

ब्रह्माका कुरा सुनी बृहस्पति उहाँलाई भन्न लागे ।१०।

**जीव उवाच** ॥ बृहस्पति भन्दछन्-

**ब्रह्मन् पुत्रो मदीयोऽयं न चन्द्रस्य कदाचन ।**
**दीयतां पुत्रसहिता तारा मह्यं पितामह ॥११॥**

हे ब्रह्मन् ! यो छोरो मेरो हो, कुनै हालतमा पनि चन्द्रमाको होइन । हे पितामह ! छोरोसहित तारा मलाई दिइयोस् ।११।

**मार्कण्डेय उवाच** ॥ मार्कण्डेय भन्नुहुन्छ-

**ततो विधुर्जीववचः श्रुत्वा प्राह पितामहम् ।**

(फेरी) बृहस्पतिका कुरा सुनेर चन्द्रमा (पनि) ब्रह्मालाई भन्न लागे ।

**चन्द्रमा उवाच ॥** चन्द्रमा भन्दछन्–

**पितामह मदीयोऽयं पुत्रो जीवस्य नैव हि ॥१२॥**

हे पितामह ! यो छोरो मेरो हो, कुनै पनि हालतमा बृहस्पतिको होइन ।१२।

**मार्कण्डेय उवाच ॥** मार्कण्डेय भन्नुहुन्छ–

**विधोर्वचनमाकर्ण्य पुनः प्राह पितामहः ।**

चन्द्रमाका कुरा सुनी फेरी ब्रह्मा भन्न लाग्नु भयो ।

**ब्रह्मोवाच ॥** ब्रह्मा भन्नुहुन्छ–

**विवादो नैव कर्तव्यश्चन्द्रेण गुरुणाऽपि च ॥१३॥**
**पुत्रपृष्ठा हि यत् तारा प्राह सत्यं तदेव हि ।**
**आहर्ता राजसूयस्य दुःखं प्राप्नोति निश्चितम् ॥१४॥**
**अतोऽत्र विधिना लब्धमायासाद्दुःखमेव च ।**
**बुधवद्भाषितं यस्माद्बालकेन सुराग्रतः ॥१५॥**
**अतोऽयं बुधनामाऽस्तु ममाज्ञातो महेश्वर ।**

यसमा चन्द्रमा र बृहस्पति (तिमीहरू दुबै जना) विवाद नगर ।१३। छोराले सोद्धा ताराले सत्य कुरा त्यतिबेला नै बताइ सकिन् । राजसूय यज्ञ गर्नेले दुःख पाउँदछ भन्ने कुरा साँचो हो ।१४। यहाँ (यतिखेर) यो विधिबाट पाइएको दुःख हो, भोग्नु नै पर्दछ । (अनि) देवताका अगाडि विद्वानले जसरी (यो) बालकले बोलेको हुनाले...।१५। हे महेश्वर ! मेरो आज्ञाले यसको नाम "बुध" हुनेछ ।



**मार्कण्डेय उवाच ॥** मार्कण्डेय भन्नुहुन्छ–

**ततो जग्राह स गुरुस्तारां कमललोचनाम् ॥१६॥**
**पुत्रं जग्राह हिमगुरौरसं तनयं तदा ।**
**ततः प्राह सभामध्ये गिरिजाप्राणवल्लभः ॥१७॥**

त्यसपछि बृहस्पतिले कमलनयन तारालाई र...।१६। औरस छोरालाई चन्द्रमाले लिए । यसपछि शिवले त्यो सभामा भन्नु भयो ।१७।

**महादेव उवाच ॥** महादेव भन्नुहुन्छ–

**गुरुपत्नी हृता तेन विधुना दुष्टबुद्धिना ।**
**महापातकसंयुक्तः क्रतुभोगविवर्जितः ॥१८॥**
**यक्ष्मणा क्षीणतामेतु सर्वदेवबहिष्कृतः ।**

(यो) दुष्ट चन्द्रमाले गुरुपत्नी हरण गरेको हुनाले महापापले ग्रस्त भई यज्ञ भाग समेत नपाई...।१८। क्षयरोगले पीडित भई दुब्लाउनेछ र सबै देवताबाट बहिष्कृत हुनेछ ।

**मार्कण्डेय उवाच ॥** मार्कण्डेय भन्नुहुन्छ–

**इत्युक्त्वा प्रययौ शीघ्रं कैलाशं गिरिजापतिः ॥१९॥**
**स्वानि स्थानानि ते जग्मुः देवाः शक्रपुरोगमाः ।**
**भूपाश्च मुनयः सर्वे स्वस्वस्थानं प्रपेदिरे ॥२०॥**
**ततः परं शीतकरो महापातकसंयुतः ।**
**अभिभूतो यक्ष्मणा च लेभे शर्म न कुत्रचित् ॥२१॥**
**ततः शरीरशुद्ध्यर्थं तीर्थं बभ्राम चन्द्रमाः ।**
**प्राच्युदीचीपश्चिमासु यानि तीर्थानि जैमिने ॥२२॥**
**तानि भ्रमन् शीतकरः पातकं न जहौ पुनः ।**

यति भन्दै शिव तुरुन्त कैलाश हिँड्नु भयो ।१९। इन्द्रादि देवताहरू पनि आआफ्ना लोकतिर गए । राजा तथा मुनिहरू पनि आआफ्ना स्थानतिर लागे ।२०। त्यसपछि महापापले युक्त भई चन्द्रमा क्षयरोगी भए, कतै शान्ति पाउन सकेनन् ।२१। अनि शरीर शुद्ध पार्न भनी चन्द्रमा तीर्थहरु घुम्न लागे । हे जैमिनि ! पूर्व, उत्तर र पश्चिमतिर जेजति तीर्थहरू छन्...।२२। ती सबै घुमेर पनि चन्द्रमाको पाप पखालिएन । अनि उनी सुन्दर दक्षिण दिशातिर लागे ।२३। उनले त्यतातिरका पनि अनेक र विविध

ततो जगाम हिमगुर्दक्षिणाशां मनोहराम्॥२३॥
तत्र भ्रान्त्या त्वनेकानि तीर्थानि विविधानि च ।
अगस्त्यास्याश्रमं रम्यं जगाम शशलाञ्छनः॥२४॥
लोपामुद्रापतिर्वीक्ष्य चन्द्रमाश्रममागतम् ।
महापातकिनं दृष्ट्वा निषीदेति वचोऽब्रवीत् ॥२५॥
उपविष्टस्ततस्तस्य वाक्यान्ते शशलाञ्छनः ।
प्रोवाच दण्डवद्भूमो लोपामुद्रापतिं तदा ॥२६॥

किसिमका तीर्थहरू घुमे । (घुम्दै) चन्द्रमा अगस्त्य मुनिको रमणीय आश्रममा पुगे ।२४। महापातकी चन्द्रमालाई आफ्नो आश्रममा आएको देखेर अगस्त्य मुनिले “बस” भन्नुभयो ।२५। आज्ञा पाएपछि चन्द्रमा बसे र दण्डबत् प्रणाम गर्दै अगस्त्य मुनिसँग भन्न लागे ।२६।

चन्द्रमा उवाच॥ चन्द्रमा भन्दछन्-

हृता भार्या गुरोर्मोहान्मया वै मन्दबुद्धिना ।
तेन पातकिनो विप्र न सुखं विद्यते मम ॥२७॥
भ्रान्तानि सर्वतीर्थानि क्षेत्राण्युपवनानि च ।
पुर्यः सप्त मया दृष्टा उषित्वाऽस्मि व्रतं चरन्॥२८॥
तथाऽपि नो मुने जाता मम पापस्य निष्कृतिः ।
कथयासु महाभाग येन मे निष्कृतिर्भवेत्॥२९॥

मन्दबुद्धि भएको मैले मोहमा परी गुरुकी पत्नी हरण गरें, हे ब्राह्मण ! त्यही पापले मलाई सुखचैन भइरहेको छैन ।२७। सबै तीर्थ, क्षेत्र र उपवन घुमे, व्रत उपवास बसी सातै पुरीको दर्शन गरें...।२८। तै पनि हे मुनि ! म पापबाट मुक्त हुन सकिन, हे महाभाग्यवान् ! हजुर मलाई पापबाट छुटकारा पाउने उपाय बताउनु होस् ।२९।

मार्कण्डेय उवाच॥ मार्कण्डेय भन्नुहुन्छ-

इति चन्द्रवचः श्रुत्वाऽगस्त्यः प्राह ततस्तु तम् ।

चन्द्रमाका कुरा सुनी अगस्त्यले उनलाई यसो भन्नुभयो ।

अगस्त्य उवाच॥ अगस्त्य भन्नुहुन्छ-



द्विजराज त्वया यस्मात् पशुवन्मूढचेतमा॥३०॥
भार्या हृत्वा गुरोश्चैव पशुकार्यं कृतं ध्रुवम् ।
तस्मात् पशुपतिं देवं गत्वा श्लेष्मान्तकं वनम्॥३१॥
आराधय महाभाग ततः शुद्धो भविष्यसि ।
मयाऽपि काशी संत्यक्ता विन्ध्यपर्वतकारणात्॥३२॥
ततः प्रभृति भो चन्द्र लभ्यते न मया सुखम् ।
अतो मयाऽपि गन्तव्यं श्लेष्मान्तकवनं सह॥३३॥

हे इन्द्र ! तिमीले पशुले जस्तै मुढेबुद्धि गरेर..।३०। गुरुकी पत्नी हरण गरी पशुकर्म गरेका छौ, त्यसैले श्लेष्मान्तक वनमा रहेका पशुपतिनाथमा गई...।३१। हे महाभाग ! उहाँको आराधना गर, अनि शुद्ध हुनेछौ । विन्ध्यपर्वतका कारण काशी छोडेर मैले पनि...।३२। त्यसपछि हे चन्द्र ! मैले पनि आजसम्म कहिल्यै सुख पाइन । त्यसैले म पनि तिमीसँगै श्लेष्मान्तक वनमा जान्छु ।३३।

मार्कण्डेय उवाच॥ मार्कण्डेय भन्नुहुन्छ-

इति तस्य वचः श्रुत्वा चन्द्रमाः प्राह तं मुनिम् ।
मम भाग्योदयो जातो भवता यदि गम्यते॥३४॥
उत्तिष्ठ मुनिशार्दूल गमनं रचय प्रभो ।
ततः श्लेष्मान्तकवनं सोऽगस्त्यश्चन्द्रसंयुतः॥३५॥
ययावाकाशमार्गेण द्वितीय इव भास्करः ।
श्लेष्मान्तकवनं क्षेत्रं दृष्ट्वा परमदुर्लभम्॥३६॥
मुदमाप तदाऽऽगस्त्यश्चन्द्रमः सहितो मुनिः ।
वाग्वत्याः पयसि स्नात्वा दृष्ट्वा देवीं तु वत्सलाम्॥३७॥
दक्षिणद्वारि संतस्थौ दृष्ट्वा पशुपतीश्वरम् ।
ततश्चन्द्रः समालेभे तपस्यामतिदारुणाम्॥३८॥
शङ्खमूले महारम्ये आश्रमे कुम्भसम्भवे ।
विधाय तस्थिवाँस्तत्र यावच्चन्द्रो विशुद्ध्यति॥३९॥

उनका यस्ता कुरा सुनेपछि चन्द्रमाले ती मुनिलाई “हजुर सँगै जानु हुन्छ भने ता त्यो मेरो अहोभाग्य हो” ... ।३४। “हे मुनिश्रेष्ठ प्रभू ! उठौं, जाने तयारी गरौं” भने । त्यसपछि अगस्त्य मुनि चन्द्रमासहित भई श्लेष्मान्तक वनमा..।३५। दोश्रो सूर्यसमान (हुँदै) आकाशको बाटो हुँदै गए । (त्यहाँ पुगी) परम दुर्लभ श्लेष्मान्तक वनक्षेत्रलाई देखेर...।३६। चन्द्रमा सहित अगस्त्य मुनि प्रसन्न भए । (अनि) बाग्मतीका जलमा नुहाएर वत्सलादेवीको दर्शन गरी...।३७। पशुपतिनाथको दर्शन गरेर दक्षिण ढोका (दक्षिण दिशा) तिर बसे । त्यसपछि (त्यहाँ बसेर) चन्द्रमाले अति कठोर तपस्या गरे ।३८। अतिरमणीय शङ्खमूलमा रहेको अगस्त्य आश्रममा रहेर चन्द्रमा (पापबाट) शुद्ध नभइञ्जेलसम्म तपस्या गर्न लागे ।३९।

**मार्कण्डेय उवाच** ॥ मार्कण्डेय (पुनः) भन्नुहुन्छ-

**ततोऽतिभक्तिश्चित्तं विषयेभ्यो नियम्य च ।**
**निराहारो विधुर्दध्यौ वाग्मतीपश्चिमे तटे ॥४०॥**
**नैश्चल्यं स्थाणुवत् प्राप्तं शीतवातादिपीडितम् ।**
**वीक्ष्य प्रसन्नो भगवाँस्तदा पशुपतीश्वरः ॥४१॥**
**तुष्टः पशुपतिः प्राह सव्यं चन्द्रमसं प्रभुः ।**

त्यसपछि अति भक्तियुक्त मन गरी, विषयवासनाबाट पर रही, निराहार बसी, बाग्मतीको पश्चिम किनारामा चन्द्रमाले...।४०। रुखजस्तो हलचल नगरी, जाडोगर्मीको पीडा सहँदै गरिरहेको ( इन्द्रको) तपस्याबाट भगवान् पशुपतिनाथ प्रसन्न एवं...।४१। सन्तुष्ट भई स्वयं (आई) चन्द्रमालाई भन्न थाल्नु भयो ।

**श्रीपशुपतिरुवाच** ॥ श्रीपशुपतिनाथ भन्नुहुन्छ-

**सन्तुष्टोऽहं हिमकर संप्रार्थय मनोगतम् ॥४२॥**
**अदेयमपि दास्यामि वरं तुभ्यं न संशयः ।**

चन्द्रमा ! (तिम्रो तपस्याले) म प्रसन्न भएँ मनले चिताएको कुरा माग ।४२। नदिन योग्य वरदान पनि निःसन्देह म तिमीलाई दिनेछु ।

**मार्कण्डेय उवाच** ॥ मार्कण्डेय भन्नुहुन्छ-

**उन्मील्य चक्षुषी चन्द्रो दृष्ट्वा पशुपतिं प्रभुम् ॥४३॥**
**प्रणम्य दण्डवद्भूमाविदं वचनमब्रवीत् ।**

दुबै आँखा खोलेर हेर्दा चन्द्रमाले प्रभू पशुपतिनाथलाई देखेपछि...।४३। जमिनमा दण्डवत् प्रणाम गर्दै यसो भन्न लागे ।

**चन्द्रमा उवाच** ॥ चन्द्रमा भन्दछन्-



**यदि तुष्टोऽसि मे नाथ प्रार्थयेऽहं वरद्वयम् ॥४४॥**
**एकपापात् प्रमुच्येऽहं श्रीशम्भो गुरुतल्पगात् ।**
**अपरं क्षेत्रमाहात्म्यं स्वपूजासहितं वद ॥४५॥**

**इति चन्द्रमसो वाक्यं श्रुत्वा शम्भुर्वचोऽब्रवीत् ।**
**मद्दर्शनेन हिमगो शुद्धो जातोऽसि सर्वथा ॥४६॥**
**तथाऽपि चन्द्र मत्क्षेत्रे मल्लिङ्गं स्थापय स्वयम् ।**
**महापातकसंयुक्तो मानवो दैवयोगतः ॥४७॥**
**वाग्वत्याः पयसि स्नात्वा वत्सलां मां विलोक्य च ।**
**मुच्यते सर्वपापेभ्यो नात्र कार्या विचारणा ॥४८॥**
**मम दक्षिणभागे तु यस्तु प्राणान् परित्यजेत् ।**
**प्रभावादस्य क्षेत्रस्य नरकं नाभिगच्छति ॥४९॥**
**मम पूर्वेण भागेन वाग्वत्याः सलिले शुभे ।**
**स्नायते सततं यस्तु तस्य पुण्यं महद्भवेत् ॥५०॥**
**मम शूलसमुद्भूस्तं प्रावृट्समयनिःसृतम् ।**
**तीर्थं मृगोदकं नाम पुण्यकृद्भिः प्रदृश्यते ॥५१॥**
**मृगोदकोद्भवे तीर्थे वाग्वत्याः पश्चिमे तटे ।**
**जन्मान्तरकृतैः पापैर्मुच्यते नात्र संशयः ॥५२॥**
**अत्र बदरिका नाम वाग्वत्याः पूर्वके तटे ।**
**तत्रापि स्नानमात्रेण पार्वती परितुष्यति ॥५३॥**

हे नाथ ! यदि हजूर प्रसन्न हुनुहुन्छ भने म दुईवटा वरदान माग्दछु ।४४। एउटा वरदार यो दिनु होस् कि म गुरुपत्न गमनको पापबाट मुक्त होउँ । अर्को वरदानमा हजुर आफ्नो पूजासहितको यस क्षेत्रको माहात्म्य मलाई बताउनु होस् ।४५। चन्द्रमाका यस्ता कुरा सुनी शिव भगवान्ले भन्न लाग्नु भयो-"मेरो दर्शनले तिमी पूर्णरूपमा शुद्ध भएका छौ ।४६। तै पनि हे चन्द्र ! मेरो (यस) क्षेत्रमा मेरो लिङ्ग (तिमी) आफैंले स्थापना गर । दैवसंयोगले महापापी मानिस पनि...।४७। बाग्मतीको जलमा नुहाएर, वत्सलादेवीको दर्शन गरी मेरो दर्शन गर्दछ भने निःसन्देह सबै पापबाट मुक्त हुन्छ ।४८। मेरो दक्षिण भागमा जसले प्राण त्याग गर्दछ, उ यस क्षेत्रको प्रभावका कारण नरक जाँदैन ।४९। मेरो पूर्वतिर रहेको बाग्मतीको पवित्र जलमा गरिने नित्य स्नानको फल अति ठूलो हुनेछ ।५०। वर्षाकालमा मेरा त्रिशूलबाट उत्पन्न मृगोदक तीर्थको दर्शन पुण्यात्माले (मात्र) पाउँदछन् ।५१। बाग्मतीको पश्चिम किनारमा मृगोदक (पर्वतबाट उत्पन्न) तीर्थमा नुहाउनाले पूर्वजन्ममा गरिएका पापबाट पनि मुक्ति हुन्छ, यसमा कुनै शङ्का छैन ।५२। बाग्मतीको पूर्वी किनारामा बदरिका नाम गरिएको तीर्थमा नुहाउनाले मात्र पनि पार्वती प्रसन्न हुन्छिन् ।५३।

नोटः अहिले आर्यघाटमा ब्रह्मनाल नजिकै रहेको तीर्थलाई तीनवटा नदीको सङ्गमस्थल भनी बताइएको छ । बाग्मती हामी प्रष्टरूपमा देख्दछौं भने बाँकी दुई नदीहरू देखिँदैनन् । बताइए अनुसार पश्चिमतिरबाट पहरा भित्रभित्रै बगेर आई मिसिने

नदीलाई मृगोदक र मृगस्थलीको डाँडो मुनी मुनी बग्दै आई त्यहाँ मिसिने नदीलाई बदरिका (वा खर्बरीका) भनिएको छ । खर्बरीका पार्वतीकी सखी थिइन् र त्यहाँ आई नुहाएर मोक्ष भएकी थिइन् । आर्यातीर्थलाई आर्यघाट बनाइएको देखिन्छ । राजवंशावलीमा देशमा खँडेरी परे आर्यातीर्थको जल अभिषेकका लागि प्रयोग गर्नु भनिएको छ । राजभोगमाला वंशावली लेख्दछ-"आर्यघाटमा पशुपतिनाथलाई स्नान गरिएको जल आई मिसिने एउटा स्थान छ । यसलाई ब्रह्मोदयतीर्थ भनिन्छ । आर्य्यदेविले तर्पण गर्नाले आर्यघाट भनि प्रख्यात भएको हो । त्यहीँ जलेश्वर पनि छन्" ॥

**अत्र कोषोदकं नाम तीर्थं कामफलप्रदम् ।**
**कोषं कोषं समाहृत्य सुरैः सर्वैः प्रकल्पितम्॥५४॥**
**तीर्थे कोषोदके चापि तदग्रे च नदीजले ।**
**तत्राभिषेकं यः कुर्यात् सोऽश्वमेधं फलं लभेत्॥५५॥**
**त्रिसन्ध्यं तु समासाध्य सन्ध्यां य समुपासते ।**
किल्विषात् स्वकृताव्यक्तात् स द्विजः परिमुच्यते ॥५६॥

सबै देवताले कोष कोष लेराएर बनाएको यहाँको **<u>कोषोदक (?)</u>** नामको तीर्थले मनको चाहना पूरा गर्दछ ।५४। त्यो कोषोदक तीर्थको वा त्यस अगिल्तिरको (बाग्मतीको) जलले जसले अभिषेक (स्नान) गर्दछ उसले अश्वमेध यज्ञ गरेको फल प्राप्त गर्दछ ।५५। जो यहाँ आएर त्रिसन्ध्यामा गरिने सन्ध्याकर्म गर्दछ, उ आफूबाट नजानीकन भए गरिएका पापबाट छुट्दछ ।५६।

नोट : कोषेदक तीर्थ आर्यातीर्थको नजिकै कतै हुनुपर्दछ । यो तीर्थका बारेमा थप विवरण लेखेको पाइएन ।

**भृगुपतनं नाम कन्दरश्चापि विद्यते ।**
**तस्मात् प्रपतनाद्वाऽपि स्वर्गलोके महीयते ॥५७॥**

त्यहाँ **<u>भृगुपतन नामको गुफा</u>** पनि छ, त्यहाँबाट खसेर ज्यान गुमाउँदा पनि स्वर्गमा प्रशंसनीय हुन्छ ।५७।

नोटः यो भृगुपतन नामको गुफा सूर्यघाटको पहरामा रहेको छ भनी बताइएको छ ।

**भृगुकन्दरमूले तु ब्रह्मभेदे मनोरमे ।**
**स्नायते विधिना यस्तु ब्रह्मलोकं स गच्छति ॥५८॥**

भृगुपतन गुफाको मूलमा रमणीय **<u>ब्रह्मभेद (ब्रह्मोद्भव)</u>** नामक तीर्थ छ । त्यहाँ जसले विधिपूर्वक नुहाउँदछ, उ ब्रह्मलोक जान्छ ।५८।



नोट : मूलको अर्थ पानीको मूल अथवा कुनै कुराको जरो वा फेद हुन्छ । यसले भृगुकन्दरमूलको अर्थ गुफा भित्रको अन्तिम भाग हो । यो तीर्थ ब्रह्माबाट स्थापना भएको हो ।

**अत्र गोखुरकं नाम तीर्थं कामफलप्रदम् ।**
**तत्राभिषेकं यः कुर्यात् गोसहस्रफलं लभेत् ॥५९॥**

यहाँ **<u>गोखुरक (गोरक्षक)</u>** नामको मनको चाहना पूरा गर्ने तीर्थ ( पनि) छ । त्यहाँ जसले नुहाउँदछ वा रुद्री लगाउँदछ उसले हजार गाईदान गरेको फल पाउँदछ ।५९।

नोटः साँढेको पैंतालाको चिह्न भएको यो तीर्थ पनि पशुपतिक्षेत्रमा रहेको र त्यहाँ गोरक्षनाथको मूर्ति समेत रहेको बताइएको छ ।

**गौरीशिखरमूले तु वाग्वत्यां यस्तु स्नायते ।**
**स्त्रीसौभाग्यमवाप्नोति देवीलोकं स गच्छति ॥६०॥**

**<u>गौरीशिखर (गुह्येश्वरीको डाँडो)</u>** को फेदमा रहेको बाग्मतीमा जसले नुहाउँदछ उसले सौभाग्यवती स्त्री पाउँदछ र (मृत्युपछि) देवीका लोकमा जान्छ ।६०।

नोटः गुह्येश्वरीको डाँडोलाई गौरीपर्वत वा गौरीशिखर भनिएको छ भने यसको थुम्कामा पार्वतीको मन्दिर वा मूर्ति रहेको उल्लेख गरिएको छ ।

**स्कन्दकुण्डं समासाद्य स्नायते यस्तु मानवः ।**
**स्कन्दलोकमवाप्नोति भूत्वा वैश्वानरद्युतिः ॥६१॥**
**अत्र पञ्चनदं नाम तीर्थं ब्रह्मनिषेवितम् ।**
**पञ्चयज्ञफलं तत्र स्नानमात्रेण लभ्यते ॥६२॥**
**शूलोद्भवे शुभे तीर्थे स्नायते यस्तु मानवः ।**

**<u>स्कन्दकुण्ड (?)</u>** मा गएर जो मानिसले नुहाउँदछ, उ अग्निसमान तेजिलो भई स्कन्दलोक जान पाउँदछ ।६१। यहाँ ब्रह्माले पनि मान्ने गरिएको **<u>पञ्चनद (?)</u>** नामक तीर्थ छ । त्यहाँ नुहाउनाले मात्र पनि पञ्चयज्ञ गरेको फल पाइन्छ ।६२। पवित्र **<u>शूलोद्भव ( शूलोद्भङ्ग)</u>** नामक तीर्थमा नुहाउनाले विशेषतः ब्राह्मणलाई

जातिस्मरत्वमाप्नोति ब्राह्मणस्तु विशेषतः ॥६३॥
प्राप्य स्नातकपानीयं गुह्यं गुह्यकरक्षितम् ।
स्नायते विधिना यस्तु यक्षलोकं स गच्छति ॥६४॥

अत्र यक्षोदकं प्राप्य तीर्थं कन्दरनिःसृतम् ।
स्नायते विधिना यस्तु मृत्युस्तं च न पश्यति ॥६५॥
योगकुण्डे देववाप्यां कुमारकन्दरेऽपि च ।
ब्रह्मादिभ्यो विशेषेण स्नायते स्वर्गकाङ्क्षिभिः ॥६६॥
वासुकेः प्रथमं कार्यं मत्पूजाराधनं सदा ।
घृतेन मधुना वाऽपि दध्ना चेक्षुरसेन च ॥६७॥
गन्धोदकेन क्षीरेण शीततोयेन वा पुनः ।
मत्स्नानं कारयेद्यस्तु तस्य पुण्यफलं महत् ॥६८॥
अनेनैव भवेत् स्वर्गे लब्धभाग्यो नरोत्तमः ।
घृतस्नानेन मल्लोके मधुना मम मन्दिरम् ॥६९॥
दध्ना वै वैष्णवं लोकं प्रयाति मम शासनात् ।
वैद्याधरं पदं याति स्नानादिक्षुरसेन तु ॥७०॥
गन्धोदकेन गान्धर्वं क्षीरेण शशिनः पदम् ।
शीतोदकस्य स्नानेन सर्वपापैः प्रमुच्यते ॥७१॥
अङ्गपूजां तु यः कुर्यात् पुष्पैर्नानाविधैर्मम ।
सर्वकामफलं भुक्त्वा मोदते मम मन्दिरे ॥७२॥
अङ्गप्रदीपं यः कुर्यात् मम भक्त्या सुसंयुतः ।
स्वयंप्रभेषु देशेषु तस्योत्पत्तिः प्रजायते ॥७३॥
अङ्गप्रदक्षिणं यस्तु करोति मम भक्तिमान् ।
रूपवान् धनवाँश्चैव वज्रसंहननो युवा ॥७४॥
विद्यावान् जायते लोके पुत्रपौत्रसमन्वितः ।
अङ्गपूजां तु यो दद्यात् मम भक्त्याऽतियत्नतः ॥७५॥
आयुष्मान् बलवान् वीरो जायते च महीपतिः ।
दीपमालां तु यः कुर्याद्भवने मम भक्तितः ॥७६॥
चक्षुष्मान् जायतेऽत्यन्तं तेजस्वी लोकपूजितः ।
गुग्गुलं दहते यस्तु ममाग्रे भक्तिसंयुतः ॥७७॥
इह लोके सुखं भुक्त्वाऽप्यन्ते याति परां गतिम् ।
तिलपात्रप्रदानेन त्रायते महतो भयात् ॥७८॥
तथैव च सुवर्णेन तथैव तिलधेनुना ।
हेमशृङ्गीं रौप्यखुरां कांस्यघण्टावलम्बिनीम् ॥७९॥
सवत्सां कपिलां दद्यात् तस्य यज्ञफलं भवेत् ।
रत्नकञ्चुकदानेन जायते रत्नवान् नृपः ॥८०॥
वस्त्रवान् वस्त्रदानेन भूमिदानेन भूमिवान् ।
गीतनृत्यप्रदानेन तूर्यनादानुमोदिना ॥८१॥
मम पार्श्वचरो भूत्वा जायते दुःखवर्जितः ।
नीलोत्पलार्कपद्मानां प्रदानेन श्रियं लभेत् ॥८२॥
वकेन विल्वपत्रेण वरदोऽस्मि विशेषतः ।
मोक्षो धत्तूरकेणापि करवीराद्धनप्रदः ॥८३॥
जात्यादिना सुगन्धेन पुष्पेण शुभगो भवेत् ।
पुष्पैः पत्रैः फलैस्तोयैर्मामर्चयति सन्ततम् ॥८४॥
सोऽपि स्वर्गफलं प्राप्य मोदते नात्र संशयः ।

पूर्वजन्मको सम्झना आउँदछ ।६३। गुह्यक (एक देवसमूह जसले कुबेरका धनसम्पत्ती आदि सुरक्षा गर्दछन्) बाट रक्षा गरिएको एउटा गोप्य **<u>स्नातकपानीय कुण्ड (प्राप्तार्कपानीय)</u>** मा (भाग्यले पाएर) नुहाए मानिस यक्षलोक जान्छ ।६४। यहाँ भृगुगुफाबाट उत्पन्न जुन् **<u>यक्षोदकतीर्थ</u>** छ, त्यहाँ विधिपूर्वक नुहाउने अमर हुन्छ (मृत्युको मुख देख्नु पर्दैन) ।६५। **<u>योगकुण्ड (?)</u>** मा, **<u>देवकुवा(?)</u>**मा र **<u>कुमारपहरा वा गुफा कुण्ड(?)मा</u>** विशेषतः ब्रह्मादि देवता तथा स्वर्गको चाहना गर्नेले नुहाउँदछन् ।६६। **<u>मेरो पूजा आराधना गर्दा पहिले वासुकिको पूजा गर्नु पर्दछ ।</u>** घिउ, मह, दही, उखुको रस (शखर) तथा...।६७। सुगन्धित जल, दूध वा फेरी शीतलजलले मलाई नुहाउनाले ठूलो फल पाइन्छ ।६८। यसरी नुहाइदिनाले त्यो मानिस स्वर्गमा भाग्यमानी र नरश्रेष्ठ हुन पुग्दछ । घिउको स्नानले मेरो लोक, महको स्नानले मेरो मन्दिर पाउँदछ भने...।६९। दही स्नानले मेरो आदेशमा वैष्णवलोक जान्छ । शक्खर स्नानले विद्याधर (एक देवयनोनि) पद पाउँदछ ।७०। सुगन्धित जलको स्नान गराउने गन्धर्वलोक र दूधले नुहाइ दिने चन्द्रलोक जान्छ । शीतल जलले स्नान गराउनाले सबै पापबाट मुक्त हुन्छ ।७१। जसले अनेक प्रकारका फूलले मलाई पूजा गर्दछ सोचेका कुरा उपभोग गर्दै (अन्तमा) उ मेरो मन्दिरमा शोभित हुन्छ ।७२। जसले एकाग्र भई भक्तिपूर्वक मेरो आरती गर्दछ उ **<u>स्वयंप्रभ देश</u>** (एक पर्वत, आफै प्रकाशित हुने) मा जन्म लिन पुग्दछ ।७३। जो मेरो भक्त मेरो अंग प्रदक्षिणा (दाहिने पारेर घुम्नु) गर्दछ उ सुन्दर, धनी, वज्रको प्रहार पनि सहन सक्ने, युवक,...।७४। पण्डित र संसारमा छोरानातीले सहित बस्ने हुनेछ । जसले विशेष प्रयाशले मेरो भक्तिपूर्वक अङ्गपूजा गर्दछ...।७५। उ दीर्घजीवि, बलवान् र वीर राजा हुनेछ । जसले मेरो मन्दिरमा भक्तिपूर्वक दीपावली गर्दछ, ...।७६। उ नेत्रवान्, अति तेजस्वी र लोकले पूज्ने हुनेछ । जसले मेरा अगिल्तिर भक्तिपूर्वक गोकुलधूप बाल्दछ...।७७। उसले यस लोकमा सुख भोगगरी अन्तमा मोक्ष हुनेछ । (मेरो मन्दिरमा) तिलले भरिएको भाँडो दान गर्नाले (वा चढाउनाले) ठूलो भयबाट जोगिन्छ ।७८। त्यस्तै सुन अथवा तिलधेनु दान गर्नाले पनि हुन्छ । सुनले सिङ मोरिएको, चाँदीले खुर मोरिएको एवं काँसका घण्टा लगाइएको...।७९। बाच्छाबाच्छी सहितको कैली गाई दान गर्नाले यज्ञ गरेको फल पाइन्छ । रत्नजडित तयारी चोलो आदि वस्त्र दान गर्नाले मानिस रत्नवान् राजा हुनेछ ।८०। वस्त्र दान गरे वस्त्रवान्, जमिन दान गर्नाले जमिन्दार, नाचगान एवं वाद्यवादन गर्नाले...।८१। दुःखरहीत भई मेरो गण हुनेछ । नीलकमल, आँक र कमल चढाउनेले लक्ष्मी पाउँदछ ।८२। गुम्पाती र बेलपत्र चढाउनेलाई म विशेष वरदान दिन्छु । धतुरोको फूल चढाए मोक्षता र कँडेलको फूल चढाए धन प्राप्त हुन्छ ।८३। चमेली आदि सुगन्धित फूल चढाउनाले शुभलाभ हुन्छ । फूल, पात, फल र जल चढाएर जसले मेरो नित्य पूजा गर्दछ...।८४। उ पनि निःसन्देश स्वर्ग पाएर खुशी हुन्छ । जसले मेरो पशुयोनिको प्रेम एवं भक्तिपूर्वक पूजा गर्दछ,...।८५। उसले पशुबन्धनबाट मुक्त

**यस्तु पूजयते भक्त्या पशुयोनिं मम प्रियाम्॥८५॥**
**मुच्यते पशुपाशेभ्यः कामसिद्धिश्च लभ्यते ।**
**यो दद्यान्मम क्षेत्रेऽस्मिन् ब्राह्मणेभ्यश्च भोजनम्॥**
**सोऽपि यज्ञफलं लब्ध्वा स्वर्गलोकमवाप्नुयात्॥८६॥**

भई कामसिद्धि प्राप्त गर्दछ । जसले मेरो क्षेत्रमा ब्राह्मणहरूलाई खुवाउँदछ उसले यज्ञ गरेको सरह फल पाई (अन्तमा) स्वर्ग पाउँदछ ।८६।

**इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये चतुर्दशोऽध्यायः॥१४॥**

श्रीस्कन्दपुराण, हिमवत्खण्ड, नेपालमाहात्म्यमा बुधको जन्म, चन्द्रमालाई परेको श्राप र पशुपतिको महिमा आदि प्रसङ्ग वर्णन भएको चौधौं अध्याय समाप्त भएको छ ।१४।

**श्लोकानामादितः समष्टयङ्काः-१,००१+८६=१,०८७**

शुरुदेखिको श्लोक सङ्ख्या :-१,००१+८६=१,०८७

## ॥ अथ पञ्चदशोऽध्यायः ॥
## ॥ पन्ध्रौं अध्याय ॥

**मार्कण्डेय उवाच ॥ मार्कण्डेय भन्नुहुन्छ-**

ततः पशुपतिर्देवः पुनः प्रोवाच शीतगुम् ।

त्यसपछि पशुपतिनाथ भगवान्ले चन्द्रमालाई फेरी भन्न लाग्नु भयो ।

**महादेव उवाच ॥ महादेव भन्नुहुन्छ-**

क्रियतां चन्द्र मे पूजां यथाभक्तिपुरःसरम् ॥१॥
स्थापयित्वा हि मल्लिङ्गं मत्क्षेत्रेऽत्यन्तदुर्लभे ।
सर्वपापविशुद्धः सन् कृतार्थस्त्वं भविष्यसि ॥२॥
पूर्वस्या कौशिकी पुण्या सर्वपापविनाशिनी ।
गङ्गा त्रिशूलगङ्गाख्या प्रतीच्यां दिशि संस्थिता ॥३॥
उत्तरस्यां दिशि तथा सीमा शिवपुरी मता ।
दक्षिणस्यां दिशि नदी पवित्रा शीतलोदका ॥४॥
एतन्मध्ये महापुण्यं नेपालं क्षेत्रमीरितम् ।
मनोहराया वाग्वत्याः सङ्गमे सुमनोहरे ॥५॥
तपस्यन्तं महाभागं गच्छ त्वं कुम्भसम्भवम् ।
तदुक्तेनैव विधिना स्वात्माभिलषिते स्थले ॥६॥
लिङ्गं स्थापय चन्द्र त्वं द्विजराजो भविष्यसि ।

हे चन्द्रमा ! मेरो भक्ति एवं विधिपूर्वक पूजा गर ।१। परम दुर्लभ (यो) मेरो क्षेत्रमा मेरो लिङ्ग स्थापना गरी सबै पापबाट शुद्ध भई तिमी कृतार्थ हुनेछौ ।२। यस (क्षेत्र)को पूर्वमा सबै पाप विनाश गर्ने पुण्यदायी कोशी नदी छिन् । त्रिशूली नामकी गङ्गा पश्चिमतिर रहेकी छिन् ।३। (यसको) उत्तर दिशाको सीमा शिवपुरी मानिन्छ । दक्षिण दिशामा पवित्र चिसापानी (मकवानपुर) नदी छिन् ।४। यिनैको बीचमा महापुण्यदायी यो नेपालक्षेत्र रहेको छ । मनोहरा र बाग्मतीको मनोहर दोभानमा...।५। तपस्या गरिरहेका महाशय अगस्त्यका समीपमा तिमी जाऊ । उनैले बताएका विधिले आफ्नो मनले खाएको स्थानमा...।६। लिङ्ग स्थापना गर, तिमी द्विजराज हुनेछौ ।



**मार्कण्डेय उवाच ॥ मार्कण्डेय भन्नुहुन्छ-**

इत्युक्त्वाऽन्तर्दधे शम्भुश्चन्द्रमा हर्षसंयुतः ॥७॥
नत्वा देवं पशुपतिं शङ्खमूलं जगाम हि ।
ततो ददर्श रुचिरमाश्रमं कुम्भजन्मनः ॥८॥
दाडिमैः कर्णिकारैश्च चम्पकैरुपशोभितम् ।
पनसैः सहकारैश्च नागरङ्गैर्विराजितम् ॥९॥
जम्बीरैर्बीजपूरैश्च खर्जूरैः प्रविराजितम् ।
जातीलवङ्गलत्तिकामालतीमल्लिकायुतम् ॥१०॥
भ्रमद्भ्रमरसङ्घातनिनादैश्च मनोहरम् ।
वाग्वतीजलसंसर्गशीतलानिलबीजितम् ॥११॥
नानापक्षिनिनादेन कोकिलानां रवेण च ।
भ्रमतां तत्र लोकानां मनसस्तापहारिणाम् ॥१२॥
प्रविवेश तदा चन्द्रस्तपोवनमनुत्तमम् ।
विशुद्धं चन्द्रमालोक्य भगवान् कुम्भसम्भवः ॥१३॥
स्वागतेन प्रजग्राह महाहर्षसमन्वितः ।
द्विजराजं मुनिश्रेष्ठः कृतासनपरिग्रहम् ॥१४॥
तेजः पुञ्जमयं दृष्ट्वा पप्रच्छ प्रीतिपूर्वकम् ।

यति भनेर शिव भगवान् अन्तर्ध्यान हुनु भयो । चन्द्रमा खुशी हुँदै...।७। भगवान् शिवलाई नमस्कार गरी शङ्खमूल गए । त्यहाँ (उनले) अगस्त्यको सुन्दर आश्रम देखे । (जुन आश्रम)...।८। दारिम, काठेचाँप, चाँप आदिले शोभायमान थियो । कटहर, अत्यन्त बास्नादार आँप र सुन्तलाले भरिएको थियो ।९। ज्यामिर, बिमिरो र खयरका बोटले सुसज्जित थियो अनि चमेली, ल्वाङ्गका लहरा, मालती (चमेलीको एक जात) र बेलीका फूलले सुगन्धित थियो ।१०। घुमिरहेका भमराका झुण्डका आवाजले मनोहर (उक्त आश्रम) बाग्मतीको पानीको संसर्गबाट बहने वृक्षाका सुगन्धमिश्रित चिसो हावाले भरिएको थियो ।११। अनेक चराचुरुङ्गी एवं कोइलीको स्वरले गुञ्जायमान हुने (त्यो आश्रम) घुम्दै आउने मानिसको थकाई मार्ने स्थलो थियो ।१२। त्यसपछि चन्द्रमा त्यही उत्तम तपोवनमा प्रवेश गरे । शुद्ध भएर आएका चन्द्रमालाई देखेर भगवान् अगस्त्य मुनिले...।१३। अति खुशी भई (यथोचित) स्वागतसत्कार गर्नु भयो । (अनि) मुनिश्रेष्ठले शान्तसँग बसेका...।१४। अति तेजिला (चन्द्रमालाई) देखेर प्रेमपूर्वक सोध्न लाग्नु भयो ।

**अगस्त्य उवाच॥** अगस्त्य भन्नुहुन्छ-

**यदादिदेश भगवान् स्वयं पशुपतिः प्रभुः॥१५॥**
**शशलाञ्छन तत्सर्वं वद यत्पुरतो मम ।**

प्रभू पशुपतिनाथ स्वयंले के आज्ञा गर्नु भयो...।१५। हे चन्द्रमा ! त्यो सबै शुरुदेखि नै मलाई बेलिविस्तार गर ।

**मार्कण्डेय उवाच॥** मार्कण्डेय भन्नुहुन्छ-

**अगस्त्य वचः श्रुत्वा द्विजराजोऽब्रवीत् पुनः॥१६॥**

अगस्त्य मुनिका कुरा सुनी चन्द्रमा फेरी भन्न लागे ।१६।

**चन्द्र उवाच॥** चन्द्रमा भन्दछन्-

**तव प्रसादाद्विप्रेन्द्र पूतोऽस्मि गुरुतल्पगः ।**
**दृष्टः पशुपतिर्देवो भोगस्वर्गापवर्गदः॥१७॥**
**आज्ञप्तं देवदेवेन लिङ्गसंस्थापनं स्वयम् ।**
**नेपाले परमे क्षेत्रे देवानामपि दुर्लभे॥१८॥**
**भवन्मुखबहिर्यातमन्त्रादिविधिना प्रभो ।**
**आज्ञप्तानि च तीर्थानि मुख्यानि द्विजपुङ्गव॥१९॥**
**पूजाविधिश्च कथितो ममानुग्रहकारणात् ।**
**अतो भवन्तमायातो देवाज्ञातो मुनीश्वर॥२०॥**
**उत्तिष्ठ मुनिशार्दूल यामः पशुपतिं वयम् ।**
**पूजयित्वा पशुपतिं यथाविधिपुरःसरम्॥२१॥**
**तीर्थयात्रा प्रकर्तव्या भवता सह यत्नतः ।**
**आत्माभिलषिते स्थाने लिङ्गसंस्थापनं मया॥२२॥**
**कर्तव्यं मुनिशार्दूल भवदुक्तविधानतः ।**

हे ब्राह्मण श्रेष्ठ ! हजुरका निगाहले म गुरुपत्नी गमनको पापबाट मुक्त भएको छु । भोग, स्वर्ग र मोक्षका दाता भगवान् पशुपतिनाथको मैले दर्शन पाएँ ।१७। देवाधिदेवले देवतालाई पनि दुर्लभ (मानिएको) नेपाल क्षेत्रमा आफैं (एउटा) लिङ्ग स्थापना गर्न (मलाई) आदेश दिनु भएको छ ।१८। हे प्रभू ! (त्यो लिङ्ग) हजुरका मुखारवृन्दबाट निस्किएका मन्त्रका विधिले (स्थापना गर्नु भन्नु भएको छ) । हे द्विजश्रेष्ठ ! मुख्यमुख्य तीर्थहरू र..।१९। पूजाविधि समेत मेरो अनुरोधमा उहाँले बताउनु भयो । त्यसैले, हे मुनीश्वर ! उहाँकै आदेशानुसार म हजुर समक्ष उपस्थित भएको छु ।२०।
हे मुनिश्रेष्ठ ! उठनु हवस्, हामी पशुपतिनाथको दर्शन गर्न जाउँ । विधिपूर्वक पशुपतिनाथको पूजा गरी...।२१। हजूरसँगै प्रयत्नपूर्वक (अरु) तीर्थयात्रा पनि गर्नुछ अनि मनले सोचेको ठाउँमा मैले लिङ्ग स्थापना ...।२२। हे मुनिश्रेष्ठ ! हजुरले बताएको विधिविधान बमोजिम गर्नु पनि छ ।



**मार्कण्डेय उवाच॥** मार्कण्डेय भन्नुहुन्छ-

**इति चन्द्रवचः श्रुत्वाऽगस्त्यः प्रोवाच तं पुनः॥२३॥**

चन्द्रमाका कुरा सुनी अगस्त्य मुनि उनलाई फेरी भन्न लाग्नु भयो ।२३।

**अगस्त्य उवाच॥** अगस्त्य भन्नुहुन्छ-

**अवश्यमेव कर्तव्या पूजा पशुपतेर्मया ।**
**तीर्थयात्रा प्रकर्तव्या मया सह कलानिधे॥२४॥**
**आत्माभिलषिते स्थाने लिङ्गं संस्थापय द्रुतम् ।**
**मयाऽप्यत्रैव कर्तव्यं लिङ्गसंस्थापनं विधो॥२५॥**

मैले (पनि) पशुपतिनाथको पूजा अवश्य गर्नु पर्दछ । हे चन्द्रमा ! मसँगै (तिमी पनि) तीर्थयात्रा गर र...।२४। मनले सोचेको स्थानमा चाँडै लिङ्ग स्थापना गर । हे चन्द्रमा ! मलाई पनि यहीँ (एउटा) लिङ्ग स्थापना गर्नु छ ।२५।

**मार्कण्डेय उवाच॥** मार्कण्डेय भन्नुहुन्छ-

**इत्युक्त्वा द्विजराजं तं स मुनिः कुम्भसम्भवः ।**
**लिङ्गसंस्थापनमतिं कृत्वा चन्द्रमभाषत॥२६॥**

ती मुनिश्रेष्ठले चन्द्रमालाई यति भन्दै लिङ्ग स्थापना गर्ने मनसायले (फेरी) यसो भन्नु भयो ।२६।

**अगस्त्य उवाच॥ अगस्त्य भन्नुहुन्छ–**

**क्रियतां होमसामग्री नेपालस्था मुनीश्वराः ।
आहूयन्तां हिमकर लिङ्गसंस्थापनोत्सवे ॥२७॥**

हे चन्द्रमा ! होमका लागि (सबै) सामग्री तयार गर (अनि) नेपालमा रहेका सबै मुनिजनलाई लिङ्गस्थापनाको उत्सवमा निम्ता गर ।२७।

**मार्कण्डेय उवाच॥ मार्कण्डेय भन्नुहुन्छ–**

**चन्द्राज्ञातः समायाता नेपालस्था मुनीश्वराः ।
मुनिभिः सहितः श्रीमानगस्त्यो मुनिसत्तमः ॥२८॥
सङ्गमस्याविदूरे तु सुस्थले सुमनोहरे ।
शुभे दिने सुलग्ने तु यज्ञशालां चकार सः ॥२९॥
हरमाराध्य विधिवद्भक्तियुक्तो मुनीश्वरः ।
कोटिहोमसमाप्त्यर्थं दत्वा दानान्यनेकशः ॥३०॥
चखान कुण्डं मनुना वारुणेन घटोद्भवः ।
पातालान्निःसृतं तोयं कुण्डे स्थास्यति सर्वदा ॥३१॥
ततः संस्थापयामास लिङ्गं कुम्भेश्वराभिधम् ।
कुम्भेश्वरस्य ये भक्ता भविष्यन्ति नराः कलौ ॥३२॥
इह लोके सुखं भुक्त्वा यास्यन्ति परमां गतिम् ।
कुम्भोद्भवेन मुनिना तपस्तप्त्वा सुदारुणम् ॥३३॥
समाराध्य हरं यस्माल्लिङ्गसंस्थापनं कृतम् ।
अतः कुम्भेश्वरं नाम प्रवदन्ति मनीषिणः ॥३४॥
चतुर्दश्यामथाष्टम्यां संक्रान्तिदिवसे तथा ।
कुम्भेश्वरं ये द्रक्ष्यन्ति ते कृतार्थो न संशयः ॥३५॥
प्रातः स्नात्वा नरः कुण्डे दृष्ट्वा कुम्भेश्वरं शिवम् ।
कुरुते शक्तितो दानं स कृतार्थो न संशयः ॥३६॥
समर्चयति विल्वस्य पत्रैः कुम्भेश्वराभिधम् ।
तस्य कुम्भेश्वरस्तुष्टः प्रददाति मनोरथान् ॥३७॥
तत्पुष्करिण्याः सलिले यः करोत्यवगाहनम् ।
श्रावणे पौर्णमास्यां वै सोऽपि स्वर्गमवाप्नुयात् ॥३८॥
वैशाखे पूर्णिमास्यां तु यो नरो भक्तिसंयुतः ।
कुम्भेश्वरं स्नापयति शीतलेन सुगन्धिना ॥३९॥
वारिणा रुद्रसूक्तैस्तु तस्य पुण्यफल श्रृणु ।
कपिलानां सहस्रस्य दानाद्यज्जायते फलम् ॥४०॥
तत्फलं समवाप्नोति नात्र कार्या विचारणा ।
तौर्यत्रिकं कारयति यः कुम्भेश्वरसन्निधौ ॥४१॥
अत्र भुक्त्वा महाभोगानन्ते याति परां गतिम् ।
नरो भूतचतुर्दश्यां कार्त्तिके भक्तिसंयुतः ॥४२॥
दीपमालां कारयति यः कुम्भेश्वरसन्निधौ ।
महादेवप्रसादेन यमलोकं न पश्यति ॥४३॥
यत्तीर्थोद्भववारिणा सुनियतं स्नात्वा नरो नित्यशः ।
पीत्वा वारि सुनिर्मलं किमथ वा कृत्वा मुखक्षालनम् ॥
पुण्यं योऽप्यभिनन्दते प्रतिदिनं श्रीदेवकुम्भेश्वरं ।
भुक्त्वा सर्वसुखानि याति नगरीं सोऽन्ते पुरीं शाम्भवीम् ॥४४॥
श्रुत्वाऽध्यायमिमं पुण्यं महापातकनाशनम् ।
मुच्यते सर्वपापेभ्यः कुम्भेश्वरसमुद्भवम् ॥४५॥**

(त्यसपछि) चन्द्रमाको निम्ता पाएर नेपालमा भएका मुनिहरू ( त्यहाँ) आए । मुनिहरू सँगै श्रेष्ठ मुनि अगस्त्यले...।२८। उक्त दोभानको नजिकै स्वच्छ एवं मनोहर स्थलमा, शुभ दिन र शुभ लग्नमा यज्ञशाला बनाउनु भयो ।२९। मुनिश्वरले विधिले भक्तिपूर्वक भगवान् शिवको आराधना गरी कोटीहोम समाप्तिका लागि अनेक वस्तु दान दिँदै...।३०। वरुणसँग मिलेर (अगस्त्य मुनिले अतुलनीय) कुण्ड खन्नु भयो । (र) यो पातालबाट (पानी) पलाउने र सधैं पानी भई रहने...।३१। कुण्डमा कुम्भेश्वर नाम गरिएको लिङ्ग स्थापना गर्नु भयो । कलियुगमा जो मानिस कुम्भेश्वरका भक्त हुन्छन्...।३२। ती यसलोकमा सुख भोग गरी (अन्तमा) मोक्ष हुन्छन् । (कुम्भ अर्थात् कलशबाट जन्मिएका, कुम्भः योनिर्जन्मस्थानं यस्य) अगस्त्य मुनिले कठोर तपस्या गरी...।३३। भगवान् शिवको आराधना गरी स्थापना गरेको लिङ्ग भएको हुनाले विद्वानहरू यो लिङ्गलाई “कुम्भेश्वर” भन्ने गर्दछन् ।३४। चतुर्दशी वा अष्टमी अथवा संक्रान्तिमा जसले कुम्भेश्वरको दर्शन गर्दछन् निःसन्देह ती मनमाफिक फल पाउँदछन् ।३५। एकाबिहानै कुण्डमा नुहाएर कुम्भेश्वरको दर्शन गर्ने अनि यथाशक्ति दान गर्ने मानिसले निःसन्देह सोचेको फल पाउँदछ ।३६। जसले कुम्भेश्वरलाई बेलपत्र अर्पण गरेर पूजा गर्दछ, कुम्भेश्वर प्रसन्न भई उसलाई मनले चिताएको कुरा दिनुहुन्छ ।३७। त्यो कुण्डको जलमा जसले श्रावणपूर्णिमाका दिन नुहाउँदछ उसले पनि स्वर्ग पाउँदछ ।३८। वैशाखपूर्णिमाका दिन जो मानिस सुगन्धी शीतल जलले भक्तिपूर्वक कुम्भेश्वरमा रुद्राभिषेक ...।३९। रुद्रसूक्त पढ्दै गर्दछ त्यसको फल सुन । हजार वटी बाच्छो सहितकी लैनू कैली गाई गर्नाले जुन फल पाइन्छ...।४०। त्यही फल पाइन्छ, यसमा सोचविचार गर्नु पर्दैन । जो कुम्भेश्वरका नजिकै वाद्यवादन गर्दछ...।४१। यहाँ (यस लोकमा) सुख भोग गरी अन्तमा मोक्ष हुन्छ । जो मानिस कार्तिक कृष्ण चतुर्दशीका दिन भक्तिपूर्वक...।४२। कुम्भेश्वरका नजिकै दीपावलि गर्दछ, महादेवका आशिर्वादस्वरुप उसले यमलोक देख्न पर्दैन ।४३। जो मानिस नित्य कुम्भकुण्डमा नुहाउँदछ, त्यहाँको जलले मुख धुन्छ वा त्यहाँको जल पिउँदछ वा कुम्भेश्वरलाई दर्शन गर्दछ, उसले सबै सुख भोगी अन्तमा शङ्करको लोक जान पाउँदछ ।४४।

जो यो कुम्भेश्वरको जन्म सम्बन्धी अध्याय सुन्दछन्, ती सबै पापबाट मुक्त हुन्छन् ।४५। ब्राह्मण वेदान्तविज्ञ हुन्छ, क्षत्रिय विजयी हुन्छ, वैश्य धनी हुन्छ भने शूद्र मोक्ष हुन्छ ।४६। कन्या

**वेदान्तवेत्ता विप्रः स्यात् क्षत्रियो विजयी भवेत् ।**
**वैश्यो धनसमृद्धः स्याच्छूद्रः सद्गतिमाप्नुयात् ॥४६॥**
**कन्यार्थी लभते कन्यां धनार्थी लभते धनम् ।**
**विद्यार्थी लभते विद्यामपुत्रः पुत्रमाप्नुयात् ॥४७॥**
**गुर्विणी जनयेत्पुत्रं श्रुत्वा ध्यायमिमं शुभम् ।**
**पतिकामनया कन्या श्रुत्वा विन्दति सत्पतिम् ॥४८॥**

चाहनेले कन्या, धन चाहनेले धन, विद्या चाहनेले विद्या र पुत्र नहुनेले पुत्र पाउँदछ ।४७। यो पवित्र अध्याय सुन्नाले गर्भिणीले छोरो पाउँदछे भने पति चाहने कन्याले सुने असल पति पाउँदछे ।४८।

**इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये कुम्भेश्वरोत्पत्तिर्नाम पञ्चदशोऽध्यायः ॥१५॥**

श्रीस्कन्दपुराण, हिमवत्खण्ड, नेपालमाहात्म्यमा ललितपुरस्थित कुम्भेश्वर महादेवको स्थापना प्रसङ्ग वर्णन भएको पन्धौं अध्याय समाप्त भएको छ ।१५।

**श्लोकानामादितः समष्टयङ्काः-१,०८७+४८=१,१३५**

शुरुदेखिको श्लोक सङ्ख्या :-१,०८७+४८=१,१३५

(चित्रकार : राजमान सिं चित्रकार, सङ्कलन : ब्रेन हाउटन हज्सन, पुनः सङ्कलन : मोहन प्रसाद सापकोटा)



कुम्भेश्वर मन्दिर, पाटन (चित्र सङ्कलन साल : वि.सं.१९०१)

(सङ्कलन : मोहन प्रसाद सापकोटा)



ललिपुरमा रहेको कुम्भेश्वर महादेवको मन्दिर । (श्रोतः सेसिल बेण्डालले लेखेको र सन् १८८६ मा क्याम्ब्रिजबाट प्रकाशित पुस्तक "अ जर्नी अफ लिटररी एण्ड आर्कोलोजिकल रिसर्च इन नेपाल एण्ड नर्थर्न इण्डिया, ड्युरिङ्ग द विन्टर अफ १८८४-५" नामक पुस्तकको पेज ३९ बाट)

Picture : Furer-Haimendorf, Christoph von. Source : SOAS



कुम्भेश्वर मेला, ललितपुर, वि.सं.२०३१

## ॥ अथ षोडशोऽध्यायः ॥
### ॥ सोह्रौं अध्याय ॥

**मार्कण्डेय उवाच ॥ मार्कण्डेय भन्नुहुन्छ-**

ततोऽगस्त्यप्रभृतिर्मुनिभिः सह चन्द्रमाः ।
जगाम हर्षसंयुक्तो देवं पशुपतीश्वरम् ॥१॥
ततोऽनुज्ञां प्रार्थयित्वा विधुः पशुपतीश्वरात् ।
राजराजेश्वरीं द्रष्टुं जगामागस्त्यसंयुतः ॥२॥
पूजयित्वा यथान्यायं राजराजेश्वरीं शिवाम् ।
दृष्ट्वा महाद्भुतं कूपं सूचकं भाविजन्मनः ॥३॥
दृष्ट्वाऽथ भैरवं देवं वत्सलां प्रविलोक्य च ।
स्तनकुण्डं पशुकुण्डं वीक्ष्य गुह्येश्वरी गतः ॥४॥
गुह्येश्वरीं पूजयित्वा महाविभवविस्तरैः ।
दृष्ट्वा तीर्थान्यनेकानि कुम्भसम्भवसंयुतः ॥५॥
गोकर्णेशं महालिङ्गं ययौ मुनिगणैर्वृतः ॥६॥
यज्ञभूमिं समालोक्य मुनीन् प्राह घटोद्भवः ।
अत्रैव रावणस्तेपे तपः परमदारुणम् ॥७॥
अत्राजुहाव पौलस्त्यो यज्ञं परमदुष्करम् ।
तपस्यया स पौलस्त्यो लङ्कास्थानमनुत्तमम् ॥८॥
लेभे चक्रे वशे देवान् राक्षसानामधीश्वरः ।
गोकर्णेशप्रसादेन त्रैलोक्ये दुर्जयीऽभवत् ॥९॥
अगस्त्यस्य वचः श्रुत्वा मुनीनामग्रतस्तदा ।
भृगुवंशसमुत्पन्नः श्यामो नाम तपोधनः ॥१०॥
मुदा परमया युक्तः पप्रच्छ घटसम्भवम् ।

त्यसपछि प्रसन्न भई अगस्त्य आदि मुनि सहित चन्द्रमा भगवान् पशुपतिनाथको दर्शन गर्न गए ।१। प्रार्थना पछि पशुपतिनाथबाट आज्ञा लिई चन्द्रमा अगस्त्यसँगै राजराजेश्वरीको दर्शनार्थ गए ।२। शास्त्रीय विधिले राजराजेश्वरी देवीको पूजा गरेपछि अर्को जन्मको सूचना दिने बडा अचम्मको कुवाको (पनि) दर्शन गरी,...।३। भैरव र वत्सला देवीको दर्शन गर्दै, स्तनकुण्ड र पशुकुण्डको दर्शन गरेर (ती) गुह्येश्वरी गए ।४। धूमधामसँग गुह्येश्वरीको पूजा गरी अगस्त्यसँगै (अरु) अनेक तीर्थको दर्शन गर्दै...।५। मुनिगणसहित महालिङ्ग गोकर्णेश्वर गए ।६। (त्यहाँ गोकर्णमा रहेको) यज्ञमण्डपलाई हेर्दै अगस्त्य मुनिले भन्नुभयो-"यहाँ नै रावणले अत्यन्त कठिन तपस्या गरेको थियो...।७। (अनि) यहीँ नै रावणले (आफ्नो टाउको काटेर होम्दै) अत्यन्त कठिन यज्ञ गरेको थियो र यही तपस्याले गर्दा रावणले उत्तम लङ्काको राज्य...।८। पाएको थियो । त्यो राक्षसराजले देवाधिदेवलाई वशमा पारेको थियो । (उ) गोकर्णेश्वरको वरदान पाई तीनै लोकमा जित्न नसकिने बनेको थियो" ।९। अगस्त्य मुनिका कुरा सुनेर (सँगै रहेका अन्य) मुनिहरुका नाइके तपस्वी एवं भृगुवंशी श्याम मुनिले त्यसपछि...।१०। अगस्त्य मुनिलाई खुशी हुँदै सोधे ।



**श्याम उवाच ॥ श्याम भन्दछन्-**

रावणस्य कुलं जन्म तपस्यां विक्रमं तथा ॥११॥
श्रोतुमिच्छाम्यशेषेण वद सर्वं तपोनिधे ।

रावणको कुल, जन्म, तपस्या तथा पराक्रमका बारेमा...।११। सबै कुरा म सुन्न चाहन्छु, हे तपस्वी ! बताउनु होस् ।

**मार्कण्डेय उवाच ॥ मार्कण्डेय भन्नुहुन्छ-**

एतत्तु वचनं श्रुत्वा भार्गवस्य महात्मनः ॥१२॥
कुम्भयोनिर्महातेजा वाक्यमेतदुवाच ह ।

महात्मा श्यामका यि कुरा सुनी...।१२। महातेजस्वी अगस्त्यले यसो भन्न लाग्नु भयो ।

**अगस्त्य उवाच ॥ अगस्त्य भन्नुहुन्छ-**

श्रृणु श्याम यथा वृत्तं तस्य तेजो बलं महत् ॥१३॥
जघान च रिपून् यस्तु यथाऽवध्यश्च शत्रुभिः ।
आह ते रावणस्येदं कुलं जन्म च भार्गव ॥१४॥
वरप्रदानं च यथा तथा सर्वं ब्रवीमि ते ।
पुरा कृतयुगे श्याम प्रजापतिसुतः शुभः ॥१५॥
पुलस्त्यो नाम विप्रर्षिः साक्षादिव हुताशनः ।
नामकीर्त्या गुणात् तस्य धर्मतः शीलतस्तथा ॥१६॥

हे श्याम ! त्यो रावणको कर्म, तेज र अति बलका बारेमा सुन्नु हवस् ।१३। उ शत्रुलाई मारी शत्रुबाट (आफू) नमारिने कसरी भयो, (अनि) हे भार्गव ! उसको कुल र जन्म..।१४। (तथा) वरदान पाएको कुरा सबै म हजुरलाई बताउँछु । हे श्याम ! पहिले सत्ययुगमा प्रजापतिका शुभ पुत्र...।१५। पुलस्त्य नाम गरिएका अग्निसमान तेजस्वी ब्राह्मण ऋषि थिए । उनको नाम, यश, गुण, धर्म तथा स्वभावले (नै) ...।१६। अरुले यि प्रजापतिका पुत्र हुन्

प्रजापतेः सुत इति शक्यं ज्ञातुमतः परम् ।
स तु धर्मप्रसादेन मेरोः पार्श्वे महागिरेः ॥१७॥
तृणविन्द्वाश्रमं गत्वाऽन्यवसन्मुनिपुङ्गवः ।
कुर्वतस्तस्य हि तपः स्वाध्यायनिरतात्मनः ॥१८॥
गत्वाऽऽश्रमपदं रम्यं विघ्नं कन्याः प्रकुर्वते ।
तत्र पन्नगकन्याश्च राजर्षितनयाश्च याः ॥१९॥
क्रीडयन्तेऽप्सरश्चैव तं देशमुपपेदिरे ।
नित्यशस्तं प्रदेशं तु गत्वा क्रीडन्ति कन्यकाः ॥२०॥
देशस्य रमणीयत्वात् पुलस्त्यो यत्र स द्विजः ।
अथ क्रुद्धो महातेजा व्याजहार महामुनिः ॥२१॥
यो मे दर्शनमागच्छेत् सा गर्भं धारयेदिति ।
तास्तु सर्वाः प्रतिगताः श्रुत्वा वाक्यं महात्मनः ॥२२॥
ब्रह्मशापभयाद्भीता न तं देशं सिषेविरे ।
तृणविन्दोस्तु राजर्षेर्दुहिता न तथाऽश्रृणोत् ॥२३॥
गत्वाऽऽश्रमपदं तस्य सा चचार सुनिर्भया ।
तस्मिन्नेव तु काले तु प्राजापत्यो महामुनिः ॥२४॥
स्वाध्यायमकरोत्तत्र तपसा द्योतितप्रभः ।
तस्य वेदध्वनिं श्रुत्वा दृष्ट्वा तं च तपोधनम् ॥२५॥
अभवत् पाण्डुदेहा सा सुव्यञ्जितशरीरजा ।
बभूव सहसोद्विग्ना दृष्ट्वा तद्रूपमात्मनः ॥२६॥
इदं किं तदिति ज्ञात्वा पितुर्गत्वाऽऽश्रमं स्थिता ।
तां दृष्ट्वा तु तथाभूतां तृणविन्दुरथाब्रवीत् ॥२७॥
किमेतदीदृशं रूपं धारयस्यात्मनो वपुः ।
साऽथ कृत्वाऽञ्जलिं दीना कन्योवाच तपोधनम् ॥२८॥
न जाने कारणं तात येन मे रूपमीदृशम् ।
किं तु पूर्वं गताऽस्म्येका महर्षेर्भावितात्मनः ॥२९॥
पुलस्त्यस्याश्रमपदमन्वेष्टुं स्वसखीजनम् ।
न चापश्यमहं तत्र कां चिदप्यागतां सखीम् ॥३०॥
रूपस्य तु विपर्यासं लब्ध्वैवाहमिहागता ।
तृणविन्दुस्तु राजर्षिस्तपसा भावितः स्वयम् ॥३१॥
ध्यानं विवेश तच्चापि ददर्श मुनिशापजम् ।
स तु विज्ञाय तं शापं महर्षेर्भावितात्मनः ॥३२॥
तनयासहितो गत्वा पुलस्त्यामिदमब्रवीत् ।
भगवँस्तनया त्वं मे गुणैः स्वैरेव भूषिताम् ॥३३॥
भिक्षां प्रतिगृहाणेमां मया ते प्रतिपादिताम् ।
तपश्चरणखिन्नस्य श्राम्यमाणक्रियस्य ते ॥३४॥
शुश्रूषातत्परा नित्यं भविष्यति न संशयः ।
एवं ब्रुवाण तं चैव राजर्षिं धार्मिकं तदा ॥३५॥
प्रतिगृह्याब्रवीत् कन्यां बाढमित्येव स द्विजः ।
दत्वाऽथ स गतः कन्यां स्वमाश्रमपदं नृपः ॥३६॥
साऽपि तत्रावसत् साध्वी तोषयन्ती पतिं गुणैः ।
तस्याश्च शीलवृत्ताभ्यां तुतोष मुनिपुङ्गवः ॥३७॥
प्रीतः स तु महातेजा वाक्यमेतदुवाच ह ।
परितुष्टोऽस्मि ते भद्रे गुणानां सम्पदा भृशम् ॥३८॥
तुष्टश्च वितराम्यद्य पुत्रमात्मसमं तव ।

भनेर थाहा पाउन सक्दथे । हे मुनिश्रेष्ठ ! ती मुनि धर्मका कृपाले विशाल सुमेरुपर्वत नजिकै...।१७। रहेको तृणविन्दु आश्रममा गएर बस्न थाले । (त्यहाँ) वेदादि शास्त्र अध्ययनमा तल्लिन हुँदै तपस्या गरिरहेका (अवस्थामा)...।१८। (उक्त) मनोरम आश्रममा कन्याहरू गएर वाधा पुर्‍याउन थाले । त्यसो गर्नेमा नागकन्या र राजर्षि कन्याहरू थिए ।१९। (हुँदाहुँदा ती कन्या जसरी नै) अप्सराहरू पनि त्यो स्थानमा आउन थाले । ती कन्याहरू दिनहुँ त्यहाँ गएर खेल्ने गर्दथे ।२०। (अन्त भन्दा) रमणीय भएकोले पुलस्त्य (तपस्या गरेर) बसेकै ठाउँमा गएर ती खेल्दथे । (एक दिन) रिसाउँदै महातेजस्वी पुलस्त्यले भने...।२१। जो मेरो दर्शन गर्न आउँदछे उ गर्भिणी हुनेछे । महात्माको (यस्ता) कुरा सुनेर ती सबै कन्या (त्यसपछि त्यहाँबाट) फर्किए ।२२। ब्रह्मश्रापको डरले ती त्यो ठाउँमा ( त्यसपछि ती खेल्न) आउँदैन थिए । (तर) तृणविन्दुकी कन्याले (भने मुनिका) ती कुरा सुनेकी थिइनन् ।२३। उनी ती मुनिका आश्रममा गएर नडराई घुम्न लागिन् । त्यसबेला प्रजापतिका पुत्र महामुनि...।२४। तपस्याको तेजले धपधपी बलिरहेका अवस्थामा वेद पढ्दै थिए । तिनको वेदपाठ सुनी ती तपस्वीलाई पनि देखेर...।२५। (उनको) शरीर गर्भवतीको जस्तो पहेंलो भयो । आफ्नो (एक्कासी) बदलिएको (यस्तो) रूप देखेर उनी आत्तिइन् ।२६। "मलाई के भएको यस्तो" भन्दै सोच्दै (उनी) आश्रमका रहेका (आफ्ना) पिताका समिप गइन् । पिता तृणविन्दुले उनको रूप देखेर यसो भने...।२७। "के हो यो ? तिमीले यस्तो रूप किन बनाएकी ?" । कन्याले निरीह हुँदै हात जोडेर तपस्वी(पिता) लाई भनिन्...।२८। "हे पिता ! मेरो यस्तो रूप किन भयो, मलाई कारण थाहा छैन । तर म एकपटक पवित्र आत्मा भएका महर्षि...।२९। पुलस्त्यका आश्रममा आफ्ना सखीलाई खोज्दै पुगेकी थिएँ । (तर) त्यहाँ मैले कुनै सखी आएको (पनि) देखिन ।३०। (त्यसपछि मेरो रूप अकस्मात बदलियो र) रूप बदलिनासाथ म यहाँ आएँ । (त्यसपछि) तृणविन्दुले आफैं तपस्या मार्फत...।३१। ध्यानदृष्टिले हेर्दा यो सबै दैववश मुनिका श्रापका कारण भएको हो भनी थाहा पाए ।३२। (अनि) पुत्रीलाई लिएर पुलस्त्य समक्ष गई यसो भने-"हे भगवन् ! आफ्ना गुणले विभूषित मेरी यि छोरीलाई ...।३३। मैले दिएको भिक्षाकारूपमा स्वीकार गर्नु हवस् । तपस्याको परिश्रमले थकित भइरहनु हुने हजूरको...।३४। यिनी हमेशा सेवा गर्न तयार हुने छिन्, यसमा कुनै शङ्का छैन । त्यसपछि यस्तो अनुरोध गरिरहेका धर्मात्मा मुनिलाई...।३५। पुलस्त्यले कन्या स्वीकार गर्दै "अति उत्तम, स्वीकार गरें" भने । यसरी ती राजर्षि कन्या दिएर आफ्नो आश्रममा गए ।३६। उनी पनि चित्त लगाएर त्यहाँ बसी आफ्ना गुणले पतिलाई सन्तुष्ट पार्न थालिन् । उनको स्वभाव र कर्मले मुनिश्रेष्ठ पनि प्रसन्न भए ।३७। महातेजस्वी मुनिले (एक दिन) खुशी हुँदै भने "म तिम्रा गुणले अति प्रसन्न छु...।३८। यो खुशीको अवसरमा म तिमीलाई आफू समानको छोरो दिन्छु । मातृ तथा पितृकुलको कर्ता भई यो पौलस्त्य नामले (संसारमा) चिनिनेछ

**उभयोर्वंशकर्त्तारं पौलस्त्येयमिति श्रुतम्॥३९॥**
**यस्मात्तु विश्रुता वेदास्त्वयैवाभ्यस्यतो मम ।**
**तस्मात् स विश्रवा नाम भविष्यति न संशयः॥४०॥**
**एवमुक्त्वा तु सा कन्या प्रहृष्टेनान्तरात्मना ।**
**अचिरेणैव कालेन प्राप्तं विश्रवनामकम्॥४१॥**
**स तु लोकत्रये ज्ञातः शौचकर्मसमन्वितः ।**
**बुद्धिमान् समदर्शी च व्रताचाररुचिस्तथा॥४२॥**
**सत्यवाक्यः कृतज्ञश्च द्युतिमान् धृत्तिमान् वशी ।**
**पितेव तपसा युक्तो विश्रवा मुनिपुङ्गवः॥४३॥**

।३९। हे प्रिये ! तिमीले मलाई वेद पढिरहेका अवस्थामा सुनेकी थियौ, त्यसैले उस (जन्मने पुत्र)को नाम निःसन्देह विश्रवा हुनेछ ।४०। मनैदेखि प्रसन्न भएर ती कन्याले यि कुरा सुनिन् र केही समय पछि नै विश्रवा नाम गरिएको छोरो पाइन् ।४१। त्यो पुत्र तीनै लोकमा शौचकर्ममा समर्पित, बुद्धिमान्, समदर्शी, व्रतबस्नमा रुची राख्ने..।४२। सत्यवक्ता, कृतज्ञ, तेजस्वी, धैर्यशाली र पिताभैं तपस्यामा लागिरहने मुनिश्रेष्ठ "विश्रवा" भनेर (लोकमा) चिनिए ।४३।

**इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये षोडशोऽध्यायः॥१६॥**

श्रीस्कन्ददपुराण, हिमवत्खण्ड, नेपालमाहात्म्यमा गोकर्णको महत्व र रावणको जन्म इतिहास आदि प्रसङ्ग बताइएको सोह्रौं अध्याय समाप्त भएको छ ।१६।

**श्लोकानामादितः समष्टयङ्काः-१,१३५+४३=१,१७८**

शुरुदेखिको श्लोक सङ्ख्या :-१,१३५+४३=१,१७८

## ॥ अथ सप्तदशोऽध्यायः ॥
## ॥ सत्रौं अध्याय ॥

### अगस्त्य उवाच ॥ अगस्त्य भन्नुहुन्छ-

अथ पुत्रः पुलस्त्यस्य विश्रवा मुनिपुङ्गवः ।
अचिरेणैव कालेन पितेव तपसि स्थितः ॥१॥
सत्यवाक् शीलवाग्दक्षः स्वाध्यायनिरतः शुचिः ।
सर्वभोगेष्वसंसक्तो नित्यधर्मपरायणः ॥२॥
ज्ञात्वा च तस्य तद्वृत्तं भरद्वाजो महामुनिः ।
ददौ विश्रवसे भार्यां स्वसुतां वरवर्णिनीम् ॥३॥
प्रतिगृह्य तु धर्मेण भरद्वाजसुतां तदा ।
मुदा परमया युक्तो विश्रवा मुनिपुङ्गवः ॥४॥
स तस्यां वीर्यसंपन्नमपत्यं परमाद्भुतम् ।
जनयामास धर्मज्ञं सर्वैरात्मगुणैर्युतम् ॥५॥
तस्मिने जाते संबभूव सन्तुष्टः स पितामहः ।
नाम चास्याकरोत् प्रीत्या सर्वदेवर्षिभिस्तथा ॥६॥
यस्माद्विश्रवसोऽपत्यं सादृश्याद्विश्रवा इव ।
तस्माद्वैश्रवणो नाम भविष्यत्येष विश्रुतः ॥७॥
स तु वैश्रवणस्तस्य तपोवनगतस्तदा ।
अवर्धताहुतिहुतो महातेजा यथाऽनलः ॥८॥
तथाऽऽश्रमपदस्थस्य बुद्धिर्जज्ञे महात्मनः ।
चरिष्यामि यतो धर्मं धर्मो हि परमा गतिः ॥९॥
ततो वर्षसहस्राणि तपस्तेपे चतुर्दश ।
पूर्णे पूर्णे सहस्रे च तां तां वृत्तिमुपस्थितः ॥१०॥
जलाशी मारुताहारो निराहारस्तथैव च ।
एवं वर्षसहस्राणि गतान्यस्यैकवर्षवत् ॥११॥
अथ प्रीतो महातेजाः सेन्द्रैः सुरगणैः सह ।
गत्वाऽऽश्रमपदं तस्य ब्रह्मेदं वाक्यमब्रवीत् ॥१२॥

मुनिश्रेष्ठ पुलस्त्यका पुत्र विश्रवा थोरै समय पछि नै पिताले जसरी तपस्या गर्न थाले ।१। सत्यवक्ता, असल स्वभावका, दक्ष, सदा वेदाध्ययनमा लागिपर्ने, शुद्धतामा रहने, सबै खाले भोगबाट वैराग्य लिएका एवं सधैं धर्ममा लागिरहने..।२। यस्तो तिन( विश्रवा मुनि)को स्वभाव देखेर महामुनि भरद्वाजले आफ्नी उत्तम पुत्री विश्रवालाई पत्नीकारूपमा दिए ।३। मुनिश्रेष्ठ विश्रवा धार्मिक विधि अनुसार भरद्वाजकी पुत्रीलाई विवाह गरेपछि अति आनन्दित भएर रहन लागे ।४। उनले ती पत्नीबाट वीर्यशाली, अति अद्भुत, धर्मात्मा एवं सबै आध्यात्मिक गुण भएको पुत्र जन्माए ।५। त्यो पुत्रको जन्मले ब्रह्मा सन्तुष्ट हुनु भयो र सबै देवर्षिसँग मिलेर उसको नामकरण संस्कार गर्नुभयो ।६। (र) “विश्रवाका पुत्र अनि विश्रवा जस्तै भएका हुनाले यिनको नाम वैश्रवण भनी प्रसिद्ध हुनेछ” भन्नुभयो ।७। त्यसपछि तपोवनमा रहेका ती बालक वैश्रवण यज्ञमा हालिएको चरुले यज्ञको महातेजिलो अग्नि बढेझैं बढ्दै हुर्कंदै गए ।८। (एक दिन) आश्रममा रहेका ती महात्मालाई “म धर्ममा रहन्छु किन कि धर्म नै मोक्षको बाटो हो” भन्ने कुराको ज्ञान भयो ।९। त्यसपछि ( उनले) चौध हजार वर्षसम्म तपस्या गरे । हरेक हजार वर्ष सकिँदा आउने आजीविकाका माध्यमलाई (उनले) परिवर्तन गरे ।१०। कहिले पानीभित्र बसेर, कहिले हावा पिएर त कहिले केही पनि नखाईकन उनका हजारौं वर्ष एक वर्ष बिते जसरी बिते ।११। यसपछि (उनको तपस्याले) प्रसन्न भई अति तेजिला ब्रह्मा, इन्द्रादि देवगण सहित त्यस आश्रममा गएर (वैश्रवण मुनिलाई) यसो भन्न लाग्नु भयो ।१२।



### ब्रह्मोवाच ॥ ब्रह्मा भन्नुहुन्छ-

परितुष्टोऽस्मि ते वत्स कर्मणाऽनेन सुव्रत ।
वरं वृणीष्व भद्रं ते वरार्हस्त्वं हि मे मतः ॥१३॥

हे बाबु ! म तिम्रो यो तपस्याले प्रसन्न भएँ । हे सुव्रत ! वरदान माग । मैले तिमीलाई वरदान दिन योग्य ठानेको छु ।१३।

### मार्कण्डेय उवाच ॥ मार्कण्डेय भन्नुहुन्छ-

अथाब्रवीद्वैश्रवणः पितामहमुपस्थितम् ।
भगवन् लोकपालत्वमिच्छेयं वित्तरक्षणम् ॥१४॥
तत्राब्रवीद्वैश्रवणं परितुष्टेन चेतसा ।
ब्रह्मा सह सुरैः सर्वैर्बाढमित्येव हृष्टवत् ॥१५॥
अहं हि लोकपालानां चतुर्थं स्रष्टुमुद्यतः ।
यमेन्द्रवरुणानां वै पदं तत्तव चेप्सितम् ॥१६॥
सत् कृतं गच्छ धर्मज्ञ दिक्पालत्वमवाप्नुहि ।
यमेन्द्रवरुणानां वै चतुर्थोऽद्य भविष्यसि ॥१७॥

यसपछि वैश्रवणले ब्रह्मासँग “भगवान् म धनसम्पत्ति रक्षाका लागि लोकपाल हुन चाहन्छु” भनेर वरदान मागे ।१४। वैश्रवणका कुरा सुनी सन्तुष्ट भएका ब्रह्मा सहितका सबै देवताले खुशी हुँदै “त्यस्तै होस्” भने (अनि) ।१५। “म पनि चार जना लोकपाल बनाउँछु भेर सोच्दै थिएँ । यम, इन्द्र र वरुणको जस्तै समान पदको (अर्थात्) चौथो दिक्पाल हुने जुन तिमीले चाहना गरेका छौ...।१६। जाऊ सत्कर्म गर, धर्मज्ञ ! तिमीले (त्यो) दिक्पाल पद (अब देखि) पाई नै सक्यौ । यम, इन्द्र र वरुण पछि

एतच्च पुष्पकं नाम विमानं सूर्यसन्निभम् ।
प्रतिगृह्णीष्व भद्रं ते त्रिदशैः समतां व्रज ॥१८॥
स्वस्त्यस्तु ते गमिष्यामि सर्व एव यथागताः ।
कृतकृत्या वयं जातास्तव दत्वा महावरम् ॥१९॥
इत्युक्त्वा स ययौ ब्रह्मा सह देवैर्नभस्तलम् ।
गतेषु ब्रह्ममुख्येषु देवेषु च महात्मसु ॥२०॥
धनेशः पितरं प्राह विनयात् प्रणतो वचः ।
भगवँल्लब्धवानस्मि वरं कमलयोनितः ॥२१॥
निवासं न तु मे देवो विदधे स प्रजापतिः ।
एवमुक्तस्तु पुत्रेण विश्रवा मुनिपुङ्गवः ॥२२॥
वचनं तत्र धर्मज्ञ श्रूयतामित्यथाब्रवीत् ।
लङ्का नाम पुरी रम्या निर्मिता विश्वकर्मणा ॥२३॥
राक्षसानां निवासाय यथेन्द्रस्यामरावती ।
तत्र त्वं वस भद्रं ते रमसे तत्र नित्यशः ॥२४॥
रमणीया पुरी सा हि रुक्मवैदूर्यतोरणा ।
राक्षसैः सा तु संत्यक्ता पुरी विष्णुभयार्दितैः ॥२५॥
शून्या रक्षोगणैः सर्वैः रसातलतलं गतैः ।
स त्वं तत्र निवासाय रोचयस्व मतिं स्वकाम् ॥२६॥
निर्दोषस्तत्र ते वासो न च दोषोऽस्ति कश्चन ।
एतच्छ्रुत्वा तु धर्मात्मा धर्मिष्ठं वचनं पितुः ॥२७॥
निवेशयामास तदा लङ्कां पर्वतमूर्धनि ।
नैर्ऋतानां सहस्रैः सा मुदितैर्बहुभिस्तदा ॥२८॥
अचिरेणैव कालेन संपूर्णा तस्य शासनात् ।
स तु तत्रावसत् प्रीतो धर्मात्मा नैर्ऋतैः सह ॥२९॥
समुद्रपरिखायां तु लङ्कायां विश्रवःसुतः ।
काले काले स तु तदा पुष्पकेण धनेश्वरः ॥३०॥
अभ्यगच्छेद्विनीतात्मा पितरं मातरं तथा ।

(अब) तिमी चौथो दिक्पाल हुनेछौ ।१७। हे सज्जन ! यो सूर्यसरह तेजिलो पुष्पक नाम गरिएको विमान लेउ र देवता सरहको हैसियत प्राप्त गर ।१८। तिमीलाई यो ठूलो वरदान दिएर सन्तुष्ट हुँदै हामी जसरी आएका थियौं त्यसरी नै जाँदैछौं, तिम्रो भलो होस्" ।१९। यति भनी ब्रह्मा सहित (सबै) देवता आकाशतिर लागे । ब्रह्मा सहितका मुख्य देवता गइसके पछि महात्मा...।२०। धनेश (दिक्पाल अर्थात् कुबेर बनेका वैश्रवण)ले आफ्ना पितासँग विनयपूर्वक नम्र वचनले यसो भने-"हे भगवन् ! मैले ब्रह्माबाट वरदान पाएको छु ।२१। (तर) ब्रह्माले म बस्ने स्थान भने तोकी दिनु भएन" । पुत्रका कुरा सुनी मुनिश्रेष्ठ विश्रवाले...।२२। यसो भने "हे धर्मज्ञ ! मेरा कुरा सुन । विश्वकर्माले बनाएको लङ्का नाम गरेको सुन्दर शहर छ ।२३। राक्षसहरू बस्न भनी बनाइएको (त्यो शहर) इन्द्रको स्वर्ग जस्तै छ । हे बाबु ! तिमी त्यहाँ गएर बस, तिम्रो भलो होस्, त्यहाँ तिमी सधैं रमाउने छौ ।२४। त्यो शहर सुन एवं वैदूर्यमणिका तोरणले युक्त र रमणीय छ । विष्णुका डरले पीडित भई राक्षसहरूले त्यो शहरलाई (अहिले) छाडेका छन् ।२५। सबै राक्षसहरू पाताल गएका हुनाले त्यो शहर (अहिले) शून्य छ । तिमी आफू त्यहाँ गएर बस्ने सोच बनाउ ।२६। तिम्रो त्यहाँको बसाईमा (कुनै) दोष हुन्न । त्यहाँ केही दोष छैन ।" धर्मशील पिताका यस्ता धार्मिक वचन सुनेर...।२७। (वैश्रवण) त्यसपछि लङ्काको मूल भागमा वा पर्वतको शिखरमा (गई) हजारौं राक्षसहरु सहित प्रसन्न भई रहन लागे ।२८। उनको शासनका कारण थोरै समयमा नै लङ्का सबै कुराले भरिपूर्ण भयो । यसरी धर्मात्मा कुबेर राक्षसहरू सहित आनन्द सँग बस्दै गर्दा...।२९। वरिपरि समुद्रले घेरिएको लङ्काबाट विश्रवाका पुत्र कुबेर बेलाबेलामा पुष्पक बिमान चढेर...।३०। नम्र स्वभावका आफ्ना मातापितालाई भेट्न जाने गर्दथे ।



**मार्कण्डेय उवाच ॥ मार्कण्डेय भन्नुहुन्छ-**

अगस्त्यस्य वचः श्रुत्वा श्यामः प्रोवाच तं मुनिम् ॥३१॥

अगस्त्यका कुरा सुनी श्यामले ती मुनिलाई (फेरी) भन्न लागे ।३१।

**श्याम उवाच ॥ श्याम भन्दछन्-**

भगवन् पूर्वमप्येषा लङ्काऽऽसीत् पिशिताशिनाम् ।
इति दम्भवचः श्रुत्वा जातो मे विस्मयः पुनः ॥३२॥
पुलस्त्यवंशादुत्पन्ना राक्षसा इति नः श्रुतम् ।
इदानीमन्यतश्चापि सम्भवः कीर्तितस्त्वया ॥३३॥
रावणात् कुम्भकर्णाच्च प्रहस्ताद्विकटादपि ।
रावणस्य च पुत्रेभ्यः किं नु ते बलवत्तराः ॥३४॥
क एषां पूर्वजो ब्रह्मन् किंनामानश्च किंबलाः ।
अपराधं च कं प्राप्य विष्णुना वाधितास्ततः ॥३५॥
एतद्विस्तरतः सर्वं कथयस्व ममानघ ।
कौतूहलमिदं त्वं मेऽनुदभानुर्यथा तमः ॥३६॥

हे भगवन् ! पहिले पनि यो लङ्का नगरी राक्षसका अधीनमा थियो भन्ने अहङ्कारपूर्ण कुरा सुनेर मलाई फेरी पनि अचम्म लागेको छ ।३२। पुलस्त्य ऋषिका वंशमा राक्षसहरू जन्मिएका कुरा त सुनेको थिएँ । अहिले अरु मार्फत पनि राक्षसहरूको जन्म भएका कुरा हजूरले बताउनु भयो ।३३। रावण, कुम्भकर्ण, प्रहसत, विकट अनि रावणका पुत्र मेघनाद आदि भन्दा पनि के ती ( पहिलेका राक्षस) बलिया थिए र ? ।३४। अनि ब्रह्मन् ! यिनका पूर्खा को थिए ? नाम के थियो ? यि कति बलिया थिए ? के अपराध गरेका कारण विष्णुले त्यसपछि तिनलाई दुःख दिए ? ।३५। हे निष्पाप ! यो सबै कुरा मलाई विस्तारपूर्वक बताउनु होस् । मेरा

यि कौतूहलतालाई सूर्यले अन्धकारलाई हटाए जसरी नै हजुरले हटाई दिने कृपा गर्नु होस् ।३६।

**मार्कण्डेय उवाच ॥** मार्कण्डेय भन्नुहुन्छ–

भार्गवस्य वचः श्रुत्वा प्रत्यभाषत तं पुनः ।

श्यामका कुरा सुनी अगस्त्य उनलाई फेरी यसो भन्न लागे ।

**अगस्त्य उवाच ॥** अगस्त्य भन्नुहुन्छ–

प्रजापतिः पुरा सृष्ट्वा अपो भार्गवनन्दन ॥३७॥
आसां गोपायने सत्वानसृजत् पद्मसम्भ्वः ।
ते सत्त्वाः सर्वकालेन विनीतवदुपस्थिताः ॥३८॥
किं कुर्म इत्यभाषन्त क्षुत्पिपासाभयार्दिताः ।
प्रजापतिस्तु तान् सर्वान् प्रत्याह प्रहसन्निव ॥३९॥
आभाष्यापः प्रयत्नेन रक्षतेति च भार्गव ।
रक्षाम इति तत्रान्यैर्यक्षामश्चेत्यथापरैः ॥४०॥
क्षुधिताक्षुधितैरुक्तौँस्ततस्तानाह भूतकृत् ।
यक्षाम इति यैरुक्तमतो यक्षा भवन्तु वः ॥४१॥
रक्षाम इति यैरुक्तं राक्षसास्ते भवन्तु वः ।
ततः प्रहेतिर्हेतिश्च राक्षसौ भ्रातरावुभौ ॥४२॥
मधुकैटभसंकाशौ बभूवतुररिन्दमौ ।
प्रहेतिर्धार्मिकस्तत्र दानवान् सोऽभिकाङ्क्षति ॥४३॥
हेतिर्दारक्रियार्थं तु यत्नं परममास्थितः ।
स कालभगिनीं पत्नीं भयानामभयावहाम् ॥४४॥
उदावहदमेयात्मा स्वयमेव महामतिः ।
स तस्यां जनयामास हेती राक्षसपुङ्गवम् ॥४५॥
पुत्रं पुत्रवतां श्रेष्ठं विद्युत्केशमिति श्रुतम् ।
स हेतिपुत्रो विक्रान्तः प्रदीपाग्निसमप्रभः ॥४६॥
व्यवर्धत महातेजास्तोयमध्ये यथाम्बुजम् ।
स यदा यौवनं तत्र प्राप्त आसीन्निशाचरः ॥४७॥
ततो दारक्रियां तस्य कर्तुं व्यवसितः पिता ।
सन्ध्यादुहितरं सोऽथ नाम्ना शालकटङ्कटाम् ॥४८॥
वरयामास पुत्राय हेती राक्षसपुङ्गवम् ।
अवश्यमेव दातव्या वराय चेति सन्ध्यया ॥४९॥
चिन्तयित्वा सुता दत्ता विद्युत्केशाय भार्गव ।
सन्ध्यायास्तनयां लब्ध्वा विद्युत्केशो निशाचरः ॥५०॥
रेमे वै स तया सार्धं पौलोम्या मघवानिव ।
कस्यचित् त्वथ कालस्य श्याम शालकटङ्कटा ॥५१॥
विद्युत्केशाद्गर्भमाप घनराजीव चार्णवात् ।
ततः स राक्षसी गर्भं घनगर्भसमप्रभम् ॥५२॥
प्रसूता मन्दरं गत्वा गङ्गा गर्भमिवाग्निजम् ।
तस्मिन्नुत्सृज्य तं गर्भं विद्युत्केशाद्रतार्थिनी ॥५३॥
रेमे पत्या तदा सर्वं विस्मृत्य सुतमात्मनः ।
तयोत्सृष्टस्तु स शिशुः प्रदीपाग्निसमप्रभः ॥५४॥
आस्ये पाणिं समाधाय मेघवद्विरुरोद ह ।

हे श्याम ! प्राचीन कालमा ब्रह्माले जलको सृष्टि गर्नु भयो ।३७। ( अनि) यो जलको संरक्षणका खातिर ब्रह्माले प्राणीको सृष्टि गर्नु भयो । ती प्राणी सधैं नम्र भएर उपस्थित हुने गर्दथे ।३८। ( एकताका) भोकप्यासले पीडित ती एकआपसमा "अब के गर्ने होला ?" भन्न थाले । ती सबैलाई मुस्कुराउँदै ब्रह्माले भन्नु भयो ।३९। "तिमीहरु प्रयत्नपूर्वक जललाई रक्षा गर" । हे श्याम ! तीमध्ये कसैले "रक्षामः (हामी एउटै नियमले संरक्षित होउँ वा हामी रक्षा गर्दछौं)" त अरुले "यक्षामः (हामी ठूला हौं वा हामी पूजा गर्दछौं) भने ।४०। ती त्यसबेला भोकप्यासले पीडित थिए त्यसैले तिनले त्यसो भने । (अनि ब्रह्माले) जजसले "यक्षामः" भनेका छन् ती यक्ष होउन् ।४१। (अनि) जजसले "रक्षामः" भनेका छन् ती राक्षस होउन् । त्यसपछि प्रहेति र हेति नाम गरेका दुई भाई राक्षस...।४२। जो मधु र कैटभ समानका शत्रुलाई दमन गर्ने थिए, उत्पन्न भए । तिनमा प्रहेति धार्मिक एवं दानवलाई मनपर्ने खालको थियो ।४३। (अर्को भाई) हेतिले पत्नी पाउन ठूलो प्रयाश गरेको थियो । हेतिले डरलाग्दा कालकी बहिनी भयालाई ...।४४। महान् आत्मा भएको बुद्धिमानले आफैं पत्नीकारूपमा वरण गर्‍यो । त्यो राक्षसश्रेष्ठ हेतीले तिनी (भया) बाट...।४५। पुत्रहरूमा श्रेष्ठ विद्युत्केश नामको पुत्र जन्माएको थियो भनेर बताइएको छ । त्यो पुत्र बलवान् र बलिरहेको आगोसमान प्रभावशाली थियो ।४६। त्यो अतीतेजस्वी पुत्र जलमा कमल बढेझैं बढ्न लाग्यो । जब त्यो राक्षस जवान भयो तब ...।४७। उसका पिताले सन्ध्याकी पुत्री शालकटङ्कटासँग उसको बिहे गरिदिने अठोट गरे ।४८। सन्ध्याले पनि राक्षसश्रेष्ठको छोरालाई छोरी दिने निर्णय गरिन् र ।४९। हे श्याम ! अनि छोरी विद्युत्केशीलाई दिइन् । सन्ध्याकी छोरीलाई पत्नीकारूपमा पाएर राक्षस विद्युत्केशी...।५०। त्यसरी नै शोभायमान भयो जसरी शचीलाई पाएर इन्द्र शोभायमान हुन्छन् । हे श्याम ! केही समय पछि शालकटङ्कटाले...।५१। विद्युत्केशीको गर्भ त्यसरी नै बोकिन् जसरी बादलले समुद्रको पानी बोक्दछ ।५२। पछि त्यो राक्षस्नीले गङ्गाले बोकेको अग्निको गर्भसमानको (आफ्नो) गर्भलाई मन्दर पर्वतमा लगेर जन्माइन् । (अनि) नवजात वालकलाई त्यहीँ छाडी रतीप्रिया त्यो राक्षस्नी...।५३। आत्मारूपी बालक पुत्रलाई पूरै बिर्सी पतिसँग रमाउन थाली । ( उता) बलिरहेको आगोसमान तेजिलो मातापिताबाट परित्यक्त

अथोपरिष्टाद्वृषभस्थितो देवो महेश्वरः ॥५५॥
अपश्यदुमया सार्धं रुदन्तं राक्षसात्मजम् ।
कारुण्यादथ पार्वत्या भवस्त्रिपुरसूदनः ॥५६॥
तं राक्षसात्मजं चक्रे पितुरेव वयःसमम् ।
अमरं चैव तं कृत्वा महादेवोऽक्षयावहम् ॥५७॥
पुरमाकाशगं प्रादात् पार्वत्याः प्रीतिकाम्यया ।
उमयाऽपि वरो दत्तो राक्षसानां भृगुद्वह ॥५८॥
गर्भप्राप्तिः सद्य एव प्रसूतिः सद्य एव तु ।
जातस्य च वयःप्राप्तिः कामतश्च भृगूद्वह ॥५९॥
ततः सुकेशो वरदानसंस्थितः
श्रियं प्रभोः प्राप्य भवस्य पार्श्वतः ।
चचार सर्वत्र महामतिः क्षणात्
खगं पुरं प्राप्य पुरन्दरो यथा ॥६०॥

त्यो बालक...।५४। आफ्नै हात मुखमा हालेर डाँको छोडेर रुन थाल्यो । पर्वत निवासी साँढे माथि चढेका भगवान् शिवले...।५५। पार्वती सहित रोहिरहेको त्यो राक्षसपुत्रलाई देखे । पार्वतीको दयाले गर्दा त्यो बालक राक्षसलाई...।५६। (एक्कासी) शिवले उसका पितासमान वयस्क बनाइ दिनु भयो । उसलाई अमर बनाई...।५७। पार्वतीको मायाले उसलाई आकाशचारी एक शहर पनि दिनु भयो । पार्वतीले पनि राक्षसमा शुक्राचार्य समान हुने वरदान दिनुभयो ।५८। "तुरुन्त गर्भ बसाउने, तुरुन्तै सुत्केरी गराउन सक्ने एवं जन्मनासाथ तरुनो हुने चाहना पूरा गर्नमा पनि शुक्राचार्य सरह हुनेछौ" भन्नु भयो ..।५९। त्यसपछि बुद्धिमान् सुकेशी (विद्युत्केशीको पुत्र)ले शिवबाट बरदान र लक्ष्मीलाई पाई तुरुन्त सबैतिर भ्रमण गर्‍यो । आकाशको शहर पाएर उ यसरी शोभायमान भयो जसरी स्वर्ग पाएर इन्द्र शोभायमान हुन्छन् ।६०।

**इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये सुकेशवरदानं नाम सप्तदशोऽध्यायः ॥१७॥**

श्रीस्कन्दपुराण, हिमवत्खण्ड, नेपालमाहात्म्यमा रावणको इतिहास बताउने क्रममा सुकेशको कथा प्रसङ्ग बताइएको सत्रौं अध्याय समाप्त भएको छ ।१७।

**श्लोकानामादितः समष्ट्यङ्काः-१,१७८+६०=१,२३८**

शुरुदेखिको श्लोक सङ्ख्या :-१,१७८+६०=१,२३८

## ॥ अथाष्टादशोऽध्यायः ॥
## ॥ अठारौं अध्याय ॥

**अगस्त्य उवाच ॥** अगस्त्य भन्नुहुन्छ-

**सुकेशं धार्मिकं मत्वा वरलब्धं च राक्षसम् ।**
**ग्रामणीर्नाम गन्धर्वो विश्वावसुसमप्रभः ॥१॥**
**तस्य देववती कन्या द्वितीया श्रीरिवापरा ।**
**तां तस्मै प्रददौ प्रीतः कृष्णायेवोदधिः श्रियम् ॥२॥**
**वरदानकृतैश्वर्यं सा तं प्राप्य पतिं प्रियाम् ।**
**आसीद्देववती दृष्ट्वा धनं प्राप्य च दुर्भगः ॥३॥**
**स तया सह सुप्रीतो रेमे च रजनीचरः ।**
**अञ्जनागर्भनिष्पन्नो गजो वाऽऽसीत् तयेव हि ॥४॥**
**देववत्यां सुकेशस्तु जनयामास भार्गव ।**
**स त्रिनेत्र समान् पुत्रान् जनयामास राक्षसः ॥५॥**
**माल्यवन्तं सुमालिं च मालिं च सुमहाबलम् ।**
**त्रयः सुकेशस्य सुताः त्रेताग्निसमतेजसः ॥६॥**
**त्रयो लोका इवान्यत्वं गतास्त्रय इवाग्नयः ।**
**त्रयो मन्त्रा इवात्युग्रास्त्रयो घोरा इवाग्नयः ॥७॥**
**विवृद्धिमगमँस्तत्र व्याधयः प्रबला इव ।**
**वरप्राप्त्या ततस्ते तु ज्ञात्वैश्वर्यं पितुर्महत् ॥८॥**
**तपस्तप्तुं गता एवं भ्रातरः कृतनिश्चयाः ।**
**प्रगृह्य नियमान् घोरान् राक्षसा मुनिपुङ्गव ॥९॥**
**चेरुस्तत्र तपो घोरं सर्वभूतभयावहम् ।**
**सत्यार्जवदमोद्भूतः स तु तेषां तपोबलः ॥१०॥**
**निर्ददाहेव लोकाँस्त्रीन् स देवासुरमानुषान् ।**
**ततो देवश्चतुर्वक्त्रो विमानं वरमास्थितः ॥११॥**
**सुकेशपुत्रानामन्त्र्य वरदोऽस्मीत्यभाषत ।**
**ब्रह्माणं वरदं ज्ञात्वा हृष्टा भार्गव राक्षसाः ॥१२॥**
**ऊचुः प्राञ्जलयः सर्वे वेपमाना इव द्रुमाः ।**
**तपसाऽऽराधितो देव ददासि यदि नो वरान् ॥१३॥**
**अजेयाः शत्रुहन्तारस्तथैव चिरजीविनः ।**
**प्रभविष्णो भविष्यामः परस्परमनुव्रताः ॥१४॥**
**एवं भविष्यथेत्युक्त्वा सुकेशतनयाँस्तदा ।**
**इत्युक्तः स ययौ देवो ब्रह्मा ब्राह्मणवत्सलः ॥१५॥**
**वरं लब्ध्वा तु ते सर्वे श्याम रात्रिञ्चरेश्वराः ।**
**सुरासुरनराणां तु वरदानात् सुनिर्भयाः ॥१६॥**
**तैर्वाध्यमानास्त्रिदशा ऋषिसङ्घाः सचारणाः ।**
**त्रातारं नाध्यगच्छंस्ते निरपत्या यथा नराः ॥१७॥**
**अथ ते विश्वकर्माणं शिल्पिनां प्रभुमव्ययम् ।**
**प्रोचुराहूय सहिता राक्षसा भृगुनन्दन ॥१८॥**
**गृहकर्ता भवान् देवो देवानां हृदयेप्सितम् ।**
**अस्माकमपि देव त्वं गृहान् कर्तुमतोऽर्हसि ॥१९॥**
**हिमवन्तं समासाद्य मेरुमन्दरमेव च ।**
**सुरेश्वरगृहप्रख्यान् गृहान् नः कुरु विश्वकृत् ॥२०॥**
**विश्वकर्मा वचः श्रुत्वा राक्षसानां महात्मनाम् ।**

(महादेवबाट) वरदान प्राप्त सुकेशलाई धार्मिक राक्षस मानी विश्वावसु समान प्रभाव भएको “ग्रामणी” नाम गरेको गन्धर्वले...।१। आफ्नी “देववती” नाम गरेकी दोश्री लक्ष्मी जस्ती छोरी उसलाई समुद्रले लक्ष्मी विष्णुलाई दिए जसरी खुशीले दिए ।२। (शिवबाट) वरदान पाएका ऐश्वर्यशाली प्रिय पतिलाई पाई देववती यसरी चम्किइन् जसरी (कुनै) दरिद्र ( अकस्मात्) धन पाउँदा चम्कने गर्दछ ।३। सुकेश राक्षस (पनि) देववतीसँग प्रसन्न भएर यसरी रम्न थाल्यो, जसरी अञ्जना ( हात्ती) का गर्भबाट जन्मिएको हात्ती आफ्नी ढोहीसँग रम्दछ ।४। हे भार्गव ! सुकेश राक्षसले देववतीबाट तीन नेत्र समानका तीन छोरा जन्माए ।५। (ती) माल्यवान्, सुमालि र बलवान् मालि ( नामका) सुकेशका तीन वटै पुत्र त्रेताग्नि समान तेजस्वी थिए ।६। यि तीन पुत्र मानौ तीन लोक नै हुन कि जस्ता वा  तीन अग्नि नै पो हुन् कि जस्ता वा तीन अति उग्र मन्त्र हुन कि जस्ता वा तीन भयङ्कर अग्नि पो हुन् कि जस्ता थिए ।७। अथवा हुर्केका तीन व्याधि नै पो हुन् कि जस्ता देखिन्थे । पिताले बरदानमा ठूलो ऐश्वर्य पाएको थाहा पाई त्यसपछि ती तीन...।८। भाईहरुले तपस्या गर्ने अठोट गरी हे मुनिश्रेष्ठ ! कठोर नियममा बसी उग्र तपस्या गरे ।९। तिनको (त्यो) उग्र तपस्या सबै प्राणीलाई भयदायक थियो । सत्य, कोमलता र दमबाट उत्पन्न तिनको त्यो तपोबलले...।१०। देवता, असुर र मानव एवं त्रिलोकलाई नै जलाइरहेभैं प्रतित हुन्थ्यो । त्यसपछि उत्तम विमानमा चढी ब्रह्मा त्यहाँ आउनु भयो (र)...।११। सुकेशका पुत्रहरूलाई सम्बोधन गर्दै “म बरदान दिन चाहन्छु (माग)” भन्नु भयो । हे भार्गव ! ब्रह्मालाई बरदाता जानी राक्षसहरू खुशी हुँदै...।१२। रुखजस्तै काँप्दै हात जोडेर भन्न लागे-“हे तपस्याले आराधना गरिएका देवता ! हजुर हामीलाई बरदान दिन चाहनु हुन्छ भने...।१३। हामी जित्न नसकिने, शत्रु मार्ने, दीर्घजीवि, विष्णुसमान प्रभावशाली र एक आपसमा एकता भएका बनौं” ।१४। त्यसपछि सुकेशका छोराहरूलाई “त्यस्तै नै होस्” भनी बरदान दिएर ब्राह्मणप्रेमी ब्रह्मा स्वर्ग जानु भयो ।१५। बरदान पाएर ती सबै राक्षसहरू देवता, दानव र मानवसँग निर्भय भई रहनबस्न लागे ।१६। ती राक्षसबाट पीडित तीनै लोकका ऋषि, देवता, चारण ( भाट) आदि गण  निसन्तान मानिसभैं भई उद्धारकर्ता समक्ष ( गुहार माग्न) गएनन् ।१७। हे भृगुनन्दन ! यसपछि ती राक्षसहरूले देवताका शिल्पकार विश्वकर्मालाई बोलाएर यसो भन्न लागे ।१८। “हजुर देवतालाई तिनले चाहेजस्तो घर बनाइ दिनु हुन्छ, त्यसैले हजुर हाम्रा लागि पनि घर बनाउन योग्य हुनुहुन्छ ।१९। हे विश्वकर्मा ! हिमालय, सुमेरु र मन्दराचलमा देवताका लागि बनाए जस्तै भवन हाम्रा लागि पनि बनाइ दिनु होस् ।२०। राक्षसहरूका कुरा सुनेर एकछिन विचार (ध्यान) गरी

**निजगाद क्षणं ध्यात्वा राक्षसेभ्यो महत्स्थलम् ॥२१॥**

विश्वकर्माले राक्षसहरूका लागि बस्ने भव्य स्थलका बारेमा ( यसरी) बताउन लागे ।२१।

**विश्वकर्मोवाच** ॥ विश्वकर्मा भन्दछन्-

**शकुनैरपि दुष्प्रापं टङ्कच्छिन्नं चतुर्दिशम् ।**
**त्रिंशद्योजनविस्तीर्णं शतयोजनमायतम् ॥२२॥**
**तत्र लङ्का च नगरी मया शक्राज्ञया कृता ।**
**सा सुवर्णमयी लङ्का रत्नवैदूर्यतोरणा ॥२३॥**
**तस्यां वसत दुर्धर्षा पुर्यां राक्षससत्तमाः ।**
**सहस्रानुचराः कृत्वा गत्वा भार्गव सत्पुरीम् ॥२४॥**
**दृढप्रकारपरिखां हेमैर्गृहशतैर्वृताम् ।**
**लङ्कामवाप्य ते हृष्टा अवसन् रजनीचराः ॥२५॥**

चराहरूले पनि पाउन (वा पत्ता लगाउन) नसक्ने, चारैतिरबाट जोड (पुल आदि जोड्ने कुरा) हटाई (छुट्टै) ३० योजन फराकिलो र सय योजन क्षेत्रफलको...।२२। मैले इन्द्रको आदेश अनुसार बनाएको (एउटा) लङ्का नामको शहर छ । त्यो लङ्का सुनैसुनले बनेको एवं नानाथरी रत्न एवं वैदूर्यमणि जडित तोरणले युक्त छ ।२३। हे हराउन वा जित्न कठिन भएका श्रेष्ठ राक्षसहरू हो ! तिमीहरू हजारौं अनुयायीलाई लिएर त्यस शहरमा गएर बस ।२४। (त्यसपछि) बलियो किल्ला, गहिरा पानीको खाडल एवं सुनैसुनका सैयौं भवनले युक्त लङ्कामा गएर ती राक्षसहरू बस्न लागे ।२५।

**मार्कण्डेय उवाच** ॥ मार्कण्डेय भन्नुहुन्छ-

**इत्यगस्त्यवचः श्रुत्वा भृगुवंशसमुद्भवः ।**
**श्यामः पप्रच्छ विनयादगस्त्यं मुनिसत्तमम् ॥२६॥**

अगस्त्यका यस्ता कुरा सुनेपछि भृगुवंशमा उत्पन्न भएका श्याम मुनिले नम्र भएर मुनिश्रेष्ठ अगस्त्यलाई भन्न लागे ।२६।

**श्याम उवाच** ॥ श्याम भन्दछन्-

**दक्षिणस्योदधेस्तीरे सुमेरुशिखरे कथम् ।**
**लङ्का स्वर्णमयी विश्वकर्मणा निर्मिता कथम् ॥२७॥**
**एतं नः संशयं छिन्धि सर्वज्ञ मुनिसत्तम ।**
**श्यामवाक्यं समाकर्ण्यागस्त्यः प्राह पुनश्च तम् ॥२८॥**

दक्षिण सागरको किनारमा सुमेरु पर्वतमाथि विश्वकर्माले लङ्का शहर किन बनाए ? ।२७। हे सबै कुराका जानकार मुनिश्रेष्ठ ! मेरो यो शङ्का निवारण गरी दिनु होस् । श्यामका कुरा सुनी अगस्त्य मुनिले उनलाई फेरी भन्न लाग्नु भयो ।२८।

**अगस्त्य उवाच** ॥ अगस्त्य भन्नुहुन्छ-

**अहं ते कथयिष्यामि लङ्कोत्पत्तिं निशामय ।**
**पुरा सुमेरुशिखरे नानारत्नविचित्रिते ॥२९॥**
**दिव्या देवसभा जाता सिद्धगन्धर्वचारणैः ।**
**तत्र प्रसङ्गतो जाता कथा बलवतां मुने ॥३०॥**
**कश्चित्तत्र सुरः प्राह वायुर्बलवतां वरः ।**
**नेति देवः कश्चिदाह गरुडो बलिनां वरः ॥३१॥**
**सुरान् सुरेन्द्रः संप्राह ज्ञातव्यमनयोर्बलम् ।**
**कथं विशेषतो देवाः प्रभञ्जनसुपर्णयाः ॥३२॥**
**सुरेन्द्रवचनं श्रुत्वा नारदः प्राह देवताः ।**
**सुमेरुश्रृङ्गमेकं हि धृत्वा वै विनतात्मजः ॥३३॥**
**तिष्ठतूपरिविक्रान्तो वायुरुत्पाटयत्वमुम् ।**
**तदा बलं परीक्षामः प्रभञ्जनसुपर्णयोः ॥३४॥**
**नारदस्य वचः श्रुत्वा बाढमित्यब्रवीद्वचः ।**
**वायुरप्याह गरुडं सुपर्णं भव विक्रमी ॥३५॥**
**इति वायुवचः श्रुत्वा गरुडो बलिनां वरः ।**
**धृत्वा सुमेरुशिखरं तस्थौ विक्रमपूर्वकम् ॥३६॥**

हे श्याम ! म तिमीलाई लङ्काको उत्पत्तिका बारेमा बताउँदछु । प्राचीन कालमा अनेक रत्नले सुसज्जित सुमेरु पर्वतमा...।२९। सिद्ध, गन्धर्व, भाट आदि सहितको दिव्य देवसभा बसेको थियो । हे मुनि ! (त्यस सभामा) को बलियो भन्ने प्रसङ्ग चल्यो ।३०। केही देवताले "सबभन्दा बलिया त वायु हुन्" भने त केही देवताले "होइन, सबभन्दा बलिया गरुड हुन्" भने ।३१। अनि इन्द्रले वायु र गरुडको बलको परीक्षा कसरी गर्ने भन्ने कुरा देवतासमक्ष राखे ।३२। इन्द्रका कुरा सुनी नारदले भने "सुमेरु पर्वतको एउटा डाँडो बोकेर गरुड सुमेरु पर्वतको टुप्पोमा बलियोसँग बसुन्....।३३। ( अनि) वायुले त्यस डाँडोलाई उडाउन (उडाउन खोजुन्) । यसरी वायु र गरुडको बलको परीक्षा हामीले लिन सक्दछौं ।३४। नारदका कुरा सुनी वायुले "ल हुन्छ" भनेर गरुडलाई आफ्नो पराक्रम देखाउन भने ।३५। वायुका कुरा सुनी अती बलिया गरुडले सुमेरुको एउटा डाँडो बोकी सुमेरुको टुप्पोमा गई डटेर बसे ।३६। त्यसपछि तुरुन्तै अत्यन्त ठूलो हुरी चल्न थाल्यो । ( त्यो) हुरीले अनेक वृक्ष र पहाडलाई उखेलेर फाल्न थाल्यो ।३७।

**ववौ प्रभञ्जनः शीघ्रं महाविक्रमपूर्वकम् ।**
**उन्मूलयामास गिरीन्महावृक्षाननेकशः ॥३७॥**
**महाभञ्भानिलोद्धूतैस्तरङ्गैश्च महोदधिः ।**
**जगत् संप्लायामास लोका व्याकुलतां ययुः ॥३८॥**
**भञ्भावायुसमुद्धूतः पांशुभिः कवलीकृतौ ।**
**न दृक्पथं समायातौ प्राणिनां चन्द्रभास्करौ ॥३९॥**
**संचालने सुपर्णस्य पक्षस्यैकस्य मारुतः ।**
**अपि संचलने शक्तो नालं विक्रमसंयुतः ॥४०॥**
**शिखरोन्मूलने शक्तिः का हि वायोर्भविष्यति ।**
**वायुर्बलवतां श्रेष्ठः कृत्वा द्विगुणविक्रमम् ॥४१॥**
**व्याकुलं च जगच्चक्रे सर्वं स्थावरजङ्गमम् ।**
**भञ्भावातहताः केचित् प्राणिनो निधनं गताः ॥४२॥**
**उन्मूलितैर्गिरिवरैर्देशाँश्चूर्णीकृता भृशम् ।**
**त्रैलोक्यविकलं सर्वं ब्रह्माणं शरणं ययौ ॥४३॥**
**सुमेरुशिखरं गत्वा ब्रह्मा लोकपितामहः ।**
**वन्दितस्त्रिदशैः सर्वैः प्रभञ्जनमथाब्रवीत् ॥४४॥**

समुद्रमा ठूलठूला भूमरी पर्न र छाल आउन थाले । संसार डुब्न लाग्यो र लोकमा हाहाकार मच्चियो ।३८। आँधीबेरी र भूमरीले उडाएको धुलोले गर्दा प्राणीहरूले सूर्यचन्द्रलाई (समेत) देख्न नसक्ने भए ।३९। वायुले जति बल गरेपनि पराक्रमी गरुडको एउटा पखेंटा पनि हल्लाउन सकेनन् ...।४०। भने पहाड उडाउने सामर्थ्य उनको कहाँबाट होस् । त्यसपछि (अघिको भन्दा) दुई गुना ठूलो भएर हुरीबतास चल्न थाल्यो ।४१। (त्यो हुरीले) चल, अचल सारा संसारलाई आकुलव्याकुल बनाउन थाल्यो । त्यसले केही प्राणी मरे पनि ।४२। हुरीले उखेलिएका पर्वत बज्रेर कतिपय देश धुलोपिठो भए । यसरी तीनै लोक व्याकुल भएपछि सबै ब्रह्माका शरणमा गए ।४३। सबै देवताबाट बन्दना गरिएका संसारका पिता ब्रह्मा (त्यसपछि) सुमेरु शिखरमा गएर वायुलाई भन्न लाग्नु भयो ।४४।

**ब्रह्मोवाच** ॥ ब्रह्मा भन्नुहुन्छ-

**प्रभञ्जन निवर्तस्व जगत् सर्वं विनश्यति ।**
**देहिनां प्राणभूतोऽसि जानेऽहं विक्रमं तव ॥४५॥**
**क्षमां कुरु जगत्प्राण क्षमाशीला हि पण्डिताः ।**
**कुरुष्व जगतां रक्षां जानेऽहं बलवानसि ॥४६॥**

"हे वायु ! शान्त बन (फर्क) । (यसरी त) संसार सबै नष्ट हुन्छ । तिमी शरीरधारी सबैका प्राण हौ । म तिम्रो पराक्रमलाई जान्दछु ।४५। हे जगत्का प्राण ! क्षमाशील नै विद्वान हुन्छ, संसारलाई बचाउ, म तिम्रो पराक्रमलाई जान्दछु" ।४६।



**अगस्त्य उवाच** ॥ अगस्त्य भन्नुहुन्छ-

**इति धातुर्वचः श्रुत्वा प्राह वाक्यं प्रभञ्जनः ।**

ब्रह्माका यस्ता कुरा सुनी वायु यसो भन्न लागे ।

**वायुरुवाच** ॥ वायु भन्दछन्-

**मेरुशृङ्गमनुत्पाट्य निवृत्तो न भवाम्यहम् ॥४७॥**
**जगत्तिष्ठतु वा यातु नाशं तत्र न मे वृथा ।**
**इति वायुवचः श्रुत्वा ब्रह्मा विष्णुमुवाच ह ॥४८॥**

"यो मेरुको डाँडो उखेलेर नफालेसम्म म शान्त (हुँदै) हुन्न ।४७। (त्यति नगर्दासम्म) संसार रहोस् कि नासियोस् मलाई मतलब छैन" । वायुका यस्ता कुरा सुनी ब्रह्माले विष्णुलाई भन्नु भयो ।४८।

**ब्रह्मोवाच** ॥ ब्रह्मा भन्नुहुन्छ-

**निवारय हृषीकेश गरुडं बलिनां वरम् ।**
**वायुरुत्पायत्वेनं न चेते सृष्टिर्विनश्यति ॥४९॥**

हे विष्णु ! बलियामा बलिया गरुडलाई रोक्नु होस्, नत्र वायुले सुमेरुलाई उखेलि दिन्छन् र त्यसले यो संसार नै नष्ट हुनेछ ।४९।

**श्रीविष्णुरुवाच** ॥ विष्णु भन्नुहुन्छ-

**श्रुत्वा ब्रह्मवचो विष्णुर्गरुडं प्राह तत्क्षणात् ।**
**निवृत्तो भव पक्षीन्द्र जानेऽहं तव विक्रमम् ॥५०॥**
**उत्पाट्य मेरुशिखरं तुष्टो भवतु मारुतः ।**

ब्रह्माका कुरा सुनी विष्णुले तुरुन्त गरुडलाई भन्नु भयो-हे पंक्षीश्रेष्ठ गरुड ! तिमी फर्क, म तिम्रो पराक्रम जान्दछु ।५०। मेरुपर्वतलाई उखेलेर वायु सन्तुष्ट हुन् (हुन्छन् भने हुन देउ) ।

**अगस्त्य उवाच** ॥ अगस्त्य भन्नुहुन्छ-

पक्षी विष्णुवचः श्रुत्वा किं चिच्छैथिल्यमाययौ ॥५१॥
वायुरुत्पाटयामास मेरुश्रृङ्गं महाबलः ।
दक्षिणस्योदधेस्तोयमध्ये श्रृङ्गं पपात ह ॥५२॥
तत्सुवर्णमयं शृङ्गं सिन्धुतोयैः सुवेष्टितम् ।
प्रोवाच विश्वकर्माणं शक्रो दृष्ट्वा मनोहरम् ॥५३॥
विश्वकर्मन् महाभाग वासाय मम सत्वरम् ।
कुरु लङ्कापुरीं रम्यां परिखीकृतसागराम् ॥५४॥
इति शक्रवचः श्रुत्वा विश्वकर्मा महाकृती ।
लङ्कानामपुरीं चक्रे शक्रस्यैवामरावतीम् ॥५५॥
लङ्कानामपुरीं रम्यामुवास बलसूदनः ।
सर्वदेवगणैः सार्धं निजां त्यक्त्वाऽमरावतीम् ॥५६॥
एतद्वृत्तान्तमाकर्ण्य ब्रह्मा मुनिगणैः सह ।
विश्वकर्मकृतां लङ्कां ययौ द्रष्टुं मनोहराम् ॥५७॥
लङ्कयामागतं दृष्ट्वा ब्रह्माणं बलसूदनः ।
प्रत्युद्ययावादरेण सर्वदेवगणैः सह ॥५८॥
पूजयित्वा यथान्यायं कृतासनपरिग्रहम् ।
उवाच विनतो भूत्वा ब्रह्माणं बलसूदनः ॥५९॥
लङ्कानामपुरीं रम्यां परिखीकृतसागराम् ।
ब्रह्मन् संदृश्यतां दिव्या मम वासाय कल्पिता ॥६०॥

विष्णुका कुरा सुनेर गरुड केही शिथिल भए ।५१। (अनि) अति बलिया वायुले मेरु पर्वत उखेले र दक्षिण समुद्रको जलमा लगेर बजारी (फाली) दिए ।५२। त्यसपछि त्यो सुनले झकिझकाउ, पानीले घेरिएको र मनोहर शिखर देखेर इन्द्रले विश्वकर्मालाई भने-।५३। हे अति भाग्यमानी विश्वकर्मा ! (त्यस शिखरमा) मलाई बस्न सागरको खाडीले युक्त सुन्दर लङ्का शहर बनाउनु होस् ।५४। इन्द्रको कुरा सुनी दक्ष शिल्पकार विश्वकर्माले इन्द्रको अमरावती शहर समान लङ्का नामको शहर बनाए ।५५। (लङ्काको अर्थ उज्वल, सुन्दर र सुरक्षित भनी लेखिएको छ) । त्यसपछि इन्द्र देवगणसहित अमरावती छाडेर त्यो लङ्का नामक शहरमा आएर रमाउँदै बस्न लागे ।५६। यो कुरा सुनी ब्रह्मा पनि मुनिगण सहित विश्वकर्माले बनाएको लङ्का शहरको सुन्दरता हेर्न आउनु भयो ।५७। ब्रह्मा लङ्कामा आएको देखी इन्द्र देवगण सहित आदरपूर्वक उनका सामु उपस्थित भए ।५८। अनि शास्त्रीय विधिविधानले उनको पूजा गरी आसनमा बसाउँदै इन्द्रले ब्रह्मालाई यस्ता नम्र वचन बोले-।५९। हे ब्रह्मन् ! सागरको खाडीले घेरिएको मलाई बस्न भनी बनाइएको यो लङ्का नामक शहरलाई राम्ररी हेर्नु होस् ।६०।

अगस्त्य उवाच ॥ अगस्त्य भन्नुहुन्छ-



इति देववचः श्रुत्वा विरञ्चिर्लोकपूजितः ।
तुङ्गसौधं समारुह्य ददर्श नगरीं तदा ॥६१॥
निम्नां दक्षिणदिग्भागे लङ्कां दृष्ट्वा मनोहराम् ।
ब्रह्मा प्रोवाच देवेन्द्रं मुनिभिः परिवारितः ॥६२॥
इयं दक्षिणदिग्भागे निम्ना लङ्कापुरी यतः ।
अतो हि रक्षसां स्थानमियं लङ्का भविष्यति ॥६३॥
निम्ना दक्षिणदिग्भागे या पुरी त्रिदशेश्वर ।
तस्यां निवसतामादौ वृद्धिरन्ते पुनः क्षयः ॥६४॥
निवसिष्यन्ति लङ्कायां प्राणिनो धार्मिका अपि ।
ते सर्वे क्रूरकर्माणो भविष्यन्ति न संशयः ॥६५॥
न वस्तव्यं त्वया शक्र लङ्कायामिति हेतुतः ।
राक्षसा निवसिष्यन्ति घोरा लोकभयावहाः ॥६६॥
इत्युक्त्वा प्रययौ ब्रह्मा मुनिभिः परिवारितः ।
विहाय लङ्कां देवेशो जगाम स्वपुरीं ततः ॥
ततः प्रभृति शून्याऽभूल्लङ्का स्वर्णमयी मुने ॥६७॥

इन्द्रका कुरा सुनी संसारबाट पूजित ब्रह्माले (एउटा) अग्लो भवनमा चढी लङ्का शहरलाई हेर्नु भयो ।६१। दक्षिणतिर होचो भएको सुन्दर लङ्का शहरलाई देखेर मुनिगणबाट घेरिएका ब्रह्माले इन्द्रलाई भन्नुभयो-।६२। "यो लङ्का शहर दक्षिणतिर होचो छ, त्यसैले यो शहर (भविष्यमा) राक्षसहरूको निवासस्थल हुनेछ ।६३। हे इन्द्र ! जुन शहर दक्षिणतिर होचो हुन्छ, त्यहाँ बस्दा पहिले उन्नति र त्यसपछि नाश हुन्छ ।६४। धार्मिक जन पनि यस लङ्का शहरमा आएर बसे भने निश्चितरूपमा क्रूरकर्म गर्ने हुने छन् ।६५। हे इन्द्र ! त्यसैले तिमीले यहाँ बस्नु उचित हुन्न । संसारलाई तर्साउने डरलाग्दा राक्षसहरू यहाँ बस्ने छन्" ।६६। यति भनेर ब्रह्मा मुनिहरू सहित (आफ्नो लोकतिर) जानु भयो । इन्द्र (आदि) पनि लङ्का छाडी आफ्नै अमरावती (तिर) गए । हे मुनि ! त्यसपछि सुनले बनेको त्यो लङ्का शहर (लामो समयसम्म) सुनसान भयो ।६७।

इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्येऽष्टादशोऽध्यायः ॥१८॥
श्रीस्कन्दपुराण, हिमवत्खण्ड, नेपालमाहात्म्यमा रावणको इतिहास बताउने क्रममा लङ्काको उत्पत्ति र सौन्दर्यता बताइएको अठारौं अध्याय समाप्त भएको छ ।१८।

श्लोकानामादितः समष्टयङ्काः-१,२३८+६७=१,३०५
शुरुदेखिको श्लोक सङ्ख्या :-१,२३८+६७=१,३०५

**॥ अथैकोनविंशोऽध्यायः ॥**

॥ उन्नाईसौं अध्याय ॥

**श्याम उवाच ॥** श्याम भन्दछन्-

**ततस्ते मुनिशार्दूल लङ्कायां राक्षसेश्वराः ।**
**किमकुर्वन्त ते वीरास्तन्माख्यातुमर्हसि ॥१॥**

हे मुनिश्रेष्ठ ! जब ती तीन राक्षसश्रेष्ठहरू लङ्कामा गएर बसे अनि ती वीरले के गरे ? हजुर मलाई बताउनु होस् ।१।

**मार्कण्डेय उवाच ॥** मार्कण्डेय भन्नुहुन्छ-

**इति श्यामवचः श्रुत्वा जैमिने मुनिसत्तम ।**
**भृगुवंशसमुद्भूतमगस्त्यः प्राह सादरम् ॥२॥**

हे श्रेष्ठमुनि जैमिनि ! श्यामका यस्ता कुरा सुनी उनलाई अगस्त्यले आदरपूर्वक भन्न लाग्नु भयो...।२।

**अगस्त्य उवाच ॥** अगस्त्य भन्नुहुन्छ-

**एतस्मिन्नेव काले तु यथाकामं च भार्गव ।**
**नर्मदा नाम गन्धर्वी बभूव भृगुनन्दन ॥३॥**
**तस्या कन्यात्रयं ह्यासीत् ह्रीश्रीकान्तिसमद्युति ।**
**ज्येष्ठक्रमेण सा तेषां राक्षसानामराक्षसी ॥४॥**
**कन्यास्ताः प्रददौ हृष्टाः पूर्णचन्द्रनिभाननाः ।**
**त्रयाणां राक्षसेन्द्राणां तिस्रो गन्धर्वकन्यकाः ॥५॥**
**दत्ता मात्रा महाभागा नक्षत्रे भगवदैवते ।**
**कृतदारास्तु ते श्याम सुकेशतनयास्तदा ॥६॥**
**चिकीडुः सह भार्याभिरप्सरोभिरिवामराः ।**
**तत्र माल्यवती नाम सुन्दरीणां च सुन्दरी ॥७॥**
**स तस्यां जनयामास यदपत्यं निबोध तत् ।**
**वज्रमुष्टिर्विरूपाक्षो दुर्मुखश्चैव राक्षसाः ॥८॥**
**सुमुखो यज्ञकेतुश्च मत्तोन्मत्तस्तथैव च ।**
**सुलोचनाऽभवत् कन्या सुन्दर्या नाम सुन्दरी ॥९॥**
**सुमालिनोऽपि भार्याऽऽसीत् पूर्णचन्द्रनिभानना ।**
**नाम्ना केतुमती श्याम प्राणेभ्योऽपि गरीयसी ॥१०॥**
**सुमाली जनयामास यदपत्यं निशाचरः ।**
**केतुमत्यां भृगुश्रेष्ठ तन्निबोधानुपूर्वशः ॥११॥**
**प्रहस्तोऽकम्पनश्चैव विकटः कालिकामुखः ।**
**धूम्राक्षश्चाथ दण्डश्च सुपार्श्वश्च महाबलः ॥१२॥**
**संह्रादिः प्रघसश्चैव भासकर्णश्च राक्षसः ।**
**राका पुष्पोत्कटा चैव नैकसी च शुचिस्मिता ॥१३॥**
**कुम्भीनसी तथेत्येताः सुमालिप्रभवाः स्मृताः ।**
**मालिनो वसुदा नाम गन्धर्वी रूपशालिनी ॥१४॥**
**भार्याऽऽसीत् पद्मपत्राक्षी साक्षात् पद्मसमानना ।**
**सुमालिनोऽनुजस्तस्यां जनयामास यन्मुने ॥१५॥**
**अपत्यं कथ्यमानं तु निबाध मम भार्गव ।**
**अनिलश्च निलश्चैव भीमः सम्पातिरेव च ॥**
**एते विभीषणामात्याः प्रालेयास्ते निशाचराः ॥१६॥**
**ततस्तु ते राक्षसपुङ्गवास्त्रयो**

हे श्याम ! त्यसैबेला (त्यहाँ) नर्मदा नाम गरिएकी इच्छा अनुसार विचरण गर्ने गन्धर्व स्त्री भइन् (आइन्) ।३। उनका ह्री, श्री र कान्ति समान तेजिला तीन कन्याहरू थिए । ती अराक्षसीले जेष्ठता क्रमअनुसार ती राक्षसहरूलाई...।४। ती कन्या दिइन् । हे श्याम ! पूर्णचन्द्र जस्ता तीन गन्धर्वकन्या विहे गर्न पाएर ती तीन सुकेशी पुत्र राक्षसराजहरू यसरी खुशी भए जसरी अप्सरासँग इन्द्र खुशी हुन्छन् ।५-६। (तीमध्ये) परमसुन्दरी माल्यवान्की पत्नी माल्यवतीले जन्माएका पुत्रहरूको नाम सुन । उनले वज्रमुष्टि, विरूपाक्ष, दुर्मुख,...।७-८। सुमुख, यज्ञकेतु, मत्तोन्मत्त नामका पुत्रहरू तथा सुलोचना नाम गरेकी एउटी परमसुन्दरी पुत्री जन्माइन् ।९। हे श्याम ! सुमालिकी पत्नी केतुमती चन्द्रमा समान सुन्दर थिइन् । सुमालिलाई आफ्नी पत्नी प्राणभन्दा पनि प्यारी लाग्दथिन् ।१०। हे भृगुश्रेष्ठ ! सुमाली नामक राक्षसले केतुमतीबाट जन्माएका सन्तानको बेलिविस्तार क्रमशः सुन ।११। प्रहस्त, अकम्पन, विकट, कालिमुख, धम्राक्ष, दण्ड, महाबली सुपार्श्व, संह्रादि, प्रघस र भासकर्ण नामका राक्षसपुत्रहरू तथा राका, पुष्पोत्कटा, शुचिस्मिता र कुम्भीनसी नामका पुत्रीहरू जन्मिए । माली राक्षसकी वसुधा नाम गरिएकी गन्धर्व कन्या, जसका कमलको पत्ती जस्ता आँखा र कमलको फूलजस्तो शरीर थियो त्यस्ती रूपकी खानी भएकी कन्या पत्नी थिइन् । हे मुनि ! सुमालीका भाई मालीले आफ्नी पत्नी वसुधाबाट जुन् सन्तान जन्माए, तिनको नाम सुन । हे भार्गव ! तिनको नाम अनिल, निल, भीमसम्पाति । (हीमतुल्य निशाचरलाई विभीषणका अमात्य मानिन्छ) ।१२-१६। तब ती तीन सुकेश पुत्रले आफ्ना सैयौं पुत्रहरू तथा निशाचरसँग मिली अति बलिया र घमण्डी भई देवता, देवराज इन्द्र, ऋषि र दानवगणलाई दुःख दिन शुरु गरे ।१७। संसारमा ती दुष्ट वरदानले उन्मत्त भई अग्निसमान हुँदै, युद्धप्रिय भई, सैयौं उपद्रो गर्ने, र यज्ञकर्ताको शान्ति नाश गर्न थाले ।१८।

निशाचरैः पुत्रशतैश्च संवृताः ।
सुरान्महेन्द्रानृषिनागदानवान्
ववाधिरेऽतिप्रबलातिगर्विताः ॥१७॥
जगद्वसन्तोऽनलवद्दुरासदाः
रणप्रचण्डाः शतशः सदोद्यताः ।
वरप्रदानादभिवर्धिता भृशं
क्रतुक्रियाणां प्रशमं प्रचक्रिरे ॥१८॥

॥ इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये ऊनविंशोऽध्यायः ॥१९॥
श्रीस्कन्दपुराण, हिमवत्खण्ड, नेपालमाहात्म्यमा लङ्काको राक्षस-वंश वर्णन गरिएको उन्नाईसौं अध्याय समाप्त भएको छ ।१९।

श्लोकानामादितः समष्ट्यङ्काः-१,३०५+१८=१,३२३
शुरुदेखिको श्लोक सङ्ख्या :-१,३०५+१८=१,३२३

## ॥ अथ विंशोऽध्यायः ॥
## ॥ बीसौं अध्याय ॥

**अगस्त्य उवाच ॥** अगस्त्य भन्नुहुन्छ-

**तैर्वाध्यमाना देवाश्च मुनयश्च तपोधनः ।**
**भयार्ताः शरणं जग्मुर्देवदेवं महेश्वरम् ॥१॥**
**प्रणम्य दण्डवद्भूमौ भयाद्गद्गदभाषिणः ।**
**सुकेशपुत्रैर्भगवन् वाधिताः स्म हताश्च ह ॥२॥**
**प्रजाध्यक्ष प्रजाः सर्वा वाध्यन्ते रिपुनाशन ।**
**शरण्येहा शरण्याश्च कृतास्ते राक्षसैर्विभो ॥३॥**
**स्वर्गात् प्रच्यवते शक्रः स्वर्गे क्रीडन्ति देववत् ।**
**अहं विष्णुरहं रुद्रो ब्रह्माऽहं देवराडहम् ॥४॥**
**अहं यमोऽहं वरुणश्चन्द्रोऽहं रविरप्यहम् ।**
**इति ते राक्षसा देव वरदानेन दर्पिताः ॥५॥**
**भाषन्ते समरे हर्षाद्ये च तेषां पुरःसराः ।**
**तन्नो देव भयार्तानाभयं दातुमर्हसि ॥६॥**
**अशिवं वपुरास्थाय जहि तान् देवकण्टकान् ।**
**इत्युक्तः स सुरैः सर्वैः कपर्दी नीललोहितः ॥७॥**
**सुकेशं प्रति सापेक्षः प्राह देवगणान् प्रभुः ।**
**अहं तान् न हनिष्यामि ममावध्या हि तेऽसुराः ॥८॥**
**किं तु मन्त्रं प्रवक्ष्यामि यो वै तान् निहनिष्यति ।**
**एवमेव समुद्योगं पुरस्कृत्य सुरर्षभाः ॥९॥**
**गच्छन्तु शरणं विष्णुं हनिष्यति स तान् प्रभुः ।**
**ततस्ते जयशब्देन नन्दित्वा वै महेश्वरम् ॥१०॥**
**विष्णोः समीपं ते जग्मुर्निशाचरभयार्दिताः ।**
**शङ्खचक्रधरं ते तु प्रणम्य बहुमानतः ॥११॥**
**ऊचुः सभ्रान्ततद्वाक्यं सुकेशतनयार्दिताः ।**
**सुकेशतनयैर्देव त्रिभिस्त्रेताग्निसन्निभैः ॥१२॥**
**आक्रम्य वरदानेन वश्या देवकृता वयम् ।**
**लङ्का नाम पुरी रम्या त्रिकूटशिखरस्थिता ॥१३॥**
**तत्र स्थित्वा प्रवाधन्ते सर्वान् नः क्षणदाचराः ।**
**स त्वामस्मत्प्रियार्थं हि जहि तान् मधुसूदन ॥१४॥**
**चक्रकृत्तास्यकमलान् निवेदय यमाय वै ।**
**भयेष्वभयदोऽस्माकं नान्योऽस्ति भवता समः ॥१५॥**
**नुद तन्नो भयं देव नीहारमिव भास्करः ।**
**इत्येवं तैः सुरैरुक्तो देवदेवो जनार्दनः ॥१६॥**
**अभयं भयभीतानां दत्वा देवानुवाच ह ।**
**सुकेशं राक्षसं जाने ईशानवरदर्पितम् ॥१७॥**
**त्रीस्तँस्य तनयाञ्जाने येषां ज्येष्ठः स माल्यवान् ।**
**तानहं समतिक्रान्तमर्यादान् राक्षसाधमान् ॥१८॥**
**सूदयिष्यामि संग्रामे सुरा भवत विज्वराः ।**
**इत्युक्त्वा ते सुराः सर्वे विष्णुना प्रभविष्णुना ॥१९॥**
**यथावासं ययुर्हृष्टाः प्रशंसन्तो जनार्दनम् ।**
**विबुधानां समुद्योगं माल्यवान् स निशाचरः ॥२०॥**

ती तीन राक्षशबाट पीडित देवता र मुनिहरू डराउँदै देवताका निदेवता महादेवका शरणमा गए ।१। (महादेवलाई) जमिनमा दण्डवत् प्रणाम गर्दै डरले गदगद स्वरमा तिनले भन्न लागे-"भगवान् सुकेशका पुत्रहरूले हामीलाई दुःख दिए, हामीमध्ये कसैलाई त मारे पनि ।२। हे प्रजाध्यक्ष ! हे शत्रुनाशक ! सबै प्रजा राक्षसबाट पीडित छन् । यसैले प्रभू ! हामी हजुरका शरणमा आएका छौं ।३। स्वर्गबाट इन्द्र लखेटिएका छन् । ती स्वर्गमा देवता खेले जसरी खेलिरहेका छन् । ती वरदानले गर्दा मात्तिएर युद्धमा जो सामुन्ने जान्छ उसलाई खुशी हुँदै "म नै ब्रह्मा हुँ, विष्णु हुँ, शिव हुँ, इन्द्र हुँ, म नै यमराज हुँ, वरुण पनि मै हुँ, सूर्य पनि मै हुँ" भन्ने गर्दछन् । हे देव ! डराएका हामीमाथि हजुर दया गर्न योग्य हुनु हुन्छ ।४-६। हजुरले भयङ्कर रूप धारण गरी ती देवताका काँडालाई मार्नु होस् । यसो भन्दै गरेका सबै देवतालाई महादेवले...।७। सुकेशी समूहको पक्ष लिँदै भन्नु भयो-"म तिनलाई मार्दिन, मैले तिनलाई (बरदान दिएर) अबध्य पारेको छु" ।८। तर म तिनलाई कसले मार्नेछ भन्ने रहस्य भने बताइ दिन्छु । तिमीहरू इन्द्रलाई अघि लाएर. विष्णु भगवानका शरणमा जाओ । उनै प्रभुले तिनलाई मार्नेछन् । त्यसपछि "महादेवको जय" भन्दै नमस्कार गरेर राक्षसबाट त्रस्त ती देवता विष्णु भगवान कहाँ गए । सम्मानपूर्वक विष्णु भगवानलाई नमस्कार गरेपछि सुकेशपुत्रबाट डराएका उनीहरु पागल जस्तै भई भन्न लागे "हे देव ! तीन अग्नि समानका सुकेशका तीन पुत्रहरूले वरदानको उन्मादमा हामी माथि आक्रमण गरी दुःख दिन शुरु गरेका छन् । उनीहरू सुन्दर लङ्का नगरीको त्रिकूट पर्वतमा रहेका छन् ।९-१३। त्यहाँ बसेर हाम्रा सबै आचारविचारलाई वाधा गर्दछन् । यसैले हे प्रभू ! हे मधुसूदन ! हजुर तिनलाई नाश गरी बक्सियोस् ।१४। हे चक्रधारी ! हजुर यो कुरा आफ्नै मुखले यमराजलाई बताइ बक्सियोस् । भयग्रस्त हामीलाई अभयदान दिने हजुर समान अरु कोही छैन । हे देव ! हजुर हाम्रो डरलाई त्यसरी नै नाश गर्नु होस् जसरी भगवान् सूर्यले बरफलाई नाश गर्नु हुन्छ । यसरी देवताबाट प्रार्थना गरिएका भगवान् विष्णुले डराएका देवताहरूलाई अभयदान दिँदै भन्न लाग्नु भयो- "भगवान् शिवबाट वरदान पाएर उन्मत्त भएका सुकेश राक्षसका बारेमा म सबै कुरा जान्दछु ।उसका तीन जना छोराहरूका बारेमा पनि जान्दछु तिमध्येको जेठो माल्यवान् हो । हे देवता हो ! युद्धमा ती मर्यादाको सीमा नाघेका अधम राक्षसहरूलाई म मार्नेछु । तपाईँहरू नडराउनु होस्, दुःख नमान्नु होस्" । भगवान् विष्णुका यी कुरा सुनेपछि "विष्णु भगवानको जय !" भन्दै खुशी हुँदै देवताहरू आआफ्ना आश्रममा गए । देवताहरूको यो प्रयाश थाहा पाएर माल्यवान् राक्षसले आफ्ना

श्रुत्वा तौ भ्रातराविष्टाविदं वचनमब्रवीत् ।
अमरा मुनयश्चैव समेत्य किल शङ्करम् ॥२१॥
अस्मद्वधं परीप्सन्त इदमूचुस्त्रिलोचनम् ।
सुकेशतनया देववरदानवरोद्धताः ॥२२॥
वाधन्तेऽस्मान् समुद्युक्ता घोररूपाः पदे पदे ।
राक्षसैरभूभितास्ते न शक्ताः स्म उमापते ॥२३॥
स्वेषु धर्मेषु संस्थातुं भयात् तेषां दुरात्मनाम् ।
तदस्माकं हितार्थाय जहि ताँस्तु त्रिलोचन ॥२४॥
राक्षसान् हुङ्कृतेनैव दह प्रदहतां वर ।
इत्येवं त्रिदशैरुक्तो निशम्यान्धकसूदनः ॥२५॥
शिरः करं च धुन्वान इदं वचनमब्रवीत् ।
अवध्या मम ते देवाः सुकेशतनया रणे ॥२६॥
मन्त्रं तु वः प्रवक्ष्यामि यस्तान् वै निहनिष्यति ।
योऽसौ चक्रगदापाणिः पीतवासा जनार्दनः ॥२७॥
हरिर्नारायणः श्रीमान् शरणं तं प्रपद्यत ।
हरादवाप्य ते मन्त्रं कामारिमभिवाद्य च ॥२८॥
नारायणालयं प्राप्य तस्मै सर्वं न्यवेदयन् ।
ततो नारायणेनोक्ता देवा इन्द्रपुरोगमाः ॥२९॥
सुरारींस्तान् हनिष्यामि देवा भवत निर्भयाः ।
देवानां भयभीतानां हरिणा राक्षसर्षभौ ॥३०॥
प्रतिज्ञातो वधोऽस्माकं चिन्त्यतां यदिह क्षमम् ।
हिरण्यकशिपोर्मृत्युरन्येषां च सुरद्विषाम् ॥३१॥
नमुचिः कालनेमिश्च संह्रादो वीरसत्तमः ।
राधेयो बहुमायी च लोकपालोऽथ धार्मिकः ॥३२॥
यमलार्जुनौ च हार्दिक्यः शुम्भश्चैव निशुम्भकः ।
असुरा दानवाश्चैव सत्त्ववन्तो महावलाः ॥३३॥
सर्व समरमासाद्य श्रूयन्ते च पराजिताः ।
सर्वैः क्रतुशतैरिष्टं सर्वमायाविदस्तथा ॥३४॥
नारायणेन निहता शतशोऽथ सहस्रशः ।
एतज्ज्ञात्वा तु सर्वेषां क्षेमं कर्तुमिहार्हथ ॥३५॥
विष्णोर्दोषस्तु नास्त्यत्र कारणे राक्षसेश्वरौ ।
देवानामेव दोषेण विष्णोः प्रचलितं मनः ॥३६॥
दुःखं नारायणं जेतुं यो नो हन्तुमिहेच्छति ।
ततः सुमाली माली च श्रुत्वा माल्यवतो वचः ॥३७॥
ऊचतुर्भ्रातरं ज्येष्ठमश्विनाविव वासवम् ।
स्वाधीनं दत्तमिष्टं च ऐश्वर्यं परिपालितम् ॥३८॥
आयुर्निरामयं प्राप्तं धर्मश्चापि कुलोचितः ।
देवसागरमक्षोभ्यं शस्त्रैः समवगाह्य नः ॥३९॥
जिता द्विषो ह्यप्रतिमा न नो मृत्युभयं कृतम् ।
नारायणश्च रुद्रश्च शक्रश्चापि यमस्तथा ॥४०॥
अस्माकं प्रमुखे स्थातुं सर्वे बिभ्यन्ति सर्वदा ।
विष्णोर्दोषस्तु नास्त्यत्र कारणे राक्षसेश्वराः ॥४१॥
देवानामेव दोषेण विष्णोः प्रचलितं मनः ।
तस्मादद्यैव सहिताः सर्वसैन्यसमावृताः ॥४२॥
देवानेव जिघांसामो येभ्यो दोषः समुत्थितः ।

दुबै भाईहरूलाई यो कुरा भन्न लाग्यो-“देवता र मुनिहरूले शङ्कर भगवानसँग गएर हामीलाई मार्नका लागि अनुरोध गर्दै भने कि ‘हे प्रभू ! हजुरबाट वरदान पाएका सुकेशपुत्रहरू उद्दण्ड भई पाइला पाइलामा हामीलाई दुःख दिइरहेका छन् । हे उमापति ! उनीहरुबाट पीडित हामी आफ्नो धर्ममा टिक्नै नसक्ने भएका छौं । आफ्नो धर्ममा अविचलित भएर बस्न ती दुराचारीहरूको डरले हामीलाई धेरै कठिन भइरहेको छ । यसैले हे त्रिलोचन ! हाम्रो भलाइका लागि ती दुष्टलाई हजुरले नाश गरी बक्सियोस् । जलाउनेहरूमा श्रेष्ठ हे शङ्कर ! हजुर हुङ्कार गरेर नै यिनलाई जलाई बक्सियोस्’ ।१५-२५। देवताका कुरा सुनेपछि आफ्नो टाउको र हात हिर्काउँदै महादेवले भन्न लाग्नु भयो-‘हे देवगण ! युद्धमा ती तीनै जना राक्षसहरू मबाट मारिन सक्दैनन् । जसले तिनलाई मार्न सक्दछन् म उनका बारेमा बताउँदछु । जसले हातमा सुदर्शन चक्र र कौमोदकी गदा बोक्दछन्, उनै पिताम्बर वस्त्र लगाउने जनार्दन नै ती पुरुष हुन् । यसैले हे देवगण ! हजुरहरू भगवान् नारायण हरिका शरणमा जानु होस्’ । भगवान् शिवबाट सल्लाह पाई उनीहरू भगवान् विष्णुका धाममा गए र सबै कुरा बताए । त्यसपछि भगवान् विष्णुले इन्द्रादि देतालाई ‘हे देवता हो ! नडराओ, म ती दानवहरूलाई मार्नेछु’ भनी डराएका देवताका अगाडि हामीलाई मार्ने प्रतिज्ञा गरेका छन् । यसैकारण हे श्रेष्ठ राक्षसहरू हो ! तिमीहरु दुबैले यस बारेमा विचार गर । देवताका शत्रु हिरण्यकशिपु तथा अन्य देवताका शत्रु राक्षसको वध पनि यिनै विष्णुका हातबाट भएको थियो ।२६-३१। नमुचि, कालनेमि, परम वीर संह्राद, परम मायावी राधेय, धर्मात्मा लोकपाल, यमलार्जुन (को उद्धार), शुम्भ, निशुम्भ आदि बलबान् दानवहरू सबै युद्धमा विष्णुका हातबाट हारेका वा मारिएका थिए भन्ने कुरा सुनिन्छ । सबै खालका माया जान्ने सैयौं एवं हजारौं दानव हस्तिहरुलाई मार्ने पनि यिनै विष्णु हुन् । यी सबै कुरा थाहा पाई (विचार गरी) तिमीहरू अब राक्षसहरूको रक्षा गर्ने उपायका बारेमा सोच । हे राक्षसराज हो ! यसमा विष्णुको कुनै दोष छैन । देवताको दोषले गर्दा विष्णुको मन चञ्चल भएको छ । जुन नारायणले हामीलाई मार्न चाहिरहेका छन् उनलाई जित्न कठिन छ” । माल्यवानका यी कुरा सुनेपछि अश्विनिकुमार जस्ता उसका भाईहरू सुमाली र माली इन्द्रसमान आफ्ना दाजु माल्यवानलाई भन्न लागे-“ईश्वरले हामीलाई स्वतन्त्रता दिए, **चाहेको धनसम्पत्ति** दिए, परिपालना गरे,।३२-३८। निरोगी आयु र कुल अनुसारको धर्म पायौं । उनैको बलमा हामीले हातहतियारले शान्त समुद्रलाई (समेत) हुँडलि दियौं ।३९। तुलना गर्नै नसकिने खालका शत्रुलाई हरायौं । हामीलाई मर्ने डर दिइएन । स्वयं नारायण, रुद्र, इन्द्र र यमराज समेत..।४०। **हाम्रा सामु टिक्दैनन्, सधैं डराउने गर्दछन्।** देवताकै दोषले गर्दा विष्णुको मन विचलित भएको भएपनि हे राक्षसराज ! अहिल्यै सबै सेना जम्मा गरी जसबाट दोष उत्पन्न भएको ती देवताहरूलाई नै मारियोस् । हे श्याम ! यस्तो विचार गर्दैसबै प्रयाश (तयारी) गरी ती सबै विशाल शरीर र महा बलशाली राक्षसहरू युद्धका लागि निस्किए । रथ,

**इति ते श्याम संमन्त्र्य सर्वोद्योगेन राक्षसाः ॥४३॥**
**युद्धाय निर्ययुः सर्वे महाकाया महाबलाः ।**
**स्यन्दनैर्वारणैश्चैव हयैश्च करिसन्निभैः ॥४४॥**
**खरैर्गोभिरथोष्ट्रैश्च शिशुमारैर्भुजङ्गमैः ।**
**मकरैः कच्छपैर्मीनैर्विहङ्गैर्गरुडोपमैः ॥४५॥**
**सिंहैर्व्याघ्रैर्वराहैश्च सृमरैश्चमरैरपि ।**
**त्यक्त्वा लङ्कां गताः सर्वे राक्षसा बलगर्विताः ॥४६॥**
**प्रयाता देवलोकाय निस्त्रासा देवशत्रवः ।**
**लङ्कायाः पर्ययं दृष्ट्वा या न लङ्कालयान्यथ ॥४७॥**
**भूतानि विमनस्कानि भयदर्शीनि सर्वशः ।**
**प्रयाता रामक्षसास्तूर्णं देवलोकं प्रयत्नतः ॥४८॥**
**राक्षसा देवलोकेन दैवतान्युपचक्रमुः ।**
**भौमाश्चैवान्तरिक्षाश्च कालाज्ञप्ता भयावहाः ॥४९॥**
**उत्पाता राक्षसेन्द्राणामभावाय समुत्थिताः ।**
**अस्थीनि मेघा ववृषुरुष्णशोणितमेव च ॥५०॥**
**वेलां समुद्रश्चोत्क्रान्तश्चेलुश्चाप्यथ भूधराः ।**
**अट्टहासा विमुञ्चन्तो घननादसमस्वनाः ॥५१॥**
**वासन्त्युच्चैः शिवास्तत्र दारुणं घोरदर्शनाः ।**
**संपतन्त्यथ भूतानि दृश्यन्ते च यथाक्रमम् ॥५२॥**
**गृध्रचक्रं महच्चात्र प्रज्वलाङ्गारिभिर्मुखैः ।**
**रक्षोगणस्योपरिष्टात् परिभ्रमति कालवत् ॥५३॥**
**कपोता रक्तपादाश्च शारिका विद्रुता ययुः ।**
**हाहा वासन्ति तत्रैव विडाला द्विपपादिकाः ॥५४॥**
**उत्पाताँस्ताननादृत्य राक्षसा बलगर्विताः ।**
**ययुरेव विदित्वा तु मृत्युपाशवशं गताः ॥५५॥**
**माल्यवाँश्च सुमाली च माली च सुमहाबलः ।**
**पुरःसरा राक्षसानां ज्वलिता इव पावकाः ॥५६॥**
**माल्यवन्तं च ते सर्वे माल्यवन्तमिवाचलम् ।**
**निशाचराश्चाश्रयन्ति धातारमिव देवताः ॥५७॥**
**तद्बलं राक्षसेन्द्राणां महाभ्रमिव नादितम् ।**
**जयेप्सया देवलोकं ययौ मालिवशे स्थितम् ॥५८॥**
**राक्षसानां समुद्योगं तं तु नारायणः प्रभुः ।**
**देवदूतादुपश्रुत्य चक्रे युद्धे तदा मनः ॥५९॥**
**ससर्जायुधतूणीरौ वैनतेयोपरिस्थितः ।**
**राक्षसानामभावाय ययौ तूर्णतरं प्रभुः ॥६०॥**
**सुपर्णपृष्ठे प्रबभौ श्यामः पीताम्बरो हरिः ।**
**काञ्चनस्य गिरेः शृङ्गे सतडित्तोयदो यथा ॥६१॥**
**स सिद्धदेवर्षिमहोरगेश्वरैर्गन्धर्वयक्षैरुपगीयमानः ।**
**समाससादामरशत्रुसैन्यं गदासिशार्ङ्गायुधचक्रपाणिः ॥६२॥**
**सुपर्णपक्षानिलधूतपत्रं भ्रमत्पताकं परिकीर्णशस्त्रम् ।**
**चचार तद्राक्षसराजसैन्यं चलोपलं नीलमिवाचलाग्रम् ॥६३॥**
**ततश्च ते शोणितमांसरूषितै-**
**र्युगान्तवैश्वानरतुल्यविग्रहाः ।**
**निशाचराः संपरिवार्य माधवं**
**वरायुधैर्निर्बिभिदुः सहस्रशः ॥६४॥**

हात्ती, हात्ती सरहका घोडा, गधा, साँढे, उँट, शिशुमार, सर्प, गोही, कछुवा, माछा, गरुड जस्ता विशाल चरा, सिंह, बाघ, बँदेल, मृग विशेष (सृमर), मृग विशेष (चमर) आदि सहित बलले उन्मत्त सबै राक्षसहरू निर्भय भई लङ्का छाडी देवलोकतिर लागे । लङ्कामा शङ्कट आएको देखि लङ्का छाडी निस्किएका ती त्यसबेला सबैतिरबाट डरलाग्दा देखिन्थे । ती प्रयत्नपूर्वक चाँडै देवलोकतिर देवलोक पुगे ।४१-४८। अनि तत्कालै ती देवताका सामु पुगे । यता पृथ्वीको आकाश आदि स्थानमा भने कालले प्रेरित भएका राक्षसको विनाशका लागि अनेक थरी डरलाग्दा उपद्रो देखिन लागे । ताता रगत सहितका हाड बादलले वर्षाउन थाल्यो ।४९-५०। किनाराको मर्यादा नाघेर समुद छचल्किन लाग्यो । बादल गर्जेको जस्तो अट्टहास गर्दै पर्वतहरू काम्न लागे ।५१। देख्दै डरलाग्दा स्याल आदि जनावर यत्रतत्र देखिन लागे । मानिस आदि जीवहरु यत्रतत्र लडखडाइरहेका देखिन थाले ।५२। आगोको फिलिङ्गो जस्तो मुख गरेका गिद्धहरू आकाशमा मडारिन लागे । ती राक्षस माथि काल घुमेझैं घुमिरहेको प्रतीत हुन्थ्यो ।५३। परेबा, सुँगा, मैना आदि चरा यताउता आत्तिएर उड्न थाले । बिराला र द्विपापादिका (?) चिच्याएर रुन लागे ।५४। कालले कुतकुत्याएका बलका घमण्डी राक्षसहरू मरिन्छ भनी जान्दाजान्दै पनि यी अपशगुनको बेवास्ता गर्दै अघि बढे ।५५। यो राक्षसको फौजमा फौजका अगिल्तिर रहेका अती बलिया माल्यवान्, सुमाली र माली बलिरहेका अग्निजस्तै चम्किला देखिन्थे ।५६। ती निशाचरहरू आफ्ना राजा माल्यवानलाई माल्यवान पर्वत जस्तै (अटल) एवं देवगणमा ब्रह्मा जस्तै (शक्तिशाली) ठान्दथे ।५७। राक्षसहरूको त्यो सेना बाजल गर्जे जसरी गर्जदै माली दैत्यको अधीनमा रही ( सेनापतित्वमा) जित्ने चाहना लिएर अघि बढ्यो ।५८। प्रभु नारायणले (पनि) राक्षसहरूको यो चर्तिकलाका बारेमा देवदूतबाट थाहा पाई (सुनी) युद्धका लागि आफ्नो मनलाई तयार पार्नु भयो ।५९। त्यसपछि प्रभु हातहतियार भिरी गरुड माथि चढेर राक्षसहरूको विनाशका लागि तुरुन्त निस्कनु भयो ।६०। (यसबेला) जसरी बिजुली सहितको बादल काञ्चन पर्वतको ढाडमा शोभायमान देखिन्छ त्यसरी नै पीताम्बर वस्त्र लगाई गरुडमाथि चढेका हरि शोभायमान देखिनु हुन्थ्यो ।६१। सिद्ध देवता ( सिद्धगण), देवर्षि, सर्पेश्वर, गन्धर्व, यक्ष आदिले पूजित हुँदै; गदा, धनुष, चक्र हातमा लिई भगवान् विष्णु देवताका शत्रु सेनालाई नाश गर्न आउनु (जानु) भयो ।६२। भगवान् हरिले रणभूमिलाई गरुडको पखेंटा मार्फत सबै दैत्यसेनालाई अस्थिर बनाएर, तिनका झण्डा आदिलाई पातजस्तै हल्लाएर र सबैका हातहतियार खसाएर चञ्चल नील पत्थर भएको नीलपर्वत समान शोभायमान बनाउनु भयो ।६३। यसपछि युगको अन्तिम चरणमा उत्पन्न भएका अग्निसमान शरीरका राक्षसहरूले भगवान् माधवलाई घेरी रगत र मासुले लतपतिएका आआफ्ना हजारौं उत्तम हातहतियारले प्रहार गर्न लागे ।६४।

॥ इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये विंशतितमोऽध्यायः ॥२०॥
श्रीस्कन्दपुराण, हिमवत्खण्ड, नेपालमाहात्म्यमा माल्यवान आदि दानव र विष्णु लगायतका देवताका बीचमा युद्ध प्रारम्भ भएको प्रसङ्ग वर्णन गरिएको बीसौं अध्याय समाप्त भएको छ ।२०।

श्लोकानामादितः समष्ट्यङ्काः-१,३२३+६४=१,३८७
शुरुदेखिको श्लोक सङ्ख्या :-१,३२३+६४=१,३८७

## ॥ अथैकविंशतितमोऽध्यायः ॥
### ॥ एक्काईसौं अध्याय ॥

**अगस्त्य उवाच ॥** अगस्त्य भन्नुहुन्छ-

**नारायणगिरिं ते तु गर्जन्तो राक्षसाम्बुदाः ।**
**बाणवर्षेण सिषिचुर्वर्षेणेवाद्रिमम्बुदाः ॥१॥**
**श्यामावदातो विष्णुश्च नीलैर्नक्तश्चरोत्तमैः ।**
**रेजेऽञ्जनगिरिः श्रीमान् वर्षद्भिरिव तोयदैः ॥२॥**
**शलभा इव केदारं मशका इव पर्वतम् ।**
**हरिं विशन्ति स्म शरा लोकास्तमिव पर्यये ॥३॥**
**स्यन्दनैः स्यन्दनगता गजैर्गजधुरं गताः ।**
**अश्वारोहाः सदश्वैश्च पदाताश्च पदातिभिः ॥४॥**
**राक्षसेन्द्रा गिरिनिभाः शरशक्त्यृष्टितोमरैः ।**
**निरुच्छ्वासं हरिं चक्रुः प्राणायामा इव द्विजम् ॥५॥**
**निशाचरैर्हन्यमानो मीनैरिव महातिमिः ।**
**शार्ङ्गमात्रस्य गात्राणि राक्षसानां महाहवे ॥६॥**
**शरैः कर्णायतोत्सृष्टैर्वज्रकल्पैर्महाजवैः ।**
**चिच्छेद तिलशो विष्णुः शतशोऽथ सहस्रशः ॥७॥**
**विद्राव्य शरवर्षं तद्वर्षं वायुरिवोत्थितम् ।**
**पाञ्चजन्यं महाशङ्खं दध्मौ स पुरुषोत्तमः ॥८॥**
**सोऽम्बुजो हरिणा ध्मातः सर्वप्राणेन शङ्खराट् ।**
**ननाद भीमनिर्ह्रादो युगान्तजलदो यथा ॥९॥**



**शङ्खराजरवः सोऽथ त्रासयामास राक्षसान् ।**
**मृगराजरवोऽरण्ये समदानिव कुञ्जरान् ॥१०॥**
**न शेकुरश्वाः संस्थातुं विमदाः करिणोऽभवन् ।**
**स्यन्दनेभ्योऽपतन् सद्यः शङ्खशब्देन मोहिताः ॥११॥**
**शार्ङ्गचापविनिर्मुक्ता वज्रतुल्याननाः शराः ।**
**विदार्य तानि रक्षांसि सुपुङ्खा विविशुः क्षितिम् ॥१२॥**
**भिद्यमानाः शरैश्चान्यैर्नारायणधनुश्च्युतैः ।**
**निपेतू राक्षसा भीताः शैला वज्रैहता इव ॥१३॥**

**गण्डानि वरनागानां विष्णुबाणक्षतानि च ।**
**असृक् क्षरन्ति धाराभिः स्वर्णराशिमिवाचलाः ॥१४॥**
**शङ्खराजवरश्चापि शार्ङ्गचापवरोऽपि च ।**
**ग्रसन्ते वैष्णवा बाणास्तेषां ध्वजधनूंषि च ॥१५॥**
**तेषां वरान् शरानूरून् शिरोध्वजधनूंषि च ।**
**रथान् पताकाँस्तूणीराँश्चिच्छेद स हरिः शरैः ॥१६॥**
**सूर्यादिव मयूखो द्याः सागरादिव चोर्मयः ।**

बादलरूपी राक्षसहरूले पर्वतरूपी विष्णुलाई बाण बर्साएर यसरी सेचन गरे जसरी बादल पानी बर्साएर पहाडलाई सेचन गर्दछ ।१। (त्यसबेला) काला र सेता वर्णका भगवान् विष्णु राक्षसहरूका बीचमा यस्तो देखिनु हुन्थ्यो जस्तो अञ्जन पर्वतमाथि बर्सिरहेको बादल देखिने गर्दछ ।२। प्रलयकालमा लोकहरू (ईश्वरमा) गएर विलीन वा समाप्त भए जसरी अथवा खेतबारीमा शलहको बथान वा पहाडमा लामखुट्टेको समूह छिरे (गए) जसरी विष्णु भगवानका शरीरमा बाणहरु प्रवेश हुँदै नष्ट भइरहेका थिए ।३। युद्धमा रथ चढेका सेनासँग रथ चढेका सेना, हात्ती चढेका सेनासँग हात्ती चढेका सेना, घोडा चढेका सेनासँग घोडा चढेकै सेना र पैदल सेनासँग पैदल सेना लड्न लागे ।४। पर्वत समानका राक्षसराजहरूले बाण, शक्ति, तोमर आदि हतियार हानेर भगवान् हरिलाई प्राणायाम गर्ने (गरिरहेको) ब्राह्मणलाई जसरी नै सास फेर्नै दिएनन् ।५। भगवान् हरिका अगाडि ती राक्षसहरू गोहीका अगाडि माछा समान थिए । त्यो महायुद्धमा ती राक्षसका शरीर उहाँलाई शार्ङ्ग धनुषले नै तह लगाउन योग्य थिए, अरु हतियार चलाउन आवश्यक नै थिएन ।६। युद्धमा भगवान् विष्णुले आफ्नो धनुष कानसम्म तन्काएर वज्रसमानका अती बेगिला बाण हानेर राक्षसहरूको शरीरलाई सैयौं हजारौं होइन कि तिल जत्रा मसिना हुने गरी टुक्रा टुक्रा बनाइ दिनु भयो ।७। हुरी जस्तो राक्षसको बाण आदि हतियारको आक्रमणलाई असफल वा नष्ट गर्दै भगवान् विष्णुले आफ्नो पाञ्चजन्य नामक महाशङ्ख बजाउनु भयो ।८। हरि भगवान्ले बजाएको त्यो महाशङ्खको ध्वनी पहिले त प्रलयकालको बादल कराएको जस्तो सुनियो ।९। त्यसपछि त्यो शङ्खको आवाजले युद्धमैदानका राक्षसगणमा यस्तो डर पैदा गरायो जस्तो डर जङ्गलमा सिंहको गर्जन सुनेपछि हात्तीहरूमा पैदा हुने गर्दछ ।१०। शङ्खको आवाजले मोहित भएका घोडाहरू उभिन सकेनन्, हात्तीहरु मदहोश भए अनि रथमा चढेका दानवहरू तल खस्न लागे ।११। हरिको शार्ङ्गधनुषबाट निस्किएका बाणहरू ती राक्षसहरूको शरीरलाई छेड्दै पृथ्वीतिर वा पातालतिर खस्न लागे ।१२। नारायणका धनुषबाट निस्केका अन्य बाण लागेर डराएका राक्षसहरू वज्र ( चटचाङ) ले पर्वत ढलेजसरी जमिनमा ढल्न लागे ।१३। भगवान् विष्णुका बाणबाट घाइते भएका उत्तम हात्तीहरूको गालाबाट चुहिएको रगतको धारा पर्वतबाट बहिरहेको गेरुको धारा जस्तो देखिइ रहेको थियो ।१४। श्रेष्ठ शङ्खराज तथा शार्ङ्ग धनुषका श्रेष्ठ वैष्णव बाणले राक्षसहरूका ध्वजापताका ध्वस्त भइरहेका थिए ।१५। भगवान् हरिले आफ्ना उत्तम बाणले राक्षसका टाउका, तिघ्रा, शिर, ध्वजा, धनुष, रथ, पताका र ठोक्रोलाई काटि दिनु भयो ।१६। यसबेला विष्णुभक्तिका कारण किरण सूर्यसमान

पातालादिव नागेन्द्रा वायोर्घा इव चाम्बुदात्॥१७॥
तथा गाढविनिर्मुक्ता शार्ङ्गान्नारायणेरिताः ।
निर्धावन्ति शरास्तूर्णं शतशोऽथ सहस्रशः ॥१८॥
शरभेण यथा सिंहः सिंहेन द्विरदो यथा ।
द्विरदेन यथा व्याघ्राः शार्दूलेनेव द्वीपिनः ॥१९॥
द्वीपिना च यथा श्वानः शुना मार्जारका यथा ।
माजरेिण यथा सर्पा भुजङ्गैर्मूषिका यथा ॥२०॥
तथा ते राक्षसाः सर्वे विष्णुना प्रभविष्णुना ।
द्राविता विदिशश्चैव शायिताश्च महीतले॥२१॥
राक्षसानां सहस्राणि निहत्य मधुससूदनः ।
वारिजं ध्मापयामास खे वायुरिव तोयदम्॥२२॥
नारायणरणध्वस्तं शङ्खनादं प्रविह्वलम् ।
ययौ तु लङ्काभिमुखं प्रभग्नं राक्षसं बलम्॥२३॥
प्रभग्ने राक्षसबले नारायणशराहते ।
सुमाली शरजालेन आजघान रणे हरिम्॥२४॥
स तु तं छादयामास नीहार इव भास्करम् ।
राक्षसाः सत्वसंपन्नाः पुनर्धैर्यं समादधुः॥२५॥
ततैव तस्य तत्क्रोधाद्राक्षसो बलदर्पितः ।
महानादं प्रकुर्वाणो राक्षसान् जीवयन्निव॥२६॥
उत्क्षिप्य स्वर्णाभरणं करं करमिव द्विपः ।
ननाद राक्षसो हर्षात् सतडित्तोयदो यथा॥२७॥
अथ तानर्दतः सङ्ख्ये शिरो ज्वलितकुण्डलम् ।
चिच्छेद यन्तुस्तुरगाः प्रोद्भ्रान्तास्तस्य रक्षसः॥२८॥
अश्वैरुद्भ्राम्यः तत्त्रस्तैः सुमाली च निशाचरः ।
इन्द्रियार्थैः परिभ्रान्तैर्वृत्तिहीनः पुमानिव॥२९॥
स तु तान् सन्नियम्याश्वानिन्द्रियार्थान् यथा यतिः ।
स्थितोऽभूदचलो भूत्वा स्थापयित्वा गतो रथम्॥३०॥
ततो विष्णुं महाबाहु प्रतपन्तं रणाजिरे ।
माली ह्यभ्यद्रवद्वीरः प्रगृह्य सशरं धनुः॥३१॥
मालीचापच्च्युता बाणाः कार्त्तस्वरविभूषिताः ।
विविशुर्हरिमासाद्य क्रौञ्चं पत्ररथा इव॥३२॥
अर्दमानः शरैः सोऽथ मालित्यक्तैः सहस्रशः ।
न चुक्षुभे रणे विष्णुर्जितेन्द्रिय इवाधिभिः॥३३॥
ततो मौर्वीस्वनं कृत्वा भगवान् भूतभावनः ।
मालिनं प्रति बाणौघान् ससर्जासिगदाधरः॥३४॥
ते मालिदेहमासाद्य वज्रविद्युत्प्रभाः शराः ।
बहुरक्तं पपुस्तत्र नागा इव पुराऽमृतम्॥३५॥
मालिनं विमुखं कृत्वा शङ्खचक्रगदाधरः ।
शितैः शरैर्ध्वजं चापं वाजिनश्चाप्यपातयत्॥३६॥
गदामादाय विरथस्ततो माली निशाचरः ।
आपुप्लुवे गदापाणिर्गिर्यग्रादिव केशरी॥३७॥
स तदा गूडं सङ्ख्य ईशानं वै यथाऽन्धकः ।
जघान शिरसि क्रुद्धो वज्रेणेव इवारिहा॥३८॥
गदयाभिहतस्तेन मालिना गरुडस्तदा ।
रणात् पराङ्मुखं देवं कृतवान् वेदनातुरः॥३९॥

तेजिला, तरङ्ग समुद्र जस्ता, नागराज पाताल जस्ता र हावाको झोक्का बादलका जस्ता भए ।१७। नारायणबाट चलाइएको कठिन शार्ङ्ग धनुषबाट निस्किएका बाण छिटोछिटो राक्षसका शरीरलाई सैयौं हजारौं टुक्रा पार्दै यताउता दौडिरहेका थिए ।१८। जसरी शरभ (आठ गोडा र माथि आँखा हुने सिंह आदि समेत मारेर रगत खाने प्राचीन एक जङ्गली जीव) सँग सिंह, सिंहसँग हात्ती, हात्तीसँग बाघ, चितुवासँग ब्वाँसो, ब्वाँसोसँग कुकुर, कुकुरसँग बिरालो, बिरालोसँग सर्प र सर्पसँग डराएर मुसा भाग्दछ त्यसरी नै विष्णु वा महाविष्णु भगवानसँग डराएर सबै राक्षसहरू दश वटै दिशातिर भागे, तिनलाई पृथ्वीमा ढालियो (खसालियो) ।१९-२१। मधुसूदनले हजारौं राक्षसहरूलाई मार्नु भयो । यसपछि उहाँले आकाशमा वायुले बादललाई बजाए जसरी नै पाञ्चजन्य शङ्ख बजाउनु भयो ।२२। नारायणले ध्वस्त पारेको र शङ्खको आवाजले हायलकायल बनाएको ध्वनी लङ्काको भित्रसम्म पुग्यो र राक्षसको सबै बल चकनाचूर भयो ।२३। राक्षसको सेना एवं शक्ति नष्ट र कमजोर भएका बेलामा सुमालीले बाणको जाल हानेर भगवान् विष्णुलाई घायल बनायो ।२४। उसले विष्णुलाई बाण बर्साएर यसरी छोपी दियो जसरी कुहिरोले सूर्यलाई छेक्दछ । यो देखेर राक्षस सेना पुनः धैर्य गर्न थाले ।२५। त्यही बेला त्यो बलको घमण्डी राक्षसले ठूलो शब्द (गर्जना) निकाल्यो, लाग्दथ्यो कि उसले आफ्ना राक्षस सेनालाई ऊर्जा दिई जगाइ रहेछ ।२६। त्यसपछि त्यो राक्षसले हात्तीले सुँड उठाए जसरी आफ्ना सुनका गहनाले सुसज्जित हात उठाउँदै बिजुली सहितको बादलले शब्द निकालेझैं गरी खुशीका शब्द निकाल्यो ।२७। अनि उसले विपक्षीहरूलाई पीडित पार्दै प्रज्वलित कुण्डल लगाएको शिर काटी (?) दियो । यसबाट त्यो राक्षसका घोडाहरू भ्रमित हुन गए ।२८। घोडाहरू भ्रमित भएपछि सुमाली पनि भ्रमले गर्दा यसरी डरायो जसरी भ्रमित इन्द्रियका लागि बेरोजगार मानिस डराउने गर्दछ ।२९। यसपछि उसले साधुले इन्द्रियलाई नियन्त्रण गरे जसरी आफ्ना घोडाहरूलाई नियन्त्रण गरी रथलाई स्थिर र अचल बनायो अनि अघि बढ्यो ।३०। यसपछि मालि हातमा धनुषबाण लिएर (हान्दै) युद्धमैदानमा धपधप बलिरहेका महाबाहु विष्णुका अगिल्तिर पुग्यो ।३१। सुनका गहनाले सुसज्जित मालिले हानेका बाणहरु विष्णुका शरीरमा क्रौञ्च पर्वतमा हाँस छिरे जसरी छिरिरहेका थिए ।३२। मालिले हानेका बाणबाट भगवान् विष्णु त्यसरी नै विचलित हुनु भएन जसरी इन्द्रिय वशमा गरेका मानिस बाहिरी उपद्रोबाट विचलित हुँदैनन् ।३३। यसपछि धनुमा ताँदो चढाएर तरबार र गदा बोकेका भगवान् विष्णुले मालिमाथि बाण प्रहार गर्नु भयो ।३४। जसरी पहिले नागहरूले अमृत पिएका थिए त्यसरी नै विष्णुका बाणले गएर मालिको शरीरको रगत पिउन थाले ।३५। शङ्खचक्रगदाधारी विष्णुले मालिलाई निराश बनाउँदै बाण हानेर उसका ध्वजा र धनुष काटी घोडालाई समेत घायल पारी लडाई दिनु भयो ।३६। रथहीन भएको मालि त्यसपछि गदा लिएर विष्णुमाथि जाइ लाग्यो । त्यसपछि विष्णु पनि पर्वतका अगिल्तिर

पराङ्मुखीकृते देव गरुडेन पतत्रिणा ।
बभूव रक्षसां नादः सिंहानामिव गर्जताम् ॥४०॥
रक्षसा गर्जतां श्रुत्वा नादं हरिहयानुजः ।
पराङ्मुखोऽत्युत्ससर्ज चक्रं मालिजिघांसया ॥४१॥
तत् सूर्यमण्डलाभासं प्रभया भासयन् नभः ।
कालचक्रनिभं चक्रं मालिशीर्षमपातयत् ॥४२॥
तच्छिरो राक्षसेन्द्रस्य चक्रकृत्तं विभीषणम् ।
पपात रुधिरोग्दारि पुरा राहुशिरो यथा ॥४३॥
ततो देवः सुसंहृष्टैः सर्वप्राणसमीरितः ।
सिंहनादस्ततो मुक्तः साधु देवेति वादिभिः ॥४४॥
मालिनं निहतं दृष्ट्वा सुमाली माल्यवानपि ।
सबलौ शोकसन्तप्तौ लङ्कां प्रति विधावितौ ॥४५॥
गरुडस्तु समाश्वस्तः संनिवृत्य यथामनः ।
राक्षसान् पातयामास पक्षपातेन कोपितः ॥४६॥
नारायणोऽप्याशु वरेषुभिः प्रभु-
र्विदारयामास धनुःप्रसूतैः ।
नक्तञ्चरान् मुक्तविधूतकेशान्
विश्वस्तचापासिनिवृत्तबाणान् ॥४७॥
छिन्नातपत्रं पतमानशस्त्रं शरैः समन्तादतिभिन्नदेहम् ।
विनिर्गतास्त्रं भयलोलनेत्रं बलं तदुन्मत्तनिभे बभूव ॥४८॥
संबाध्यमाना हरिवाणजालैः
सुरागजालानि समुत्सृजन्तः ।
धावन्ति नक्तञ्चरकालमेघा
वायुप्रणुन्ना इव कालमेघाः ॥४९॥
चक्रप्रहारैर्विनिकृत्तदेहाः
संचूर्णिताश्चाशु गदाप्रहारैः ।
असिप्रहारैर्बहुधा विभक्ताः
पतन्ति शैला इव राक्षसेन्द्राः ॥५०॥
चक्रोत्कृत्तास्यकमला गदासंचूर्णितोरसः ।
लाङ्गलाकर्षितग्रीवाः सुशरैर्भिन्नमस्तकाः ॥५१॥
केचिच्चैवासिना छिन्ना तथाऽन्ये शरपीडिताः ।
निपेतुरम्बरात् तूर्णं राक्षसाः सागराम्भसि ॥५२॥
ततोऽम्बरं प्रच्युतहारकुण्डलै-
र्निशाचरैर्नीलबलाहकोपमैः ।
निपात्यमानैर्ददृशे निरन्तरं
विसर्प्यमाणैरिव नीलपर्वतैः ॥५३॥

सिंह गर्जेझैं गर्जनु भयो ।३७। जसरी पहिला युद्धमा अन्धकासुर शिवमाथि जाइ लागेको थियो त्यसरी नै मालि राक्षस गरुडमाथि जाइ लाग्यो । अनि शत्रुघाती समानको मालिले रिसाएर गदाले गरुडको टाउकामा हिर्कायो ।३८। मालिले हानेको गदाको चोटले व्याकुल भएका गरुडले भगवान् विष्णुलाई युद्धबाट अन्तै ध्यान मोड्न बाध्य बनाए ।३९। घाइते गरुडका कारण विष्णुको ध्यान मोडिए पछि राक्षसहरू सिंह गर्जिएझैं गर्जिए ।४०। राक्षसहरूको गर्जन सुनेर इन्द्रका दाजु हरिले गरुडतिर ध्यान दिएकै अवस्थामा मालिलाई मार्न भनी सुदर्शन चक्र प्रहार गर्नु भयो ।४१। सूर्यमण्डल चम्केझैं आकाशमा चम्कँदै त्यो कालचक्र समानको चक्रले गएर मालिको शिर काटी खसाली दियो ।४२। राक्षसराज मालिको त्यो रगतका धारा निस्किरहेको शिर पहिले राहुको शिर खसेझैं गरी पृथ्वीमा खस्यो ।४३। तब खुशीले गद्गद भएका देवताहरू "जय होस् जय होस्" भन्दै पूरै शक्ति लगाएर सिंहनाद गर्न (चिच्याउन) थाले ।४४। मालि मरेको देखेपछि सुमाली र माल्यवान् दुबै जना शोकाकुल हुँदै लङ्कातिर कुलेलम ठोके ।४५। गरुड पनि ढुक्क हुँदै फर्किए अनि आफ्ना परखेंटाले रिसाउँदै राक्षसहरूलाई मार्न लागे ।४६। नारायणले पनि धनुषबाट निस्किएका आफ्ना उत्तम बाणले कपाल फुस्किएका तथा धनुष, तलबार बाण आदि ध्वस्त भएका राक्षसहरूले चाँडै मार्नु भयो ।४७। राक्षसको त्यो (बलियो) सेना (अब) उन्मत्तको सेना जस्तै हुन पुग्यो । कसैका छाता (छत्र) थिएनन् । कसैको हातहतियार खस्न लागेको थियो । कसैका बाण लागेर अङ्गभङ्ग भएका थिए । कोही डरले आँखा यताउता घुमाइरहेका थिए । कोही निशस्त्र थिए ।४८। हावाले छिन्नभिन्न भएको कालो बादलझैं काला राक्षसगण हरिका बाणले पीडित भएर  देव-हात्तीका बन्धन खोल्दै भागे ।४९। चक्रको प्रहारबाट शरीर काटिएका, गदाको प्रहारबाट शरीर  धुलोपिठो भएका तथा तरबारको प्रहारबाट अङ्ग काटिई घायल भएका अधिकांश राक्षसहरू पर्वत ढले जसरी पृथ्वीमा ढलिरहेका थिए ।५०। चक्रको चोटले छाती धुलोपिठो भएका, हलोले तानिएर घाँटी तन्किएका अनि बाण लागेर टाउको छिनेका राक्षसहरू यत्रतत्र देखिन्थे ।५१। तरबारले काटिएका र बाणले घायल भएका राक्षसहरू तुरुन्त आकाशबाट समुद्रको पानीमा खसे ।५२। त्यसबेला हार, कुण्डल खसेका एवं नीलो बादल जसरी खसिरहेका राक्षसले ढाकेको आकाश कतै हिँडिरहेको नीलपर्वत नै पो हो कि जस्तो लाग्दथ्यो ।५३।



॥ इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये मालिवधो नामैकविंशोऽध्यायः ॥२१॥

श्रीस्कन्दपुराण, हिमवत्खण्ड, नेपालमाहात्म्यमा मालिको वध गरिएको वृत्तान्त
वर्णन भएको एक्काईसौं अध्याय समाप्त भएको छ ।२१।

श्लोकानामादितः समष्ट्यङ्काः-१,३८७+५३=१,४४०
शुरुदेखिको श्लोक सङ्ख्या :-१,३८७+५३=१,४४०

## ॥ अथ द्वाविंशोऽध्यायः ॥
## ॥ बाईसौं अध्याय ॥

**अगस्त्य उवाच ॥** अगस्त्य भन्नुहुन्छ-

**हते माल्यबले तस्मिन् पद्मनाभेन पृष्ठतः ।**
**माल्यवान् स निवृत्तोऽथ वेलयेव महार्णवः ॥१॥**
**संरक्तनयनः कोपाच्चलन्मौलिर्निशाचरः ।**
**पद्मनाभमिदं प्राह वचनं परुषं तदा ॥२॥**
**नारायणं न जानोषे क्षत्रधर्मं सनातनम् ।**
**अयुद्धमनसो यन्नो भवान् हन्ति यथेतरः ॥३॥**
**पराङ्मुखवधं पापं यः करोति महीतले ।**
**न हन्ता न हतः स्वर्गं लभते तेन कर्मणा ॥४॥**
**युद्धश्रद्धाऽथ वा तेऽस्ति तत्र शार्ङ्गगदाधरः ।**
**अयं स्थितोऽहं पश्यामि बलं दर्शय यत् तव ॥५॥**
**माल्यवन्तं स्थितं दृष्ट्वा माल्यवन्तमिवाचलम् ।**
**उवाच राक्षसेन्द्रं तं देवेन्द्रावरजो बली ॥६॥**
**युष्मत्तो भयभीतानां देवानामभयं मया ।**
**राक्षसोत्सादनाद्दत्तं तदेतदनुपाल्यते ॥७॥**
**प्राणैरपि प्रियं कार्यं देवतानां सदा मया ।**
**सोऽहं विनिहनिष्यामि रसातलगतानपि ॥८॥**
**देवमेवं ब्रुवाणं तु स तदा पुरुषोत्तमम् ।**
**शक्त्या बिभेद संक्रुद्धो राक्षसेन्द्रो ननाद च ॥९॥**
**माल्यवद्भजनिर्मुक्ता शक्तिघण्टाकृतस्वना ।**
**हरेरुरसि विभ्राज मेघोपरि शतह्रदा ॥१०॥**
**ततीतमेव निष्कृष्य शक्तिं शक्तिधरप्रियः ।**
**माल्यवन्तं समुद्दिश्य चिक्षेपाम्बुरुहेक्षणः ॥११॥**
**स्कन्दोत्सृष्टेव सा शक्तिर्गोविन्दकरनिःसृता ।**
**काङ्क्षन्ती राक्षसं प्रायान्महोल्केवाञ्जनाचलम् ॥१२॥**
**सा तस्योरसि विस्तीर्णे हारभाभिः प्रभासिते ।**
**अपतद्राक्षसेन्द्रस्य गिरिकूटे यथाऽशनिः ॥१३॥**
**तया भिन्नतनुत्राणः प्राविशद्विपुरं तमः ।**
**माल्यवान् पुनराश्वस्तस्तस्थौ गिरिरिवाचलः ॥१४॥**
**ततः कार्ष्णायसं शूलं कण्टकैर्बहुभिर्वृतम् ।**
**प्रतिगृह्याहनद्देवं स्तनयोरन्तरे दृढम् ॥१५॥**
**तथैव रणरक्तस्तु मुष्टिभिः सोऽरुणानुजम् ।**
**ताडयित्वा धनुर्मात्रतपक्रान्तो निशाचरः ॥१६॥**
**ततोऽम्बरे महाशब्दः साधु साध्वित्यथोत्थितः ।**
**आहत्य राक्षसो विष्णुं गरुडं यदताडयत् ॥१७॥**
**वैनतेयस्तदा क्रुद्धः पक्षवातेन राक्षसम् ।**
**व्युवाह बलवान् वायुः शुष्कपर्णचयं यथा ॥१८॥**
**द्विजेशपक्षवातेन वीक्ष्य ताडितमग्रजम् ।**
**सुमाली स्वबलैः सार्धं लङ्कामभिमुखो ययौ ॥१९॥**
**पक्षवातसमुद्धूतो माल्यवानपि राक्षसः ।**
**स्वबलेन समागम्य ययौ लङ्का ह्रियाऽऽवृतः ॥२०॥**

हरिद्वारा माल्यवानका सेना मारिएपछि किनाराबाट समुद्र फर्के जसरी माल्यवान फेरी फर्केर आयो ।१। अनि रिसले राताराता आँखा पारी टाउको कपाउँदै भगवान् हरिलाई यस्ता रुखो वचन भन्न लाग्यो ।२। “हे नारायण तिमी सनातन क्षत्रिय धर्म जान्दा रहेनछौ । किन कि युद्धबाट भागिरहेको मलाई तिमी मार्न खोज्दैछौ ।३। जो मानिस युद्धबाट भागिरहेको व्यक्तिलाई मार्ने जस्तो पाप काम गर्दछ : मर्ने र मार्ने दुबैले त्यो कर्मले गर्दा स्वर्ग पाउँदैनन् ।४। हे शार्ङ्ग एवं गदा बोकेका विष्णु ! यदि तिमी साँच्चिकै युद्धप्रिय हौ भने यी म यहाँ छु, तिमी आफ्नो पुरुषार्थ ममाथि देखाऊ” ।५। त्यसपछि माल्यवान पर्वत जसरी उभिइरहेको माल्यवानलाई देखेपछि हरिले त्यो राक्षसराजलाई भन्नु भयो ।६। “तिमीबाट भयभीत देवताहरूलाई मैले अभयदान दिएको छु त्यसैले राक्षस नाश गर्ने यो काम गरी मैले उनीहरूको संरक्षण गरिरहेको छु ।७। देवताको कार्य मलाई प्राणभन्दा पनि प्यारो छ त्यसैले म पातालमा गएका राक्षसहरूलाई पनि मार्नेछु” ।८। यस्ता गुरा गरेका भगवान् पुरुषोत्तमलाई त्यो राक्षसराजले रिसाएर शक्ति (भाला) ले हिर्कायो र चिच्याउन लाग्यो ।९। माल्यवानका हातबाट छाडिएको त्यो भाला घण्टा बजेजस्तो स्वर निकाल्दै, बादल माथि बज्र (चटचाङ) शोभायमान भए जसरी विष्णुका छातीमा गएर शोभायमान हुन पुग्यो ।१०। तब कमल नेत्र भगवानले त्यो भालालाई निकाली माल्यवान तिर नै प्रहार गर्नु भयो ।११। स्कन्दकुमारबाट बनाइएको एवं गोविन्दका हातबाट फ्याँकिएको त्यो भाला राक्षसको (ज्यान लिने) चाहना गर्दै (आकाशबाट) पर्वततिर उल्का गएजसरी राक्षसतिर गयो ।१२। त्यो भाला पर्वतको थाप्लोमा चटचाङ गएर वज्रे जसरी लगाएको हारको चमकले चम्किएको राक्षसराजको चौडा छातीमा गएर बज्रियो ।१३। त्यो भाला उसको फलामको कवच छेडेर भित्र अन्धकारमा (छातिभित्र) प्रवेश गऱ्यो । तर पनि माल्यवान पर्वत जसरी नै निर्धक्क भएर उभिइ रह्यो ।१४। यसपछि उसले काँडैकाँडा भएको कालो शूल (भिरजस्तो हतियार) भगवान् विष्णुको दुबै स्तनका बीच छातीमा बेगले प्रहार गऱ्यो ।१५। गसैगरी उसले रक्ताम्मे गरुडलाई गएर मुड्कीले हिकार्यो र तप दवाइएको त्यो राक्षस बचेको धनुष मात्र पनि भाँचेर (रणमैदानबाट भाग्यो) (?) ।१६। यसपछि आकाशमा “जय होस् ! जय होस् !” भन्ने शब्द गुञ्जियो । यसरी जब राक्षसले विष्णुलाई शक्तिले हाने पछि गरुडलाई पनि पीडा पुऱ्यायो तब ।१७। गरुडले पनि रिसाउँदै हावाले सुकेका पापतिङ्गर उडाए जसरी आफ्ना परखैँटाको हावाले राक्षसलाई लखेट्न थाले ।१८। गरुडको परखैँटाको हावाले आफ्ना दाजु पीडित भइरहेको देखेपछि सुमाली आफ्ना सेना लिएर लङ्कातिर भाग्यो ।१९। परखैँटाको

एवं ते रक्षसाः श्याम हरिणा लोकधारिणा ।
बहुशः समरे भग्ना बहुप्रबलनायकाः ॥२१॥
अशक्नुवँस्ततो विष्णुं प्रतियोद्धुं भयार्दिताः ।
त्यक्त्वा लङ्कां गताः सर्वे पातालं पन्नगालयम् ॥२२॥
सुमालिनं समासाध्य राक्षसं भृगुसत्तम ।
स्थितः प्रख्यातवीर्योऽयं वंशे शालकटङ्कटे ॥२३॥
कथिता राक्षसाः चैते शालकटङ्कटाः ।
दशग्रीवादयः श्याम पौलस्त्या नाम राक्षसाः ॥२४॥
सुमाली माल्यवान् माली ये च तेषां पुरःसराः ।
सर्व एते महाभागा रावणाद् बलवत्तराः ॥२५॥
न चान्यो राक्षसां हन्ता सुरेष्वपि मुनीश्वर ।
ऋते नारायणाद्देवाच्छङ्खचक्रगदाधरात् ॥
भवाद्वा मुनिशार्दूल पार्वतीप्राणवल्लभात् ॥२६॥
येषां मया तव मुनीश्वर राक्षसाना-
मुत्पत्तिरद्य कथिता सकला यथावत् ।
भूयो निबोध भृगुसत्तम रावणस्य
जन्म प्रभावमतुलं बलवत्तरस्य ॥२७॥
स राक्षसो विष्णुभयार्दितस्तदा
स्वपुत्रपौत्रैश्च समन्वितो बली ।
चिरात् सुमाली व्यचरद्रसातलं
ततस्तु लङ्कामवसद्धनेश्वरः ॥२८॥

हावाले हुत्याइएको (होसमा आएको) माल्यवान पनि लज्जित हुँदै आफ्ना बचेखुचेको सेना लिएर लङ्कातिर गयो ।२०। हे श्याम ! यसरी संसारलाई धारण गर्ने भएका भगवान हरिबाट त्यो युद्धमा अनेक बलवान राक्षसहरू मारिए ।२१। यसपछि डराएका ती राक्षसहरू भगवान विष्णुसँग लड्न नसकिने रहेछ भन्दै लङ्कालाई छाडी पातालतिर गए ।२२। हे भृगुश्रेष्ठ ! सुमालिबाट शुरु भएको यो शक्तिशालि एवं प्रसिद्ध शालकटङ्कट नामक राक्षस वंश हो ।२३। हे श्याम ! यो शालकटङ्कट वंशका बारेमा मैले बताएँ । रावण आदि राक्षस पौलस्त्य वंशका राक्षस मानिन्छन् ।२४। सुमाली, माल्यवान, माली यी महान् पूर्वज राक्षसहरू सबै रावणभन्दा बलिया थिए ।२५। देवताहरूमा राक्षशलाई नाश गर्ने विष्णु मात्र हुन् । हे मुनिश्वर ! भगवान् विष्णु नभई कोही पनि राक्षसहरूलाई दबाउन सक्दैन । हे मुनिश्रेष्ठ ! हजुरले मलाई राक्षसको उत्पत्तिका कुरा सतइतथ्य बताउनु भयो अब भगवान् शिवबाट वरदान पाई शक्तिशाली भउको रावणको जन्म र प्रभुत्वका बारेमा पुनः थप बताउने कृपा गर्नु होस् ।२६-२७। विष्णुका डरले बलवान् सुमाली राक्षस लामो समयसम्म आफ्ना छोरानाती सहित पातालमै बस्यो । यसबेला लङ्कामा कुबेर बस्ने गर्दथे ।२८।

॥ इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये द्वाविंशोऽध्यायः ॥२२॥
श्रीस्कन्दपुराण, हिमवत्खण्ड, नेपालमाहात्म्यमा सुमाली आदि राक्षस राजाको पाताल गमन आदि विषय वर्णन भएको बाईसौं अध्याय समाप्त भएको छ ।२२।

श्लोकानामादितः समष्ट्यङ्काः-१,४४०+२८=१,४६८
शुरुदेखिको श्लोक सङ्ख्या :-१,४४०+२८=१,४६८

## ॥ अथ त्रयोविंशोऽध्यायः ॥
## ॥ तेईसौं अध्याय ॥

**अगस्त्य मुनिरुवाच ॥** अगस्त्य मुनि भन्नुहुन्छ-

**कस्य चित् त्वथ कालस्य सुमाली स तु राक्षसः ।**
**नीलजीमूतसङ्काशस्तप्तकाञ्चनसन्निभः ॥१॥**
**आदाय कन्यां रुचिरां विना पद्ममिव श्रियम् ।**
**राक्षसेन्द्रः स तु तदा विचरन् वै महीतले ॥२॥**
**गच्छन्तं गगनेऽपश्यत् पुष्पकेण धनेश्वरम् ।**
**पितरं द्रष्टुकामं च मातरं च निशाचरः ॥३॥**
**तं दृष्ट्वाऽनलसङ्काशं विमानं पावकोपमम् ।**
**हितार्थं चिन्तयामास राक्षसानां निशाचरः ॥४॥**
**किं नु कृत्वा भवेच्छ्रेयो वर्धेमहि कथं वयम् ।**
**सुतां विश्रवसे दद्यां राक्षसीं वरवर्णिनीम् ॥५॥**
**स तु राक्षसशार्दूल शार्दूलसमविक्रमः ।**
**अथाब्रवीत् सुतां तां तु नैकसी किल नामतः ॥६॥**
**पुत्रि प्रदानकालस्ते यौवनं चातिवर्तते ।**
**त्वत्कृते च वयं सर्वे यन्त्रिता धर्मबुद्धयः ॥७॥**
**त्वयि पुत्रसमायुक्ता इच्छा संपत्स्यतेऽचिरात् ।**
**त्वं हि सर्वगुणोपेता श्रीरपद्मेव नः कुले ॥८॥**
**प्रत्याख्यानाच्च भीतैस्त्वं नासुरैर्वियसे शुभे ।**
**न ज्ञायते वरः पुत्रः कन्यानां चारुदर्शनः ॥९॥**
**कन्या पितृणां दुःखं हि सर्वेषां मानकारिणाम् ।**
**मातुः कुलं पितुश्चैव यत्र कन्या प्रदीयते ॥१०॥**
**कुलत्रयं यदा कन्या संशयस्थं करोति हि ।**
**सा त्वं मुनिवरं श्रेष्ठं प्रजापतिकुलोद्भवम् ॥११॥**
**गच्छ विश्रवसं पुत्रि पौलस्त्यं वरय स्वयम् ।**
**ईदृतास्ते भविष्यन्ति पुत्राः पुत्रि न संशयः ॥१२॥**
**तेजसा भास्करोदग्रा यादृशोऽयं धनेश्वरः ।**
**सा तु तद्वचनं श्रुत्वा कन्यका पितृगौरवात् ॥१३॥**
**गत्वाऽऽश्रमपदं तस्थौ यत्र तप्यति विश्रवाः ।**
**एतस्मिन्नन्तरे श्याम पुलस्त्यतनयो द्विजः ॥१४॥**
**अग्निहोत्रमुपातिष्ठच्चतुर्थ इव पावकः ।**
**सा तु तं दारुणं कालमबुध्वा पितृगौरवात् ॥१५॥**
**उपावृत्यागतस्तस्य चरणेऽधोमुखी स्थिता ।**
**स तु तां वीक्ष्य धर्मातमा पूर्णचन्द्रनिभाननाम् ॥१६॥**
**अब्रवीत् परमोदारो दीप्यमान इवौजसा ।**
**भद्रे कस्यासि दुहिता कुतो वा त्वमिहागता ॥१७॥**
**किं कार्यं कस्य वा हेतोस्तत्त्वतो ब्रूहि तच्छुभे ।**
**एवमुक्त्वा तु सा कन्या कृताञ्जलिरथाब्रवीत् ॥१८॥**
**राक्षसीं विद्धि मां ब्रह्मन् शासनात् पितुरागताम् ।**
**नैकसीमिति नाम्ना वै शेषं त्वं ज्ञातुमर्हसि ॥१९॥**
**तपः प्रभावेण मुने यदर्थमहमागता ।**
**ततो गत्वा मुनिर्ध्यानं वाक्यमेतदुवाच ह ॥२०॥**

केही समय बितेपछि नीलो बादलजस्तै कालो एवं तताइएको सुनजस्तै चम्किलो त्यो सुमाली नामको राक्षस..।१। कमल बिनाकी लक्ष्मी सरहकी आफ्नी छोरीलाई लिएर पृथ्वीमा घुमिरहेको थियो ।२। (घुम्दै गर्दा) त्यो राक्षसले आकाशमा आफ्ना आमाबाबुको दर्शनका लागि पुष्पक विमानमा चढेर गइरहेका कुबेरलाई देख्यो ।३। यस्तो अग्निसमान तेजिलो र वेगिलो विमानलाई देखेर त्यो राक्षसले राक्षसको भलाइका बारेमा सोच्यो ।४। के गर्दा हाम्रो उन्नतिप्रगति होला ? हाम्रो वृद्धि कसरी होला ? यदि मैले आफ्नी उत्तम स्वभावकी छोरी विश्रवा मुनिलाई दिएँ भने, पक्कै पनि हाम्रो प्रगति हुनेछ ।५। (यस्तो विचार गरी) सिंहसमान बलियो राजसराजले आफ्नी नैकसी नामकी छोरीलाई भन्न लाग्यो- ।६। “हे छोरी अब तिमी युवती भएकी छयौ, विवाह गर्ने बेला भएको छ । तिम्रा लागि हामी सबै धर्मबुद्धिबाट नियन्त्रित भएका छौं ।७। तिमीलाई छोराका साथमा देख्ने हाम्रो चाहना भविष्यमा अवश्य पूरा हुनेछ । तिमी हाम्रो वंशकी कमल बिनाकी लक्ष्मी हौ ।८। अपहेलनाले तर्सिएका राक्षस तिमीसँग विहे गर्न मान्दैनन् । हे सुन्दरी ! कन्याका लागि सुन्दर वर को हुन्छ भन्न (वा थाहा पाउन) सकिन्न ।९। स्वाभिमानी सबै पिताका लागि (हुर्केकी) छोरी दुःखदायी हुन्छे किन कि छोरीले आमाको, बाबुको र पतिको गरी तीन वटा कुललाई सशङ्कित (चिन्तित) पार्ने गर्दछे ।१०। हुर्केकी छोरीले तीन कुललाई चिन्तित बनाइरहेकी हुन्छे । यसैले हे छोरी ! तिमी जाऊ र प्रजापति कुलमा जन्मिएका श्रेष्ठ मुनि अर्थात् पौलस्त्य कुलका विश्रवासँग स्वयंवर गर । यसबाट हे पुत्री ! तिमीलाई सूर्यसमान तेजिला र यी कुबेर जस्तै प्रभावशाली छोराहरु प्राप्त हुनेछन् । यसमा कुनै शङ्का नगर । छोरीले पनि बाबुको कुरा सुनी उनको गौरवलाई ध्यानमा राखी उनका कुरालाई उचित ठानी विश्रवा मुनिका आश्रमतिर गइन् । हे श्याम ! त्यसबेला चौथो अग्नि समान तेजिला विश्रवा मुनि होम गरिरहेका थिए । बाबुको आज्ञाको मात्र सोच लिएकी उनले यतिखेर आफ्नो बिन्ती बिसाउने उचित समय होइन भनी नजानी गएर मुनिका चरणमा परिन् । पुण्यात्मा मुनिले पूर्णिमाका चन्द्रमा जस्तो अनुहार भएकी कन्यालाई देखेर “हे सुन्दरी ! तिमी कसकी छोरी हौ ? कहाँबाट यहाँ आयौ ? के कामले आयौ ? सही कुरा भन” भन्नु भयो । मुनिले यति भनेपछि ती कन्याले हात जोडेर यसो भनिन्-“हे ब्रह्मन् ! म बाबुको आज्ञाले यहाँ आएकी हुँ । मेरो नाम नैकसी हो । किन आएकी भन्ने कुरा तपका शक्तिले हजुर स्वयं थाहा पाउन सक्नु हुनेछ” । यसपछि मुनिले ध्यान गरेर विचार गरी ती कन्यालाई भन्न लाग्नु भयो ।११-२०। “हे कल्याणी ! मैले तिम्रो चाहना थाहा पाएँ । हे मदोन्मत्त हात्ती हिँडे जसरी हिँड्ने हे सुन्दरी ! तिमी पुत्रको चाहना गरी यहाँ आएकी

विज्ञातं ते मया भद्रे कारणं यन्मनोगतम् ।
सुताभिलाषो मत्तस्ते मत्तमातङ्गगामिनी ॥२१॥
दारुणायां तु वेलायां यस्मात् त्वं समुपस्थिता ।
शृणु तस्मात् सुतान् भद्रे यादृशाञ्जनयिष्यसि ॥२२॥
दारुणान् दारुणाचारान् दारुणाभिजनप्रियान् ।
जनयिष्यसि सुश्रोणि राक्षसान् क्रूरकर्मणः ॥२३॥
सा तु तद्वचनं श्रुत्वा प्रणिपत्याब्रवीद्वचः ।
भगवन्नेदृशाः पुत्रास्त्वत्तो ब्राह्मणयोनितः ॥२४॥
स कन्ययैवमुक्तस्तु विश्रवा मुनिपुङ्गवः ।
उवाच नैकसीं भूयः पूर्णेन्दुरिव रोहिणीम् ॥२५॥
पश्चिमो यस्तव सुतो भविष्यति शुभानने ।
समधर्मानूरूपः स भविष्यति न संशयः ॥२६॥
एवमुक्ता तु सा कन्या श्याम कालेन केन चित् ।
जनयामास वीभत्सरक्षोरूपं सुदारुणम् ॥२७॥
दशग्रीवं महादंष्ट्रं नीलाञ्जनचयोपमम् ।
ताम्रोष्ठं विंशतिभुजं महास्यं दीप्तमूर्धजम् ॥२८॥
जातमात्रे ततस्तस्मिन् प्रजज्वाल बलाग्निना ।
क्रव्यादाश्चापशव्यानि मण्डलानि प्रचक्रमुः ॥२९॥
ववर्षू रुधिरं देवा मेघाश्च खरनिःस्वनाः ।
निष्प्रभश्चापि सूर्योऽपि महोल्का चापतद्भुवि ॥३०॥
चकम्पे धरणी चैव बबुर्वाताः सुदारुणाः ।
अक्षोभ्यः कुक्षिभिश्चैव समुद्रः सरितां पतिः ॥३१॥
अथ नामाकरोत् तस्य पितामहसमः पिता ।
दशग्रीवः प्रसूतोऽयं दशग्रीवो भविष्यति ॥३२॥
तस्य त्वनन्तरं जातः कुम्भकर्णो महाबलः ।
प्रमाणाद्यस्य विपुलं प्रमाणं नेह विद्यते ॥३३॥
ततः शूर्पणखा नाम संजज्ञे बिकटानना ।
विभीषणश्च धर्मात्मा नैकस्याः पञ्चमः सुतः ॥३४॥
तस्मिन् जाते महासत्वे पुष्पवर्षं पपात ह ।
आकाशस्था दुन्दुभयो देवानां प्राणदँस्तथा ॥३५॥
वाक्यं चैवान्तरिक्षे च साधु साध्विति वै तदा ।
तौ तु तत्र महारण्ये ववृधाते महौजसौ ॥३६॥
कुम्भकर्णदशग्रीवौ लोकोद्वेगकरौ तदा ।
कुम्भकर्णः प्रमत्तस्तु महर्षीन् धर्मवत्सलान् ॥३७॥
त्रैलोक्यं नित्यसन्तुष्टोभक्षयन् विचचार ह ।
विभीषणस्तु धर्मात्मा नित्यं धर्मे व्यवस्थितः ॥३८॥
स्वाध्यायी नियताहार उवास विजितेन्द्रियः ।
अथ वैश्रवणो देवस्तत्र कालेन केन चित् ॥३९॥
आयातः पितरं द्रष्टुं पुष्पकेण धनेश्वरः ।
तं दृष्ट्वा नैकसं तत्र ज्वलन्तमिव तेजसा ॥४०॥
आगम्य राक्षसी तत्र दशग्रीवमुवाच ह ।
सुतं वैश्रवणं पश्य भ्रातर तेजसा वृतम् ॥४१॥
भ्रातेभावे समे वाऽपि पश्यात्मानं त्वमीदृशम् ।
दशग्रीव तथा यत्नं कुरुष्वामितविक्रमः ॥४२॥
यथा त्वमपि पुत्रो मे भव वैश्रवणोपमः ।



रहिछ्यौ । तिमी डरलाग्दो समयमा मेरा अगिल्तिर आइ पुग्यौ, यसैले तिमीलाई डरलाग्दा पुत्रहरू प्राप्त हुने छन् । हे सुन्दर नितम्ब भएकी ! तिमी क्रूर काम गर्ने पुत्रहरू जन्माउने छयौ" ।२१-२३। उनले मुनिको कुरा सुनेपछि "हे भगवन् हजुरजस्ता ब्राह्मणबाट पनि यस्ता पुत्र जन्मन्छन् र ? भनी सोधिन् ।२४। यसपछि मुनिश्रेष्ठले चन्द्रमालाई रोहिणीलाई भने जसरी ती कन्या नस्कसीलाई यी कुरा भन्न लागे ।२५। "हे सुन्दर अनुहारकी कन्या ! तिम्रो अन्तिम पुत्र धर्मात्मा हुनेछ, यसमा कुनै शङ्का छैन" ।२६। हे श्याम ! केही समय बितेपछि ती कन्याले अति डरलाग्दा राक्षस छोरा जन्माइन् । दश टाउका, ठूला दाँत-दाह्रा, नीलो गाजल जस्तो रूप, तामा रङका ओठ, बीस वटा हात, ठूलो मुख र बलिरहेको तालु भएको छोरो पाइन् । त्यो छोरो जन्मनासाथ अग्नि जस्तै बलियो भई चम्कन लाग्यो । (यसबेला) काँचो मासु खाने पशुपंक्षी उल्टो दिशामा घुम्न लागे । रगतको वर्षा भयो । बादल गधा कराए जसरी कराउन लागे । सूर्य प्रभावहीन भए । पृथ्वीमा बेस्सरी उल्काको वर्षा भयो ।२७-३०। पृथ्वी हल्लिन लाग्यो । आँधीबेरी आयो । समुद्रमा ठूलठूला छाल वा आँधी आउन लागे ।३१। ब्रह्मासमानका बाबुले उसको नाम राख्दै भने "दशवटा ग्रीवा (गर्दन) सहित जन्मिएको हुनाले यसको नाम दशग्रीव हुनेछ" ।३२। यसपछि अति बलियो कुम्भकर्ण जन्मियो । उसको शरीरको लम्बाइ चौडाइ नाप्नै सकिँदैनथ्यो ।३३। कुम्भकर्ण पछि डरलाग्दो मुख भएकी शूर्पणखा जन्मिइन् । धर्मात्मा विभीषण नैकसीको पाँचौं सन्तानको रूपमा जन्मिए ।३४। (विश्रवाकी वरवर्णिनी नामकी जेठी पत्नीबाट कुबेरको जन्म भइसकेको हुनाले विश्रवाका पाँचौं सन्तान भनिएको हुनुपर्दछ । नैकसी (कैकसी) का पाँच सन्तान भएको तथ्य उपलब्ध छैन) । विभीषण जन्मदा देवताहरूले फूल बर्साए । आकाशमा दुन्दुभि बजे । उनी देवतालाई सुखदायक थिए त्यसैले यी काम गरिए । "जय होस् ! जय होस् !" भन्ने आकाशवाणी सुनियो । रावण र कुम्भकर्ण दुबै विशाल र घना बनमा पालिए । यी दुबै अति नै बलिया थिए ।३५-३६। रावण र कुम्भकर्ण दुबैले संसारलाई दुःख दिन लागे । उन्मत्त कुम्भकर्णले धर्मकर्ममा लागेका ऋषिहरूलाई तीन लोक घुम्दै खान थाल्यो । धर्मात्मा विभीषण भने सधैं धर्मकर्ममा लागिरहन्थे । उनी वेद आदि शास्त्र नित्य पढ्ने गर्दथे । मात्रा मिलाएर खानपिन गर्दथे र इन्द्रियलाई जितेका थिए । केही समय पछि कुबेर आफ्ना मातापितालाई भेट्न पुष्पक विमान चढेर त्यहाँ आए । उनले त्यहाँ तेजस्वी रावणलाई देखे ।३७-४०। त्यसै बखतमा नैकसीले रावण समक्ष गएर भन्न लागिन्-" हे पुत्र यी तेजस्वी कुबेरलाई हेर । दाजुभाईका नाताले तिमी आफूलाई यी सरह सम्झ । हे रावण ! तिमी पनि यस्तो प्रयत्न गर जसले गर्दा तिमी पनि यी सरहका बन्न सक । आमाका यस्ता कुरा सुनेपछि प्रतापी रावणले रिसाउँदै प्रतिज्ञा गरे र भने "माता म सत्य भन्दछु म कि यी सरह कि यीभन्दा बढी तेजस्वी अवश्य बन्नेछु ।४१-४४। यसैले हे आमा ! तपाईं आफ्नो मनको डाहम शान्त पार्नु होस्" । यसपछि रिसाउँदै तपस्याबाट नै यस्तो

मातुस्तद्वचनं श्रुत्वा दशग्रीवः प्रतापवान्॥४३॥
अमर्षमतुलं लेभे प्रतिज्ञां चाकरोत् तदा ।
सत्यं ते प्रतिजानामि भ्रातृ तुल्योऽधिकोऽपि वा॥४४॥
भविष्याम्योजसा चैव सन्तापं त्यज हृद्गतम् ।
ततः क्रोधेन तेनैव दशग्रीवः सहानुजः॥४५॥
चिकीर्षुर्दुष्करं कर्म तपसे धृतमानसः ।
प्राप्स्यामि तपसा काममिति कृत्वा यथाविधि॥
आगच्छदात्मसिद्ध्यर्थमत्र गोकर्णसन्निधौ॥४६॥
सराक्षसश्चात्र सहानुजस्तदा
तपश्चचारातुलमुग्रविक्रमः ।
अतोषयच्चापि पितामहं विभुं
ददौ स तुष्टश्च वरं महात्मने॥४७॥

तेज प्राप्त गर्न सकिन्छ भन्ने कुरा सोची विभीषण र कुम्भकर्णलाई सँगै लिएर रावण तपस्या गर्न गयो । गोकर्ण नजिकैको वनमा आएर उसले निश्चय गर्‍यो कि तपस्याबाट नै म चाहेको शक्ति प्राप्त गर्दछु ।४५-४६। राक्षस तथा भाईहरूसँग बसेर अती पराक्रमी रावणले अती कठिन तरिकाले तपस्या गर्‍यो । तपस्याबाट ब्रह्मालाई खुशी पार्‍यो । खुशी भएका ब्रह्माले ती महात्मा रावणलाई वरदान दिए ।४७।

॥ इति स्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये त्रयोविंशोऽध्यायः॥२३॥
स्कन्दपुराण, हिमवत्खण्ड, नेपालमाहात्म्यमा रावण आदिको जन्म र तपस्याका लागि प्रस्थान आदि विषय वर्णन भएको तेईसौं अध्याय समाप्त भएको छ ।२३।

श्लोकानामादितः समष्ट्यङ्काः-१,४६८+४७=१,५१५
शुरुदेखिको श्लोक सङ्ख्या :-१,४६८+४७=१,५१५

## ॥ अथ चतुर्विंशोऽध्यायः ॥
### ॥ चौबीसौं अध्याय ॥

**मार्कण्डेय उवाच ॥ मार्कण्डेय भन्नुहुन्छ-**

अथाब्रवीन्मुनिः श्याम अत्रागत्य महाबलाः ।
आचक्ष्व कीदृशं ब्रह्मन् तपस्तेपुर्महौजसः ॥१॥
अगस्त्यस्त्वब्रवीत् श्यामं भूयः प्रयतमानसम् ।
ताँस्तान् धर्मविधींस्तात भ्रातरस्ते समाश्रिताः ॥२॥
कुम्भकर्णस्तदात्यर्थं सत्यधर्मपरायणः ।
अतपद्ग्रीष्मकाले वै सोऽग्निभिः सूर्यपञ्चमैः ॥३॥
मेघाम्बुसिक्तो वर्षासु वीरासनमसेवत ।
नित्यं च शिशिरे काले जलमध्ये प्रतिश्रयः ॥४॥
एवं वर्षसहस्राणि दश तस्य तदा ययुः ।
सत्यकर्मानुरक्तस्य सत्येष्वधिष्ठितस्य च ॥५॥
विभीषणश्च धर्मात्मा नित्यं धर्मरतः शुचिः ।
पञ्च वर्षसहस्राणि पादेनैकेन तस्थिवान् ॥६॥
समाप्ते नियमे तस्य ननृतुश्चाप्सरोगणाः ।
पपात पुष्पवर्षं च तुष्टुवुश्चैव देवतः ॥७॥
पञ्च वर्षसहस्राणि सूर्यमेवानुवर्तयत् ।
तस्थावूर्ध्वशिरोबाहुः स्वाध्यायासक्तचेतनः ॥८॥
एवं विभीषणस्यापि गतानि सुमहात्मनः ।
दश वर्षसहस्राणि स्वर्गस्थस्येव नन्दने ॥९॥
पुनश्च शङ्खमूलस्य सङ्गमे जलमाश्रितः ।
तपश्चचार सुमहन्निराहारो जितेन्द्रियः ॥१०॥
लिङ्गानां कोटिमुत्पाद्य व्रतं कृत्वा महत्तरम् ।
वाग्वत्या मणिमत्याश्च सङ्गमे पूर्वगे तटे ॥११॥
लिङ्गं संस्थाप्य कोटीनां लिङ्गानामुपरिस्थले ।
दिव्यवर्षसहस्रं तु निराहारो दशाननः ॥१२॥
पूर्णे वर्षसहस्रे तु शीर्षमग्नौ जुहाव सः ।
एवं वर्षसहस्राणि नव तस्यातिचक्रमुः ॥१३॥
शिरांसि नव चाप्यस्य प्रविष्टानि हुताशनम् ।
पूर्णे वर्षसहस्रे तु दशमे दशमं शिरः ॥१४॥
छेत्तुकामस्य धर्मात्मा प्राप्तस्तस्य प्रजापतिः ।
पितामहस्तु सुप्रीतः सह देवैरुपस्थितः ॥१५॥
वत्स वत्स दशग्रीव प्रीतस्तेऽस्मीत्यभाषत ।
शीघ्रं वृणीष्व भद्रं ते वरं यत् तेऽभिवाञ्छितम् ॥१६॥
तत् ते कामं करोम्यद्य न वृथा ते परिश्रमः ।
ततोऽब्रवीद्दशग्रीवः प्रहृष्टेनान्तरात्मना ॥१७॥
प्रणम्य शिरसा देव हर्षगद्गदया गिरा ।
भगवन् प्राणिनां नित्यं नान्यत्र मरणाद्भयम् ॥१८॥
न च मृत्युसमः शत्रुरमरत्वं ततो वृणे ।
एवमुक्तस्ततो ब्रह्मा दशग्रीवमुवाच ह ॥१९॥
नास्ति सर्वामरत्वं ते वरमन्यं वृणीष्व वै ।
एवमुक्तस्तदा श्याम ब्रह्मणा लोककारिणा ॥२०॥

श्याम मुनिले अगस्त्यलाई सोधे-"हे ब्रह्मन् ! अति बलिया राक्षसहरू यहाँ (गोकर्णमा) आएर कसरी कठोर तपस्या गरे ?" ।१। तपस्याबाट पवित्र मन भएका अगस्त्यले श्यामलाई भन्नु भयो-"हे बाबु ! ती राक्षस दाजुभाईले धर्मविधि पूरा गर्न अनेक तरिकाले तपस्या गरे ।२। कुम्भकर्णले सत्यधर्ममा रही ग्रीष्मकालमा चार अग्नि र सूर्य सहितको पञ्चाग्नि तापेर कठिन तपस्या गरे ।३। वर्षाकालमा बादलले बर्साएको पानीमा वीरासन (पछिल्तिर एउटा गोडा मोरेर त्यसको तिघ्रामा अर्को गोडा राख्दा हुने हठयोगको एक आसन) मा बसेर तपस्या गरे । जाडोमा पानी भित्र बसेर तपस्या गरे ।४। यसरी सत्यकर्म गर्दै सत्यमा दृढ रही तपस्या गर्दागर्दै उसका दश हजार वर्ष बिते ।५। नित्य धर्ममा रही पवित्र भई धर्मात्मा विभीषणले एउटा गोडा मात्र टेकी उभिएर पाँच हजार वर्षसम्म तपस्या गरे ।६। उनको तपस्या सकिँदा अप्सराहरू नाचे र देवताले प्रसन्न भई फूल बर्साए ।७। पाँच हजार वर्षसम्म उनले स्वाध्यायशील चित्तले सूर्यतिर फर्की सूर्य-नमस्कार आसनले तपस्या गरे ।८। यसरी तप गर्दागर्दै महात्मा विभीषणका पनि दश हजार वर्ष स्वर्गको बगैंचामा बसेर बिताए जसरी बिते ।९। त्यसपछि उनले पुनः शङ्खमूलको दोभानमा पानीमा जितेन्द्रिय र निराहार भएर बसी कठोर तपस्या गरे ।१०। बाग्मती र मणिमती नदीको दोभानको पूर्वी किनारमा एक करोड शिवलिङ्ग स्थापना गरी पूजा गरे ।११। रावणले पनि माख्लो भागमा एक करोड शिवलिङ्ग स्थापना गरी सहस्र दिव्य वर्षसम्म निराहार बसी पूजा गरे ।१२। हरेक एक हजार वर्ष बितेपछि उनी आफ्नो एउटा शिर काटी आगोमा होम हाल्ने गर्दथे । यसरी नौ हजार वर्ष बिते ।१३। उनले नवौं शिर पनि अग्निमा होम गरे । दश हजार वर्ष बितेपछि आफ्नो दशौं शिर होम गर्नका लागि काट्न खोज्दा प्रसन्न भएका ब्रह्मा देवगण सहित त्यहाँ उपस्थित हुनु भयो ।१४-१५। "पुत्र ! हे पुत्र दशानन ! म तिमीबाट प्रसन्न भएँ" भन्दै उहाँले "हे भद्र ! तिम्रो मनले चाहेको वरदार छिटो माग । तिमीले गरेको परिश्रम व्यर्थ हुँदैन म तिमीलाई सफल बनाउँदछु" भन्नु भयो । त्यसपछि रावणले अन्तर मनबाट खुशी हुँदै ब्रह्मालाई शिरले ढोगी हर्षले भावविभोर हुँदै भन्न लागे-" भगवन् ! प्राणीलाई मर्नु जत्तिको डर अरु केहीको पनि हुँदैन । मृत्यु समानको अरु कुनै शत्रु नै छैन । त्यसैले मलाई अमर हुने वरदान दिनु होस्" । यसपछि ब्रह्माले रावणलाई भन्नु भयो-"पूर्ण अमरत्व कतै पनि छैन, त्यसैले अरु कुनै बरदान माग" । लोक निर्माता ब्रह्माले यसो भनेपछि हे श्याम ! रावणले उनका अगाडि हात जोडेर यसो भने-" हे प्रजाध्यक्ष ! गरुड, नाग, यक्ष, दैत्य, दानव, राक्षस तथा सबै खालका देवताबाट मलाई अवध्य हुने ( नमारिने) वरदान दिनु होस् । हे पितामह ! मलाई अरु

दशग्रीव उवाचेदं कृताञ्जलिरथाग्रतः ।
सुपर्णनागयक्षाणां दैत्यदानवरक्षसाम् ॥२१॥
अवध्यत्वं प्रजाध्यक्ष देवतानां च सर्वशः ।
न हि चिन्ता ममान्येषु प्राणिषु प्रपितामह ॥२२॥
तृणभूता हि मे सर्वे प्राणिनो मानुषादयः ।
एवमुक्तस्तु धर्मात्मा दशग्रीवेण रक्षसा ॥२३॥
उवाच वचनं श्याम सह देवैः पितामहः ।
भविष्यत तदेवं वै तव राक्षसपुङ्गव ॥२४॥
श्रृणु चापि वरं भूयः प्रीतस्य विहितं मम ।
हुतानि यानि शीर्षाणि पूर्वमग्नौ त्वयाऽनघ ॥२५॥
उत्थास्यन्ति पुनस्तानि तव राक्षसपुङ्गव ।
वितरामि वरं सौम्य तव चान्यं सुदुर्लभम् ॥२६॥
छन्दतो विन्द भद्रं ते रूपमन्यद्यदीच्छसि ।
एवं पितामहोक्तस्य दशग्रीवस्य रक्षसः ॥२७॥
अग्नौ हुतानि शीर्षाणि यानि तान्युत्थितानि वै ।
एवमुक्त्वा तु तं श्याम दशग्रीवं प्रजापतिः ॥२८॥
विभीषणमथोवाच वाक्यं लोकपितामहः ।
विभीषण त्वया वत्स धर्मसंहितबुद्धिना ॥२९॥
आराधितोऽस्मि धर्मज्ञ वरं वरय सुव्रत ।
विभीषणस्तु धर्मात्मा प्राञ्जलिर्वाक्यमब्रवीत् ॥३०॥
ततः सर्वगुणैर्नित्यं चन्द्रमा रश्मिभिर्यथा ।
भगवन् हितमेतावन्मन्ये लोकेश्वरः प्रभुः ॥३१॥
प्रतो यदि तु दातव्यो वरो मे श्रृणु सुव्रत ।
परमापद्गतस्यापि धर्म एष मतिर्भवेत् ॥३२॥
अशिक्षितं च भगवन् ब्रह्मास्त्रं प्रतिभातु मे ।
या या जायेत मे बुद्धिस्तेषु तेष्वाश्रमेष्विह ॥३३॥
सा सा भवतु धर्मिष्ठा तं तं धर्मं भजे तव ।
एष मे परमोदारो वरः परमको मतः ॥३४॥
न हि धर्मानुरक्तानां किञ्चिल्लोकेऽस्ति दुर्लभम् ।
अथ प्रजापतिः प्रीतो वाक्यमेतदुवाच ह ॥३५॥
धर्मिष्ठस्त्वं यथा वत्स तथैतत् ते भविष्यति ।
यस्माद्राक्षसयोनौ ते जातस्यामित्रकर्षण ॥३६॥
नाधर्के जायते बुद्धिरमरत्वं ददामि ते ।
एष एव च ते कामो नित्यं वत्स भविष्यति ॥३७॥
अशिक्षितं च ब्रह्मास्त्रं यथावत् प्रतिपत्स्यते ।
कुम्भकर्णाय तु वरं दातुकामं तपोधन ॥३८॥
प्रजापतिं सुराः सर्वे वाक्यं प्राञ्जलयोऽब्रुवन् ।
न तावत् कुम्भकर्णाय प्रदातव्यो वरस्त्वया ॥३९॥
जानासि हि यथा लोकाँस्त्रासयत्येष राक्षसः ।
नन्दनेऽप्सरसः सप्त महेन्द्रानुचरा दश ॥४०॥
अनेन भक्षिता ब्रह्मन् ऋषयो ब्राह्मणास्तथा ।
तच्छापो वरणादस्मै दीयताममितप्रभो ॥४१॥
लोके वै स्वस्ति चैवं स्याद्भवेदस्या च सम्मते ।
एवमुक्तः सुरैर्ब्रह्माऽचिन्तयत् पद्मसम्भवः ॥४२॥
देवीं सरस्वतीं देवः पद्माक्षीं पद्मसम्भवीम् ।

प्राणीहरूबाट चिन्ता छैन, मानिस आदि प्राणी लाई म झारपात सरह मान्दछु" । दशग्रीवका मुखबाट यस्ता कुरा सुनेपछि हे श्याम ! पितामहले यसो भन्नु भयो-"हे राक्षसश्रेष्ठ ! सबै कुरा तिमीले मागेजस्तै हुनेछ । अरु वरदान पनि म तिमीलाई दिन्छु सुन । हे राक्षसराज ! तिमीले पहिले अग्निमा होम गरेका तिम्रा शिर पुनः आउने छन् । अर्को दुर्लभ वरदान पनि म तिमीलाई दिन्छु ।१६-२६। तिमी मनले चाहे अनुसारको रूप बदल्न सक्नेछौ" । ब्रह्माले यति भनी सकेपछि दशग्रीव राक्षसका आगोमा होमिएका शिरहरू पनि पुनः जस्ता तस्तै भए । हे श्याम ! रावणलाई यति भनेपछि ब्रह्माले विभीषणलाई भन्न लाग्नु भयो -" हे बाबु विभीषण ! धर्मपूर्वक संयमित चित्तले तिमीले मेरो आराधना गरेका छौं । म प्रसन्न छु, हे धर्मज्ञ ! वर माग" । त्यसपछि धर्मात्मा विभीषणले हात जोडेर भने ।२७-३०। जसरी चन्द्रमा नित्य सर्वगुणले सम्पन्न हुन्छन् लोकको हित गर्दछन् त्यसरी नै लोकको भलाई चाहने हे लोकेश्वर प्रभु ! हजुर साँचिकै मलाई वरदान दिन चाहनु हुन्छ भने म माग्दछु सुन्नु हवस्-अति आपद पर्दा पनि मेरो बुद्धि धर्मतिरै लागोस् । अशिक्षित भएर पनि म ब्रह्मास्त्रका बारेमा विधिवत् सबै कुरा जान्न सकूँ । मेरो बुद्धि जुन जुन आश्रममा जान्छ त्यहाँ त्यहाँ धर्मले मलाई साथ देओस् । किन कि संसारमा धर्ममा अडिग हुने मानिसलाई केही कुरा पनि दुर्लभ हुँदैन । यसैले मलाई यही वरदान दिनु हवस्" ।३१-३३। त्यसपछि ब्रह्माले खुशी हुँदै भन्नु भयो-"हे पुत्र ! तिमी धार्मिक त छौ नै सधैं रही रहने छौ । तिम्रो जन्म राक्षस योनिमा भएको छ, स्वभाव जन्य आकर्षण भएपनि तिमी भने अधार्मिक हुने छैनौ । म तिमीलाई अमर हुने वरदान दिन्छु । तिमीले चाहेको कुरा पुग्नेछ । अशिक्षित भएर पनि ब्रह्मास्त्रका बारेमा यथार्थ ज्ञान तिमीलाई हुनेछ" । ब्रह्माले कुम्भकर्णलाई वरदान दिन आँटेपछि सबै देवताले हात जोडेर ब्रह्मालाई भन्न लागे-"हे भगवन् ! कुम्भकर्णलाई चाहीं यस्तो वरदान नदिनु हवस् । हजुरलाई थाहा छ कि यो राक्षसले तीन वटै लोकमा दुःख दिइरहेको छ । स्वर्गको बगैंचाका सात वटी अप्सराहरू र इन्द्रका दश जना सेवकहरूलाई यसले खाइसकेको छ ।यसले कैयौं ऋषि र ब्राह्मणलाई समेत खाइसकेको छ । त्यसैले हे प्रभु ! यसलाई वरदान होइन श्राप दिनु हवस् । यसमा सहमत भए लोकमा शान्ति हुने थियो" । देवताहरुको कुरा सुनेपछि ब्रह्माले एकछिन विचार गरी कमलका जस्ता आँखा भएकी र कमलबाट उत्पन्न भएकी देवी सरस्वतीलाई सम्झनु भयो किन कि सबै प्राणीको जिभ्रोमा बुद्धि, धिरता र सम्झना शक्तिका रूपमा बस्ने उनी नै हुन् ।सम्झना साथ देवी सरस्वती ब्रह्माका सामु उपस्थित भइन् र छेउमा उभिएर भन्न लागिन्-।३४-४४। "हे प्रभु ! म यहाँ उपस्थित भएकी छु । के काम गर्नु पर्‍यो ? आज्ञा होस्" । त्यसपछि ब्रह्माले सरस्वतीलाई भन्नु भयो-"हे प्रार्थना गरिएकी देवि ! तिमी यो कुम्भकर्णको जिभ्रोमा गएर देवताको अनुकूल हुने गरी बस" । यति सुनेपछि सरस्वती ब्रह्मालाई नमस्कार गर्दै कुम्भकर्णको मुखमा गएर बसिन् ।४४-४६। अग्स्त्य मुनिले भन्न लाग्नु भयो कि

विलोक्य सर्वभूतेषु जिह्वा बुद्धिर्धृतिः स्मृतिः ॥४३॥
चिन्तिता चोपतस्थौ सा पार्श्वे हृष्टा सरस्वती ।
प्राञ्जलिः प्राह पार्श्वस्था सा तु देवी सरस्वती ॥४४॥
इयमस्मागता देव किं कार्यं करवाणि ते ।
प्रजापतिस्तु तां प्राह देवीं चैव सरस्वतीम् ॥४५॥
वाणि त्वं राक्षसस्यास्ये भव या देवतेप्सिता ।
इत्युक्त्वा सा प्रणम्याथ तं विवेश निशाचरम् ॥४६॥
ततो भार्गव तद्रक्षो ब्रह्मा वचनमब्रवीत् ।
कुम्भकर्ण महाबाहो वरं वरय राक्षस ॥४७॥
कुम्भकर्णस्ततो हृष्टः श्रुत्वा वाक्यमुवाच ह ।
स्वप्तुंवर्षसहस्राणि देवदेव ममेप्सितम् ॥४८॥
षण्मासान्ते भवेद्देव दिनमेकं तु भोजनम् ।
एवमस्त्विति तं चोक्त्वा सह देवैः पितामहः ॥४९॥
देवी सरस्वती चैव मुक्त्वा तं प्रययौ दिवम् ।
गतेषु ब्रह्मपूर्वेषु दैवतेषु नभःस्थलम् ॥५०॥
विमुक्तोऽसौ सरस्वत्या पूर्वां प्रकृतिमागतः ।
कुम्भकर्णस्तु दुष्टात्मा चिन्तयामास दुःखितः ॥५१॥
ईदृशं किमिदं वाक्यं वदनान्मम निःसृतम् ।
अनभिप्रेतपूर्वं हि संमोहादिव भाषितम् ॥५२॥
सन्तप्यमानो दुःखार्तो विन्धुवँश्चरणौ करौ ।
आत्मानमेवमवशं श्वसन् निन्दन् पपात ह ॥५३॥
एवं लब्धवराः सर्वे भ्रातरो दीप्ततेजसः ।
श्लेष्मान्तकवनं नाम तत्र ते न्यवसँश्चिरम् ॥५४॥

हे भार्गव ! त्यसपछि ब्रह्माले कुम्भकर्णलाई भन्नु भयो -"हे कुम्भकर्ण ! हे महाबाहु ! हे राक्षस ! बरदान माग " ।४७। त्यसपछि खुशी हुँदै कुम्भकर्णले भन्यो "हे देव ! हजार वर्षसम्म म सुती रहूँ र छ महिनामा एक दिन खानका लागि बिउँझिऊँ" । "ल त्यस्तै होस्" भनी ब्रह्मा, देवता र सरस्वती पनि उसलाई मुक्त गरी स्वर्गतिर लागे ।४८-४९। देवीदेवताहरु आकाशतिर गइ सकेपछि दुष्टात्मा कुम्भकर्ण पूर्वकै अवस्थामा आयो र चिन्ता गर्दै दुःखी भयो ।५०-५१। "पहिले कहिल्यै नसोचेका कुरा मोहवश मेरा मुखबाट कसरी निस्किए ? भक्षयामीति वदता स्वप्स्यामीत्युदितं मया । "भक्षयामि" भन्नु भर्ने स्थानमा "स्वप्स्यामि" कसरी मबाट भनिन गयो ? पीरले छटपटिँदै दुःखी भएर उ हातगोडा मिच्न लाग्यो । आफूलाई नियन्त्रण गर्न नसकी उ लामो सास तानी, आफ्नो निन्दा गर्दै ढल्न पुग्यो । यसरी वर पाएका ती प्रचण्ड तेजका राक्षसहरू धेरै दिनसम्म श्लेष्मान्तक वनमा बसी (त्यसपछि आफ्ना देशतिर लागे) ।५२-५४।



॥ इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये चतुर्विंशोऽध्यायः ॥२४॥
श्रीस्कन्दपुराण, हिमवत्खण्ड, नेपालमाहात्म्यमा रावणका दाजुभाईको तपस्या, वरप्राप्ति आदि विवरण उल्लेख भएको चौबीसौं अध्याय समाप्त भएको छ ।२४।

श्लोकानामादितः समष्ट्यङ्काः-१,५१५+५४=१,५६९
शुरुदेखिको श्लोक सङ्ख्या :-१,५१५+५४=१,५६९

## ॥ अथ पञ्चविंशोऽध्यायः ॥
## ॥ पच्चीसौं अध्याय ॥

**अगस्त्य उवाच ॥ अगस्त्य भन्नु हुन्छ ।**

सुमाली वरलब्धाँस्तु ज्ञात्वा तान् वै निशाचरः ।
उदतिष्ठद्भयं त्यक्त्वा सानुगः सर्व आतुरः ॥१॥
माली चण्डः प्रहस्तश्च विरूपाक्षो महोदरः ।
सचिवाः परिवार्येनमुपातिष्ठन् सुमालिनम् ॥२॥
प्रस्थितः सचिवैः सर्वैर्वृतो राक्षसपुङ्गवैः ।
अभिगम्य दशग्रीवं परिष्वज्येदमब्रवीत् ॥३॥
दिष्ट्या ते पुत्र संप्राप्तश्चिन्तितोऽयं मनोरथः ।
यस्त्वं त्रि(वि)भुवनश्रेष्ठाल्लब्धवान् वरमीदृशम् ॥४॥
यत्कृते च वयं लङ्कां त्यक्त्वा यात्रा रसातलम् ।
तद्गतं नो महाबाहो महद्विष्णुकृतं भयम् ॥५॥
असकृत् तेन भग्ना हि परित्यज्य स्वमालयम् ।
विद्रुताः सहिताः सर्वे प्रविष्टाः स्मो रसातलम् ॥६॥
अस्मदीया च लङ्केयं नगरी राक्षसोषिता ।
निवेशिता तत्र भ्रात्रा धनाध्यक्षेण धीमता ॥७॥
यदि नाम न शक्येयं समावस्तुं त्वयाऽनघ ।
तपसा वा महाबाहो प्रत्यानेतु त्वमर्हसि ॥८॥
त्वं तु लङ्केश्वरस्तात भविष्यसि न संशयः ।
सर्वेषा नः प्रभुश्चैव भविष्यसि महाबल ॥९॥

तिनले वरदान पाएको थाहा पाई सुमाली राक्षस आफ्ना कुटुम्ब र सेवक सहित डर एवं अधैर्यता त्यागेर उठ्यो ।१। माली, चण्ड, प्रहस्त, विरूपाक्ष, महोदर आदि अनुचर (सचिव) पनि सुमालीका अगाडि जम्मा भए ।२। अनि ती सेवकले घेरिएर त्यो राक्षसराज रावण भएका ठाउँमा गई अँगालो हाल्दै भन्न लाग्यो ।३। "हे पुत्र तिमीले भाग्यले गर्दा सोचेको कुरा प्राप्त गर्‍यौ, यस्तो सारा जगतमा सबैभन्दा उत्तम बरदान पायौ ।४। हे महाबाहु ! जुन विष्णुका डरले हामी आफ्नो देश लङ्का छाडी पाताल आएका थियौं अब हाम्रो त्यो डर हटयो ।५। तिनै विष्णुले पटकपटक लखेट्नाले हामी सबै मुख लुकाउँदै आफ्नो देश लङ्का छाडी पातालमा आएका थियौं ।६। लङ्का शहर हामी राक्षसहरू बसेको शहर हो । अहिले त्यहाँ तिम्रा बुद्धिमान् दाजु कुबेर बस्ने गरेका छन् ।७। यति तिमी अरु कुनै कारणले त्यहाँ गएर बस्न पाएनौ भने पनि हे निष्पाप रावण ! तिमी आफ्ना तपस्याका प्रभावले लङ्कालाई फिर्ता गर्न सक्षम छौ ।८। हे पुत्र (नाती) ! तिमी अवश्य नै लङ्काका मालिक हुनेछौ, यसमा कुनै शङ्का छैन । हे महा बलशाली ! तिमी हामी सबैका स्वामी हुनेछौ" ।९।



**दशग्रीव उवाच ॥ रावण भन्दछन्-**

अथाऽब्रवीतद्दशग्रीवो मातामहमुपस्थितम् ।
वित्तेशो गुरुरस्माकं नार्हस्येवं प्रभाषितुम् ॥१०॥
इत्येवमुक्तः स तदा सुमाली रावणेन हि ।
नोवाच किञ्चिदत्रैव न्यवसत् स सुहृद्वृतः ॥११॥
कस्य चित् त्वथ कालस्य वसन्तं तत्र रावणम् ।
प्रहस्तः प्रश्रितं वाक्यमिदं राक्षसमब्रवीत् ॥१२॥

यो कुरा सुनेपछि रावण भन्न लागे-"हे मावली हजुरवा ! कुबेर हाम्रा आदरणीय व्यक्ति हुन्, उनका बारेमा यस्तो कुरा गर्नु हुँदैन" ।१०। रावणले यस्ता कुरा गरेपछि सुमाली केही नबोली आफ्ना मित्रसँगै त्यहीँ बस्न लाग्यो ।११। यसरी बस्दा बस्दै केही समय बिते । तब एकदिन प्रहस्तले रावणलाई नम्र भई भन्न लाग्यो ।१२।

**प्रहस्त उवाच ॥ प्रहस्त भन्दछ-**

दशग्रीव महावाहो यत् पुरा प्रोक्तवानसि ।
वित्तेशी गुरुरस्माकं वाक्यमेतन्निबोध मे ॥१३॥
महावीर महाबाहो नार्हस्त्वं वक्तुमीदृशम् ।
सौभ्रात्रं नास्ति वीराणां शृणु भूयो वयश्च मे ॥१४॥
अदितिश्च दितिश्चैव द्वे एते सहिते किल ।
भार्ये परमरूपिण्यौ कश्यपस्य प्रजापतेः ॥१५॥
अदित्यां जज्ञिरे देवास्तदा त्रिभुवनेश्वर ।
दितिश्चाजनयद्दैत्यान् कश्यपादात्मसम्भवान् ॥१६॥
दैत्यानां किल धर्मज्ञ पूरियं सवनार्णवा ।
आसीत् सर्वैर्वृता भूमिस्तेऽभवन् प्रभविष्णवः ॥१७॥

"हे दशग्रीव ! हे महाबाहु ! हजुरले कुबेर हाम्रो पूजनीय व्यक्ति हुन् भनी पहिले जुन कुरा मर्जी भएको थियो, त्यसबारेमा मलाई मनमा लागेका कुरा सुनी बक्सियोस् । हे महावीर ! हे महाबाहु ! हजुरले त्यस्ता कुरा गरेको सुहाएन । वीरका कोही भाईबन्धु हुँदैनन्, मेरा कुरा सुनी बक्सियोस् । कश्यप प्रजापतिका अदिति र दिति नामका अति सुन्दरी दुई पत्नीहरू थिए ।१३-१५। हे त्रिलोकका मालिक ! अदितिबाट देवताहरू तथा दितिबाट दैत्यहरू जन्मिए । दुबै कश्यपका सन्तान हुन् ।१६। हे धर्मज्ञ ! वन एवं समुद्र सहितको यो लङ्काको भूभाग पहिला दैत्यहरूको थियो । पछि विष्णुका बलले ती देवताले दैत्यलाई मारी भगाई

ततस्ते निहताः सर्वे विष्णुना प्रभविष्णुना ।
देवानां तु वशं नीतं त्रैलोक्यमिदमव्ययम् ॥१८॥
तथा वैरमपर्याप्तं गरुडस्योरगैः सह ।
भ्रातृभिः संप्रयुक्तं वै संहारो यस्य नाभवत् ॥१९॥
नैतदेको भवामद्य करिष्यति विपर्ययम् ।
सुरैराचरितं पूर्वं कुरुष्वैतद्वचो मम ॥२०॥
एवमुक्तो दशग्रीवः प्रहस्तेन महात्मना ।
चिन्तयित्वा मुहूर्तं तु वाढमित्वेव सोऽब्रवीत् ॥२१॥
स तु तेनैव हर्षेण तस्मिन्नहनि वीर्यवान् ।
लङ्कां गतो दशग्रीवः सह तैः क्षणदाचरैः ॥२२॥
त्रिकूटस्थः स तु तदा दशग्रीवो महाबलः ।
प्रेषयामास दौत्येन प्रहस्तं वाक्यकोविदम् ॥२३॥
प्रहस्त शीघ्र तं गत्वा ब्रूहि राक्षसपुङ्गव ।
वचनान्मम वित्तेशं सामपूर्वमिदं वचः ॥२४॥
इय लङ्कापुरी राजन् राक्षसानां महात्मनाम् ।
निवासो देवविहितः सर्वलोकपरिश्रुतः ॥२५॥
किंचित् कारणमुद्दिश्य त्यक्ताऽसीद्राक्षसैरियम् ।
ते पुनः समये प्राप्ते स्वं निवासमुपागताः ॥२६॥
त्वया निवेशिता चेयं तत्ते न सदृशं कृतम् ।
तद्भवान् यदि नामैतां दद्यादतुलविक्रमे ॥२७॥
कृता मम भवेत् प्रीतिर्धर्श्चैवानुपालितः ।
इत्युक्तः स तदा गत्वा प्रहस्तो वाक्यकोविदः ॥२८॥
दशग्रीववचः सर्वं वित्तेशाय न्यवेदयत् ।
प्रहस्तादभिसंश्रुत्य सर्वं वैश्रवणो वचः ॥२९॥

तीनै लोकलाई नियन्त्रण गरी मालिक बने । फेरी सुनी बक्सियोस् त गरुड र सर्प दाजुभाई हुने तर पनि झगडा भइरहन्छ । यसको फैसला आजसम्म पनि हुन सकेको छैन ।१७-१९। हजुर एक्लैले यो देव-दानवका बीचको झगडामा पनि कुनै निर्णय गर्न सक्नु हुन्न । पहिले देवताले हामीमाथि जस्तो व्यवहार गरेका थिए हजुरले पनि तीमाथि त्यस्तै व्यवहार गर्नु पर्दछ । मलाई यस्तै लाग्दछ" ।२०। प्रहस्तका यस्ता कुरा सुनेपछि रावणले एक छिन सोचेर भने "कुरा ठिकै हो" ।२१। त्यसपछि बलशाली रावण खुशी हुँदै राक्षसहरूसँग त्यही दिन लङ्कामा गयो ।२२। महा बलशाली रावण त्रिकूट पर्वतमा गएर बसी बोल्नमा चतूर प्रहस्तलाई दूत बनाएर कुबेर समक्ष पठाउने उद्येश्यले उनलाई भन्न लागे-।२३। "हे राक्षसश्रेष्ठ प्रहस्त ! तिमी चाँडे गएर कुबेरलाई मेरो यो नीतीयुक्त सन्देश विनम्रतापूर्वक भन ।२४। हे राजन् ! यो लङ्का शहर महात्मा राक्षसहरूको हो । देवताहरूले गरेको यो निर्णयका बारेमा सबै लोकलाई थाहा छ ।२५। कुनै कारणले गर्दा पहिला राक्षसहरूले यो शहर छाडेका थिए । समय बितेपछि ती आफ्नो पहिलेको वासस्थान तिरै आएका छन् ।२६। हजुरले यहाँ बसोबास गर्न गराउन थाल्नु भैको छ, यो उचित छैन । यसैले हजुर यो शहरलाई अत्यन्त पराक्रमी रावणलाई दिनु होस् ।२७। यसबाट हजुरहरूका बीचमा आपसी सद्भाव र अनुपालन गरिएको (दाजुभाईको) धर्म रही रहन्छ" । रावणले यति भनी सकेपछि चतूर वक्ता प्रहस्तले गएर । रावणले भनेका सबै कुरा कुबेरलाई निवेदन गऱ्यो । प्रहस्तका मुखबाट रावणको सबै सन्देश सुनेपछि ।२९।



वैश्रवण उवाच॥ कुबेर भन्दछन्-

उवाच वाक्यं वाक्यज्ञः प्रहस्तं स निशाचरम् ।
सर्वं कर्ताऽस्मि भद्रं ते राक्षसेशवचोऽचिरात् ॥३०॥
किन्तु तावत् प्रतीक्षस्व पितुर्यावन्निवेदय ।
एवमुक्त्वा धनाध्यक्षो जगाम पितुरन्तिकम् ॥३१॥
अभिवाद्याब्रवीत् तं च रावणस्य यदीप्सितम् ।
एष तात दशग्रीवो दूतो प्रेषितवान्मम ॥३२॥
ममेयं दीयतां लङ्का पूर्वं रक्षोगणोषिता ।
तन्मया यदनुष्ठेयं तदाचक्ष्व ममानघ ॥३३॥
धनदेनैवमुक्तस्तु विश्रवा मुनिपुङ्गवः ।
सोऽब्रवीद्वचनं तत्र शृणु पुत्र वचो मम ॥३४॥

कुबेरले चलाख वक्ता एवं दूत राक्षस प्रहस्तलाई भने "म तिम्रा राक्षसराजका सबै कुरा तुरुन्त गर्नेछु । तर म एकपटक पितालाई सोधेर आउँदछु । त्यतिञ्जेलसम्म तिमी कुरेर बस" । यति भनी कुबेर पिताका आश्रममा गए ।३०-३१। त्यहाँ पुगी अभिवादन गरेपछि पितालाई भन्न लागे-"रावणले म समक्ष एउटा दूत पठाएको रहेछ । त्यसैले उनले राक्षसहरूले पहिले बनाएको शहर मलाई नै दिइयोस् भनेका छन् । मैले के गर्नु उचित हुन्छ आज्ञा होस्" ।३२-३३। कुबेरका कुरा सुनेपछि मुनिश्रेष्ठ विश्रवाले भन्नु भयो-"हे पुत्र ! मेरा कुरा सुन ।३४।

विश्रवा उवाच॥ विश्रवा भन्नु हुन्छ-

दशग्रीवो ममाप्येतदुक्तवान् मुनिसन्निधौ ।
मया निर्भर्त्सितः सोऽपि बहुवोक्तः सुदुर्मतिः ॥३५॥
क्रोधेन च पुनश्चोक्तो ध्वंस ध्वंसेति वै मुहुः ।
तच्छृणुष्व वचः पुत्र मम धर्मार्थसंहितम् ॥३६॥
वरप्रदानात् संमूढो धर्माधर्मं न वेद सः ।

रावणले सबै मुनिगण सामु मसँग पनि यो कुरा गरेको थियो । मैले त्यो कुमती लागेकोलाई धिक्कार्दै गाली गरें ।३५। फेरी मैले रिसाउँदै जा तेरो नाश होस् सत्यानाश होस् समेत पटकपटक भने । त्यसैले हे पुत्र ! मेरा धर्मयुक्त कुरा सुन ।३६। वरदान पाएर मूर्ख बनेको उ अहिले धर्म अधर्मका बारेमा जान्दैन । न त उ मेरो

**न विभेति च मे शापात् प्रकृतिं दारुणां गतः ॥३७॥**
**तस्मात् प्रयाहि भद्रं ते कैलासं धरणीधरम् ।**
**निशामय निकेतार्थं त्यज लङ्कां सहानुगः ॥३८॥**
**तत्र मन्दाकिनी नाम नदीनां प्रवरा नदी ।**
**काञ्चनैः सूर्यसंकाशैः पङ्कजैर्मण्डितोदका ॥३९॥**
**तत्र देवाः सगन्धर्वाः साप्सरोगणकिन्नराः ।**
**विहारशीलाः सततं रमन्ते धरणीधरे ॥४०॥**
**रमस्व पुत्र त्वमपि रम्ये तस्मिन् शिलोच्चये ।**
**न हि क्षेमं तवानेन वैरं धनद रक्षसा ॥४१॥**
**जानीषे च यथा तेन लब्धः परमको वरः ।**
**तथेत्युक्त्वा स पितरमभिवाद्य कृताञ्जलिः ॥४२॥**
**ययौ लङ्कां पुनस्तूर्णं प्रहस्तं चेदमब्रवीत् ।**
**ब्रूहि गच्छ दशग्रीवं पुरीं राज्यं च यन्मम ॥४३॥**
**तवाप्येतन्महाभाग भुङ्क्ष्वैनं गतकण्टकम् ।**
**अविभक्तं त्वया सार्धं राज्यं यच्चास्ति मे वसु ॥४४॥**
**अहं गच्छामि कैलासं निवासाय सहानुगः ।**
**लङ्कामावस भद्रं ते स्वधर्ममनुपालय ॥४५॥**
**एवमुक्त्वा धनाध्यक्षो बलेन महता तदा ।**
**सपौरदारः सामात्यः सवाहनधनागतः ॥४६॥**
**प्रहस्तोऽथ दशग्रीवं गत्वा वचनमब्रवीत् ।**
**प्रहृष्टात्मा महात्मानं सहामात्यं सहानुगम् ॥४७॥**
**शून्या सा नगरी लङ्का त्यक्त्वैनां धनदो गतः ।**
**प्रविश त्वं महाबाहो स्वधर्ममनुपालय ॥४८॥**
**एवमुक्तः प्रहस्तेन दशग्रीवो निशाचरः ।**
**निवेशयामास पुरीं सभ्राता सपदानुगः ॥**
**धनदेन परित्यक्तां संविभुक्तमहापथाम् ॥४९॥**
**स चाभिषिक्तः क्षणदाचरैस्तदा**
**निवेशयामास पुरीं दशाननः ।**
**निकामपूर्णा च बभूव सा पुरी**
**निशाचरैर्नीलवलाहकोपमैः ॥५०॥**

श्रापसँग नै डराउँदछ । उसको स्वभाव निष्ठुर भएको छ ।३७। यसैले हे सज्जन् ! तिमी पृथ्वीको कैलासतिर जाऊ । राक्षसहरूका लागि आफ्ना अनुचरसहित लङ्का छाड ।३८। त्यहाँ नदीहरूमा श्रेष्ठ, सूर्यको किरण समान चम्किला स्वर्णकमलले सुशोभित जल भएकी मन्दाकिनी नामकी नदी छिन् ।३९। त्यस क्षेत्रमा वा भूभागमा गन्धर्व सहितका देवता तथा अप्सरा सहितका किन्नरहरू अनवरत रूपमा घुम्दै रमाइरहेका हुन्छन् ।४०। त्यो उच्च पर्वत खण्डमा गएर तिमी पनि रमाएर बस । यी राक्षसहरूसँग शत्रुता मोल्नु तिम्रा लागि फाइदाजनक हुँदैन ।४१। उसले वरदान पाएका कुरा पनि तिमीलाई थाहा छँदै छ" । पिताका यस्ता कुरा सुने पछि कुबेरले ढोग्दै हात जोडेर बिदा भई छिट्टै लङ्का पुगेर प्रहस्तलाई यो कुरा भन्न लागे-"हे प्रहस्त ! रावणलाई गएर भन कि मेरो शहर र यो राज्य सबै उनैको हो । हे महाभाग्यवान् बाधारहीत भएर यो राज्य भोग गर, यहाँ जेजति धन र राज्य छन् ती सबै उनको र मेरो दुबैको हो । म बस्नका लागि आफ्ना अनुचर सहित कैलाश जान्छु । हे सज्जन ! तिमीहरु लङ्कामा आएर बस र आफ्नो धर्मको पालना गर" ।४५। यसो भनेपछि कुबेर आफ्ना विशाल सेना, शहरवासी, स्त्री, मन्त्रीगण र वाहनलाई लिएर कैलासतिर लागे ।४६। यसपछि प्रहस्तले गएर रावणलाई यो कुरा बतायो । "हे महाबाहु ! महात्मा कुबेर खुशी भई आफ्ना मन्त्री र अनुचरलाई लिई हिँडी सके अहिले लङ्का शहर सुनसान छ, हजुर शहरमा प्रवेश गरी आफ्नो धर्म पालना गर्नु हवस्" ।४७-४८। प्रहस्तका कुरा सुनेपछि राक्षस रावण आफ्ना भाइ र अनुचर सहित लङ्कामा प्रवेश गऱ्यो । कुबेरले छाडेको यो शहरमा ठाउँठाउँमा विभाजित ठूलाठूला राजमार्गहरु थिए ।४९। राक्षसहरूबाट अभिषेक गरिएको त्यो रावण लङ्कामा गयो । यसबेला त्यो शहर नीलो बादल जस्तो देखिने राक्षसहरूले भरिभराउ भएको थियो, त्यहाँ रावण बसोबास गर्न लाग्यो ।५०।



**॥ इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये पञ्चविंशोऽध्यायः ॥२५॥**

श्रीस्कन्दपुराण, हिमवत्खण्ड, नेपालमाहात्म्यमा रावणबाट कुबेरलाई हटाई लङ्काको राज्यभार लिइएको आदि जस्ता वृत्तान्त वर्णन गरिएको पच्चीसौं अध्याय समाप्त भएको छ ।२५।

**श्लोकानामादितः समष्टयङ्काः-१,५६९+५०=१,६१९**

शुरुदेखिको श्लोक सङ्ख्या :-१,५६९+५०=१,६१९

## ॥ अथ षड्‌विंशोऽध्यायः ॥
## ॥ छब्बीसौं अध्यायः ॥

**अगस्त्य उवाच ॥** अगस्त्य भन्नुहुन्छ-

अत्र श्याम दशग्रीवो गोकर्णेश्वरसन्निधौ ।
तपस्यां परमां कृत्वा त्रैलोक्ये दुर्जयोऽभवत् ॥१॥
देवेन्द्रं स्ववशे कृत्वा जित्वा सर्वान् महीपतीन् ।
नागलोकं वशे कृत्वा तस्थौ लोकेश्वरो बली ॥२॥

हे श्याम ! यहाँ गोकर्णेश्वरको छेउमा बसेर रावणले कठिन तपस्या गरे र त्यसैका प्रभावले उनी तीन वटै लोकमा कसैले हराउन नसक्ने गरी शक्तिशाली बने ।१। उनले देवताका राजा इन्द्र, पृथ्वीका सबै राजाहरू र नागलोक (पाताल) लाई समेत नियन्त्रण गरी महाशक्तिशाली लोकेश्वर भई रहन लागे ।२।

**मार्कण्डेय उवाच ॥** मार्कण्डेय भन्नुहुन्छ-

जैमिने मुनिशार्दूल स मुनिः कुम्भसम्भवः ।
दशग्रीवसमुत्पत्तिमुक्त्वा कारुणिकेश्वरम् ॥३॥
मुनिभिर्वेष्टितो भूत्वा ययौ चन्द्रसमन्वितः ।
चन्द्रमास्तत्र दानानि दत्वा कारुणिकेश्वरम् ॥४॥
दृष्ट्वा स प्रययौ धीरो द्रष्टुं वै वज्रयोगिनीम् ।
वज्रां देवीं समभ्यर्च्य यथाविभवविस्तरैः ॥५॥
द्रष्टुं नारायण देवं ययौ दोलागिरिं विधुः ।
अनन्तलिङ्गमालोक्य सर्वपापप्रणाशनम् ॥६॥
पुनः कुम्भेश्वरं द्रष्टुं जगामागस्त्यसंयुतः ।
गत्वा किञ्चित्ततो दूरं विश्रान्तोऽगस्त्य संयुतः ॥७॥
ततो जलाशये एकश्चटकः सलिलं तदा ।
पातुं समागतं वीक्ष्य श्येन एकः प्रधावितः ॥८॥
श्येनो गृहीत्वा चटकं दृष्ट्वा चन्द्रः कृपान्वितः ।
त्याजयामास चटकं चन्द्रमा मुनिपुङ्गव ॥९॥
मुमूर्षुं चटकं दृष्ट्वा चन्द्रमास्तं जलाशये ।
स्थापयामास कृपया घटसम्भवसंयुतः ॥१०॥
प्राणाँस्तत्याज चटकस्तस्मिँस्तीर्थे मनोहरे ।
ततो दिव्यतनुर्भूत्वा तप्तकाञ्चनभूषणः ॥११॥
बभूव चटकः सद्यस्तत्र त्यक्त्वा कलेवरम् ।
शिवरूपधरास्तत्र शिवदूताः समागताः ॥१२॥
विमानवरमादाय ज्वलत्पावकतेजसः ।
विमाने स्थापयामासुर्विद्याधरमिवापरम् ॥१३॥
चामरैर्वीज्यमानं तं द्वितीयमिव भास्करम् ।
विस्मितोऽभूत् क्षपानाथो मुनिभिः परिवारितः ॥१४॥
भूत्वा च विस्मितश्चन्द्र उवाच घटसम्भवम् ।
स्थापयिष्यामि तीर्थेऽस्मिन् शिवलिङ्गं मनोहरम् ॥१५॥
चटकस्य चरित्रं हि दृष्ट्वा हर्षसमागतः ।
चन्द्रस्य वचनं श्रुत्वा प्राह वै घटसम्भवः ॥१६॥
स्थापयात्र महालिङ्गं तीर्थे परमदुर्लभे ।
ततो विधुर्मुनिप्रोक्तैमन्त्रैः परमपावनैः ॥१७॥
स्वनाम्ना स्थापयामास लिङ्गं विभवविस्तरैः ।
स्थापनादेव लिङ्गस्य निशानाथः स्वकां प्रभाम् ॥१८॥
प्रतिपेदे मुनिश्रेष्ठ मुनिनामग्रतस्तदा ।

हे जैमिने ! यसपछि ती मुनिश्रेष्ठ अगस्त्यले रावणको उत्पत्ति आदिको कथा भनी सकेपछि मुनिगण र चन्द्रमा सहित कारुणिकेश्वर(शङ्खमूल) तिर जानु भयो । चन्द्रमाले त्यहाँ कारुणिकेश्वरमा दानहरु दिई भगवान्‌को दर्शन गरी सबै जना वज्रयोगिनीको दर्शनार्थ गए । त्यहाँ चन्द्रमाले देवीको यथाविधि पूजाआजा गरी नारायणको दर्शनका लागि चाँगु गए । यसपछि सबै पाप नाश गर्ने अनन्तलिङ्गको दर्शन गरी अगस्त्य सहित दर्शनार्थ पुनः कुम्भेश्वरतिर गए । केही पर पुगेपछि अगस्त्य सहित सबैले आराम गरे ।५-७। त्यसै बेलामा त्यहाँ रहेको एउटा जलाशयमा एउटा भँगेरो पानी पिउन गयो । उत्ति नै खेर एउटा चील(बाज) ले त्यो त्यो भँगेरालाई झम्टियो ।८। हे मुनिश्रेष्ठ ! चीलले भँगेरालाई समाएको देखी चन्द्रमाले दयागरी भँगेरालाई चीलको पञ्जाबाट मुक्त पारी दिए ।९। त्यसपछि त्यो घाइते भँगेरालाई दयालु चन्द्रमाले मुनि समेत भई त्यो जलाशयमा पानी पिउनका लागि राखी दिए ।१०। (तर) त्यो भँगेरोले त्यो मनोहर तीर्थमा प्राण त्याग गऱ्यो । यसपछि त्यो भँगेरो आफ्नो रूप छाडी तुरुन्त एउटा दिव्य शरीर भएको, तताइएको सुन (झलझल गर्ने) का आभूषण लगाएको पुरुष हुन पुग्यो । अनि त्यहाँ शिवकै रूप भएका शिवका दूतहरू आइपुगे ।११-१२। बलिरहेको अग्नि समानको विमान लेराएर अर्को कुनै विद्याधर(एक देवयोनि)लाईझैं गरी उसलाई त्यो विमानमा लगी बसाए ।१३। अनि सूर्य समानको उसलाई चमर हम्कँदै लिएर गए । मुनिगणका बीचमा रहेका चन्द्रमा यो घटना देखेर अचम्ममा परे ।१४। यसपछि अचम्ममा परेका चन्द्रमाले अगस्त्य मुनिलाई "म यो तीर्थमा एउटा सुन्दर शिवलिङ्ग स्थापना गर्नेछु" भने ।१५। भँगेराको अद्भुत दृश्य देखेका अगस्त्यले पनि चन्द्रमाको कुरा सुनेर हर्षित हुँदै भने कि "हुन्छ, यो अति दुर्लभ तीर्थमा एउटा महालिङ्ग स्थापना गर" । त्यसपछि मुनिले बताएका विधि र पढेका अति पवित्र मन्त्रले आफ्नो नामबाट चन्द्रमाले त्यहाँ महिमा प्रख्यात भएको शिवलिङ्ग स्थापना गरे । हे मुनिश्रेष्ठ ! लिङ्ग स्थापना गर्नाले नै सबै मुनिगणका सामु चन्द्रमाले आफ्नो गुमेको तेज (पुनः) प्राप्त गरे ।१६-१९। त्यसपछि भगवन् अगस्त्यले अगाडि आएर सबै मुनिहरूलाई सम्बोधन गर्दै भन्नु भयो-।१९।

तत प्रोवाच भगवानगस्त्यो मुनिसत्तमः ॥१९॥

**अगस्त्य उवाच** ॥ अगस्त्य भन्नुहुन्छ–

**श्रृण्वन्तु मुनयः सर्वे यथार्थं वचनं मम ।**
**सोमेन स्थापितं यस्माच्छिवलिङ्गमनुत्तमम् ॥२०॥**
**सोमलिङ्गं ततो विप्रा नाम चास्य भविष्यति ।**
**नरश्चटकतीर्थे हि स्नात्वा भक्तिपरायणः ॥२१॥**
**सोमलिङ्गप्रभुं दृष्ट्वा मुच्यते घोरकिल्विषात् ।**
**चतुर्दश्यां सोमवारे सोमलिङ्गं वरं भुवि ॥२२॥**
**ये च द्रक्ष्यन्ति मनुजास्तेषां सिद्धिः करस्थिता ।**
**हेलयाऽवि च ये लोकाः सोमलिङ्गं शुभोदयम् ॥२३॥**
**द्रक्ष्यन्ति सोमवारे वै तेऽपि स्युः शिववल्लभाः ।**
**तीर्थे हि कलविङ्कस्य जलस्पर्शेन मानवः ॥२४॥**
**मुच्यते घोरपापेभ्यो नात्र कार्या विचारणा ।**
**सत्यं सत्यं पुनः सत्यं श्रृण्वन्तु मुनयो वचः ॥२५॥**
**सोमलिङ्गस्य भक्तानां नापत् कुत्रापि वर्तते ।**
**सोमलिङ्गस्य भक्तानां धनधान्यं भविष्यति ॥२६॥**
**इत्युक्त्वा स मुनीन् सर्वानगस्त्यः कुम्भसम्भवः ।**
**उवाच चन्द्रं विधिवत् पूजयाशु महेश्वरम् ॥२७॥**
**चतुर्वेदोक्त मन्त्रैश्च मुनीनां मुखनिःसृतैः ।**
**पूजयामास विधिवत् सोमलिङ्गं कलानिधिः ॥२८॥**

"हे मुनिगण ! सबै जना मेरा सत्य कुरा सुन्नु हवस् । चन्द्रमाले स्थापना गरेको हुनाले यो उत्तम शिवलिङ्गको नाम **सोमलिङ्ग** भनी रहनेछ । **चटकतीर्थ**मा नुहाएर भक्तिपूर्वक सोमलिङ्गको दर्शन गर्ने मानिस महापापबाट पनि मुक्त हुनेछ । जसले सोमवारे चतुर्दशीका दिन पृथ्वीको यो उत्तम सोमलिङ्गको दर्शन गर्दछ उसका हातैमा सिद्धि प्राप्त हुन्छन् । ख्यालख्यालमै पनि जसले सोमवार यो शिवलिङ्गको दर्शन गर्नेछ उसले पनि शिवको सान्निध्यता प्राप्त गर्नेछ । यो चटकतीर्थको जल छुनाले पनि मानिस महापापबाट मुक्त हुनेछ, यसमा अन्यथा नसोच्नू । हे मुनिजन ! यो सत्य, अति सत्य र परम सत्य वचन सुन्नु होस् ।२०-२५। सोमलिङ्गका भक्तलाई कहिल्यै विपत्ति आउँदैन । सोमलिङ्गका भक्तहरू धनधान्यले भरिपूर्ण हुनेछन्" ।२६। कुम्भबाट जन्मिएका अगस्त्य ऋषिले मुनिहरूलाई यति भनेपछि चन्द्रमालाई शिवको विधिपूर्वक पूजा गर्न आदेश दिनु भयो ।२७। अनि मुनिका मुखबाट उच्चारण भएका चार वटै वेदका मन्त्रहरूबाट चन्द्रमाले सोमलिङ्गलाई विधिवत् पूजा गरे ।२८।



**मार्कण्डेय उवाच** ॥ मार्कण्डेय भन्नुहुन्छ–

**पूजयित्वा यथान्यायं चन्द्रः सोऽगस्त्यसंयुतः ।**
**मुनिभिर्वेष्टितो भूत्वा कुम्भेश्वरशिवं ययौ ॥२९॥**
**कुम्भेश्वरं पूजयित्वा स मुनिः कुम्भसम्भवः ।**
**हरसिद्धिं समालोक्य दक्षिणाशां ययौ तदा ॥३०॥**
**चन्द्रोऽपि निर्मलो भूत्वा स्वर्लोकं प्रजगाम हि ।**
**यज्ञभागं ययुः सर्वे मुनयो लोकपूजिताः ॥३१॥**
**स्वं स्वं स्थानं ययुः सर्वे मुनयो लोकपूजिताः ।**
**सोमलिङ्गसमुत्पत्तिं यः श्रृणोति नरोत्तमः ॥३२॥**
**इह लोके सुखं भुक्त्वाऽप्यन्ते स्वर्गमवाप्नुयात् ।**
**प्रायः कलियुगे कोऽपि सोमलिङ्गस्य तत्त्वतः ॥३३॥**
**न वेद महिमानं वै जैमिने मुनिसत्तम ।**
**इति ते कथितं विप्र किमन्यच्छ्रोतुमिच्छसि ॥३४॥**

त्यहाँ विधिवत् पूजा गरी सकेपछि अगस्त्य र मुनिगण सहित चन्द्रमा कुम्भेश्वर गए ।२९। त्यहाँ कुम्भेश्वरको पूजा गरी सकेपछि अगस्त्य मुनि हरिसिद्धिको दर्शन गरी दक्षिणतिर गए ।३०। चन्द्रमा पनि निर्मल भई स्वर्गतिर गए र सबैबाट पूजित हुँदै मुनिजनबाट (पहिलेझैं) यज्ञको भाग पाउन लागे ।३१। मुनिहरू पनि सबै आआफ्ना आश्रमतिर लागे । जो उत्तम मानिस यो सोमलिङ्गको उत्पत्ति सम्बन्धी कथा सुन्दछ उसले यस लोकमा सुख भोगगरी मृत्युपछि स्वर्ग प्राप्त गर्दछ । हे जैमिने ! कलियुगमा प्रायः कसैले पनि सोमलिङ्गको भित्री महिमा जान्दैनन् । हे विप्र ! मैले यो महिमा तिमीलाई बताएँ । अब के सुन्न चाहन्छौ ? ।३२-३४।

**॥ इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये षड्विंशोऽध्यायः ॥२६॥**
श्रीस्कन्दपुराण, हिमवत्खण्ड, नेपालमाहात्म्यमा सोमलिङ्गको स्थापना आदि प्रसङ्ग उल्लेख भएको छब्बीसौं अध्याय समाप्त भएको छ ।२६।

**श्लोकानामादितः समष्ट्यङ्काः-१,६१९+३४=१,६५३**
शुरुदेखिको श्लोक सङ्ख्या :-१,६१९+३४=१,६५३



सोमलिङ्गेश्वर महादेव, सिरुटार, भक्तपुर (तस्बिर श्रोत : कल्याण पौडेल)



चटकेश्वर महादेव, दधिकोट, भक्तपुर (तस्बिर श्रोत : कल्याण पौडेल)



चटकेश्वर महादेव, दधिकोट, भक्तपुर (तस्बिर श्रोत : कल्याण पौडेल)

**॥ अथ सप्तविंशोऽध्यायः ॥**

॥ सत्ताईसौं अध्याय ॥

**सूत उवाच** ॥ सूत भन्नुहुन्छ–

**मार्कण्डेयमुखोद्भूतं सोमेश्वरसमुद्भवम् ।**
**श्रुत्वा तुष्टतमो भूत्वा जैमिनिः पर्यपृच्छतः ॥१॥**

मार्कण्डेयका मुखारवृन्दबाट सोमेश्वरको उत्पत्ति सम्बन्धी कथा सुनी सन्तुष्ट जस्तै भएका जैमिनी पुन सोद्धछन् ।१।

**जैमिनिरुवाच** ॥ जैमिनि भन्नुहुन्छ–

**मार्कण्डेय महाभाग साधुसाधुमुनीश्वर ।**
**त्वद्वक्ताम्बुजनिर्यातां कथाममृतरूपिणीम् ॥२॥**
**पिबतो नास्ति मे तृप्तिः सन्तोषश्च परोऽभवत् ।**
**सोमलिङ्गसमुत्पत्तिं दशग्रीवकथान्विताम् ॥३॥**
**श्रुत्वा मे परमस्तोषो जातश्च मुनिसत्तम ।**
**अन्यान्यपि च लिङ्गानि सोमलिङ्गसमानि च ॥४॥**
**ब्रह्मन् कथय मे भूयः श्लेष्मान्तकवने मुने ।**
**इति जैमिनिवाक्येन प्रेरितो मुनिसत्तमः ॥५॥**

"हे महाभाग्यशाली मार्कण्डेय ! हजुरको जय होस् । हे मुनिश्वर ! हजुरका मुखकमलबाट निस्केका कथारूपी अमृत पिएर मेरो तिर्खा मेटिँदैन । पूरै सन्तुष्टी पनि भएन । हे मुनिश्रेष्ठ ! रावण-कथा सहितको सोमलिङ्गको उत्पत्ति सम्बन्धी कथा सुनेपछि भने मलाई अति नै सन्तोष भयो । हे ब्रह्मन् ! हे मुनि ! श्लेष्मान्तक वनमा रहेका सोमलिङ्ग समानका अरु लिङ्गहरूका बारेमा पनि मलाई बताउनु होस्" । जैमिनिको अनुरोधबाट उत्प्रेरित भएका मुनिश्रेष्ठ..।२-५।

**मार्कण्डेय उवाच ॥ मार्कण्डेय भन्नुहुन्छ-**

मार्कण्डेयो महाभागः पुनराह कथां शुभाम् ।
जैमिनेऽहं प्रवक्ष्यामि भृङ्गीश्वरसमुद्भवम् ॥६॥
यस्य श्रवणमात्रेण सर्वपापैः प्रमुच्यते ।
पुरा कैलासशिखरे नानाधातुविचित्रिते ॥७॥
नानानिर्झरणोपेते नानाद्रुमसमन्विते ।
अप्सरोगणसङ्कीर्णे सिद्धविद्याधरान्विते ॥८॥
मन्दाकिनीस्वर्णपद्मसमूहैश्च विराजिते ।
कामधेनुसमाकीर्णे कल्पद्रुमसमन्विते ॥९॥
नानापक्षिनिनादेन सदा श्रुतिमनोहरे ।
नानाविधैः शिवगणैः समन्तात् परिवेष्टिते ॥१०॥
व्याघ्राननैर्विडालास्यैः शार्दूलवदनैस्तथा ।
अपादैर्बहुपादैश्च ह्रस्वपादैस्तथैव च ॥११॥
अकर्णैर्बहुकर्णैश्च गोकर्णैः खरकर्णकै ।
अश्वकर्णैरुष्ट्रकर्णैर्गजकर्णैर्महोदरैः ॥१२॥
कुब्जैर्वानरकैर्दीर्घैर्विकटैर्दन्तुरैस्तथा ।
उदरास्यैर्महास्यैश्च बहुहस्तैस्तथैव च ॥१३॥
वानरास्यैर्वराहास्यैर्हस्तशून्यैस्तथैव च ।
एवं विध गणैस्तत्र समन्तात् परिवारिते ॥१४॥
व्याघ्रचर्मसमासीनं शशाङ्कधवलं शिवम् ।
विभूतिभूषितं त्र्यक्षं परमानन्दरूपिणम् ॥१५॥
सुप्रसन्नमुखं दृष्ट्वा हसन्तं स्मितभाषिणम् ।
एकान्ते गिरिजा देवी प्रणम्य च कृताञ्जलिः ॥१६॥

महाभाग्यशाली मार्कण्डेयले "हे जैमिनि ! म (अब) भृङ्गीश्वर उत्पत्तिको कथा भन्दछु" भन्दै पुनः शुभ कथा भन्न शुरु गर्नु भयो ।६। जुन कथा सुन्नाले मात्र पनि सबै पाप नाश हुन्छ । प्राचीनकालमा अनेक धातुले बनेको, अनेकौं झरनाहरूले सुशोभित, अनेक थरी वृक्षहरूले शोभायमान, अप्सराको समूले घेरिएको, सिद्ध एवं विद्याधरले युक्त, सुनौला कमल सहितको मन्दाकिनी (नदी) ले युक्त, कामधेनु र कल्पवृक्षले व्याप्त, अनेक थरी चराहरूको कर्णप्रिय आवाज आइरहने, अनेक प्रकारका शिवगणले चारैतिरबाट घेरिएको; बाघको जस्तो मुख भएका, बिरालाको जस्तो मुख भएका तथा सिंहको जस्तो मुख भएका, गोडा नभएका, धेरै गोडा भएका, छोटा गोडा भएका, त्यस्तै कान नभएका, धेरै कान भएका, गाईको जस्तो कान भएका, गधाको जस्तो कान भएका, घोडाको जस्तो कान भएका, ऊँटको जस्तो कान भएका, हात्तीको जस्तो कान भएका, ठूलो पेट भएका, कुप्रा, बाँदरजस्ता, अग्ला, डरलाग्दा र नमिलेका दाँत भएका, पेटमा मुख भएका, ठूलो मुख भएका, धेरै हात भएका, बाँदरको जस्तो मुख गरेका, बँदेलको जस्तो मुख गरेका तथा हात नभएका : यस्ता प्रकारका (शिवगणबाट) चारैतिरबाट घेरिएको कैलाशको चुचुरोमा बाघको छालामा बसेका, चन्द्रमा जस्तै सेतो खरानी घसेका, तीन आँखा भएका, अत्यन्त आनन्ददायक रूपका, अति प्रसन्न अनुहारका र मुस्कुराएर बोल्ने शिवलाई देखी पार्वतीले नमस्कार गरी हात जोडेर एकान्तमा...।७-१६।



**पार्वत्युवाच ॥ पार्वती भन्नुहुन्छ-**

विनयात् परिपप्रच्छ कौतूहलसमन्विता ।
देवदेव महादेव शशाङ्ककृतशेखर ॥१७॥
कथां विचित्रां कथय कस्याप्यविदितां प्रभो ।
त्वत्तः श्रुत्वा कथां चित्रां सखीनामग्रतः प्रभो ॥१८॥

नम्रतापूर्वक उत्सुक हुँदै सोध्नु भयो- " हे देवका पनि देव महादेव ! हे चन्द्रमालाई शिरमा धारण गरेका ! हे प्रभु ! कसैले पनि थाहा नपाएको एउटा विचित्रको कथा भन्नु होस् । हजुरबाट सुनेपछि म त्यो कथा मेरा सखीहरूलाई बताउँदछु प्रभु ।१७-१८।

**मार्कण्डेय उवाच ॥ मार्कण्डेय भन्नुहुन्छ-**

वक्ष्येऽहं जगतां नाथ तासां तोषो भविष्यति ।
पार्वत्या वचनं श्रुत्वा विहस्य जगतां पतिः ॥१९॥
नन्दिकेशं समाहूय वचनं चेदमब्रवीत् ।
यावद्देव्या कथा कुर्वे विचित्रे मन्दिरोत्तमे ॥२०॥
द्वारि स्थित्वा नन्दिकेश गणान् सर्वान् निवारय ।
महादेववचः श्रुत्वा नन्दिकेशः शिवाज्ञया ॥२१॥
द्वाःस्थो भूत्वा गणान् सर्वान् वारयामास तत्क्षणात् ।
ततो विचित्रभवने सह देव्या महेश्वरः ॥२२॥
गत्वा दत्वा कपाटं च कथां प्राह मनोहराम् ।
एतस्मिन्नन्तरे भृङ्गीतद्द्वारं समुपाययौ ॥२३॥

हे संसारका मालिक ! मैले कथा भनेपछि सुनेर ती खुशी हुनेछन्" । पार्वतीको कुरा सुनेर जगतका मालिकले हाँस्दै आफ्नो गण ( एवं वाहन) नन्दिलाई बोलाएर यो कुरा भन्नु भयो-"जबसम्म यो उत्तम एवं विचित्र मन्दिरमा म पार्वतीलाई कथा भन्दछु तबसम्म हे नन्दि ! तिमी ढोकामा बसी गण आदि सबै लाई भित्र आउन नदिई रोक (पहरा देऊ) । महादेवका कुरा सुनी नन्दि पनि शिवको आज्ञा पाई तुरुन्त ढोकामा गई सबै गणहरूलाई छेकी पहरा दिन थाले । त्यसपछि त्यो विचित्रको भवनमा शिव भगवानले गएर ढोका लगाई पार्वतीलाई मनोहर कथा बताउनु भयो । यसैबेलामा शिवका एक गण भृङ्गी (भित्र जाने मनले) त्यो ढोकामा आइपुगे ।

गत्वा स्वभवनं भृङ्गी चिन्तयित्वा क्षणार्धतः ।
भृङ्गरूपं समास्थाय ययौ तत्र महेश्वरः ॥२४॥
कपाटच्छिद्रमार्गेण भृङ्गी तत्र विवेश ह ।
पार्वतीपुरतः प्रोक्ताः कथाश्चामृतसन्निभाः ॥२५॥
प्रत्याह भृङ्गरूपेण भृङ्गी शुश्राव ताः कथाः ।
स्वस्त्रियै विजयानाम्न्यै प्रत्याह तां कथां वराम् ॥२६॥
कथयामास भृङ्गी वै महादेवमुखाच्छ्रुताम् ।
एकदा गिरिजा देवी विचित्रासनसंस्थिता ॥२७॥
विजयाद्याः सखी सर्वा प्रोवाच स्मितपूर्वकम् ।
कथयामि कथां दिव्यां कयाऽपि हि न च श्रुता ॥२८॥
कृताञ्जलिपुटाः प्रोचुर्जयाद्या गिरिजां तदा ।
आज्ञापय महादेवि दैत्यदर्पनिषूदिनि ॥२९॥
इति तासां वचः श्रुत्वा गिरिजा हरवक्त्रतः ।
निर्गतां कथयामास परमानन्दतस्तथा ॥३०॥
सखीमध्यात् समुत्थाय विजया प्राह चण्डिकाम् ।
मयाऽपि ज्ञायते देवि कथय त्वं प्रसादतः ॥३१॥
कथयामि कथामुक्ता विजया प्रावदत् कथाम् ।
विजयावक्रतः श्रुत्वा कथां सा हरवल्लभा ॥३२॥
दुःखिताऽभूत् समुत्थाय ययौ च हरसन्निधौ ।
अतीव दुःखितां दृष्ट्वा शङ्करः प्राणवल्लभाम् ॥३३॥
प्रोवाच स्नेहपूर्वं हि विषण्णाऽसि कथं प्रिये ।
इति शम्भुवचः श्रुत्वा प्रोवाच गिरिजा रुषा ॥३४॥
स्फुरदोष्ठपुटद्वन्द्वा वेपमाना मुहुर्मुहुः ।
महादेव न जानामि हृदयं कुटिलं तव ॥३५॥
उक्ता कथा या भवता संगोपनपरेण च ।
मदग्रे जगतां नाथ त्वयैव विजयाऽपि च ॥३६॥
सखीनामग्रतो लज्जा मम जाता महेश्वर ।
इति तस्या वचः श्रुत्वा प्रोवाच गिरिजां हरः ॥३७॥
मा विषीद वरारोहे यावद्ध्यानं करोम्यहम् ।
इत्युक्त्वा गिरिजां नाथो दध्यौ तस्मिन् क्षणे मुने ॥३८॥
ध्यात्वा तु कारणं ज्ञात्वा चाहूय भृङ्गिणं शिवः ।
क्रोधसंरक्तनयनः शशापाशु स भृङ्गिणम् ॥३९॥
त्वया कपटपूर्वं हि भृङ्गरूपेण चाधम ।
रहोवार्ता श्रुता यस्माद्देव्यग्रे च मयोदिता ॥४०॥
अतो ध्वसेति कैलासान्मानुषो भव सर्वथा ।
शापं सुदारुणं लब्ध्वा भृङ्गी देवान्महेश्वरात् ॥४१॥

(भित्र जान नपाएपछि) भृङ्गी आफ्नो घरमा (फर्की) गएर एकछिन सोचविचार गरी भमराको रूप लिएर (पुनः) शिव कहाँ गए ।१९-२४। त्यहाँ पुगेर ढोकाको प्वालबाट भित्र छिरे । (त्यहाँ शिवबाट) पार्वतीका अगिल्तिर अमृतसमानको कथा भनियो ।२५। त्यो कथा भमराको रूप लिएका भृङ्गीले पनि सुने । अनि भृङ्गीले गएर आफ्नी विजया नाम गरेकी पत्नीलाई महादेवका मुखबाट सुनिएको त्यो उत्तम कथा सुनाए । एकदिन पार्वतीले अचम्मको आसनमा बसेका बेलामा विजया आदि गरिएका आफ्ना सबै सखीहरूलाई मुस्कुराउँदै "म आज कसैले नसुनेको अति उत्तम कथा भन्दछु" भन्नु भयो ।२६-२८। त्यसपछि जया आदि सखीहरूले हात जोडेर पार्वतीलाई "हे महादेवी ! हे दैत्यहरूका घमण्ड नाशिनी ! (त्यो कथा) भन्नु होस्" भने ।२९। यस्ता तिनका कुरा सुनेपछि पार्वतीले शिवका मुखबाट सुनेको कथा अती आनन्दित भएर भन्नु भयो ।३०। यसपछि सखीहरूमध्येबाट उठ्दै विजयाले पार्वतीलाई "यो कथा त मलाई पनि थाहा छ, आज्ञा दिनुहुन्छ भने भन्दछु" भनिन् ।३१। यसपछि विजयाले कथा भनिन् । विजयाको मुखबाट कथा सुनेर ती पार्वती दुःखी भइन् र जुरुक्क उठेर शिव भएका ठाउँमा गइन् । आफ्नी प्राणप्यारीलाई अति नै दुःखी देखेर शिव भगवानले "किन उदास भएकी प्रिये ?" भनी माया गरेर सोध्नु भयो । शिवको कुरा सुनी पार्वतीले रिसाएर दुबै ओठ फरफराउँदै र बारम्बार काम्दै भन्नुभयो-"हे महादेव ! हजुरको कपटी मनलाई म जान्दिन ( बुझ्दिन) । जुन कथा गोप्य तरिकाले हजुरले मेरा सामु भन्नु भएको थियो, हे जगतका मालिक ! त्यही कथा हजुरले विजयालाई पनि बताउनु भएछ । हे महेश्वर ! (आज मलाई) सखीहरुका बीचमा लाजमर्दो भयो" । उनका त्यस्ता कुरा सुनेपछि शिवले पार्वतीलाई भन्नु भयो- "जबसम्म म ध्यानदृष्टिले (सत्य कुरा पत्ता लगाउन्न) तबसम्म तिमी उदास नहोऊ" । हे मुनि ! यति भनेर शिव तुरुन्तै ध्यान गर्न लाग्नु भयो ।३२-३८। ध्यानबाट कारण थाहा पाई शिवले भृङ्गीलाई बोलाएर रिसले राताराता आँखा पारी "हे अधम ! तिमीले कपटपूर्ण तरिकाले भमराको रूप लिई हामी बीचको कुराकानी सुन्यौ, मैले पार्वतीसँग गरेको कुराकानी सुन्यौ, त्यसैले तिमी तुरुन्त कैलाशबाट तल खसी मानव बनी हालेस्" भनी श्राप दिनु भयो । भगवान् शिवबाट कठोर श्राप पाएपछि भृङ्गीले...।३९-४१।



भृङ्ग्युवाच ॥ भृङ्गी भन्दछन्-

दण्डवत् प्रणिपत्याग्रे वचनं चेदमब्रवीत् ।
अजानता मया देव चरितं विप्रियं तव ॥४२॥
क्षन्तव्यो मेऽपराधस्तु देवदेव महेश्वर ।
मन्दस्य मम दुष्टस्य चापराधः पदे पदे ॥४३॥
अन्तरेण महादेव कः सहेतापरः प्रभुः ।
इति भृङ्गिवचः श्रुत्वा महादेवः कृपानिधिः ॥४४॥

हात जोडी लौरोजस्तो भई यसो भन्न लागे-"हे देव ! मैले अनजानमा हजुरलाई मन नपर्ने काम गरेँ । हे देवताका देवता महेश्वर ! मेरो अपराध क्षमा गर्नु हवस् । दुष्ट एवं मन्दबुद्धि भएको मेरा पाइला पाइलामा हुने अपराध महादेव बाहेक हे प्रभु ! अरु कस्ले नै सहन सक्दछ र ?" भृङ्गीका यस्ता कुरा सुनेर दयाका खानी महादेवले...।४२-४४।

**मार्कण्डेय उवाच॥ मार्कण्डेय भन्नुहुन्छ-**

उवाच भृङ्गिन् मे वाक्यं न कदाऽपि मृषा भवेत्।
पृथिव्यां ब्राह्मणो भूत्वा विद्यावान् धार्मिकः कृती॥४५॥
नवलक्षमिता गाथाः कृत्वा रससमन्विताः।
शिवलिङ्गं हि संस्थाप्य क्षेत्रे परमदुर्लभे॥४६॥
मानुष्यं हि परित्यज्य कैलासं पुनरेष्यसि।
इति शङ्करवाक्यान्ते भृङ्गी परमदुःखितः॥४७॥
पतितः पृथिवीमध्ये स्वापराधेन जैमिने।
पुत्रोऽभूद्विष्णुदत्तस्य मथुरायां सुतेजसः॥४८॥
जातकर्मादिकं चास्य पिता चक्रे समाहितः।
गुणाढ्य इति तन्नाम पृथिव्यां प्रश्रितं तदा॥४९॥
पपाठ सकला विद्या मुने व्याकरणादिकाः।
स सर्वशास्त्रवेत्ताऽभूद्गुणाढ्यो द्विजसत्तम॥५०॥
पितर्युपरते सोऽथ गुणाढ्यो गुणसंयुतः।
ययावुज्जयिनीं धीरो मदनो यत्र भूपतिः॥५१॥
आचार्यः सर्ववर्माऽभून्मदनद्वारि पण्डितः।
स परीक्ष्य महाबुद्धिं गुणाढ्यं कविपण्डितम्॥५२॥
कथयामास भूपाय सर्ववर्मा बुधोत्तमः।
यथार्थनामा नृपते गुणाढ्योऽयं द्विजोत्तमः॥५३॥
योग्योऽथ भवतो द्वारि वृत्तिरस्मै प्रदीयताम्।
सर्ववर्मवचः श्रुत्वा राज्ञा सुस्थापितो द्विजः॥५४॥
द्वारे मदनभूपस्य पण्डितः सर्वदा स्थितः।
मुने मदनभूपस्य भार्याऽभूदतिसुन्दरी॥५५॥
नाम्ना लीलावती देवी विद्या व्याकरणादिकाः।
राजा व्याकरणं नैव जानाति मुनिपुङ्गव॥५६॥
एकदा ग्रीष्मसमये घर्मार्तो मदनो नृपः।
लीलावतीसमायुक्तो जलक्रीडां चकार हि॥५७॥
जलाञ्जलिप्रदानेन परस्परमभीक्ष्णशः।
चिक्रीडतुर्दम्पती तौ सखीभिः परिवारितौ॥५८॥
जलाञ्जलि प्रदानेन खिन्ना लीलावती पतिम्।
प्राह नाथ परिश्रान्ता मोदकं देहि सर्वथा॥५९॥
प्रस्तावसदृशं वाक्यमबुध्वा नृपतिस्तदा।
लड्डुका दापयामास नानारससमन्विताः॥६०॥
एतादृशं पतिं बुध्वा ज्ञानशून्यं मुने तदा।
लीलावती जिहासोच्चैर्विषण्णा चाभवत् क्षणात्॥६१॥
उच्चैर्हाससमायुक्ता विषण्णा तदनन्तरम्।
व्रीडितोऽभून्नरपतिर्मदनो मुनिपुङ्गव॥६२॥
एकान्ते सर्ववर्माणमाचार्यं पण्डितोत्तमम्।
गुणाढ्यं च तथाऽऽहूय राजा वचनमब्रवीत्॥६३॥

भृङ्गीलाई "मेरो वचन कहिल्यै खेर जाँदैन (झुटो हुँदैन)। पृथ्वीमा ब्राह्मण भएर जन्मी विद्वान्, धार्मिक र यशस्वी हुँदै (जब) प्रेम, आनन्द र गुणले युक्त भएका नौ लाख स्तुति श्लोक रचना गरी अति दुर्लभ स्थानमा शिवलिङ्ग स्थापना गर्नेछौ (तब) मनुष्यको जुनि छाडी पुनः कैलाशमा आउनेछौ"। हे जैमिनि ! शिवले यति भनी सक्नासाथ अति दुःखी हुँदै भृङ्गी आफ्नो अपराधले गर्दा पृथ्वीमा खसे। (पृथ्वीमा उनी) मथुराका (एक) तेजस्वी (ब्राह्मण) विष्णुदत्तका छोरा भएर जन्मिए।४५-४८। पिताले यी बालकको जातकर्म आदि संस्कार ध्यान दिएर गरे। पृथ्वीमा यिनको नाम यसपछि विनम्र गुणाढ्य भनी रहन गयो।४९। मुनि(पिता)ले उनलाई व्याकरण आदि सबै विद्या पढाए। हे द्विजश्रेष्ठ ! ती गुणाढ्य सबै शास्त्रमा निपुण भए।५०। पिताको देहावसान भएपछि ती गुनिला गुणाढ्य उज्जयन देश गए। जहाँ धैर्यशाली मदन नामका राजा थिए।५१। मदन राजाको ढोकामा (दरबारमा) सर्ववर्मा नामका पण्डित आचार्य थिए। उनले (सर्ववर्माले) गुणाढ्यको परीक्षा लिई उनी अति बुद्धिमान्, कवि एवं पण्डित भएको कुरा राजालाई बताए। गुणाढ्य नाम अनुसार नै उत्तम द्विज छन् भने।५२-५३। यी योग्य छन् यसैले यिनलाई हाम्रो दरबारको ढोकामा जागिर दिइयोस् भने। सर्ववर्माको कुरा सुनेपछि राजाले पनि उनलाई जागिर दिए।५४। ती पण्डित (गुणाढ्य) हरदम मदन राजाको ढोकामा बस्दथे। हे मुनि ! मदन राजाकी अति सुन्दरी पत्नी थिइन्।५५। उनको नाम *लीलावती* देवी थियो। उनी व्याकरण आदि शास्त्रमा निपुण थिइन्। हे मुनिश्रेष्ठ ! राजा (भने) व्याकरण जान्दैनथे।५६। ग्रीष्म ऋतुमा एक दिन राजा गर्मीले आकुलव्याकुल भएर लीलावती सहित भई पानीमा खेलिरहेका थिए।५७। ती राजदम्पती सखी समेत एक आपसमा भीषण तरिकाले लगातार अँजुलीले पानी छ्यापाछ्याप गरी खेलिरहेका थिए।५८। निरन्तर अँजुलीले पानी छ्याप्दाछ्याप्दा रानी थाकिन् र पतिलाई "हे स्वामि ! अब मलाई मोदक दिनु होस्" भनिन्।५९। रानीको यो प्रस्ताव राजाले बुझेनन् र रानीलाई अनेक स्वादका लड्डु लेराई दिए।६०। हे मुनि ! अज्ञानी पतिको यस्तो ताल देखेर लीलावती (पहिले) खित्का छोडेर हाँसिन् र एकैछिनमा उदास भइन्।६१। हे मुनिश्रेष्ठ ! अट्टहास पछि रानी उदास भएको देखेर राजा मदन लज्जित हुन पुगे।६२। त्यसपछि राजाले एकान्तमा सर्ववर्मा पण्डित र गुणाढ्यलाई बोलाएर यो कुरा भने-।६३।

**राजोवाच॥** राजा भन्दछन्-

**मत्पण्डितावुभावेव भवन्तो गुणसंयुतौ ।**
**मया जलविहारेऽद्य लज्जा लब्धा कलत्रतः ॥६४॥**
**प्राह लीलावती मां तु मोदकं देहि भूपते ।**
**इति तस्या वचः श्रुत्वा ततोऽहं द्विजसत्तमौ ॥६५॥**
**मोदकानां सहस्रं हि ददौ तस्यै क्षणार्धतः ।**
**सा जहास तदा राज्ञो विषण्णा चाभवत् क्षणात् ॥६६॥**
**ततो विषादो मे जातो लज्जा च महती पुनः ।**
**कोऽर्थो मोदकशब्दस्य भवेद्ब्राह्मणसत्तमौ ॥६७॥**

"मेरा पण्डित हजुरहरू दुबै जना गुणशाली हुनुहुन्छ । आज पानीमा खेल्दा म पत्नीबाट लज्जित हुन पुगें । लीलावतीले मलाई "हे महाराज मलाई मोदक दिनु होस्" भनिन् । उनका कुरा सुनेपछि हे उत्तम द्विज हो ! मैले तुरुन्तै हजारौं लड्डु लेराउन लगाई उनलाई दिएँ । उनी (मेरो चाला देखेर) ठूलो स्वरले हाँसिन् र एकैछिनमा उदास भइन् ।६४-६६। त्यसपछि म खिन्न भएँ, मलाई अति नै लाज लाग्यो । हे उत्तम ब्राह्मणहरू ! यो मोदक शब्दको के अर्थ होला ?" ।६७।

**॥ इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये सप्तविंशोऽध्यायः ॥२७॥**

श्रीस्कन्दपुराण, हिमवत्खण्ड, नेपालमाहात्म्यमा भृङ्गीश्वर उत्पत्तिको प्रारम्भिक कथा वर्णन भएको सत्ताईसौं अध्याय समाप्त भएको छ ।२७।

**श्लोकानामादितः समष्टयङ्काः-१,६५३+६७=१,७२०**

शुरुदेखिको श्लोक सङ्ख्या :-१,६५३+६७=१,७२०

**॥ अथाष्टविंशोऽध्यायः ॥**

॥ अठ्ठाईसौं अध्याय ॥

**मार्कण्डेय उवाच** ॥ मार्कण्डेय भन्नुहुन्छ-

**इति तस्य वचः श्रुत्वा भूपतेर्द्विजसत्तमौ ।**
**ऊचतुर्युक्तिमद्वाक्यं भूपतिं वाक्यकोविदौ ॥१॥**

राजाका यस्ता कुरा सुनेपछि बोल्नमा चतुर ती दुबै द्विजले राजालाई यस्ता युक्तिसङ्गत कुरा भने- ।१।

**सर्ववर्मगुणाढ्यावूचतुः** ॥ सर्ववर्म र गुणाढ्य भन्दछन्-

**राजँल्लीलावती राज्ञी गौडभूपस्य कन्यका ।**
**सा विद्या विविधा वेद काव्यव्याकरणादिकाः ॥२॥**
**उदकं मा प्रयच्छेति तयोक्तं नृपसत्तम ।**
**अपां विहारे भवता प्रस्तावो नावधारितः ॥३॥**
**अतस्तया च हसितं नान्यदस्तीह कारणम् ।**
**एवं वचस्तयोः श्रुत्वा मदनः प्राह तौ पुनः ॥४॥**
**कालेन कियता विप्रौ ज्ञानं व्याकरणे मम ।**
**भवेत् तद्द्विजशार्दूलावेष मे संशयो महान् ॥५॥**
**इति तस्य वचः श्रुत्वा गुणाढ्यः प्राह भूपतिम् ।**
**अब्दैर्द्वादशभिर्भूप ज्ञानं व्याकरणे तव ॥६॥**
**अहं हि कारयिष्यामि नात्र कार्या विचारणा ।**
**गुणाढ्यवचनं श्रुत्वा सर्ववर्मा बुधाग्रणीः ॥७॥**
**राजानं प्राह राजेन्द्र ज्ञानं व्याकरणे तव ।**
**वर्षद्वयेन संपूर्णं कारयिष्यामहं किल ॥८॥**
**इति तस्य वचः श्रुत्वा भूपतिः प्राह तं पुनः ।**

"हे राजन्! रानी लीलावती गौड राजाकी छोरी हुन्। तिनी अनेक विद्या, काव्य, व्याकरण आदिमा विदुषी छिन् ।२। हे नृपश्रेष्ठ ! उनले मलाई पानी नफ्याँक भनेकी हुन्। जलक्रिडा गर्दा हजुरले यो कुरा ध्यान दिनु भएन ।३। (हजुरले लड्डु दिनु भयो) यसै कारण गर्दा उनी हाँसेकी हुन् । अरु कुनै कारणले होइन" । तिनका कुरा सुनेपछि राजा मदनले तिनलाई फेरी यसो भन्न लागे-।४। "मलाई कति समयमा व्याकरणको ज्ञान हुन सक्दछ त ? हे द्विजहरू हो ! मलाई यस विषयमा (ज्ञान लिन सक्छु कि सक्दिन होला भनेर) ठूलो शङ्का छ" ।५। उनका यस्ता कुरा सुनेपछि गुणाढ्यले राजालाई भने "हे राजन् ! बाह्र वर्षमा हजुरलाई व्याकरणको ज्ञान म आफैं दिन सक्दछु । यसमा अन्यथा सोच्नु नै पर्दैन" । गुणाढ्यका कुरा सुनेर श्रेष्ठ विद्वान सर्ववर्माले राजालाई भने "हे राजन् ! म हजुरलाई दुई वर्षमै पूरा व्याकरणको ज्ञान निश्चित रूपमा दिन सक्दछु" ।५-८। उनका कुरा सुनेपछि राजालाई उनले पुनः भने-



**राजोवाच** ॥ राजा भन्दछन्-

**यदि वर्षद्वयेनैव ज्ञानं व्याकरणे मम ॥९॥**
**कारयिष्यामि विप्रेन्द्र राज्यस्यार्द्धं ददामि ते ।**

"यदि दुई वर्षमै हजुर मलाई व्याकरणको ज्ञान दिन सक्नु हुन्छ भने ।९। हे विप्रश्रेष्ठ ! म हजुरलाई आधा राज्य दिनेछु" ।

**मार्कण्डेय उवाच** ॥ मार्कण्डेय भन्नुहुन्छ-

**एवं तयोर्वचः श्रुत्वा गुणाढ्यः प्राह भूपतिम् ॥१०॥**

तिनका यस्ता कुरा सुनेपछि गुणाढ्यले राजालाई भने-।१०।

**गुणाढ्य उवाच** ॥ गुणाढ्य भन्दछन्-

**यदि वर्षद्वयेनैव ज्ञानं व्याकरणे तव ।**
**सर्ववर्मा कारयति तदा शास्त्रं त्यजाम्यहम् ॥११॥**
**तुभ्यं दत्वा हि सर्वस्वं यास्यामि गहनं खलु ।**
**संस्कृतस्य परित्यागं यावज्जीवं करोम्यहम् ॥१२॥**
**इति तस्य वचः श्रुत्वा सर्ववर्मा द्विजोत्तमः ।**
**प्रतिज्ञापूर्वकं प्राह गुणाढ्यं गुणभूषितम् ॥१३॥**
**यदि वर्षद्वयादर्वाग्ज्ञानं व्याकरणे दृढम् ।**
**न शक्यते मया कर्तुं नरेन्द्रस्य द्विजोत्तम ॥१४॥**

"यदि सर्ववर्माले दुई वर्षमा नै हजुरलाई व्याकरणको ज्ञान दिन सके भने म शास्त्र नै त्याग गर्दछु ।११। निश्चय नै सर्वस्व उनलाई दिएर म बनमा जानेछु र बाँचुञ्जलसम्म संस्कृतलाई परित्याग गर्नेछु" ।१२। उनका कुरा सुनेपछि द्विजश्रेष्ठ सर्ववर्माले (पनि) गुणका खानी गुणाढ्यलाई प्रतिज्ञा गर्दै भने- "हे द्विजोत्तम ! दुई वर्ष भित्र मैले राजालाई व्याकरणको ज्ञान दिन सकिन भने निश्चित रूपमा म आजीवन संस्कृतलाई त्याग गर्नेछु । सबै कुरा तिमीलाई दिएर वनमा जानेछु ।"।१३-१५। यस्तो प्रतिज्ञा

यावज्जीवं परित्यागं संस्कृतस्य करोम्यहम् ।
सर्वस्वं भवते दत्वा यास्यामि गहनं ध्रुवम् ॥१५॥
इति प्रतिज्ञां कृत्वा हि समुत्थाय गृहं ययौ ।
रात्रावाराधयामास कुमारं हरनन्दनम् ॥१६॥
धूपैर्दीपैश्च नैवेद्यैः परां भक्तिं समाश्रितः ।
प्रसन्नश्च कुमारोऽभून्निशीथे सर्ववर्मणे ॥१७॥
तं विलोक्य नमश्चक्रे सर्ववर्मा द्विजोत्तमः ।
विनतं तं समालोक्य प्रोवाच हरनन्दनः ॥१८॥

गरेपछि सर्ववर्मा उठेर घर गए । रातमा शिवपुत्र कुमारको आराधना गरे ।१६। धूप, दीप, नैवेद्य आदिले भक्तिपूर्वक आराधना गरेपछि रातमा कुमार सर्ववर्मासँग प्रसन्न हुनु भयो ।१७। उहाँलाई देखेर द्विजश्रेष्ठ सर्ववर्माले नमस्कार गरे । उनलाई नम्र भइरहेको देखी कुमारले भन्नु भयो-।१८।

कुमार उवाच ॥ कुमार भन्नुहुन्छ-

वरं वरय विप्रेन्द्र प्रसन्नोऽस्मि न संशयः ।
कुमारवाक्यमाकर्ण्य सर्ववर्माऽवदत् पुनः ॥१९॥

“हे श्रेष्ठ ब्राह्मण ! म प्रसन्न छु वरदान माग, शङ्का नगर” । कुमारका वचन सुनेपछि सर्ववर्माले फेरी भन्न लागे-।१९।

सर्ववर्मोवाच ॥ सर्ववर्मा भन्दछन्-

यदि प्रसन्नो मे देव स्वल्पं व्याकरणं तदा ।
देहि मे मदनो येन पण्डितो भवति ध्रुवम् ॥२०॥
इति तस्य वचः श्रुत्वा कुमारोऽमितविक्रमः ।
कलापाख्यं व्याकरण ददौ कृत्वा द्विजन्मने ॥२१॥
आचार्योऽपि तदादाय पुस्तकं मदनं नृपम् ।
पाठयामास यत्नेन पण्डितो मदनोऽभवत् ॥२२॥
मदनस्य दृढं ज्ञानं दृष्ट्वा व्याकरणे तदा ।
गुणाढ्यो लज्जितो भूत्वा सर्वस्वं सर्ववर्मणे ॥२३॥
दत्वा त्यक्त्वा संस्कृतं च जगाम गहनं खलु ।
तत्राश्रमं विधायाशु गुणाढ्योऽप्यतिसुन्दरम् ॥२४॥
विभूतिभूषितो नित्यं जटाजूटसमन्वितः ।
रुद्राक्षमालया नित्यं शिवनाम जजाप हि ॥२५॥
एकदा ह्याश्रमे तस्य पुलस्त्यो मुनिसत्तमः ।
समागतो देवयोगान्मुनिभिः परिवारितः ॥२६॥
तमागतमभिप्रेक्ष्य पुलस्त्यं मुनिसत्तमम् ।
प्रत्युद्ययावादरेण गुणाढ्यो गुणसंयुतः ॥२७॥
आसने तं समावेश्य पाद्यादिभिरथो मुने ।
गुणाढ्यः पूजयामास मुनीनपि यतव्रतान् ॥२८॥
ततो विश्रान्तमासीनं पुलस्त्यं मुनिसंयुतम् ।
गुणाढ्यः परिपप्रच्छ भाषया नतकन्धरः ॥२९॥

“हजुर मसँग प्रसन्न हुनुहुन्छ भने मलाई छोटो वा लघु व्याकरणको ज्ञान दिनु होस् ता कि म त्यो ज्ञान मदन राजालाई दिएर उनलाई साँचिकै पण्डित बनाउन सकूँ” ।२०। उनका कुरा सुनेपछि अती पराक्रमी कुमारले ती द्विजलाई “कलाप” नामक व्याकरण शास्त्र बनाई दिनु भयो ।२१। आचार्यले पनि त्यो पुस्तक लिएर मदन राजालाई प्रयत्नपूर्वक पढाए । मदन राजा पनि पण्डित भए ।२२। त्यसपछि राजा मदनलाई व्याकरणको दृढ ज्ञान भएको देखेर गुणाढ्य लज्जित हुँदै आफ्नो सर्वस्व सर्ववर्मालाई दिए ।२३। सर्वस्व दिई संस्कृत पनि त्यागेर बनमा गए । त्यहाँ गुणाढ्यले चाँडै अतिसुन्दर आश्रम पनि बनाए ।२४। (अनि) खरानी घसी, जटा पाली नित्य रुद्राक्ष माला लिएर शिवनाम जप्न थाले ।२५। एकदिन दैववश तिनका आश्रममा मुनिगणले घेरिएका मुनिश्रेष्ठ पुलस्त्य आइपुगे ।२६। मुनिश्रेष्ठ पुलस्त्य आएको देखेर गुणवान् गुणाढ्यले उनको एवं अन्य मुनिगणको अभिवादन एवं स्वागतसत्कार गरी आसनमा बसाली जल आदिले उनलाई र अरु मुनिहरूलाई पनि पूजा गरे ।२७-२८। त्यसपछि मुनिगण सहित आराम गरिरहेका पुलस्त्यलाई झुकेर नम्र भई गुणाढ्यले सोधे-।२९।

गुणाढ्य उवाच ॥ गुणाढ्य भन्दछन्-

सर्वा कथा मे विदिता भवता मुनिसत्तम ।
निस्तारस्तु कथं मे स्यात् तदाचक्ष्व दयानिधे ॥३०॥

“हे मुनिश्रेष्ठ ! हजुरबाट मैले सबै कथा सुने । हे दयाका खानी ! अब यो कथा म कुन भाषामा लेखौं, बताउनु होस्” ।३०।

**मार्कण्डेय उवाच** ॥ मार्कण्डेय भन्नुहुन्छ-

इति तस्य वचः श्रुत्वा पुलस्त्यो धातृनन्दनः ।
गुणाढ्यं पुनरेवाह सर्वज्ञो मुनिसत्तमः ॥३१॥

उनका कुरा सुनेपछि ब्रह्माका पुत्र एवं सबै कुरा जान्ने मुनिश्रेष्ठ पुलस्त्यले गुणाढ्यलाई पुनः यो कुरा भन्नु भयो-।३१।

**पुलस्त्य उवाच** ॥ पुलस्त्य भन्नुहुन्छ-

पिशाचभाषया गाथा नवलक्षमिताः कुरु ।
ततो हि परमे पीठे नेपालाख्ये मनोहरे ॥३२॥
शिवलिङ्गं स्थापयित्वा विप्र मोक्षमवाप्स्यसि ।
इत्युक्त्वा स्वाश्रमं यातो मुनिभिः परिवारितः ॥३३॥
पुलस्त्यो ब्रह्मणः पुत्रो जैमिने मुनिसत्तम ।
ततो गुणाढ्यो गुणवान् पत्राण्यादाय शाखिनाम् ॥३४॥
धातुभिर्विलिलेखाशु कृत्वा गाथा मनोहराः ।
पपाठ च स्वयं गाथा गुणाढ्यो गुणिसत्तमः ॥३५॥
गाथाः श्रुत्वा हि पशवो गुणाढ्यरचितास्तदा ।
आहारं हि परित्यज्य तस्थुस्तस्याश्रमे सदा ॥३६॥
यदा जजाप हि मुने गुणाढ्यो गुणिनां वरः ।
तदा हि पशवः सर्वे ग्रासान्वेषणतत्पराः ॥३७॥
व्याधा हत्वा मृगाँस्ताँस्तु मदनस्य महीपतेः ।
ददौ हि सूपकारेभ्यः पेचुस्तेऽपि तदा मुने ॥३८॥
नीरसं हि परं भुक्त्वा नृपः प्राह च पाचकान् ।

"पिशाच भाषामा नौ लाख गाथा लेख्नू अनि नेपाल नाम गरिएको सुन्दर र उत्तम पीठमा शिवलिङ्ग स्थापना गर्नू । यसपछि हे ब्राह्मण ! तिमीले मोक्ष प्राप्त गर्नेछौ" । हे जैमिनि ! यति भनेर ब्रह्माका पुत्र मुनिश्रेष्ठ पुलस्त्य मुनिहरूले घेरिएर आफ्नो आश्रमतिर जानु भयो । त्यसपछि गुणाढ्य रुखका पात लेराउँदै गेरु आदि धातुले त्यसमा मनोहर गाथा लेख्न थाले । गुणवान् गुणाढ्य गाथा लेखेपछि त्यसलाई पढ्ने पनि गर्दथे ।३२-३५। त्यसपछि गुणाढ्यले लेखेका गाथा सुनेर नै पशुहरू जतिखेर पनि खान नै छाडी उनका आश्रममा रहन थाले ।३६। जब श्रेष्ठ एवं गुणवान् गुणाढ्य शिवनाम जप्न थाल्दथे तब मात्र पशुहरु खानाको खोजीमा यताउता जाने गर्दथे ।३७। हे मुनि ! शिकारीहरूले मदन राजाका लागि (त्यही जङ्गलबाट) मृग आदि मारेर लगी उनका भान्छेहरूलाई दिने गर्दथे ।३८। स्वाद एवं रस नभएको (मासु खान दिएको देखेर) राजाले भान्छेहरूलाई भने-



**राजोवाच** ॥ राजा भन्दछन्-

कथं शुष्कानि मांसानि मह्यं दत्तानि पाचकाः ॥३९॥
इति तस्य वचः श्रुत्वा प्रोचुस्ते पाचका नृपम् ।
व्याधैराहृतमांसानि ह्यस्माभिः संस्कृतानि च ॥४०॥
पाचकानां वचः श्रुत्वा व्याधानाहूय पार्थिवः ।
जगाद हेतुना केन शुष्कमांसमुपागतम् ॥४१॥
इति भूपवचः श्रुत्वा व्याधाः प्रोचुर्भयातुराः ।
दुर्बला हरिणाः सर्वे वने जाता नरेश्वर ॥४२॥
कारणं तु न जानीमो येन ते दुर्बला मृगाः ।
व्याधानां वचनं श्रुत्वा व्याधान् प्राह नरेश्वरः ॥४३॥
ज्ञायतां कारणं व्याधा येन ते दुर्बला मृगाः ।
इति भूपवचः श्रुत्वा ययुर्व्याधा वनं तदा ॥४४॥
गत्वा तदाश्रमं रम्यं गुणाढ्यं ददृशुस्तदा ।
कृत्वा गाथा वदन्तं च जटिलं श्मश्रुसंयुतम् ॥४५॥
गाथाश्च शृण्वतस्तस्थुः पशूँश्चददृशुस्तदा ।
गाथाः श्रुत्वाऽथ ते तस्थुस्तत्रैव विपिने मुने ॥४६॥
चकार भोजनं राजा तदा मांसविवर्जितम् ।
सूपकाराँश्च प्रपच्छ कोपसंरक्तलोचनः ॥४७॥
कथमद्य समानीतं भोजनं मांसवर्जितम् ।
इत्याकर्ण्य नरेन्द्रस्य वचः कोपसमन्वितम् ॥४८॥

"हे भान्छे हो ! किन मलाई सुकेको मासु खान दिइयो ?"।३९। उनका कुरा सुनेपछि भान्छेहरुले राजालाई भने-"महाराज ! हामीले त शिकारीले जस्तो मासु लेराएर दिन्छ त्यही नै पकाएर हजुरलाई दिएका हौं" ।४०। भान्छेका कुरा सुनेपछि राजाले शिकारीहरूलाई बोलाई भने-"तिमीहरुबाट के कारणले सुकेको मासु लेराइएको हो ?"।४१। राजाका कुरा सुनेपछि डरले थरथर काँप्दै शिकारीहरूले भने-"हे महाराज ! बनका सबै मृगहरू दुब्ला भएका छन् । के कारणले ती दुब्लाए हामी जान्दैनौ" । शिकारीहरूका कुरा सुनी तिनलाई राजाले भने-।४२-४३। "हे शिकारीहरू हो ! के कारणले मृगहरू दुब्लाए, त्यो पत्ता लगाओ" । यसपछि राजाको आदेश अनुसार (कारण खोज्न) शिकारीहरू बनमा गए ।४४। वनमा तिनले एउटा सुन्दर आश्रममा बाक्लो दाह्री पालेका गुणाढ्यलाई गाथा लेख्दै पढ्दै गरिरहेको देखे ।४५। गाथा सुन्दै बसिरहेका पशुहरू देखे । हे मुनि ! यसपछि ती पनि गाथा सुन्दै त्यही वन(आश्रम नजिक) मा बसे । (दरबार फर्केनन्) ।४६। (उता दरबारमा) राजाले मासु बिना नै भोजन गरे । (मासु नपकाएकोमा राजाले) रिसले राताराता आँखा पारी ( नपकाउनुको कारणका बारेमा) रिसाउँदै भान्छेलाई सोधे- ।४७। "किन आज मासु बिनाको खाना लेराएर खुवायौ ?" राजाबाट

**सूपकारास्तदा प्रोचुर्मुनि प्राञ्जलयो नृप ।**

यस्ता रिसाएर सोधिएका प्रश्न सुनेर ।४८। भान्छेहरुले राजालाई हात जोडेर भन्न लागे-

**सूपकारा ऊचुः** ॥ भान्छेहरूले भने-

**मांसार्थ विपिने ये च व्याधा यान्ति नरेश्वर ॥४९॥**
**न हि ते विनिवर्त्तन्ते यमलोकं गता इव ।**
**इति तेषां वचः श्रुत्वा राजा बुद्धिमतां वरः ॥५०॥**
**सर्ववर्माचार्ययुक्तो जगाम विपिनं तदा ।**
**स ददर्श नृपो धीरं गुणाढ्यं गुणिनां वरम् ॥५१॥**
**कथयन्तं कथाश्चित्रा नानाश्चर्यसमन्विताः ।**
**तत्कथाश्रवणामोदत्यक्तग्रासान् पशूँस्तदा ॥५२॥**
**ददर्श दुर्बलान् भूपो मेदोमांसविवर्जितान् ।**
**आत्मनश्च रसोत्पत्तिं ज्ञात्वा भूपतिसत्तमः ॥५३॥**
**ववन्दे गुणिनां श्रेष्ठं गुणाढ्यं धर्मतत्परम् ।**
**गुणाढ्योऽपि ततो दृष्ट्वा सर्ववर्माणमागतम् ॥५४॥**
**ननाम गुरुवद्धीरो ददौ भूपाय चाशिषम् ।**
**चकार विधिवत् पूजां तयोर्द्विजनरेन्द्रयोः ॥५५॥**
**ततो नरपतिः प्राह सर्ववर्ममते स्थितः ।**
**गुणाढ्य यामो नगरं यथापूर्वस्थितिं कुरु ॥५६॥**
**इति भूपतिवाक्यान्ते गुणाढ्यः प्राह भूपतिम् ।**

"हे महाराज ! मासु लेराउनका लागि बनमा गएका शिकारीहरू यमलोकतिर नै गए जसरी फर्केर नै आएनन्" । तिनका यस्ता कुरा सुनेपछि बुद्धिमान राजा आचार्य सर्ववर्मालाई समेत लिई बनमा गए । (त्यहाँ) अनौठा र चित्रविचित्रका कथा भनिरहेको र खान पनि छाडी त्यो कथा सुन्दै पशुहरु बसिरहेका बोसो र मासु नभएका कमजोर पशुहरुलाई राजाले देखे । राजा पनि कथा सुनेर हर्षित भए ।४९-५३। अनि धर्ममा तत्पर गुणश्रेष्ठ गुणाढ्यलाई ( गएर) नमस्कार गरे । त्यसपछि गुणाढ्यले पनि सर्ववर्मा आएको देखी उनलाई गुरुसमान मानी नमस्कार गरे, राजालाई आशिर्वाद दिए । अनि ती दुई राजा र ब्राह्मणलाई विधिवत् पूजा गरे ।५४-५५। त्यसपछि सर्ववर्मको सल्लाहमा राजाले गुणाढ्यलाई "हे गुणाढ्य ! पहिलेकै स्थितिमा रहने गरी दरबार फर्कनु होस्" भनी आग्रह गरे ।५६। राजाको कुराको अन्तमा गुणाढ्यले राजालाई भने-

**गुणाढ्य उवाच** ॥ गुणाढ्य भन्दछन्-



**जानामि सर्वं नृपते तवास्मीति निगद्यते ॥५७॥**
**पिशाचभाषया राजन् कृता गाथा मनोहराः ।**
**नवलक्षमितास्तास्त्वं संस्कृतेन लिखापय ॥५८॥**
**अहं यास्यामि नेपालं क्षेत्राणां क्षेत्रमुत्तमम् ।**
**इत्युक्त्वा प्रददौ तानि शाखिपत्राणि जैमिने ॥५९॥**
**आदाय तानि नृपतिः स्वकीयां नगरीं ययौ ।**
**तदा ययौ गुणाढ्योऽपि श्लेष्मान्तकवनं मुने ॥६०॥**

"हे राजन् ! हजुरको मप्रतिको प्रेमका बारेमा म जान्दछु । हजुर पनि मेरा बारेमा जान्नु हुन्छ । यसैले म हजुरलाई अनुरोध गर्दछु कि-मैले पिशाचभाषामा नौ लाख गाथा लेखेको छु । यसलाई हजुरले लगी संस्कृतमा उल्था गर्न लगाउनु होस् । म क्षेत्रहरूमा उत्तम क्षेत्र नेपाल जान्छु" । हे जैमिनि ! यति भनी गुणाढ्यले गाथा लेखिएका पातहरू राजालाई दिए ।५७-५९। यसपछि राजा ती पात बोकी आफ्नो शहरतिर लागे । गुणाढ्य पनि श्लेष्मान्तक बनतिर गए ।६०।

नोट : मासु (पिशितम्) खानेलाई पिशाच भनिन्छ । पिशाच एक देवयोनि हो पनि भनिएको छ । यी पिशाचले बोल्ने भाषालाई पिशाचभाषा भनिन्थ्यो । रुखको पात एवं बोक्रामा लेखिएको नौ लाख श्लोकको यो शिव-गाथा वास्तवमा कुन भाषामा लेखिएको थियो ? त्यसको लिपी कस्तो थियो ? संस्कृतमा अनुवाद भएपछि यसको के नाम राखियो ? अहिले छ छैन ? पिशाच भनेका जङ्गली आदिवासी हुन् अथवा अरु नै ? यी कुराहरूको उत्तर पाउन सकिएन । तिलेश्वर, चम्पकेश्वर र रामेश्वर गरी ६४ शिवलिङ्ग मध्येका तीन शिवलिङ्ग त्यहाँ रहेको वर्णन पाइन्छ । अहिलेको अवस्था के छ होला ?

**॥ इति श्रीस्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्येऽष्टाविंशोऽध्यायः ॥२८॥**

। श्रीस्कन्दपुराण, हिमवत्खण्ड, नेपालमाहात्म्यमा भृङ्गीश्वर उत्पत्तिको कथा प्रसङ्गमा गुणाढ्यको कथा वर्णन गरिएको अठ्ठाईसौं अध्याय समाप्त भएको छ ।२८।

**श्लोकानामादितः समष्ट्यङ्काः-१,७२०+६०=१,७८०**

शुरुदेखिको श्लोक सङ्ख्या :-१,७२०+६०=१,७८०

## ॥ अथोनत्रिंशोऽध्यायः
॥ उनन्तीसौं अध्याय ॥

**जैमिनिरुवाच ॥ जैमिनि भन्नुहुन्छ–**

**नेपालक्षेत्रमासाद्य गुणाढ्येन महात्मना ।**
**किमकारि महाभाग तदाचक्ष्व पुरो मम ॥१॥**

हे महाभाग्यशाली ! नेपाल क्षेत्रमा पुगेर महात्मा गुणाढ्यले के गरे ? त्यो कुरा सबै मलाई बताउनु होस् ।१।

**सूत उवाच ॥ सूत भन्नुहुन्छ–**

**इति जैमिनिवाक्यान्ते मार्कण्डेयस्तपोधनः ।**
**गुणाढ्यचरितं सर्वं जैमिनिं प्राह शौनकः ॥२॥**

हे शौनक ! जैमिनिका कुरा सुनेपछि तपस्याका खानी मार्कण्डेयले गुणाढ्यका सबै चरित्र जैमिनिलाई बताउन लाग्नु भयो ।२।

**मार्कण्डेय उवाच ॥ मार्कण्डेय भन्नुहुन्छ–**

**नेपालक्षेत्रमासाद्य गुणाढ्यो द्विजसत्तमः ।**
**वाग्वत्याः सलिलो स्नात्वा दृष्ट्वा पशुपतीश्वरम् ॥३॥**
**क्षेत्रप्रदक्षिणं कृत्वा लिङ्गं संस्थाप्य यत्नतः ।**
**आरुरोह ततो भृङ्गी कैलासं पर्वतोत्तमम् ॥४॥**

नेपालक्षेत्र पुगेर द्विजश्रेष्ठ गुणाढ्यले वाग्वती नदीमा नुहाई पशुपतिनाथको दर्शन गरे ।३। त्यसपछि तीर्थ परिक्रमा गरी प्रयत्नपूर्वक लिङ्ग स्थापना गरे अनि भृङ्गि बनेर पुनः कैलास उक्लिए (मोक्ष भए) ।४।

**जैमिनिरुवाच ॥ जैमिनि भन्नुहुन्छ–**

**भृङ्गिणा मुनिशार्दूल कथं क्षेत्रप्रदक्षिणम् ।**
**कृत तद्विधिमाचक्ष्व लिङ्गस्थापनकं विधिम् ॥५॥**

हे मुनिश्रेष्ठ ! भृङ्गिले तीर्थपरिक्रमा कसरी गरे त्यसको र लिङ्ग स्थापना गर्ने विधिको बारेमा बताउनु होस् ।५।



**मार्कण्डेय उवाच ॥ मार्कण्डेय भन्नुहुन्छ–**

**क्षेत्रप्रदक्षिणविधिः श्रूयतां मुनिसत्तम ।**
**क्षेत्रप्रदक्षिणं कृत्वा नरः पापैः प्रमुच्यते ॥६॥**
**पूर्वेद्युर्मानवो यत्नाद्धविष्याशी जितेन्द्रियः ।**
**भूमिशायी ध्रुवं भूयाच्छिवस्मरणतत्परः ॥७॥**
**ततः प्रभाते वाग्वत्यां स्नानं कृत्वा यथाविधि ।**
**पूजयित्वा पशुपतिं संकल्पं नियतश्चरेत् ॥८॥**
**मासपक्षतिथीनां च निमित्तानां च सर्वशः ।**
**आदावुल्लेखनं कृत्वा ततः संकल्पमाचरेत् ॥९॥**
**क्षेत्रप्रदक्षिणं देव करिष्ये विधिपूर्वकम् ।**
**संकल्पसिद्धिर्मे भूयात् त्वत्प्रसादान्महेश्वर ॥१०॥**
**अनुज्ञां देवदेवेश देहि मे परमेश्वर ।**
**इत्यनुज्ञां प्रार्थयित्वा त्रिः प्रदक्षिणमाचरेत् ॥११॥**
**ततो दक्षिणद्वारेण राजराजेश्वरीं व्रजेत् ।**
**विलोक्य भैरवं देवं वत्सलां प्रविलोक्य च ॥१२॥**
**गुह्येश्वरीं ततो गच्छेन्नदीमुत्तीर्य वाग्वतीम् ।**
**नत्वा गुह्येश्वरीं देवीं चैलगङ्गां ततो व्रजेत् ॥१३॥**
**स्नात्वा वै चैलगङ्गायां पितृन् सन्तर्प्य यत्नतः ।**
**गोकर्णेशं ततो गच्छेन्महापातकनाशनम् ॥१४॥**

हे मुनिश्रेष्ठ ! तीर्थ घुम्ने विधिका बारेमा सुन्नु होस् । यो विधिले तीर्न घुम्नाले मानिस पापबाट मुक्त हुन्छ ।६। तीर्थ यात्रा शुरु गर्ने अघिल्लो दिन मानिसले फलफूल मात्र खाएर बस्नू । जितेन्द्रिय भई भुइँमा सुत्नू । मनले शिवको नाम जपिरहनू ।७। भोलिपल्ट बिहान गएर वाग्वतीमा विधिपूर्वक नुहाउनू । त्यसपछि पशुपतिनाथको दर्शन गरी विधिपूर्वक सङ्कल्प गर्नू ।७। सङ्कल्पमा पहिला महिना, पक्ष, तिथि, प्रयोजन आदि सबै कुरा खुलाउनू र त्यसपछि सङ्कल्प गर्नू ।९। यसपछि "हे देव ! म विधिपूर्वक तीर्थयात्रा गर्दैछु, हे महेश्वर ! हजुरको आशिर्वादले मेरो सङ्कल्प सफल होस् । हे देवताका पनि देवता ! हे परमेश्वर ! मलाई आज्ञा दिनु हवस्" भनी आज्ञा लिँदै प्रार्थना गर्नू र तीन पटक प्रदक्षिणा गर्नू ।१०-११। त्यसपछि दक्षिणतिरको ढोकाबाट गई राजराजेश्वरीको दर्शन गर्नू । (पुनः फर्की) भैरवको दर्शन गर्नू । अनि वत्सलादेवीको दर्शन गर्नू ।१२। त्यसपछि वाग्वती नदी तरेर गुह्येश्वरी जानू । गुह्येश्वरीको दर्शन गरेपछि चैलगङ्गा जानू ।१३। चैलगङ्गामा नुहाएपछि प्रयत्नपूर्वक पितृहरूलाई तर्पण दिनू । त्यसपछि महापाप नाश गर्ने गोकर्णेश्वर जानू ।१४।

नोट : चैलगङ्गाका बारेमा केही मतमतान्तर छन् । अहिलेको तिलगङ्गा नै चैलगङ्गा हो भन्ने विद्वानहरू पनि छन् । तर परिक्रमा-पथको वर्णनक्रमलाई हेर्दा गुह्येश्वरीभन्दा केही पूर्व सैनिक ब्यारेकको उत्तरतिर चैलगङ्गा रहेको छ भनी बाल्मीकि विद्यापिठका प्राचार्य श्री माधवप्रसाद लामिछानेले दिनु भएको जानकारी नै सही हो जस्तो देखिन्छ । जङ्गलको बीचबाट खोलिएको बाटोको उत्तरी मुखमा नै चैलगङ्गा रहेको हुनुपर्दछ ।

तमभ्यर्च्य महाभक्त्या यथाविभवविस्तरैः ।
तत्रानुज्ञां प्रार्थयित्वा गच्छेत् कारुणिकेश्वरम् ॥१५॥
सुन्दरीं च ततो दृष्ट्वा गच्छेद्वै वज्रयोगिनीम् ।
ततो गरुडपूर्वं हि नारायणमथो व्रजेत् ॥१६॥
तं संपूज्य यथा भक्त्या गच्छेच्चैव कीलेश्वरम् ।
ततो वागीश्वरं गच्छेद्वाग्विभूतिप्रदायकम् ॥१७॥
तत्र कुण्डे नरः स्नात्वा वाल्मीकेशं प्रपूजयेत् ।
तत्रैव वसतिं कुर्याद् ब्राह्मणान् भोजयेत् ततः ॥१८॥
रात्रौ जागरणं कुर्यान्नृत्यगीतादिकौतुकैः ।
ततः प्रभाते विमले स्नात्वा कुण्डे मनोहरे ॥१९॥
अनुज्ञां प्रार्थयेद्धीमान् कृताञ्जलिपुटस्तदा ।
जय वागीश्वर विभो जय त्र्यक्ष महेश्वर ॥२०॥
क्षेत्रप्रदक्षिणा कर्म निर्विघ्नं भवतु प्रभो ।
इत्यनुज्ञां प्रार्थयित्वा त्रिचम्पकसरो व्रजेत् ॥२१॥
देवान् पितॄंश्च सन्तर्प्य तस्मिँस्तीर्थे शुभोदके ।
भोगीभोगसमासीनं माधवं पूजयेज्जले ॥२२॥
ततश्चण्डेश्वरीं गच्छेन्महादुरितनाशिनीम् ।
चण्डेश्वरीं पूजयित्वा चण्डेश्वरसमन्विताम् ॥२३॥
गच्छेद्धनेश्वरं लिङ्गं धनवृद्धिकरं तदा ।
मौनी व्रजेत् ततो धीमान् लिङ्गं गोखुराङ्कसमं मुने ॥२४॥
अद्यापि दृश्यते लिङ्गं गोखुराङ्कसमं मुने ।
तमभ्यर्च्य ततो गच्छेल्लिङ्गमिन्द्रेश्वराभिधम् ॥२५॥
लीलावत्या रुद्रमत्या सङ्गमे सुमनोहरे ।
स्नात्वा पितृन् समभ्यर्च्य दत्वा दानानि शक्तितः ॥२६॥
अर्चयित्वेश्वरं लिङ्गमाशापूरेश्वरं व्रजेत् ।
तं समभ्यर्च्य विधिवड्डोलेश्वरमथो व्रजेत् ॥२७॥

तत्रैव वसतिं कुर्याद्धारातीर्थेऽतिपुण्यदे ।
रात्रित्रये नृत्यगीतपुराणश्रवणैर्नरः ॥२८॥
प्रातः स्नात्वा समभ्यर्च्य डोलेश्वरमिति क्रमात् ।
अनुज्ञां प्रार्थयेत् तत्र भक्तियुक्तो नरोत्तमः ॥२९॥
जय डोलेश्वर विभो क्षेत्रवासिजनप्रिय ।
अनुज्ञां देहि देवेश प्रदक्षिणविधौ मम ॥३०॥
इत्यनुज्ञां गृहीत्वा तु गच्छेत् सूर्यविनायकम् ।
गणेश विघ्नहरण भक्तानुग्रहकारक ॥३१॥
क्षेत्रप्रदक्षिणविधिमविघ्नं कुरु मे प्रभो ।
इति मन्त्रेण गणपं नत्वा भक्तिपुरःसरम् ॥३२॥
अनन्तलिङ्गं नियमाद्गच्छेद्धमार्थकामदम् ।
तत्र पुष्करिणीं प्राप्य देवाग्रे निर्मलोदकाम् ॥३३॥

आफ्नो क्षमता अनुसार अत्यन्त भक्तिपूर्वक उहाँको पूजाआजा गरेपछि प्रार्थना गर्दै उहाँको आज्ञा लिएर कारुणिकेश्वर (शङ्खमूल) जानू ।१५। यसपछि सुन्दरी (सुन्दरीजल ?) माताको दर्शन गरी वज्रयोगिनी (साँखु) जानू । यसपछि पहिले गरुड र त्यसपछि नारायणको (चाँगु, भक्तपुर) दर्शन गर्नू ।१६। नारायणको यथाशक्ति भक्तिपूर्वक पूजा गरेपछि कीलेश्वरको (चाँगु) को दर्शन गर्नू । त्यसपछि अद्भुत बोल्ने शक्ति प्रदान गर्ने वागीश्वर (भक्तपुर बागेश्वरी) को दर्शन गर्नू ।१७। त्यसपछि त्यहाँ रहेको कुण्डमा नुहाई बाल्मीकेश्वरको पूजा गर्नू । त्यसपछि त्यहीँ बसेर ब्राह्मणहरूलाई भोजन गराउनू ।१८। नाच, गान र उत्सव गरी रात कटाउनू, नसुत्नू । त्यसपछि बिहान कञ्चन र सुन्दर कुण्डमा नुहाउनू ।१९। अनि अँजुली बाँधेर बुद्धिमानले "हे प्रभु वागीश्वर हजुरको जय होस् ! हे तीन आँखा भएका महेश्वर हजुरको जय होस् ! हाम्रो तीर्थयात्रा कुनै बाधा नभईकन सम्पन्न होस् प्रभु !" भनी आज्ञा लिँदै प्रार्थना गर्नू र त्रिचम्पक तलाउ (?) मा जानू ।२०-२१। त्यो तीर्थको पवित्र जलले देवता र पितृहरूलाई तर्पण दिएपछि जलमा शेषनागमाथि सुतेका माधव नारायणलाई पूजा गर्नू ।२२। त्यसपछि ठूलठूला सङ्कट नाश गर्ने भएकी चण्डेश्वरी ( बनेपा) समक्ष जानू । चण्डेश्वर सहित चण्डेश्वरीलाई पूजा गरेपछि धन बढाउने भएका धनेश्वर (बनेपा) लिङ्गको दर्शन गर्न जानू । त्यसपछि बुद्धिमानले त्यहाँदेखि केही नबोली गोखुरेश्वर ( धुलिखेल) को दर्शन गर्न जानू ।२३-२४। हे मुनि ! अहिले पनि त्यहाँ गाईको खुर आकारको शिवलिङ्ग देख्न पाइन्छ । तिनलाई पूजा आराधना गरेपछि इन्द्रेश्वर (पनौती) को दर्शन गर्न जानू ।२५। त्यहाँ लीलावती र रुद्रमतीको सुन्दर दोभानमा नुहाएर पितृहरूलाई तर्पण दिनू अनि यथाशक्ति दान दिनू ।२६। त्यहाँ रहेको महादेवलाई पूजा गरेर आशापुरेश्वर (सूर्यविनायक, भक्तपुर) दर्शन गर्न जानू । उनको राम्ररी पूजा गरेपछि डोलेश्वर (भक्तपुर) जानू ।२७। त्यहाँ रहेको अति नै पुण्यशाली धारातीर्थमा तीन दिन विश्राम गर्नू । मानिसले तीन रात नै नाच, गान र पुराण श्रवण गरेर बिताउनू ।२८। त्यसपछि बिहान उठी नुहाएर डोलेश्वरको विधिपूर्वक पूजा गरी भक्तिपूर्वक आज्ञा लिँदै प्रार्थना गर्नू र भन्नू "हे डोलेश्वर ! हे प्रभु ! हजुरको जय होस् । तीर्थयात्री(त्रा)-प्रिय मलाई (वा हामीलाई) हे देवेश ! तीर्थयात्रा गर्ने आज्ञा दिनु होस्" भन्नू ।२९-३०। यसरी आज्ञा लिएर वाधा नाश गर्ने तथा भक्तप्रति दया गर्ने सूर्यविनायक गणेशको दर्शन गर्न जानू ।३१। "मेरो तीर्थयात्रा कुनै बाधा नभई सम्पन्न गराई दिनु होस् प्रभु" भन्दै गणेशलाई भक्तिपूर्वक वन्दना गरेपछि धर्म, अर्थ र काम दिने अनन्तलिङ्गेश्वरको दर्शन गर्न जानू । त्यहाँ मन्दिर अगाडि रहेको निर्मल तलाउमा विधिपूर्वक नुहाएर

स्नात्वा यथाविधि जले पितृन् सन्तर्प्य यत्नतः ।
तल्लिङ्गं पूजयित्वा तु यथाविभवविस्तरैः ॥३४॥
दानानि च यथाशक्त्या शिवप्रीत्या उदारधीः ।
द्विजातिभ्यस्ततो दद्यात् सात्त्विको यतमानसः ॥३५॥
गच्छेद्दै वज्रवाराहीं सर्वदेवनमस्कृताम् ।
भक्त्या देवीं नमस्कृत्य भारभूतेश्वरं व्रजेत् ॥३६॥
भुजङ्गशैलमारुह्य गुहाद्वारि मनोहरे ।
क्षेत्रसीमानिवसतिं गणेश द्वारि पूजयेत् ॥३७॥
योन्याकारेण छिद्रेणप्रविश्य मनुजः सुधीः ।
भारभूतेश्वरं नत्वा सर्वपापैः प्रमुच्यते ॥३८॥
योन्याकारेण च्छिद्रेण यः प्रविश्य नरः सुधीः ।
भारभूतेश्वरं पश्यन् न स गर्भगृहं विशेत् ॥३९॥
मनःशिला महातीर्थे दृष्ट्वा हरिहरावुभौ ।
भैरवं च नरो दृष्ट्वा सर्वपापैः प्रमुच्यते ॥४०॥

यथा तेन परावृत्य मातृतीर्थं ततो व्रजेत् ।
अद्यापि तत्र वर्तन्ते जैमिने मुनिसत्तम ॥४१॥
मीनाः सुवर्णतिलका मातृतीर्थे मनोहरे ।
मातृतीर्थे नरः स्नात्वा दृष्ट्वा हरिहरावुभौ ॥४२॥
न स गर्भगृहं याति पुमान् स्त्री वा न संशय ।
हरसिद्धिमथो दृष्ट्वा गोपालेशं ततो व्रजेत् ॥४३॥
गोपालेशं पूजयित्वा दृष्ट्वा नारायणं प्रभुम् ।
तत्रैव वसतिं कुर्याद्धविष्याशी जितेन्द्रियः ॥४४॥
रात्रौ जागरणं कुर्याद्गीतनृत्यसुमङ्गलैः ।
ततः प्रभाते विमले स्नात्वा चैव यथाविधि ॥४५॥
अनुज्ञां प्रार्थयेद्धीमान् गोपालेश्वरसन्निधौ ।
गोपालेश महादेव क्षेत्रविघ्ननिवारक ॥४६॥
क्षेत्रप्रदक्षिणविधिर्भवतु त्वत्प्रसादतः ।
इत्याज्ञां प्राप्य मनुजा गच्छेद्दै पाण्डुकेश्वरम् ॥४७॥
पाण्डुनद्यां नरः स्नात्वा दृष्ट्वा वै पाण्डुकेश्वरम् ।
अपि दुष्कृतकर्माऽपि मुच्यते सर्वकिल्विषात् ॥४८॥
ततः पर्वतमुल्लङ्घ्य चतुर्वक्त्रेश्वरं व्रजेत् ।
चतुर्वक्त्रेश्वरं भक्त्या पूजयित्वा यथाविधि ॥४९॥
इन्द्रेश्वरमथो गच्छेत् सर्वसिद्धिप्रदायकम् ।
तं पूजयित्वा विधिवन्महाविभवविस्तरैः ॥५०॥
ततः पर्वतमुल्लङ्घ्य प्रत्यङ्नारायणं व्रजेत् ।
नारायणं पूजयित्वा तत्रैव वसतिं चरेत् ॥५१॥
रात्रौ जागरणं कुर्याद्विष्णुधर्मकथादिभिः ।
ततः प्रभाते विमले स्नानं कृत्वा यथाविधि ॥५२॥
अनुज्ञां प्रार्थयेत् तत्र श्रीनारायणसन्निधौ ।
मह्यं देहि प्रभोऽनुज्ञां विष्णो त्रैलोक्यपूजित ॥५३॥
क्षेत्रप्रदक्षिणविधिः पूर्णोऽस्तु कृपया तव ।
इत्यनुज्ञां ततो लब्ध्वा बुद्धस्थानं ततो व्रजेत् ॥५४॥
परमानन्दकन्दाब्जे धर्मधातुद्रवे जले ।
गयातीर्थान् समागत्य बुद्धो देवः स्वयं स्थितः ॥५५॥

प्रयत्नपूर्वक पितृलाई तर्पण दिनू । त्यसपछि त्यो शिवलिङ्गलाई शथाशक्ति पूजा गर्नू ।३२-३४। भगवान् शिवलाई खुशी पार्न उदार, सात्विक र संयमित मनले ब्राह्मणहरूलाई गच्छे अनुसार दान दिनू ।३५। यसपछि सबै देवताहरूबाट नमस्कार गरिएकी वज्रवाराहीको दर्शन गर्न जानू । भक्तिपूर्वक देवीको पूजाआजा र नमस्कार गरेपछि भारभूतेश्वर ( गुप्तेश्वर, फुल्चोकी) को दर्शन गर्न जानू ।३६। भुजङ्ग पर्वत चढेर सुन्दर गुफामा पुगेपछि तीर्थको सीमा रक्षार्थ ढोकामा बसेका गणेशलाई पूजा गर्नू ।३७। योनि आकारको मुख भएको गुफाभित्र छिरी भारभूतेश्वरको दर्शन गर्ने बुद्धिमान मानिस सबै पापबाट मुक्त हुन्छ ।३८। योनि आकारको मुख भएको गुफाभित्र छिरी भारभूतेश्वरको दर्शन गर्ने बुद्धिमान मानिसले पुनः गर्भमा वास गर्नु पर्दैन (मोक्ष हुन्छ) ।३९। यसपछि मनशिला (टीकाभैरव, लेले?) नामको महान् तीर्थमा गई नारायण र शिवको दर्शन गर्नू । त्यहाँ रहेका भैरवको दर्शन गर्नाले । मानिस सबै पापबाट मुक्त हुन्छ ।४०।

त्यसपछि त्यही बाटोबाट फर्केर मातातीर्थ जानू । हे मुनिश्रेष्ठ जैमिनि ! अहिले पनि त्यस सुन्दर मातातीर्थमा सुनका टीका भएका माछाहरू छन् । मातातीर्थमा नुहाई नारायण र शिव दुबैको दर्शन गर्नाले मानिस चाहे पुरुष होस् स्त्री उसले पुनः गर्भवास गर्नु पर्दैन, यसमा शङ्का नै गर्नु पर्दैन । यसपछि हरिसिद्धको दर्शन गरेर अनि गोपालेश्वर दर्शन गर्न जानू ।४१-४३। गोपालेश्वरको पूजा गरेपछि भगवान् नारायणको दर्शन गर्नू । फलफूल खाई जितेन्द्रिय भएर त्यो रात त्यहीं बस्नू ।४४।
रातभर मङ्गलदायी नाचगान गरेर बिताउनू । बिहान भएपछि विधिपूर्वक नुहाउनू ।४५।
अनि गोपालेश्वरसँग "हे गोपालेश्वर महादेव ! हे तीर्थवाधा नाशक ! हजुरको आशिर्वादले तीर्थयात्रा सफल होस्" भनी प्रार्थना गर्दै बिदा हुनू । यसरी आज्ञा लिएपछि पाण्डुकेश्वर (पालुङ, मकवानपुर) जानू ।४६-४७।

त्यहाँ पाण्डु नदीमा नुहाएर पाण्डुकेश्वरको दर्शन गर्नू । यसो गर्नाले गलत काम गर्ने पनि सबै पापबाट मुक्त हुन्छ ।४८।
त्यसपछि डाँडो नाघेर चतुर्वक्त्रेश्वर (?) जानू । चतुर्वक्त्रेश्वरलाई विधिपूर्वक श्रद्धाले पूजा गरी सबै सिद्धि प्रदान गर्ने इन्द्रेश्वर ( इन्द्रदह ?) जानू । तिनलाई धूमधामसँग विधिपूर्वक पूजा गरे पछि डाँडो नाघी पश्चिम नारायण जानू । नारायणको पूजा गरी त्यहीं बस्नू ।४९-५१।

विष्णुधर्मका कथा आदि सुन्दै रातभर जागराम बस्नू । विहान उठी विधिपूर्वक नुहाएर नारायणसँग "हे तीनै लोकबाट पूजित विष्णु ! मलाई जाने आज्ञा दिनु हवस् । हजुरका कृपाले तीर्थयात्रा पूर्ण भएको छ" भन्दै प्रार्थना गर्दै आज्ञा लिनू । यसरी आज्ञा लिएपछि वुद्धस्थान (स्वयम्भू) जानू ।५२-५४।

वसन्ति भिक्षवो यत्र विहाय सुतबान्धवान् ।
ज्ञानानन्दसमायुक्ता बुद्धदर्शनलालसाः ॥५६॥
बुद्ध प्रदक्षिणीकृत्य ततो विष्णुमतीं व्रजेत् ।
विष्णुमत्यां नरः स्नात्वा सन्तर्प्य च पितामहान् ॥५७॥
लुण्ठिकेशं ततो गच्छेद्यत्रास्ते भगवान् हरिः ।
अनन्तशयनासीनं वीक्ष्य नारायणं नरः ॥५८॥
उत्तरेण ततो गच्छेद्विष्णुस्मरणतत्परः ।
अधस्तात् पर्वतस्यैव भोगिभोगासनस्थितम् ॥५९॥
नरो नारायणं दृष्ट्वा मुच्यते चापि किल्विषात् ।
आगच्छेद्दक्षिणपथा जयवागीश्वरीं शिवाम् ॥६०॥
तामभ्यर्च्य यथाशक्त्या दण्डवत् प्रणिपत्य च ।
मानसा संस्मरन् विष्णुं गच्छेत् पशुपतीश्वरम् ॥६१॥
दृष्ट्वा पशुपतिं देवं सर्वपापैः प्रमुच्यते ।
पञ्चामृतैः पञ्चगव्यैः स्नापयेत् परमेश्वरम् ॥६२॥
नानासुगन्धि द्रव्यैश्च सुगन्धिकुसुमैस्तथा ।
अभ्यर्चयेद्यथाशक्त्या धूपैर्नैवेद्यविस्तरैः ॥६३॥
ब्राह्मणान् भोजयेच्छक्त्या दद्याच्चापि च दक्षिणाम् ।
कृताञ्जलिपुटो भूत्वा मन्त्रं चेमं ततः पठेत् ॥६४॥
देवदेव महादेव पार्वतीप्राणवल्लभ ।
क्षेत्रप्रदक्षिणविधिः संपूर्णस्त्वत्प्रसादतः ॥६५॥
इमं मन्त्रं समुच्चार्य वाग्वतीसरितं व्रजेत् ।
तत्र स्नात्वा यथान्यायं सन्तर्प्य च पितामहान् ॥६६॥
विलोक्य वत्सलां देवीं गच्छेद् द्वारं च दक्षिणम् ।
देवं प्रदक्षिणीकृत्य वासुकिं प्रविलोक्य च ॥६७॥
प्राच्यां दिशि ततो दृष्ट्वा द्वारपालविनायकम् ।
ततः कृतार्थो भवनं गच्छेन्मनुजसत्तमः ॥
सुहृद्भिः सह भुञ्जीत पापशून्यो नरोत्तमः ॥६८॥

त्यहाँ अति नै आनन्दमय कमलको धर्मधातुरूपी जलमा गयातीर्थबाट आएर बुद्ध भगवान् आफैं बस्नु भएको छ ।५५। जहाँ बुद्धको दर्शन पाउने चाहनाले छोरा आफन्त आदि त्यागी ज्ञानमा मग्न भएर भिक्षुहरू बस्ने गर्दछन् ।५६। स्वयम्भूको परिक्रमा गरेपछि विष्णुमती जानू । त्यहाँ विष्णुमतीमा नुहाई पितृलाई तर्पण दिएपछि लुण्ठिकेश (?) जानू । अनन्त नागमाथि सुतिरहनु भएका भगवान् विष्णुको दर्शन गरेपछि मानिस (यात्रु) विष्णुको नाम जप्दै उत्तरतिर जानू । त्यहाँ पर्वतको फेदमा नागको ओछ्यानमा सुतिरहेका नारायण ( बूढानीलकण्ठ) को दर्शन गर्नाले मानिस पापबाट मुक्त हुन्छ । त्यसपछि दक्षिणतिरको बाटो हुँदै देवी जयवागीश्वरीको दर्शन गर्न आउनू ।५७-६०। उहाँलाई शक्तिअनुसार पूजाआजा गरी दण्डवत् प्रणाम गर्नू । यसपछि मनले विष्णुलाई सम्झँदै पशुपतिनाथ जानू ।६१। यसरी पशुपतिनाथको दर्शन गरेपछि सबै पाप नाश हुन्छ । पशुपतिनाथलाई पञ्चामृत र पञ्चगव्यले नुहाई दिनू ।६२। यथाशक्ति अनेक प्रकारका सुगन्ध, फूल, धूप, दीप, नैवेद्य आदि चढाएर पशुपतिनाथको पूजा गर्नू ।६३। ब्राह्मणहरूलाई यथाशक्ति भोजन गराउनू र दक्षिणा दिनू । अनि अँजुली बाँधेर यो (तलको) मन्त्र पाठ गर्नू ।६४। "हे देवताका पनि देवता महादेव ! हे पार्वतीका प्राणप्यारा ! हजुरको आशिर्वादले (प्रदक्षिणा विधि) तीर्थयात्रा समाप्त भएको छ" ।६५। यो मन्त्र पढेपछि वाग्मती नदीमा जानू र नुहाई पितृहरूलाई तर्पण दिनू ।६६। अनि वत्सलादेवीको दर्शन गरी दक्षिणढोकाबाट भित्र पसी पशुपतिनाथलाई घुम्दै वासुकीको दर्शन गर्नू ।६७। अनि पूर्वतिर रहेका द्वारपाल गणेश भगवान्को दर्शन गर्नू । यसपछि उत्तम मानिस सन्तुष्ट एवं प्रसन्न भई आफ्नो घर जानू । त्यसपछि पापरहीत भएको श्रेष्ठ मानिसले शुभचिन्तक आफन्तसँग बसी भोज (तीर्थे-भोज) खानू ।६८।

नोट : लेलेको लिच्छवीकालीन नाउँ "लेम्बटी" हो । त्यसभन्दा पहिले के भनिन्थ्यो थाहा भएन । यो मनशिला भनेर कुन तीर्थलाई बताइएको हो स्पष्ट आधार पाउन सकिएन । फुल्चोकीबाट मातातीर्थ जाँदा बाटोमा पर्ने र जुन बाटो गएको त्यही बाटो फर्कनु पर्ने स्थान ललितपुरको लेले मात्र हो । जहाँ भैरव (टीकाभैरव) त अहिले पनि छन् तर नारायण र विष्णुको प्राचीन मूर्ति भएको जानकारी पाउन सकिएन । लिच्छकी कालको शिलालेख त बारीमा मिल्काउने हामीलाई अरु कुराको चासो हुन सक्ने कुरा पनि भएन । अझै बेच्न सकिने मूर्तिहरू नै बाँकी भएकोले त्यो र त्यस्ता शिलापत्र बारी भएपनि बचेको हुनु पर्दछ ।

**॥ इति स्कन्दपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये ऊनत्रिंशोऽध्यायः ॥२९॥**

**। स्कन्दपुराण, हिमवत्खण्ड, नेपालमाहात्म्यमा तीर्थ प्रदक्षिणा विधि वर्णन भएको उनन्तीसौं अध्याय समाप्त भएको छ ।२९।**

**श्लोकानामादितः समष्ट्यङ्काः-१,७८०+६८=१,८४८**

शुरुदेखिको श्लोक सङ्ख्या :-१,७८०+६८=१,८४८

## उल्लेखित तीर्थ परिक्रमा पथमा रहेका तीर्थ र मन्दिरहरूको चित्र क्रमशः

**(१) बाग्मतीमा स्नान :**

Photographer & @ : Alfred Gregory, Collector : Mohan Prasad Sapkota



आर्यघाट, पशुपति, वि.सं.२०१६

## (२) प्रारम्भ तीर्थ : पशुपतिनाथको दर्शन र सङ्कल्प

तस्विर खिच्ने : दिर्घमान चित्रकार, श्रोत : यूनेस्को, संकलन : मोहन प्रसाद सापकोटा



श्रीपशुपतिनाथ मन्दिर, खिचिएको साल : वि.सं.१९७७ को हाराहारी

## (३) राजराजेश्वरी :



राजराजेश्वरी मन्दिर, देउपाटन, पशुपति (तस्विर श्रोत : प्रकाशमान शिल्पकारको फेसबुक पेज)

**(४) भैरवको दर्शन :**



उन्मत्तभैरव, पशुपतिनाथ (तस्विर श्रोत : पिन्टेरेष्ट)

## (५) वत्सलादेवी :



वात्सल्य देवीको मन्दिर, पशुपति, काठमाडौं, (तस्बिर स्रोत: गुस्ताभ ली बोनले लेखेको र ई.सं.१८८२ र १८८६ मा फ्रेंच भाषामा पहिलो पटक प्रकाशित भएको एवं ई.सं.१९८९ मा काठमाण्डूमा अंग्रेजी भाषामा पुनर्मुद्रण भएको पुस्तक "भोयेज टु नेपाल" नामक पुस्तकबाट) । (सङ्कलन : मोहन प्रसाद सापकोटा) ।

## (६) गुह्येश्वरी :



श्री गुह्येश्वरी, ई.सं.१८९० (श्रोत : न्हुछेराज, मदन चित्रकार)

**(७) चैलगङ्गा : ?**

**(८) गोकर्णेश्वर :**

Source : Halpern, Joel Martin, Collector : Mohan Prasad Sapkota



भक्तजनको घुँइचो, गोकर्ण, कुशे औंसी, वि.सं.२०१६

**(९) कारुणिकेश्वर (शङ्खमूल) :**



कारुणिकेश्वर रहेको भनिएको शङ्खमूल क्षेत्रको एक प्राचीन तस्विर (तस्विर श्रोत : साझा डटकम)

## (१०) सुन्दरी माई (सुन्दरीजल ?) :



सुन्दरीमाई, सुन्दरीजल, काठमाडौं (तस्विर श्रोत : रमेश कडरिया)

## (११) वज्रयोगिनी (साँखु) :



वज्रयोगिनी, साँखु, काठमाडौं (तस्विर श्रोत : [illegible])

**(१२) गरुड, चाँगु, भक्तपुर :**



गरुड भगवान्, चाँगु, भक्तपुर (तस्बिर श्रोत : विकिमेडिया)

**(१३) चाँगुनारायण, भक्तपुर :**

(तस्विर श्रोत: पर्सिभल ल्याण्डनले लेखेको र लण्डनबाट ई.सं.१९२८ (वि.सं.१९८५) मा प्रकाशन भएको "नेपाल" नामक पुस्तकबाट) । (सङ्कलन : मोहन प्रसाद सापकोटा) ।



चाँगुनारायण मन्दिर, भक्तपुर, नेपाल

**(१४) कीलेश्वर, चाँगु, भक्तपुर :**



भगवान श्रीकृष्णद्वारा स्थापना गरिएको कीलेश्वरको मन्दिर, चाँगु, भक्तपुर (श्रोत : फन्टूर हट ईयु)

**(१५) वागीश्वर र वाल्मीकेश्वर भक्तपुरमा दर्शन, बास र स्नान : (तस्बिर माथि नै दिइ सकिएको) । (१६) त्रिचम्पकसर (तीनवटा चाप्को रुख भएको तलाउ ?) : (१७) शेषनागमाथि सुतेका माधव नारायण (?) : (१८, १९) चण्डेश्वरी र चण्डेश्वर, बनेपा, काभ्रे :**



चण्डेश्वरी (दायाँ) र चण्डेश्वर (बायाँ शिखरशैली) मन्दिर, बनेपा, काभ्रे (श्रोतः ओल्ड नेपाल-फोटोज एण्ड इमेजेज)



**(२०) धनेश्वर, बनेपा, काभ्रे : तस्बिर माथि नै राखिएको ।**
**(२१) गोखुरेश्वर, धुलिखेल काभ्रे :**



गौखुरेश्वर शिवलिङ्ग, धुलिखेल, काभ्रे (श्रोतः फेसबुक)

**(२२) इन्द्रेश्वर, पनौती, काभ्रे : तस्बिर माथि नै राखिएको । (२३) पनौतीमा स्नान, तर्पण र दान । (२४) आशापुरेश्वर : तस्बिर माथि नै राखिएको । (२५) डोलेश्वरमा तीन दिनको बास र धारातीर्थमा स्नान : तस्बिर माथि नै राखिएको । (२६) सूर्यविनायक : तस्बिर माथि नै राखिएको । (२७) अनन्तलिङ्गेश्वर दर्शन, तलाउमा स्नान र तर्पण तथा दान : तस्बिर माथि नै राखिएको ।**
**(२८) वज्रवाराही, ललितपुर :**

(चित्रकार :- डा.हेनरी एम्ब्रुस ओल्डफिल्ड, श्रोत :- ब्रिटिश लाइब्रेरीको वेभसाइट, सङ्कलन :- मोहन प्रसाद सापकोटा)



वज्रवाराही मन्दिर, चापागाउँ, ललितपुर (वि.सं.१९१२)

**(२९) भुजङ्ग पर्वत (फूल्चोकी डाँडो) चढी गणेश र भारभूतेश्वरको (गुप्तेश्वर) दर्शन :**



भारभूतेश्वर (गुप्तेश्वर) शिवलिङ्ग रहेको गुफाको प्रवेशद्वार, फुल्चोकी, ललितपुर (तस्बिर श्रोत : ललितपुर खबर)



भारभूतेश्वर (गुप्तेश्वर) शिवलिङ्ग (?), फुल्चोकी, ललितपुर (तस्बिर श्रोत : ललितपुर खबर)

**(३०) मनशिलामा विष्णु, शिव र भैरवको दर्शन (नेपाल राज्यको इतिहासमा यहाँका भैरवको नाम नै विष्णेमहेश्वर-भैरव भनी दिइएको छ) । :**

(चित्रकार :- डा.हेनरी एम्ब्रुस ओल्डफिल्ड, श्रोत :- ब्रिटिश लाइब्रेरीको वेबसाइट, सङ्कलन :- मोहन प्रसाद सापकोटा)



टीका भैरव, फर्पिङ्ग नजिक (लेले?), ललितपुर (वि.सं.१९१४)



मनःशिला (ढुङ्गेश्वर) र टीका भैरव मन्दिर, लेले, ललितपुर (तस्विर सौजन्य : श्री मुरारीप्रसाद न्यौपाने, चापागाउँ)



मन:शिला (ढुङ्गेश्वर) , लेले, ललितपुर (तस्बिर सौजन्य : श्री मुरारीप्रसाद न्यौपाने, चापागाउँ)



**(३१) मातातीर्थ : स्नान गरी नारायण र शिवको दर्शन ।**



मातातीर्थको एक पुरानो तस्बिर (तस्बिर श्रोत : काठमाडौं भ्याली टेम्पल्स डटकम)

**(३२) हरिसिद्धिको दर्शन :**



हरिसिद्धिको मन्दिर, ललितपुर (श्रोत : हरिसिद्धि गोल्डन भिजेलको ब्लग)

**(३३) गोपालेश्वर : चित्र पहिले नै दिइसकिएको ।**

**(३४) शेषनारायण (फर्पिङ्ग) :**

Source : Rich Pfau (A P.C.V.), A collection of Mohan Prasad Sapkota



उपत्यकाका चार नारायणमध्येको एक शेष नारायणको मन्दिर, फर्पिङ्ग, काठमाडौं, तस्विर खिचिएको साल : वि.सं.२०३०



शेषनारायण (श्रोत : टुवाचुङ्ग डटकम)

**(३५) पाण्डु नदीमा स्नान र पाण्डुकेश्वरको दर्शन, पालुङ, मकवानपुर :**



पाण्डुकेश्वरको नवनिर्मित मन्दिर, पालुङ, मकवानपुर (श्रोत : थाहा टाइम्स)

**(३६) चतुर्वक्त्रेश्वर (?) :**
**(३७) इन्द्रेश्वर (?) :**
**(३८) पश्चिम नारायण (इचङ्गु नारायण ?) :**



इचङ्गु नारायण मन्दिर, नागार्जुन वनको दक्षिणी काख, काठमाडौं (श्रोतः टेम्पल्स डट इन्साइडहिमालयाज डटकम)



इचङ्गु नारायण, काठमाडौं (श्रोतः फेसबुक)

**(३९) स्वयम्भूनाथ :**

(श्रोतः कर्क पेट्रिकले लेखेको "यान एकाउण्ट अफ नेपौल..." नामक पुस्तक, सङ्कलन : मोहन प्रसाद सापकोटा)



स्वयम्भूनाथ, नेपाल (वि.सं.१८६८)



स्वयम्भूनाथ । श्रोत-कैलाश, भोलुम ७ । स्केच बनाइएको साल-सन् १८४५ । सङ्कलन-मोहन प्रसाद सापकोटा

(चित्रकार :- कन्वे सिप्ली, श्रोत :- इण्डिया तिबेत याण्ड काश्मिर, सङ्कलन :- मोहन प्रसाद सापकोटा)



बेलायती राजदूतावासको परिसरबाट देखिएको स्वयम्भूनाथ स्तूप (चित्र कोरिएको साल : वि.सं.१९०९ माघ ११)



स्वयम्भूनाथ, काठमाण्डौ (तस्विर श्रोत: डेनियल राइटले लेखेको र क्याम्ब्रिजबाट सन् १८७७ (वि.सं.१९३४) मा प्रकाशन भएको "हिष्ट्री अफ नेपाल" नामक पुस्तकबाट)।

(सङ्कलन : मोहन प्रसाद सापकोटा)।



स्वयम्भूनाथ, काठमाण्डौ (तस्बिर श्रोतः डेनियल राइटले लेखेको र क्याम्ब्रिजबाट सन् १८७० (वि.सं.१९२४) मा प्रकाशन भएको "हिष्ट्री अफ नेपाल" नामक पुस्तकबाट)। (सङ्कलन : मोहन प्रसाद सापकोटा)।

(४०) विष्णुमती :





इन्द्रायणी (लूती अजिमा) नजिकैको विष्णुमती नदी र पुल, १९८८, (तस्बिर : कमलरत्न तुलाधर, श्रोत: इन्टरेट अर्काइभ)

**(४१) बूढानीलकण्ठ : तस्बिर माथि नै दिई सकिएको। (४२) जयवागीश्वरी। (४३) पशुपति। (४४) वाग्मती स्नान। (४५) वत्सला दर्शन। (४६) पशुपति घुम्दै वासुकी दर्शन। (४७) पशुपति मन्दिरभन्दा पूर्वतिर रहेका गणेशको दर्शन। (४८) घर फर्की तीर्थे भोज।**

## ॥ अथ त्रिंशोऽध्यायः ॥
## ॥ तीसौं अध्याय ॥

**जैमिनिरुवाच ॥ जैमिनि भन्नुहुन्छ–**

**भवदुक्तप्रकारेण कृत्वा क्षेत्रप्रदक्षिणम् ।**
**कथं संस्थापितं लिङ्गं भृङ्गिणा तदब्रवीहि मे ॥१॥**

"हजुरले बताएको विधिले क्षेत्रप्रदक्षिणा (तीर्थयात्रा) गरेपछि भृङ्गिले शिवलिङ्ग कसरी स्थापना गरे ?" । त्यो कुरा मलाई बताउनु होस् ।१।

**मार्कण्डेय उवाच ॥ मार्कण्डेय भन्नुहुन्छ–**

**क्षेत्रप्रदक्षिणं कृत्वा गुणाढ्यो गुणिनां वरः ।**
**आहूय च मुनीन् सर्वान् नेपालक्षेत्रवासिनः ॥२॥**
**गुह्येश्वरीसन्निधिस्थान् वत्सलापार्श्वसंस्थितान् ।**
**शङ्खमूले स्थितांश्चापि कुम्भेशसविधे स्थितान् ॥३॥**
**स्थितान् पशुपतेः पार्श्वे तथा दोलागिरिस्थितान् ।**
**हनुमत्तीर्थसंस्थांश्च तथा वागीश्वरस्थितान् ॥४॥**
**चण्डेश्वरीसन्निधिस्थान् वज्रासन्निधिवासिनः ।**
**मृगेन्द्रशिखरस्थांश्च विष्णुमत्युद्भवस्थितान् ॥५॥**
**आशापूरेश्वरस्थांश्च डोलेश्वरनिवासिनः ।**
**भारभूतेश्वरस्थांश्च गोपालेश्वरसंस्थितान् ॥६॥**
**इत्यादिनानातीर्थस्थांस्तापसान् विजितेन्द्रियान् ।**
**तेषां सम्मतिमादाय वेदोक्तविधिना तदा ॥७॥**
**लिङ्गसंस्थापनं कर्म प्रारेभे होमपूर्वकम् ।**
**ततः प्रववृते यज्ञो गुणाढ्यस्य महात्मनः ॥८॥**

गुणश्रेष्ठ महात्मा गुणाढ्यले तीर्थयात्रा गरेपछि नेपालक्षेत्रका गुह्येश्वरी, वत्सला, शङ्खमूल, कुम्भेश्वर, पशुपति, चाँगु, हनुमानघाट, वागेश्वर, चण्डेश्वरी, वज्रवाराही, शिवपुरी, चक्रतीर्थ, आशापुरेश्वर, डोलेश्वर, भारभूतेश्वर, गोपालेश्वर, आदि अनेक तीर्थका वरिपरि बस्ने तपस्वी एवं जितेन्द्रिय सबै मुनिहरूलाई निमन्त्रणा गरेर तिनको सहमतीमा वेदले बताएको विधि अनुसार पहिला होम गरी लिङ्ग स्थापनाको लागि यज्ञ गर्न शुरु गरे ।२-८।

**दीयतां भुज्यतां चैव जातो हि निनदो महान् ।**
**मरुतस्य यथा यज्ञो यथा दाशरथेरपि ॥९॥**
**तथैव यज्ञो ववृधे गुणाढ्यस्य महात्मनः ।**
**होमान्ते स्थापयामास शिवलिङ्गं द्विजोत्तम ॥१०॥**
**कृताञ्जलिपुटो भुत्वा गुणाढ्यो गुणिनां वरः ।**
**प्रोवाच तापसान् सर्वान् विनयानतकन्धरः ॥११॥**

त्यसबेला "दिनु होस्" "खानु होस्" को ठूलो आवाज आइरहेको थियो । महात्मा गुणाढ्यको त्यो यज्ञ राजा मरुतको वा रामचन्द्रको यज्ञ जस्तै वृद्धि भइरहेको थियो । हे द्विजश्रेष्ठ ! यज्ञको अन्तमा उनले शिवलिङ्गको स्थापना गरे ।९-१०। त्यसपछि गुणश्रेष्ठ गुणाढ्यले हात जोडेर नम्र भई निहुरेर सबै मुनिहरूलाई भन्न लागे-।११।

**गुणाढ्य उवाच ॥ गुणाढ्य भन्दछन्–**

**शृण्वन्तु ब्राह्मणाः सर्वे शिवलिङ्गस्य तापसाः ।**
**किं नामधेयं कर्तव्यं तत् समाख्यातुमर्हथ ॥१२॥**
**गुणाढ्यं वचनं श्रुत्वा मुनीनामग्रगस्तथा ।**
**हारीतो नाम विप्रर्षिर्गुणाढ्यं प्राह धार्मिकम् ॥१३॥**

"हे ब्राह्मण हो ! हे मुनि हो ! सबै जना सुन्नु होस् त ! यो शिवलिङ्गको नाम के राखौं मलाई बताइ दिनु होस्" ।१२। गुणाढ्यका कुरा सुनेपछि मुनिमध्येका श्रेष्ठ ब्राह्मणकुलमा जन्मिएका हारीत मुनिले धार्मिक गुणाढ्यलाई यसो भने-।१३।

**हारीत उवाच ॥ हारीत भन्दछन्–**

**गुणाढ्य श्रूयतां वाक्यं न त्वं प्राकृतमानुषः ।**
**हेतुना केन चिच्छिप्तः शम्भुना पूर्वजन्मनि ॥१४॥**
**भृङ्गी ते नाम शम्भोस्त्वं सर्वदा द्वारपालकः ।**
**अतो भृङ्गीश्वरं नाम कुरु लिङ्गस्य सर्वथा ॥१५॥**

"हे गुणाढ्य ! सुन्नु होस्, हजुर सामान्य पुरुष हुँदै होइन । कुनै कारणले पूर्वजन्ममा शिव भगवान्ले हजुरलाई श्राप दिनु भएकोले अहिले यो रूपमा हुनु हुन्छ ।१४। हजुरको नाम भृङ्गी हो । हजुर

शिव भगवानका द्वारपाल हुनुहुन्छ । यसकारण यो लिङ्गको नाम भृङ्गीश्वर राख्नु होस् ।१५।

**मार्कण्डेय उवाच** ॥ मार्कण्डेय भन्नुहुन्छ-

**हारीतस्य वचः श्रुत्वा प्राह वेदशिरा मुनिः ।**

हारीतका कुरा सेनेपछि वेदशिरा नामका मुनिले भन्न थाले-

**वेदशिरा उवाच** ॥ वेदशिरा भन्दछन्-

**इति भृङ्गीश्वरं लिङ्गं वदन्तु द्वापरे युगे ॥१६॥**
**स्पर्शपाषाणजं लिङ्गं यतो भृङ्गीश्वराभिधम् ।**
**अतः कलियुगे लोकाः सुवर्णेश्वरसंज्ञितम् ॥१७॥**
**वदिष्यन्ति मुनिश्रेष्ठाः सर्वकामप्रदं सदा ।**

“हे मुनिजन ! द्वापरयुगमा (अहिले) एक भक्त भमराले ढुङ्गालाई छुनाले भृङ्गीश्वर नामको लिङ्ग उत्पन्न भएको थियो । यसैले त्यसलाई मानिसहरू भृङ्गीश्वर भन्दछन् । कलियुगमा यसलाई मानिसहरू सुवर्णेश्वर भन्ने छन् । यो लिङ्गले सधैं सबै चाहना पूरा गर्दछ भनी मुनिश्रेष्ठहरू भन्दछन्” ।१५-१७।

**मार्कण्डेय उवाच** ॥ मार्कण्डेय भन्नुहुन्छ-

**ततो गुणाढ्यो गुणवान् रत्नगोवस्त्रकाञ्चनैः ॥१८॥**
**ब्राह्मणाँस्तोषयामास गुणश्रेष्ठपुरस्सरम् ।**
**ततः पपात गगनात् पुष्पवृष्टिर्मनोहरा ॥१९॥**
**देवदुन्दुभयो नेदुर्ननृतुश्चाप्सरोगणाः ।**
**ववौ वायुः सुखस्पर्शो गन्धर्वा ललितं जगुः ॥२०॥**
**मुनीनां पश्यता तत्र वृषयानं मनोहरम् ।**
**विमानमागतं तत्र नानाश्चर्यसमन्वितम् ॥२१॥**
**रुद्ररूपधरैः श्रेष्ठैर्गणैश्च समधिष्ठितम् ।**
**तदाश्चर्यं महद्दृष्ट्वा सर्वे संभ्रान्तमानसाः ॥२२॥**
**उत्तस्थुर्मुनयः सर्वे वेदवेदाङ्गपारगाः ।**
**अवतीर्य विमानात् तु ततो रुद्रगणा मुने ॥२३॥**
**प्रोचुर्मुनिगणान् हर्षाद्भस्मरुद्राक्षधारिणः ।**
**त्रिशूलधारिणो गौरा जटामुकुटधारिणः ॥२४॥**
**लोचनत्रयसंयुक्ता दिव्या डमरुपाणयः ।**



त्यसपछि गुणवान् एवं गुणश्रेष्ठ गुणाढ्यले आफैं अघिसरी रत्न, गाई, वस्त्र र सुन दान दिएर ब्राह्मणहरूलाई सन्तुष्ट पारे । त्यसपछि आकाशबाट सुन्दर किसिमले देवताले फूलको वर्षा गरे ।१८-१९। दुन्दुभि बाजा बजाए, अप्सराहरू नाच्न लागे । आनन्द दिने गरी हावा चल्न थाल्यो । गन्धर्वहरू सुन्दर तरिकाले नाच्न लागे ।२०। यसपछि मुनिहरुले हेर्दाहेर्दै त्यहाँ साँढे जोतिएको (नारिएको) आश्चर्ययुक्त विमान आयो ।२१। त्यो विमानमा रुद्ररूपका श्रेष्ठ गणहरू बसेका थिए । यस्तो अति आश्चर्यजनक कुरा देखेर सबैजना टवाल्ल परे ।२२। यस्तो आश्चर्य देखेर वेद एवं वेदाङ्गका पण्डित मुनिजन पनि सबै एकैपटक जुरुक्क उठे । अनि खरानी घसेका, रुद्राक्षको माला लगाएका, त्रिशूल हातमा लिएका, गोरा, जटाको मुकुट बनाएका, तीन आँखा भएका, दिव्य स्वरूपका र हातमा डमरु लिएका रुद्रगण विमानबाट ओर्लिएर खुशी हुँदै मुनिहरूलाई भन्न लागे-।२३-२४।

**रुद्रगणा ऊचुः** ॥ रुद्रका गणहरू भन्दछन्-

**भवन्तो मुनयः सर्वे वेदवेदाङ्गपारगाः ॥२५॥**
**आसनेषु समासीनाः शृणुध्वं वचनं ममः ।**
**एवं गणवचः श्रुत्वा हारीतः प्राह तान् गणान् ॥२६॥**

हजुरहरू सबै मुनिजन वेद एवं वेदाङ्गका विद्वान हुनुहुन्छ । सबैजना आआफना आसनमा बसेर मेरा (हाम्रा) कुरा सुन्नु होस् । रुद्रगणका कुरा सुनी हारीत मुनिले ती गणलाई भने- ।२५-२६।

**हारीत उवाच** ॥ हारीत भन्दछन्-

**रुद्ररूपधराः सर्वे तेजसा भास्करोपमाः ।**
**उपविश्य भवन्तोऽपि कथां कुर्वन्तु सर्वथा ॥२७॥**

हजुरहरू सबै जनाले रुद्रको रूप लिनु भएको छ । तेजमा सूर्यसमान हुनु हुन्छ । हजुरहरू पनि आसन ग्रहण गर्नु (बस्नु) होस् । बसेरै कुराकानी गरौं (कथा भनौ) ।२७।

**मार्कण्डेय उवाच ॥ मार्कण्डेय भन्नुहुन्छ-**

**उपविश्य गणाः सर्वे कथाः प्रोचुर्मनोहराः ।**

त्यसपछि सबै रुद्रगण बसेर मनोहर कथा भन्न लागे ।

**रुद्रगणा ऊचुः ॥ रुद्रका गणहरू भन्दछन्-**

**यो देवः सर्वदेवानां देवेषु परिगीयतै ॥२८॥**
**येन सृष्टं जगत् सर्वं यः पाति सकलं जगत् ।**
**संहरत्यपि भूतानि स देवः परमेश्वरः ॥२९॥**
**वेदा अपि न जानन्ति यं रुद्रं परमार्थतः ।**
**इह नैको गुणान् वक्तुं तस्य सर्वात्मनो विभोः ॥३०॥**
**परमात्मस्वरूपेण वर्तते सर्वजन्तुषु ।**
**नित्यानन्दमयः साक्षात् स देवः केवलो विभुः ॥३१॥**
**निर्गुणो देहवान् योऽपि सर्वगो न हि गोचरः ।**
**यस्यान्तं नैव जानाति ब्रह्मा हरिरपि स्वयम् ॥३२॥**

**स देवैश्चिन्त्यते साक्षात् सर्वव्यापी महेश्वरः ।**
**कृपया यस्य देवस्य वासवाद्याः सुरा अपि ॥३३॥**
**संप्राप्ता लोकपालत्वं स देवो गिरिजापतिः ।**
**श्मशाने वसतिर्यस्य ललाटे यस्य चन्द्रमाः ॥३४॥**

"जसलाई देवताहरूमा सबै देवताका देवता भनी चिनिनु हुन्छ, जसले सारा संसारको सृष्टि गर्नु भयो, जसले पूरा संसारलाई पालन गर्नुहुन्छ, अनि जसले सारा प्राणीलाई नाश पनि गर्नु हुन्छ, ती देवता परमेश्वर शिव हुनु हुन्छ ।२८-२९। जुन् रुद्रलाई ठिक तरिकाले वेदहरू पनि जान्दैनन् । यहाँ एउटाले सबैको आत्मामा वास गर्ने त्यस्ता प्रभुका गुणहरू बताउन सकिन्न ।३०। जो परमात्मा स्वरूपले सबै जीवमा बस्नु हुन्छ, ती अरु कोही नभएर सदा आनन्दित हुने साक्षात् प्रभु शिव नै हुनु हुन्छ ।३१। जो सत्व, रज र तम गुणभन्दा परको हुनुहुन्छ, शरीर भएर तथा सबैमा रहेर पनि जसलाई देख्न सकिन्न, जसको अन्त स्वयं ब्रह्मा र विष्णुले पनि जान्नु हुन्न, ।३२। यस्ता ती देवतालाई सबै देवताहरू साक्षात् एवं सर्वव्यापी महेश्वर भनी चिन्तन गर्दछन् । जसका कृपाले इन्द्र आदि देवताले पनि लोकपाल हुन पाए ती देवता पार्वतीपति शिव हुनुहुन्छ । जसको वासस्थान मसान छ, जसका शिरमा चन्द्रमा छन् र ।३३-३४। जसका देब्रेतिर पार्वती छिन् यस्ता प्रभुले भनेका कुरा सुन्नु होस् ।

**वामाङ्गे गिरिजा यस्य स यदाह शृणुष्व तत् ।**
**अपि दुष्कृतकर्माऽपि यो लिङ्गं स्थापयेन्नरः ॥३५॥**
**मुच्यते सर्वपापेभ्यो नात्र कार्या विचारणा ।**
**हेलया कपटेनापि शोभया मनुजोत्तमः ॥३६॥**
**धारयन्ति च रुद्राक्षं तेषां पापं न विद्यते ।**
**विभूतिभूषिता ये वै ये च रुद्राक्षधारिणः ॥३७॥**
**लिङ्गसंस्थापका ये च ते स्युः कैलासवासिनः ।**
**मल्लिङ्गपूजनरता मन्नामग्रहणे रताः ॥३८॥**
**मत्पुष्पवाटीकर्तारस्ते स्युः कैलासवासिनः ।**
**अर्कधत्तूरपुष्पैश्च विल्वपुष्पैस्तथा जलैः ॥३९॥**
**मां पूजयन्ति मनुजास्ते स्युः कैलासवासिनः ।**
**अपिदुष्कृतकर्माऽपि युक्तो वा सर्वपातकैः ॥४०॥**
**लिङ्गसंस्थापनादेव मुच्यते नात्र संशयः ।**
**हेलया परिहासेन संकेतेनापि मानवाः ॥४१॥**
**मन्नामग्रहणे युक्ता मुच्यन्ते घोरकिल्वषात् ।**
**अयं तु गुणवाँल्लोके गुणाढ्यो लोकपूजितः ॥४२॥**
**आचारवान् योगयुक्तो वेदवेदाङ्गपारगः ।**
**विद्यावान् विनयाधारः स्वाध्यायी देवपूजकः ॥४३॥**
**विशेषतो हि मद्भक्तो मन्नामग्रहणे रतः ।**
**अस्य प्राक्तनकं जन्म श्रृण्वन्तु मुनयो ध्रुवम् ॥४४॥**

"पाप गर्ने मानिस भएपनि जसले शिवलिङ्ग स्थापना गर्दछ उ सबै पापबाट मुक्त हुन्छ । यसमा सोचविचार गर्नु नै पर्दैन । जो उत्तम मानिस ख्यालख्यालमा, कपटले वा सजाउन मात्रै भएपनि रुद्राक्ष लगाउँदछ, तिनका पाप नाश हुन्छन् । जसले विभूति अथवा रुद्राक्ष लगाउँदछन् अथवा जसले लिङ्ग स्थापना गर्दछन् ती सबै कैलास जान्छन् । मेरो लिङ्गको पूजा गर्ने, मेरो नाम जपिरहने र मेरो लागि बगैंचा बनाउनेहरू कैलास जान्छन् । आँक, धतुरो र बेलको फूलले तथा जलले मलाई पूजा गर्ने मानिस कैलास गएर बस्न पाउँदछ । पापी होस् वा महापापी उ लिङ्ग स्थापना गर्नाले नै मुक्त हुन्छ, शङ्का गर्ने पर्दैन । ख्यालख्यालमा, हँसिमजाकमा वा ईशारामा नै भएपनि मेरो नाम जप्ने मानिस महापापबाट पनि मुक्त हुन्छ । यी गुणशाली एवं लोकले पूजित, सदाचारी, योगी, वेद एवं वेदाङ्गमा निपुण, विद्वान्, नम्र, वेद आदि शास्त्र पढिरहने तथा देवताका पूजक गुणाढ्य मेरो नाम जपिरहने मेरा विशेष भक्त हुन् । हे मुनगण ! यिनको पूर्वजन्मको सत्य कथा सुन्नु होस् ।३५-४४।

**अयं किल पुरा भृङ्गी नन्दितुल्यो महाबलः ।**
**मद् द्वारपालको नित्यं मम रूपधरः सदा ॥४५॥**
**एकस्मिन् दिवसे देव्या मया च रहसि स्थितम् ।**

यी पहिले नन्दिसमान महाबलिया भृङ्गी थिए । सधैं मेरो रूप लिएर मेरो ढोकामा पहरा दिन्थे ।४५। एक दिन मेरो र पार्वतीका बीच गोप्य स्थानमा भनी रहिएको अनेक रसले भरिपूर्ण कथालाई

**कुर्वतो हि कथास्तत्र नानारससमन्विताः ॥४६॥**
**तत्रानेन समास्थाय भृङ्गरूपं हि दुर्धिया ।**
**आगत्य हि श्रुताः सर्वाः कथा मन्मुखनिर्गताः ॥४७॥**
**कथास्ताः कथयामास स्वपत्न्यै रससंयुताः ।**
**एतज्ज्ञात्वा मया शप्तः कैलासात् पतितो ह्ययम् ॥४८॥**

यिनले कुबुद्धि लागेर भमराको रूप लिई सुने । मैले भनेको सबै रसिलो कथा सुनेर घर आई त्यो कथा आफ्नी पत्नीलाई भने । यो थाहा पाएपछि मैले दिएको श्रापका कारण यी कैलाशबाट पतन भएका हुन्" ।४६-४८।

**स तस्य चरितं सर्वं ज्ञात्वाऽन्तर्यामिना तदा ।**
**शप्तोऽसौ देवदेवेन ततो मानुषतामियात् ॥४९॥**
**लब्ध्वा विप्रकुले जन्म गुणाढ्यो गुणिनां वरः ।**
**नवलक्षमिता गाथाः कृत्वा रससमन्विताः ॥५०॥**
**नेपाले परमे क्षेत्रे देवानामपि दुर्लभे ।**
**लिङ्गं संस्थापयामास शिवस्यानुग्रहोऽभवत् ॥५१॥**
**विमानं प्रेषितं दिव्यं देवदेवेन शम्भुना ।**
**एहि विप्र गुणाढ्य त्वं विमानेऽधिष्ठितो भव ॥५२॥**
**सहैव यामः कैलासं शम्भुमद्य प्रपश्यसि ।**

उसको चरित्र (कर्तुत) का बारेमा सबैथोक जानेका अन्तर्यामी देवताका पनि देवता प्रभुले यसरी श्राप दिएपछि यी मानिस भएर एउटा ब्राह्मणको कुलमा गुणवान् गुणाढ्य भई जन्मिए । अनि रसिला नौ लाख गाथा लेखेर देवताका लागि पनि दुर्लभ मानिने उत्तम तीर्थ नेपालमा आई शिवलिङ्गको स्थापना गरेपछि यी ( अहिले) शिवको आशिर्वाद पाउन सफल भए ।४९-५१। देवाधिदेव भगवान् शिवले विमान पठाउनु भएको छ । यही हो । हे ब्राह्मण गुणाढ्य ! तिमी विमानमा चढ ।५२। हामीसँगै हिँड । कैलासमा आजै तिमीले शिवको दर्शन पाउनेछौ" ।

**मार्कण्डेय उवाच ॥ मार्कण्डेय भन्नुहुन्छ-**

**एवं गणवचः श्रुत्वा गुणाढ्यो गुणिसन्नमः ॥५३॥**
**वदनं समुदैक्षेत मुनीनामुग्रतेजसाम् ।**
**ततो गुणाढ्यमालोक्य मुनीनां मुखवीक्षकम् ॥५४॥**
**प्राह चण्डतपा वाक्यं मुनीनां तत्र शृण्वताम् ।**

रुद्रगणका यस्ता कुरासुनेपछि गुणशाली गुणाढ्यले मुनिहरूको अती तेजश्वी अनुहारतिर आनन्द मान्दै हेरे । त्यसपछि आफूतिर प्रसन्न भई हेरिरहेका गुणाढ्यलाई चण्डतपा नाम गरेको मुनिले भने-।५३-५४।

**चण्डतपा उवाच ॥ चण्डतपा भन्दछन्-**



**अदावेव हि संप्रोक्तं हारीतेन तपस्विना ॥५५॥**
**सेवको देवदेवस्य न त्वं प्राकृतमानुषः ।**
**नेपाले परमे क्षेत्रे लिङ्गं संस्थापितं त्वया ॥५६॥**
**शापान्तस्तेन ते जातस्तुष्टोऽभूत् पार्वतीपतिः ।**
**विमानवरमारुह्य याहि पश्य महेश्वरम् ॥५७॥**
**आशीर्वादैर्द्विजादीनां शीघ्रं पश्य महेश्वरम् ।**

"सुन्नु होस् त, यहाँ तपस्वी हारीतले अघि नै हजुरलाई भनी सक्नु भयो कि हजुर देवाधिदेवका सेवक हुनुहुन्छ, साधारण मानिस हुनु हुन्न । हजुरले उत्तम तीर्थ नेपालमा उत्तम लिङ्गको स्थापना गर्नु भयो । यसले हजुरको श्राप समाप्त भयो र भगवाने शिव प्रसन्न हुनु भयो । जानुहोस् विमानमा चढ्नु होस् र गई भगवान् शिवको दर्शन गर्नु होस् । द्विजगणको आशिर्वाद लिई चाँडै गएर शिव भगवान्को दर्शन गर्नु होस्" ।५५-५७।

**मार्कण्डेय उवाच ॥ मार्कण्डेय भन्नुहुन्छ-**

**इति श्रुत्वामुनेर्वाक्यं गुणाढ्यो द्विजसत्तमान् ॥५८॥**
**आमन्त्र्याधिरुरोहाशु विमानमतिसुन्दरम् ।**
**जयध्वनिस्ततो जातो मुनीनां वदनोद्गतः ॥५९॥**
**पपात खात् पुष्पवृष्टिर्विद्याधरकरच्युता ।**
**देवदुन्दुभयो नेदुर्ननृतुश्चाप्सरोगणाः ॥६०॥**
**ववौ वायुः सुखस्पर्शो गन्धर्वा ललितं जगुः ।**
**विमानस्पर्शमात्रेण गुणाढ्यो गुणिनां वरः ॥६१॥**
**त्र्यक्षरूपधरो भूत्वा कैलासं प्रययौ तदा ।**
**एवं ते कथितं विप्र भृङ्गीश्वरसमुद्भवम् ॥६२॥**

मुनिका यस्ता कुरा सुनेपछि उत्तम द्विज गुणाढ्य द्विजश्रेष्ठसँग आशिर्वाद लिई बिधाबारी हुँदै त्यो अति नै सुन्दर विमानमा चढे । त्यसपछि मुनिहरूका मुखबाट जय जयको ध्वनी गुञ्जियो ।५८-५९। **विद्याधरहरूका हात मार्फत आकाशबाट फूलको वर्षा भयो । देवताहरूले दुन्दुभि बजाए । अप्सराहरू नाच्न लागे ।६०।** आनन्द लाग्ने गरी हावा चल्न थाल्यो । गन्धर्वहरूले कर्णप्रिय गीत गाए । गुणशाली गुणाढ्यले विमानलाई छुनासाथ शिवगण भई कैलासतिर लागे । हे विप्र ! मैले हजुरलाई भृङ्गीश्वर उत्पत्तिको यस्तो कथा बताएँ ।६१-६२।

**भृङ्गीश्वरसम लिङ्गं न भूतं न भविष्यति ।**

भृङ्गीश्वर सरहको लिङ्ग न कहिल्यै बनाइयो न त भविष्यमा नै बन्नेछ । उत्तमतीर्थ नेपालमा रहेको यो भृङ्गीश्वर शिवलिङ्गलाई जसले

भृङ्गीश्वरं ये पश्यन्ति नेपाले क्षेत्रसत्तमे ॥६३॥
तेषां मनोरथावाप्तिर्भविष्यति न संशयः ।
भृङ्गीश्वरं ये पश्यन्ति भक्तियुक्तेन चेतसा ॥६४॥
तेषां दास्यति कैलासं भगवान् पार्वतीपतिः ।
अष्टम्यां च चतुर्दश्यां संक्रान्तिदिवसे तथा ॥६५॥
भृङ्गीश्वरं ये द्रक्ष्यन्ति ते यास्यन्ति परां गतिम् ।
षण्मासं प्रत्यहं दृष्ट्वा देवं भृङ्गीश्वरं मुदा ॥६६॥
विद्यावान् जायते विप्रः कवीनामग्रणीर्भवेत् ।
वन्ध्याऽपि नियमं दृष्ट्वा शीघ्रं गर्भमवाप्नुयात् ॥६७॥

दर्शन गर्दछ उसका सबै चाहना पूरा हुन्छन्, कुनै शङ्का छैन । जसले श्रद्धा एवं भक्तिपूर्वक भृङ्गीश्वरको दर्शन गर्दछ, त्यसलाई भगवान् शिव कैलासमा बस्न दिनु हुन्छ । अष्टमी, चतुर्दशी र सङ्क्रान्तिका दिन जसले भृङ्गीश्वरको दर्शन गर्दछन् ती मोक्ष हुन्छन् । छ महिनासम्म प्रसन्न मनले निरन्तर भगवान् भृङ्गीश्वरको दर्शन गर्नाले ब्राह्मण विद्यावान् र महाकवि हुन्छ, बाँझी स्त्रीले सधैं दर्शन गरे चाँडै गर्भवती हुन्छे ।६३-६७।

भृङ्गीश्वरस्य सेवातो दरिद्रो धनमाप्नुयात् ।
अद्यापि भृङ्गरूपेण भृङ्गी पर्वणि पर्वणि ॥६८॥
समायाति मुने द्रष्टुं लिङ्गं भृङ्गीश्वराभिधम् ।
श्रुत्वाऽध्यायमिमं पुण्यं भृङ्गीश्वरसमुद्भवम् ॥६९॥
यः शृणोति नरः श्रेष्ठः श्रीशम्भोर्विजयं शुचिः ।
श्रद्दधानः सदा भक्त्या सर्वैनोभिः स मुच्यते ॥७०॥

भृङ्गीश्वरको सेवा गर्नाले दरिद्रले धन प्राप्त गर्दछ । अहिले पनि त्यहाँ पर्व पर्वमा भृङ्गी भृङ्गीश्वरको दर्शनका लागि आउने गर्दछन् । भृङ्गीश्वर उत्पत्ति सम्बन्धी पुण्यदायी यो शम्भुविजयको अध्याय श्रद्धापूर्वक शुद्ध भई सुन्ने मानिस सबै पापबाट मुक्त हुन्छ ।६८-७०।

मनःशुद्धिविहीनत्वात् समस्तं कर्म निष्फलम् ।
ब्राह्मणं पूजयित्वा च भूषणाच्छादनादिभिः ॥७१॥
लभते तत्तदेवाशु प्रसादाच्छङ्करस्य च ।
द्विजो विद्यामवाप्नोति वर्षादर्वाङ् न संशयः ॥७२॥

मन शुद्ध छैन भने गरिएका सबै कर्म फलहीन हुन्छन् । यसैले श्रद्धापूर्वक वस्त्र, आभूषण आदिले ब्राह्मणको पूजा गरी शिवको आशिर्वादले चाहेको कुरा चाँडै प्राप्त गर्न सफल हुन्छ । द्विजले एक वर्ष भित्रै विद्या आर्जन गर्न सक्दछ यसमा कुनै शङ्का छैन ।७१-७२।

अस्य श्रवणमात्रेण क्षत्रियो विजयी भवेत् ।
महतीं श्रियमाप्नोति नरेन्द्रेण सुदुर्लभाम् ॥७३॥

यो कथा सुन्नाले मात्रै पनि क्षत्रिय विजयी हुन्छ । राजाले पाउन कठिन लक्ष्मी प्राप्त गर्दछ ।७३।

श्रुत्वाऽध्यायमिमं पुण्यं महापातकनाशनम् ।
वैश्यो धनसमृद्धः स्यात् महाधर्ममवाप्नुयात् ॥७४॥

यो महापाप नाशक पुण्यदायी अध्याय सुनेर वैश्य धनी हुन्छ र ठूलो पुण्य कमाउँदछ ।७४।



**सूत उवाच ॥ सूत भन्नुहुन्छ–**

श्रुत्वाऽध्यायमिमं पुण्यं शूद्रः सद्गतिमाप्नुयात् ।
इति नेपालमाहात्म्यं मार्कण्डेयस्तपोधनः ॥७५॥
कथयित्वा द्विजातिभ्यः सायंसन्ध्यामुपासितुम् ।
ययौ शिष्यगणैः सार्धं विभावसुरिवापरः ॥७६॥

यो पुण्यदायी अध्याय सुन्नाले शूद्र मोक्ष हुन्छ । तपस्याका धनी मार्कण्डेय मुनि द्विजहरूलाई यो नेपालमाहात्म्य भनी सकेर साँझको सन्ध्याकर्म गर्न भनी शिष्य सहित सूर्य भगवान् देवतासँग गए जसरी जानु भयो ।७६।

अन्येऽपि मुनयः सर्वे ययुः सन्ध्यामुपासितुम् ।
इदं नेपालमाहात्म्यं गुह्यमत्यन्तदुर्लभम् ॥
गोपनीयं प्रयत्नेन धार्मिकाय प्रकाशयेत् ॥७७॥

अरु मुनिहरू पनि साँझको सन्ध्याकर्म गर्न भनी गए । यो गोप्य एवं दुर्लभ नेपालमाहात्म्यलाई प्रयत्नपूर्वक गोप्य राख्नू र धर्मप्रति आस्था हुनेहरूलाई मात्र बताउनू ।७७।

**॥ इति स्कन्धपुराणे हिमवत्खण्डे नेपालमाहात्म्ये त्रिंशोऽध्यायः ॥३०॥**

**। स्कन्धपुराण, हिमवत्खण्ड, नेपालमाहात्म्यमा भृङ्गीश्वर स्थापना र गुणाढ्यले मोक्ष प्राप्त गरेको कथा प्रसङ्ग वर्णन भएको तीसौं अध्याय समाप्त भएको छ ।३०।**

श्लोकानामादितः समष्ट्यङ्काः-१,८४८+७७=१,९२५
शुरुदेखिको श्लोक सङ्ख्या :-१,८४८+७७=१,९२५

**॥ इति नेपालमाहात्म्यम् ॥**

**॥ नेपालको बागमती अञ्चल, काभ्रेपलाञ्चोक जिल्ला, अनैकोट गाउँ, वडा नम्बर तीन, चारघर टोलमा जन्म भई सोही अञ्चलको काठमाडौं जिल्ला, गोकर्णेश्वर नगरपालिका, वडा नम्बर सात, दक्षिणढोकामा बसोबास गर्ने मोहनप्रसाद सापकोटाद्वारा गरिएको नेपालमाहात्म्यको नेपाली भावानुवाद समाप्त भएको छ ॥**

